# सुन प्रकरण

# अभियोगपत्र

विसं २०८० भाद्र ३१



हाम्रा नेता र राज्य संरचनाहरु के के गर्न सक्छन् भनि भविष्यमा नेपालीले हेरुन

भनि अभिलेख राख्ने उद्देश्यले

[यो अभियोगपत्र, यसका पात्र, तथ्यमा समाचारपत्रहरुमा विवादास्पद समाचारहरु आएका]

**<u>अदालतले भर्ने;</u>**
**दर्ता नं. ...............**
**दर्ता मिति ............**

# श्री काठमाडौं जिल्ला अदालतमा

## मुलुकी फौजदारी कार्यविधि संहिता, २०७४ को दफा ३२ बमोजिम दायर गरेको

## <u>अभियोग पत्र</u>

## आ.व. २०८०/८१ सालको निर्णय नम्बरः-

**राजस्व अनुसन्धान विभाग, हरिहरभवन, ललितपुरका निर्देशक सन्तोष पौडेल समेतको** जाहेरीले नेपाल सरकार.........................................................................................................................**वादी**

**<u>विरुद्ध:</u>**

१) YAO YISHEN को नाती, YAO MING र WANG XIUQIN को छोरा, ZHONG SHAN DONGLU 268 HEBEI, SHIJIA ZHUANG CHINA स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.४ धुम्बराहीमा वस्ने (राहदानी नं. EB0563022 बाहक) **ALEX भन्ने YAO PUCHENG.......................................१**

२) LI ARJING नाती, LI GOU CHAI र WANG CHUN MEI को छोरा, WANG EJUN को श्रीमान Republic of China (ताईबान) Taipei Da Anqu Weiguang Lu New Taipet Cuty बाट जारी भएको (राहदानी नं. 360387660 बाहक) वर्ष ३८ को ALI भन्ने **LI WEN TSUNG..........................................................................१**

**३)** LI MING र CHEN FENG छोरा, YUN NAN KUN MING CHENG GONG FENG HUANG स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं, टोखा नगरपालिका वडा नं. ५ बसुन्धरा वस्ने वर्ष २६ को (राहदानी नं. EE7295222 बाहक) ROGER or STEPS भन्ने **LI NENGKAI.........................................................१**

**प्रतिवादी**

४) DING JIA LOU र HE WEIPING को छोरा, YUNNAN BAOSHAN CHINA स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं टोखा नगरपालिका वडा नं.५ वसुन्धारा वस्ने वर्ष २७ को राहदानी नं. EE7295379 बाहक SAUTEN भन्ने **DING SHENG FA...१**

५) LIN JING HAN को नाती LIN HUA YAN र WANG AI ZHEN को छोरा CHINA GUANGDONG, SHANG WEI HAIFONG स्थायी वतन भई हाल का.जि. का.म.न.पा.वडा नं.२ लाजिम्पाट बस्ने (चिनिया राहदानी नं. E94446558 वाहक) बर्ष ३६ को **LIN ZEQIANG (लिन चछयाङ).......................................................................१**

**६)** GAL TSO को नाती, THUP TING YANTEE र NIY MA को छोरा, House No-158 block No. -7 Manju ka Tilla, CivilLines, North Delhi भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं काठमाडौं म.न.पा.वार्ड नं.३ कम्फोपर्ट आपार्टमेन्टमा 6-B-2 मा वस्ने वर्ष ५३ को (भारतिय आधार कार्ड नं.४०८३ ०२७४ ४२४८ भएका) **टाँसी भन्ने थुप्तिन छिरिङ (THUPTING TSERING).......................................................................१**

७) डिक बहादुर राईको नाती, पदम बहादुर राई रमाया राईको छोरा, कोशी प्रदेश, जिल्ला जिल्ला भोजपुर, अरुण गा.पा. वडा नं. ४ चरम्बीगाँउ भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं, बुढानिलकंठ न.पा. वडा नं. ४ पासीकोटमा वस्ने वर्ष ४९ को **हर्कराज राई** (नागरिकता नं. ३३३४/१०५७१ काठमाडौं)**.......................................................................१**

**८)** NAYWANG TSERING र TESRING CHEOETSO छोरा, ANTERPEN PROVINCE HOBUKKEN CITY BELGUIM स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला जिल्ला काठमाडौं, का.म.पा. वडा नं. २६ कपुरधारामा वस्ने (राहदानी नम्बर GA4597364 BELGUIM बाहक) वर्ष ४० को **DAWA TSERING (दावा छिरिङ).......................................................................१**

**९)** YANG ZHU AN नाती, YANG FU PING र LI CHUNG YAN छोरा, HUNAN PROVINCE,YUEYANG HUALONG CITY, ZHU ZI KO ZHENG VILLAGE स्थायी वतन भई हाल बागमती प्रदेश, काठमाडौं जिल्ला का.म.न.पा.वडा नं. २६ स्थित होटेल भियाना वस्ने (राहदानी नं. EA8572733) वर्ष ३४ को **YANG WEN.......१**

**१०)** TIAN SHIXIONG को नातिनी, TIAN SHUGUANG र ZHON XIAO QIN छोरी, CHINA SHAN XI PROVINCE YU LIN CITY हाल बागमती प्रदेश, काठमाडौं जिल्ला का.म.न.पा.वडा नं.२६ स्थित होटेल भियाना वस्ने (राहदानी नं. EF4184484 बाहक) **MI TIAN.......................................................................१**

११) दल बहादुर श्रेष्ठको नाती, प्रभु नारायण श्रेष्ठ र स्व. मोहनमाया श्रेष्ठको छोरा, बागमती प्रदेश, जिल्ला काठमाडौं का.म. न.पा. वडा नं.३२ मा वस्ने बर्ष ५५ को **कृष्ण कुमार श्रेष्ठ** (ना.प्र.नं.३०२६/६१, भोजपुर)**.......................................................................१**

१२) प्रेमलालको नाती, विष्णु दत्त भट्ट र देवकी देवी भट्टको छोरा, सुदुरपश्चिम प्रदेश, जिल्ला डडेल्धुरा अजयमेरु गा.पा. वडा नं.१ भई हाल बागमती प्रदेश, भक्तपुर जिल्ला, सुर्य विनायक न.पा. वडा

**प्रतिवादी**

नं.२ झ्याँ गाँउ बस्ने बर्ष ४९ का **पुष्कर राज भट्ट** (ना.प्र.नं. १५९८/७४ म.ड.६८१५, डडेलधुरा)**...............................................................................................१**

१३) चर्तुर मान राईको नाती, निर बहादुर राई र पदम कुमारी राईको छोरा, कोशी प्रदेश, जिल्ला खोटाङ साविक डम्बर्खु शिवालय गा.वि.स. वडा नं.४ हाल परिवर्तित जन्तेढुङगा गाउपालिका वडा नं.४ घर भई बागमती प्रदेश, जिल्ला ललितपुर महालक्ष्मी नगरपालिका वडा नं.६ बस्ने बर्ष ४६ को **राजेन्द्र कुमार राई** (ना.प्र. नं.१०४२/२६७५, खोटाङ)**.......................................१**

१४) ईश्वरी प्रसाद पराजुलीको नाती, भुपेन्द्र प्रसाद पराजुली र तिर्थ कुमारी पराजुलीको छोरा, बागमती प्रदेश, जिल्ला सिन्धुपाल्चोक, बलेफी गा.पा. वडा नं.७ खाडिचौर भई हाल भक्तपुर जिल्ला, सुर्यविनायक न.पा. वडा नं. ४ ठिमीमा वस्ने बर्ष ३५ को **यादव पराजुली** (ना.प्र.नं.१३९१५०,सिन्धुपाल्चोक)**.....................................................................१**

१५) सोम नाथ गौतमको नाती, शेष कान्त गौतम र सुभद्रा गौतमको छोरा, बागमती प्रदेश, जिल्ला चितवन साविक रत्न नगर नगरपालिका वडा नं. ९ हाल रत्न नगर नगरपालिका वडा नं. १२ वस्ने ३८ बर्ष को **सुदर्शन गौतम** (ना.प्र.नं.८३२३/०६०, चितवन)**.........................................१**

१६) रण बहादुर भुजेलको नाती, कर्ण बहादुर भुजेल र सरस्वती भुजेलको छोरा, बागमती प्रदेश, जिल्ला दोलखा, मेलुङ्ग गा.पा.३ घ्याङसुकाठोकर टोल भई हाल काठमाडौं का.म.न.पा. वडा नं.१६ स्वयम्भु सानो भञ्याङमा बस्ने वर्ष ५४ को **रामकुमार भुजेल** (ना.प्र.नं. ५२५१/६४८, दोलखा)**..................................................................................................१**

१७) दल बहादुर भुजेलको नाती, राम बहादुर भुजेल र कल्पना भुजेलको छोरा, बागमती प्रदेश, जिल्ला दोलखा मिलुङ गाउँपालिका वडा नं.१ पोष्टीक बस्ने वर्ष २१ का **दिलिप भुजेल** (ना.प्र.न.२२-०१-७६-००२३८, दोलखा)**.................................................................१**

१८) चन्द लाल खरेलको नाती, नन्द लाल खरेलको छोरा, लुम्बिनी प्रदेश, जिल्ला गुल्मी हरेवा गाबिस वडा नं.२ भई हालको परिवर्तित चन्दकोट गा.पा. वडा नं.६ स्थायी वतन भई हाल काठमाडौं टोखा नगरपालिका वडा नं.११ मा बस्ने वर्ष ३४ को **सुमन खरेल** (ना.प्र.प.नं.०४१३०३७/२६५, गुल्मी)**.....................................................................१**

१९) राम औतार साह सोनाको नाती, प्रह्लाद साह सोनार र तारादेवी सोनारिनको छोरा, मधेश प्रदेश, जिल्ला बारा, कलैया उपमहानगरपालिका वडा नं.४ कलैया वस्ने बर्ष ४५ को **शिव कुमार सरार्फ** (ना.प्र.प.नं.२३५७।०९५५।४९८६, बारा)**...............................................१**

२०) चित्र बहादुर बस्नेतको नाती, प्रशुराम बस्नेत र रिता बस्नेतको छोरी, बागमती प्रदेश, जिल्ला दोलखा भिमेश्वर नगरपालिका वडा नं.११ स्थायी वतन भई हाल काठमाडौं जिल्ला टोखा नगरपालिका वडा नं.१०, सामाखुसी वस्ने वर्ष ४५ को **किशोर बस्नेत** (ना.प्र.न. ५६५०,दोलखा)**...................................................................................................१**

२१) भैरब सिंह चन्दको नाती, राजेन्द्र कुमार चन्द र कल्पना देवी चन्दको छोरा, सुदुरपश्चिम प्रदेश, जिल्ला कैलाली धनगढी उप.म.न.पा. वडा नं.८ क्याम्पस रोडमा वस्ने बर्ष ३४ को **सन्तोष चन्द** (ना.प्र.नं.७१२६७, कैलाली)**..........................................................................१**

**प्रतिवादी**

२२) गुणाखर पौडेल नाती, लिलाधर पौडेल र चित्रकाला पौडेलको छोरा, लुम्बिनी प्रदेश, जिल्ला पाल्पा, साबिक जुठापौवा गा.बि.स वडा नं.३ भई बसाई सराई गरी बागमती प्रदेश, जिल्ला काठमाडौं, टोखा नगरपालिका वडा नं.१० खरिबोट वस्ने वर्ष ५६ को त्रिभुवन विमानस्थल,भन्सार कार्यालयमा भन्सार अधिकृत पदमा कार्यरत **गणेश प्रसाद पौडेल** (ना.प्र.प.नं.१२८३१/३९७१४, काठमाडौं)**..............................................................१**

२३) भुपाल नेपालीको नाती, कान्छा नेपाली र मैया नेपालीको छोरा, बागमती प्रदेश, जिल्ला भक्तपुर सूर्य विनायक न.पा. वडा नं.८ सिपाडोल स्थायी वतन भएका नायब सुब्बा वर्ष ३३ को **बिरेन्द्र नेपाली** (ना.प्र.नं. नम्बर २९३०१३/१३२, भक्तपुर)**.......................................................१**

**२४)** रेवतीरवण ढकालको नाती, नारायण प्रसाद ढकाल र सुभद्रा ढकाल छोरा, बागमती प्रदेश, जिल्ला काठमाडौं, कागेश्वारी मनोहरा नगरपालिका वडा नं.-६ बस्ने त्रि.वि.भन्सार कार्यालयका खरिदार पदमा कार्यरत वर्ष ५७ को **कुमार ढकाल** (नागरिकता नं.७७७३, काठमाडौं)**...........१**

२५) गोविन्दमान श्रेष्ठनाती पुर्णमान श्रेष्ठ र सुवर्ण मैया श्रेष्ठको छोरा, बागमती प्रदेश, जिल्ला काठमाडौं, काठमाडौं म.न.पा. वडा नं.१७ ढल्को खुसिवु वस्ने बर्ष ५० को त्रि.वि. भन्सार कार्यालय गौचरमा टेलिफोन अपरेटर पदमा कार्यरत **सरोज श्रेष्ठ** (नागरिकता नं.८८८६, काठमाडौं)**........१**

२६) कृष्ण बहादुर लिम्बुको छोरी, दिपेन्द्र राईको श्रीमती, कोशी प्रदेश, झापा जिल्ला गौरदह न.पा. वडा नं. १ घर भई हाल बागमती प्रदेश, का.जि. बुढानिलकण्ठ वडा नं. १० एकताबस्ती बस्ने वर्ष ३८ की (ना.प्र.नं. ६४१७१५६०२ झापा) **रुकमिना सुव्वा.......................................१**

२७) पाना लाल साह सोनार र शान्ति देवी सोनारको छोरा, मधेश प्रदेश, जिल्ला बारा साविक कलैया नगरपालिका वडा नं.६ हालको परिवर्तित कलैया उपमहानगरपालिका वडा नं.१ वस्ने **भोला साह सोनार** (ना.प्र.न. ३३०५५/३३१,बारा)**....................................................(फरार)..१**

२८) भुवाने चलाउनेको छोरा, लुम्बिनी प्रदेश, जिल्ला बर्दिया गेरुवा गा.पा. वडा नं.४ स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं, का.म.न.पा. वडा नं.४ चुनदेवी बस्ने बर्ष ३८ को **जीवन चलाउने** (ना.प्र.प.नं.२१६०७ वर्दिया)**..................................................(फरार)..१**

२९) मुल मान बुढाको छोरी, लुम्बिनी प्रदेश, रोल्पा जिल्ला साविक थवाङ गा.वि.स. वडा नं.७ परिवर्तित थवाङ गा.पा. वडा नं.२ स्थायी वतन भई हाल बागमती प्रदेश, जिल्ला काठमाडौं का.म.न.पा.वडा नं.२६ ठमेल ज्याँठामा रहेको होटल भियनाको संचालक, जिल्ला काठमाडौं,काठमाडौं महानगरपालिका वडा नं.२९ सामाखुशी बस्ने **अमला रोका** (ना.प्र.प.नं.४४१०४ रोल्पा)**...................................................................(फरार)....१**

**प्रतिवादी**

**मुद्दा:अवैध रुपमा सुन भन्सार चोरी पैठारी, नेपाल राष्ट्र बैंक ऐन अन्तर्गतको कसूर तथा संगठित अपराध समेत ।**

**मुद्दाको संक्षिप्त तथ्य:**

**१. प्रहरी प्रतिवेदनहरु:**

**क) राजस्व अनुसन्धान विभागका सन्तोष पौडेलको प्रतिवेदन:**

नेपालमा सुन पैठारी गर्न नेपाल राष्ट्र बैकको पूर्व स्वीकृती लिएर बाणिज्य बैकहरुले मात्र पैठारी गर्न पाउने, कुनै ब्यक्तिगत फर्म तथा ब्यक्तिले पैठारी गर्ने पाउने कानुनी ब्यवस्था नभएको, सुन पैठारी गर्न कुनै ब्यक्तिगत फर्म

तथा ब्यक्तिले पाउने ब्यवस्था नभएको हुँदा रेडी ट्रेड प्रा.लि. नामको कम्पनी दर्ता गरी सुनलाई सवारी साधनको ब्रेक प्याडको स्वरुप बनाई ब्रेक प्याडकै कार्टुनमा प्याक गरी अबैध पैठारी गर्ने पूर्व योजना सहित बिभिन्न तहमा जिम्मेबारी पुरा गर्न समूह बनाएर आपराधिक समूहको लाभको लागि तिनै समूहको निर्देशनमा यी अभियुक्तहरु समेत मिलेर राजस्व चुहावट गरेर अबैध सुन पैठारी गर्ने गरेको देखिँदा कसूरजन्य कार्यमा संलग्न रहेको यि अभियुक्तहरु समेतको आपराधिक कार्य संगठित अपराध निवारण ऐन, २०७० ले परिभाषित गरेको संगठित अपराध मुद्दामा अनुसन्धान हुन भन्ने समेत व्यहोराको प्रतिवेदन रहेको ।

ख) **<u>प्रहरी उपरिक्षक संजय सिंह थापा समेतको प्रतिवेदन:</u>**

अबैध सुन पैठारी गरी राजस्व चुहावट गरेको सम्वन्धमा हालसम्मको अनुसन्धानबाट नेपालमा सुन पैठारी गर्न कुनै कम्पनी तथा ब्यक्तिले पाउने ब्यवस्था नभएको नरहेको अवस्थामा रेडी ट्रेड प्रा.लि. समेतको कम्पनी दर्ता गरी सवारी साधनमा प्रयोग हुने ब्रेक प्याडको स्वरुप बनाई ब्रेक प्याडकै कार्टुनमा प्याक गरी भन्सार चोरी पैठारी गर्ने योजना सहित अपराधिक समूह बनाएर आपराधिक लाभको लागि तिनै समूहको निर्देशनमा पक्राउ परेका अभियुक्तहरु समेतको मिलि नेपालमा अबैध सुन चोरी पैठारी गरी राजस्व चुहावट गर्ने गरेको देखिँदा उक्त कसूर अपराध सगठित अपराध निवारण ऐन, २०७० अनुसारको संगठित अपराध समेत भएको स्पष्ट हुन आएकोले थप अनुसन्धान तथा कारवाहीको लागी राजस्व अनसन्धान बिभागको पत्रसाथ मिसिल कागजातहरु यस ब्यूरोमा प्राप्त हुन आएकोले प्राप्त सो मिसिल कागजातहरु अध्ययन बिष्लेषण गर्दा निम्न तथ्यहरु खुल्न आएको देखिन्छ ।

- कम्पनी रजिष्ट्रार कार्यालय त्रिपुरेश्वरमा मिति २०७९।१२।१९ गते दिलिप भुजेलको नाममा रेडी ट्रेड प्रा.लि.दर्ता नं. ३१०१८०/०७९/०८० मा कम्प्यूटर पार्टहरु, ईलेक्ट्रोनिक्स सामानहरु, टि.भी., भिडियो क्यामरा वासिङ मेशिन, भ्याकुम मिक्चर र सोका पार्ट्सहरु आयात गरी बिक्री वितरण गर्ने उद्देश्य राखी दर्ता गरेको र आन्तरिक राजस्व कार्यालय महाराजगंजबाट स्थायी लेखा नं.६१०४७७९७३ लिई कम्पनी संचालन गरेको देखिन आएकोमा सो कम्पनीले कम्पनीको उद्देश्य भन्दा फरक मालवस्तु अर्थात सवारी साधनको पार्ट्स ब्रेक प्याड आयात गर्ने गरेको देखिएको ।
- उक्त रेडी ट्रेड प्रा.लि.कम्पनीको कार्यालय ठेगाना जिल्ला काठमाडौं बुढानिलकण्ठ नगरपालिका वडा नं.४ उल्लेख गरि घर धनी रत्न कुमारी भण्डारी (प्रतिवादी हर्कराज राईको भाउजु नाता पर्ने) संग कार्यालय रहने भनी सम्झौता गरेको भएतापनि उक्त प्रा.लि.को कार्यालय उक्त घर तथा अन्यत्र कहि कतै स्थापना भएको नदेखिएको।
- रेडी ट्रेड प्रा.लि.ले बिदेशबाट मालवस्तु पैठारी गर्नको लागी मूल्य अभिबृद्धि कर (Value Added Tax) मा दर्ता भई रही EXIM CODE लिनु पर्नेमा VAT मा दर्ता नै नगरी भन्सार बिभागबाट EXIM CODE6104779730113NP लिएको देखिन आएको ।
- रेडी ट्रेड प्रा.लि.ले बिदेश चिन हङकङबाट मिति २०२३।०४।२४ देखि हालसम्म पटक पटक USD 500 भन्दा कम मूल्य उल्लेख गरी AUTO PARTS BREAK PADS ११८० SETS, SHAVER, MACHANICAL MOTOR समेत पैठारी गरेको देखिन आएको ।
- मिति२०८०।०४।०२ गते Exporter: GIANGMEN FENGTONG TRANSPORTATION SERVICE CO.LTD CHINA बाट Ready Trade Pvt. Ltd. को नाममा BRAKE PADS 160 Sets ( प्रज्ञापन पत्र नं. M 35079) उल्लेख गरी आयात गरेको, भन्सार एजेन्टको रुपमा यादव पराजुली

(भन्सार एजेन्ट नं. 782) को तर्फबाट भन्सार एजेन्टको कर्मचारी राजेन्द्र कुमार राईले कागजपत्र पेश गरेकोमा पैठारी भई आएको मालवस्तुको निरीक्षणमा खटिएका खरिदार कुमार ढकालले चेकजाँच गरेको भनी भन्सार अधिकृत सन्तोष चन्दले भन्सार पास गरेको देखिन आएको।

- मिति २०८०|०४|०३ गते बा २ ज २३२४ नं. ट्याक्सी अशोक लामाले चलाएको अवस्थामा सो ट्याक्सीबाट रेडी ट्रेड प्रा.लि.का प्रतिनिधी राजेन्द्र कुमार राईको रोहवरमा SHAVER सेट ८० थान, BRAKE PADS -८ कार्टुन वरामद भएको देखिन आएको।
- राजस्व अनुसन्धान विभाग, ललितपुरका निर्देशक सन्तोष पौडेल समेतले ८ वटा कार्टुनमा रहेको ब्रेक प्याडको स्वाभाविक तौल भन्दा फरक तौल देखिएकोले राजस्व चुहावट (अनुसन्धान तथा नियन्त्रण) ऐन, २०५२ को दफा १० बमोजिम अनुसन्धान हुन भनी प्रतिवेदन दिएको र ब्रेक शु आकारको नमूना थान ४ (चार) EDX उपकरणबाट परीक्षण गर्दा ३ बटा नमूनामा 99.55% सम्म सुन रहेको देखिन आएको।
- रेडी ट्रेड प्रा.लि.ले विदेशबाट आयात गर्ने कार्गो ट्रान्स ग्लोबल सर्भिसेज प्रा.लि.भएको कागजातहरुबाट देखिएको र सो कार्गो ल्याएको कुरा स्वीकार गरी उक्त ट्रान्स ग्लोवल सर्भिस प्रा.लि.का संचालकहरु कृष्ण कुमार श्रेष्ठ समेतले खुलाएको देखिन आएको।
- ट्याक्सी चालक अशोक लामाले उक्त ब्रेक प्याड भनिएको वस्तु राजेन्द्र राईले भने अनुसार बालुवाटार लैजान लागेको भनी खुलाएकोमा सामान राख्ने स्थान खोजी गर्दा चाइनिज पासपोर्ट नम्बर E94446558 बाहक Lin Zeqiang चाइनिज नागरिकले भाडामा लिएको भनी खुल्न आएको आधारमा चाइनिज नागरिक Lin Zeqiang पक्राउमा परी दाखिला गरेको प्रतिवेदनबाट देखिन आएको।
- मिति २०८०/०४/०२ गते त्रिभुवन विमानस्थल भन्सार कार्यालयको रेडि ट्रेड प्रा.लि.ले पैठारी गरेको ब्रेक प्याडसमेतका मालवस्तुहरु नियन्त्रणमा लिई अनुसन्धान गर्दा ब्रेक प्याडमा रहने धातु सुनको बनाई ल्याएकोमा सो मालवस्तु प्रज्ञापन पत्र नं. ३५०७९ मिति २०८०/०४/०२ बाट जाँचपास भएको उक्त प्रज्ञापन पत्रको आधारमा जाँचपास गरेका कर्मचारीहरु भन्सार अधिकृत सन्तोष चन्द (कर्मचारी संकेत नं. २३२०२१), खरिदार कुमार ढकाल (कर्मचारी संकेत नं.९९२४७) भएको साथै एक्स-रे टेक्निसीयन सरोज श्रेष्ठ (कर्मचारी संकेत नं.१४३१०७), त्रिभुवन विमानस्थल भन्सार कार्यालयको कार्गो गोदामबाट जाँचपास गर्ने ठाउँमा लैजाने क्रममा एक्स-रे मेशिनमा चेक गर्ने डिउटी तोकिएको र सोही मालवस्तु Break pads मा रहने धातु सुनको बनाई ल्याएको देखिएकोले निज भन्सार अधिकृत सन्तोष चन्द (कर्मचारी संकेत नं. २३२०२१), खरिदार कुमार ढकाल (कर्मचारी संकेत नं.९९२४७) भएको साथै एक्स-रे टेक्निसीयन सरोज श्रेष्ठ (कर्मचारी संकेत नं.१४३१०७) संलग्नता देखिन आएको।
- रेडि ट्रेड प्रा.लि.ले पैठारी गरेको ब्रेक प्याड समेतका मालवस्तुहरु नियन्त्रणमा लिई अनुसन्धान गर्दा सोही प्रकृतिको मालवस्तु Break pads र Shaver भन्सार एजेन्ट नं. १०३१ की रुक्मिना सुब्बाले त्रिभुवन विमानस्थल भन्सार कार्यालयबाट २० दिन अगाडी समेत जाँचपास गरेको देखिन आएको।
- भन्सार प्रतिनिधी रहेका सुदर्शन गौतमले सोही प्रकृतिको मालवस्तु Break pads र Shaver त्रिभुवन विमानस्थल भन्सार कार्यालयबाट आफ्नो भन्सार एजेन्टनं. ४४६ प्रयोग गरी जाँचपास गरेको देखिन आएको।
- जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.१६ मा JHONG JIANUA ले सटर भाडामा लिएको रेडी ट्रेड प्रा.लि.को गोदाम खानतलासी गर्दा सो गोदाममा ब्रेक प्याड ६६ कार्टुन, हिटर मेशिन २ थान, हिटिङवायर

जस्तो देखिने वस्तु १ कार्टुन, तौल गर्ने मेसिन ४ थान, विभिन्न सामानहरु ६ झोला बरामद भएकोमा देखिन आएको।

- अबैध रुपमा सुन पैठारी भएको सुन व्यवस्थापन गर्नको लागि बा.१६ च ९३००, बा.१६ च १७७१ नम्वर र BAB 5989 नं. को सवारी साधनहरु प्रयोग भएको अनुसन्धानको क्रममा संकलन भएको CCTV फुटेजबाट देखिन आएको र उक्त गाडीहरु प्रतिवादी हर्कराज राईले सोलुशन ट्राभल्स एण्ड टुर्स प्रा.लि. बालुवाटारका संचालक केशव श्रेष्ठसँग सम्झौता गरी उपलव्ध गराईएको सो सवारी साधनहरुमा GPS फिट भएको समेत देखिन आएको।
- अवैध रूपमा सुन लुकाई छिपाई ल्याउन प्रयोग भएको ईलेक्ट्रिक मालवस्तुहरु काठमाडौं जिल्लाका बालुवाटार, लाजिम्पाट, सोह्रखुट्टे, टोखामा राखेको देखिन आएको बिभिन्न मितिमा भएको खानतलासी वरामदी मुचुल्का समेतबाट स्पष्ट हुन आएको देखिन्छ।
- अवैध रूपमा ल्याएको सुन टोखामा रहेको Dong fang International Pvt.Ltd. दर्ता नं. २२८०४०/०७६/०७७ को नाममा भाडामा लिएको जग्गामा टहरा बनाई सो गोदाममा गाल्ने गरेको गोदाम भित्र सुन गाल्ने मेसिन, एसिड, सुन काट्ने कैची सुन तौल गर्ने मेसिन समेत फेला परेकोमा संगठित रुपमा बारदात गरेको देखिन आएको।
- चाईनिज नागरिकहरु नेपालमा पर्यटक भिसामा आए बिदेशी लगानी भित्र्याउने भनी प्रस्ताव पेश गरी LAND AND OCEAN INTERNATIONAL LOGISTICES PVT. LTD. KTM-3 नामको कम्पनी खडा गरी सोही कम्पनीको आवरणमा व्यवसायीक भिसा लिई नेपालमा रही सुनको अबैध कारोवार गरेको देखिन आएको, उल्लेखित तथ्यहरुको आधारमा हालसम्म पक्राउ परेका प्रतिवादीहरुले विदेश हङकङबाट नेपालको AIRPORT को बाटो प्रयोग गरी भारतीय बजार समेतमा सुनको व्यापार गर्ने योजना बनाई देखावटी रुपमा कम्पनी खडा गरेको, मालवस्तु बिदेशबाट पठाउदा वा मगाउदा अपनाउनु पर्ने कानुनी कार्यबिधिलाई छलि USD 500 भन्दा कम मूल्यको मालवस्तु हङकङबाट नेपालमा कम्पनीको उदेश्य भन्दा फरक मालवस्तु BREAK PADS पैठारी गरेको देखाई सो भित्र लुकाई छिपाई सुन राखेको, कार्गोले मालवस्तु नेपालमा ल्याउने, भन्सार ऐजेन्टले अबैध सुनलाई लुकाई सामन्य मालवस्तु हो भन्ने देखाई भन्सारमा जाँचपासको लागि कागजपत्र पेश गर्ने, भन्सारको कर्मचारी मालवस्तुको निरीक्षण नै नगर्ने, यसरी नेपालमा सुन ल्याई सके पश्चात सो सुनलाई पगाली सुनको बिभिन्न साईज र तौल निर्माण गरी भारतीय बजारसमेतमा विक्री गरी आर्थीक फाईदा लिने उद्देश्य राखि सो कार्यको लागी प्रतिवादीहरु दिलिप भुजेल राम कुमार भुजेल, हर्कराज राईले कम्पनी खडा गर्ने, कृष्ण कुमार श्रेष्ठ समेतले कार्गोबाट मालवस्तु नेपालमा ल्याउने, राजेन्द्र कुमार राई समेतका भन्सार ऐजेन्टले मालवस्तु भन्सारबाट जाँचपास गराउने, शा.अ.सन्तोष चन्द समेतका भन्सारको कर्मचारीले निरीक्षण नै नगरी जाँचपास गर्ने, टासी भन्ने थुप्तिन छिरिङ र हर्कराज राईले भन्सार लाग्ने रकम तिर्ने, मालवस्तु राख्नको लागी सटरहरु व्यवस्था गर्ने र मालवस्तु ओसार प्रसार गर्नको लागी गाडीको व्यवस्था गर्ने, दावा छिरिङ समेतले मालवस्तु सुन लुकाई छिपाई हङकङबाट पैठारी गरी भारत समेतका देशहरुमा बिक्री गर्नको लागि समन्वय सम्पर्क गरी रकमको व्यवस्था गर्ने, नेपालमा व्यवस्थापन गर्नको लागि रकम व्यवस्था गर्ने देखिन आएबाट प्रतिवादीहरुले अपराधिक लाभ लिने उदेश्यले अपराधिक समूह निर्माण गरी संगठित भई समूहका सदस्यहरुका बीचमा पृथक पृथक व्यक्तिहरुको तहगत जिम्मेवारीहरु बाँडफाँड गरी आपराधिक लाभ लिनको

लागी प्रत्यक्ष वा परोक्ष रुपमा संलग्न रही, योजना र बिस्तारित तयारीको अवैध सुन पैठारी गरी मुलुकलाई प्रतिकूल प्रभाव पार्ने बदनियतका साथ देश भित्र मात्र नभई राष्ट्रिय अन्तरराष्ट्रिय सीमाना पार गरी अपराधिक कार्य गरी संगठित रुपमा कसूर अपराध गरेको र सो संगठित रुपमा भएको कसूर अपराधमा हङकङ देखि ल्याई भारतसम्म पुऱ्याउन उनको लागि लगानी गर्ने व्यवस्थापन गर्ने र विक्री समेत गर्नको लागि प्रतिवादीहरु राजेन्द्र कुमार राई, अशोक लामा,टाँसी भन्ने THUPTING TSERING, हर्कराज राई, राम कुमार भुजेल, दिलिप भुजेल, LIN ZEQIANG, राजन कुमार श्रेष्ठ, कृष्ण कुमार श्रेष्ठ, पुष्करराज भट्ट, सन्तोष चन्द, सरोज श्रेष्ठ, कुमार ढकाल, यादव पराजुली, सुदर्शन गौतम, दावा छिरिङ, नरेश तामाङलाई परिचालन तथा व्यवस्था गर्ने अन्य मानिसहरु पनि संलग्न हुन सक्ने भएकोले अन्य मानिसहरु समेत पहिचान गरी निजहरु समेत उपर संगठित अपराध निवारण ऐन,२०७० बमोजिमको कसूर अपराधमा अनुसन्धान गरी पाउन प्र.उ. संजय सिंह थापा समेत व्यहोराको प्रतिवेदन ।

ग) **<u>प्र.नि. बिष्णु प्रदिप बस्याल समेतको प्रतिवेदन</u>**:

अबैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा तत्काल पक्राउ परी आएका प्रतिवादीहरु हर्कराज राई र तिब्बतियन मुलका भारतिय नागरिक टासि भन्ने थुप्तिन छिरिङले हङकङबाट नेपालमा ल्याईएको रेडि ट्रेड प्रा.लि. समेतका बिभिन्न कम्पनीका ब्रेक शु समेतका मालवस्तुहरु भित्र अवैध सुन छिपाई भन्सार जाँचपास गरिसके पश्चात बिभिन्न स्थानमा भएका गोदाममा राखि सो गोदामबाट ब्रेक शु समेतका मालवस्तुहरु का.जि.टोखामा भएको सुन गाल्ने मेसिन समेत भएको गोदाममा लगि ती मालवस्तुबाट सुन निकाली तौल र आकार बनाई सो सुन बिक्री गर्ने समेतका ब्यवस्थापनको लागि प्रतिवादी हर्कराज राईले सम्झौता गरी का.जि.बालुवाटार स्थित सोलुसन टुर्स एण्ड ट्राभन्स प्रा.लि.का संचालक केशब श्रेष्ठसंग भाडामा लिएको भनी प्रारम्भिक सोधपुछको क्रममा बताएकोले उक्त सोलुसन टुर्स एण्ड ट्राभन्स प्रा.लि.का संचालक केशब श्रेष्ठसंग बुझ्दा ह्वाद ईलेक्ट्रोनिक सप्लायर्सका संचालक भनी हर्कराज राईले आफ्नो नाम उल्लेख गरी सन २०२२ डिसेम्बर १ मा बाग्मती BAB ५९८९ नं. को रेनवत डष्टर गाडि, सन २०२३ फेब्रुअरी १० मा बा १६ च १७७१ नं. को ब्रेजा गाडि र २०२३ अप्रिल १ मा बा १६ च ९३०० नं. को क्रेटा गाडि भाडामा लिएको, गाडि भाडामा दिनु पूर्व सबै गाडिमा GPS TRACKER RECORDING राखेको र सो GPS RECORDING समेत अनुसन्धान अधिकृतलाई दिएको भनी गाडि भाडा सम्झौता समेत पेश गरेको देखिएको, उक्त गाडिहरु हर्कराज राईले सम्झौता गरी लिए पछी टासी भन्ने थुप्तिन छिरिङ्गले चाईनिज नागरिक ALEX भन्ने YAO PUCHENG, STEPS भन्ने LI NENGKAI, ALI OR LI भन्ने LI WEN –T SUNG र SAUTEN भन्ने DING SHENG FA समेतलाई प्रयोग गर्न दिएको र निजहरुले गाडि अवैध सुन ब्यवस्थापनमा गर्न प्रयोग गरेको भनी सोधपुछका क्रममा बताएकोले सो गाडिहरुमा जडान भएको GPS TRACKER RECORD को बिश्लेषण गर्दा उक्त गाडिहरु चाईनिज नागरिकहरु ALEX भन्ने YAO PUCHENG, STEPS भन्ने LI NENGKAI, ALI OR LI भन्ने LI WEN –TSUNG र SAUTEN भन्ने DING SHENG FA ले रेडि ट्रेड प्रा.लि.समेतका कम्पनीले हङकङबाट नेपाल पैठारी भई आएका ब्रेक शु समेतका मालवस्तुमा छिपाई राखेको अवैध सुन विभिन्न स्थानमा भएको गोदामबाट जिल्ला काठमाडौं टोखा नगरपालिका वडा नं.४ मा रहेको चाईनिज नागरिक Dou Chuanjun (Passport No: EG3871313) ले भाडामा लिएको जग्गामा रहेको टहरामा लगि सुनलाई पगालि निश्चित आकार दिई तौल र साईज मिलाई

बिक्री गर्ने समेतका प्रयोजनमा प्रयोग भएको देखिएको, उक्त गाडिहरु उल्लिखित प्रतिवादीहरुले प्रयोग गर्ने गरेको भनी बुझिएका मानिस बिपना लामा, अशोक क्षेत्री समेतले मानिसको फोटो समेत सनाखत गरी कागज गरेको, सो गाडिहरु गएको बिभिन्न स्थानको CCTV Footage समेत संकलन गरी सो को विश्लेषण गरी हेर्दा उल्लिखित चाईनिज नागरिकहरुले उक्त गाडिहरु प्रयोग गरी अवैध सुन राखेको बिभिन्न गोदामा आबत जावत गरी ठमेल स्थित भियना होटेलको कम्पाउण्ड भित्र रहेको KTV रेष्टुरेन्टमा समेत गई सो क्लबका संचालन गर्ने भनिएका चाईनिज नागरिक WEN TSUNG र MI–TIAN संग भेटघाट गरी प्रत्यक्ष रुपमा संलग्न भई, योजना र बिस्तारित तयारीका साथ अवैध सुन पैठारीमा संलग्नता रहेको देखिन आएकोले निज चाईनिज नागरिकहरु मिली विदेश हङकङबाट नेपालको AIRPORT को बाटो प्रयोग गरी भारतीय बजार समेतमा सुनको व्यापार गर्ने योजना बनाई, टासि भन्ने थुप्तिन छिरिङ्ग, दावा छिरिङ्ग, हर्कराज राई र चाईनिज राहदानी नं.E94446558 भएका LIN ZEQIANG समेतलाई परिचालन गरी संगठित रुपमा अबैध सुन पैठारी गर्ने कार्यमा संलग्न रहेका, उल्लिखित चाईनिज नागरिकहरुलाई पनि पक्राउ गरी अनुसन्धान गर्नु पर्ने देखिएकोले निजहरुको खोजतलास गर्दै जाँदा वारदात पश्चात निज प्रतिवादीहरु जिल्ला ललितपुर ललितपुर महानगरपालिका वडा नं.२३ धापाखेलमा रहेको डाउनटाउन अपार्टमेन्टमा MI –TIAN ले दुईवटा अपार्टमेन्ट भाडामा लिई सो मध्ये B-Block को ६०८ मा चाईनिज नागरिक WEN TSUNG र MI–TIAN र B Block को ३०९ मा STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA लुकि छिपी बसेको भन्ने खुल्न आएकोले निज प्रतिवादीहरु फेला पारी नियन्त्रमा लिई निजहरु बस्ने कोठा तथा शरिरको खानतलासी गर्दा प्रतिवादी MI–TIAN को साथबाट मोवाईलहरु, राहदानी र नगद रु.१,५०,०१०।-(एक लाख पचास हजार दश) फेला परेको, प्रतिवादी WEN YONG को साथबाट मोबाईल-१, STEPS भन्ने LI NENGKAI को साथबाट मोवाईल, नगद रु.१,१८,०००।-(एक लाख अठार हजार), सोनाम लामा काभ्रेपलान्चोक ना.प्र.नं.३०३०४२-२२५४ उल्लेख भएको राहदानी नं.१२५८९४५६ को जिल्ला प्रशासन कार्यालय काभ्रेपलान्चोकबाट जारी भएको देखिने सक्कल राहदानी थान-१(एक) र चाईनिज नागरिक SAUTEN भन्ने DING SHENG FA मोवाईल तथा निजको फोटो रहेको राम लामा काभ्रेपलान्चोक ना.प्र.नं.३०३०४१-२२५४ उल्लेख भएको राहदानी नं.१२५८९४५७ को जिल्ला प्रशासन कार्यालय काभ्रेपलान्चोकबाट जारी भएको देखिने सक्कल राहदानी फेला परेकोले सो मोवाईल तथा राहदानीहरुको रितपूर्वक खानतलासी बरामदी गरी बरामदी मुचुल्का सहित प्रस्तुत कसूर अपराधमा संलग्न रहेका अन्य मानिसहरुलाई खोजतलास गर्ने कार्य जारी नै राखी पक्राउ प्रतिवादीहरुलाई प्रतिवेदनसाथ पेश गरेका साथै निज चाईनिज नागरिक STEPS भन्ने LI NENGKAI तथा SAUTEN भन्ने DING SHENG FA ले भई नेपाली नागरिकता लिई बनाई सोही नागरिकताको आधारमा राहदानी समेत बनाएको देखिन आएको सो कार्यमा संलग्न रहेका मानिसहरु पहिचान गरी निज प्रतिबादीहरु उपर संगठित अपराध निवारण ऐन,२०७० र प्रचलित कानुन बमोजिम समेत अनुसन्धान पाँउ भन्ने व्यहोराको प्रतिवेदन।

घ) **<u>प्र.नि. बिष्णु प्रदिप बस्यालको प्रतिवेदन</u>:**

राजस्व अनुसन्धान विभागको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्कराज राई समेत भएको अबैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ परी आएका प्रतिवादीहरु हर्कराज राई र तिब्बतियन मुलका भारतिय नागरिक टासि भन्ने थुप्तिन छिरिङले हङकङबाट नेपालमा ELECTRIC

DEVICE हरुमा लुकाई छपाई अबैध रुपमा सुन पैठारी गर्ने उदेश्यका साथ प्रतिवादी दिलिप भुजेलको नाममा रेडी ट्रेड प्रा.लि. नामक कम्पनी खडा गरेको, सोही कम्पनी मार्फत सन् २०२३-०४-२४ देखि सन् २०२३-०७-१८ सम्मका बिभिन्न मितिहरुमा पटक पटक ब्रेक प्याड (BRAKE PADS ), सेभर SHAVER समेतका मालवस्तु पैठारी गरेको देखिन आएको, भन्सार जाँच पास गर्ने क्रममा X-RAY मा खटिने कर्मचारी, जाँचकी कर्मचारी, मूल्यांकन शाखा, प्रमुख भन्सार अधिकृत (उप सचिव), जोखिम ब्यबस्थापन शाखा (WAN) र भन्सार अधिकृत संलग्न रही भन्सार जाँचपास गर्ने प्रकृया रहेको, रेडी ट्रेड प्रा.लि.ले पैठारी गरेको विभिन्न प्रज्ञापन नं. मा उल्लेख भएको सामानहरु मध्ये प्रज्ञापन नं.३५०७९ मिति २०८०।०४।०२ गते बाट पैठारी भएको ब्रेक प्याड (BRAKE PADS) रहेको प्याड हटाई EDX उपकरणबाट परीक्षण गर्दा 99.55% सम्म सुन रहेको देखिन आएकोमा उल्लिखित सुन गाली तौल गर्दा ६० किलो ७१६ ग्राम देखिन आएको प्रस्तुत मुद्दामा त्रि.बि. भन्सारमा ब्रेक प्याड पैठारी भई आए पश्चात सो सुन रहेको मालवस्तु ब्रेक प्याड (BRAKE PADS) जाँचपास गर्ने प्रकृयामा हाल पक्राउ परी हिरासतमा रहेको भन्सार अधिकृत सन्तोष चन्द, जाँचकी खरिदार कुमार ढकाल र X-RAY मा सरोज श्रेष्ठ बाहेक मूल्यांकन शाखामा अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यबस्थापन शाखा (WAN) मा अधिकृत पदमा पुष्पा जोशी र नायब सुब्बा पदमा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा श्रीधर टण्डन (उप सचिव) संलग्न रही उल्लेखित सुन रहेको मालवस्तु जाँचपास गरी Exit नोट समेत दिई भन्सारबाट बाहिर निस्केको अवस्थामा सुन रहेको ब्रेक प्याडहरु बरामद भएको देखिन आएको, प्रतिवादी अधिकृत सन्तोष चन्दले अधिकार प्राप्त अधिकारी समक्ष बयानको क्रममा भन्सार जाँचपास प्रकृयामा मूल्यांकन शाखामा कार्यरत अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यवस्थापन शाखा (WAN) मा कार्यरत अधिकृत पुष्पा जोशी र नायब सुब्बा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत (उप सचिव) श्रीधर टण्डन समेत संलग्नता रहेको भनी खुलाई लेखाई दिएको, त्रि.वि.भन्सार विभागको पत्रबाट मूल्यांकन शाखामा कार्यरत अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यबस्थापन शाखा (WAN) मा कार्यरत अधिकृत पुष्पा जोशी र नायब सुब्बा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत (उप सचिव) श्रीधर टण्डन प्रकृयामा संलग्न रहेको भनी पत्र प्राप्त हुन आएबाट प्रतिवादीहरुले सुन रहेको ब्रेक प्याड X-RAY गर्ने क्रममा कैफियत देखिन आएको, Red Channel बाट आएको मालवस्तु पुन: X-Ray गर्ने, भौतिक रुपमा एक/एक गरेर भौतिक परीक्षण समेत गरी मालवस्तुको एकिन गरी उपलब्ध कागजात, बिलबिजक, मालवस्तुको मूल्यको स्व-घोषणा, ब्राण्ड, उत्पती मुलुक, साईज, गुणस्तर लगायतका बिबरणको आधारमा चेकजाँच गर्नु पर्ने सोबाट समेत एकिन नभएमा भन्सार विभागमा रहेको ल्याबमा परीक्षण गराई एकिन गरी मालवस्तु जाँचपास गर्नु पर्नेमा सो बिधी र प्रकृया समेत पुरा नगरी पक्राउ प्रतिवादीहरुसँग मिलेमतो गरेको देखिन आएकोले त्रिभुवन विमानस्थल, भन्सार कार्यालयमा कार्यरत रहेका प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत उप सचिव श्रीधर टण्डन, मूल्यांकन शाखामा अधिकृत गणेश पौडेल, अधिकृत पदमा कार्यरत रहेका पुष्पा जोशी, नायव सुव्वा पदमा कार्यरत रहेको कमल परियार र नायब सुब्बा बिरेन्द्र नेपाली समेत उपर कानुन बमोजिम अनुसन्धान हुन भन्ने समेत व्यहोराको प्रतिवेदन।

ङ) **प्र.नि. बिष्णु प्रदिप बस्यालको प्रतिवेदन**:

राजस्व अनुसन्धान विभागको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्कराज राई समेत भएको अबैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा तत्काल पक्राउ परी आएका प्रतिवादीहरु

हर्कराज राई र तिब्बतियन मुलका भारतिय नागरिक टासि भन्ने थुप्तिन छिरिङले हङकङबाट नेपालमा ल्याईएको रेडि ट्रेड प्रा.लि. समेतका बिभिन्न कम्पनीका ब्रेक सु समेतका मालबस्तुहरु भित्र अवैध सुन छिपाई भन्सार जाँचपास गरिसके पश्चात बिभिन्न स्थानमा भएका गोदाममा राखि सो गोदामबाट ब्रेक सु समेतका मालबस्तुहरु का.जि.टोखामा भएको सुन गाल्ने मेसिन समेत भएको गोदाममा लगि ती मालबस्तुबाट सुन निकाली तौल र आकार बनाई सो सुन बिक्री गर्ने समेतका ब्यस्थापनको लागि प्रतिवादी हर्कराज राईले सम्झौता गरी का.जि.बालुवाटार स्थित सोलुसन टुर्स एण्ड ट्राभन्स प्रा.लि.का संचालक केशब श्रेष्ठसंग भाडामा लिएको भनी प्रारम्भिक सोधपुछको क्रममा बताएकोले उक्त सोलुसन टुर्स एण्ड ट्राभन्स प्रा.लि.का संचालक केशब श्रेष्ठसंग बुझ्दा ह्वावाद ईलेक्ट्रोनिक सप्लायर्सका संचालक  हर्कराज राईले  आफ्नो नाम उल्लेख गरी  सन २०२२ डिसेम्बर १ मा बाग्मती BAB ५९८९ नं. को डष्टर गाडि, सन २०२३ फेब्रुअरी १०  मा बा १६ च १७७१ नं.को ब्रेजा गाडि र २०२३ अप्रिल १ मा बा १६ च ९३०० नं. को क्रेटा गाडि भाडामा लिएको, गाडि भाडामा दिनु पूर्व सबै गाडिमा GPS TRACKER RECORDING राखेको र सो GPS RECORDING समेत अनुसन्धान अधिकृतलाई दिएको भनी गाडि भाडा सम्झौता समेत पेश गरेको देखिएको, उक्त गाडिहरु हर्कराज राईले सम्झौता गरी लिए पछी टासी भन्ने थुप्तिन छिरिङ्गले चाईनिज नागरिक ALEX भन्ने YAO PUCHENG, STEPS भन्ने LI. NENGKAI, ALI OR LI भन्ने LI, WEN –T SUNG  ,  र SAUTEN भन्ने DING SHENGNFAसमेतलाई प्रयोग गर्न दिएको र निजहरुले गाडि अवैध सुन ब्यवस्थापनमा गर्न प्रयोग गरेको भनी सोधपुछका क्रममा बताएकोले सो गाडिहरुमा जडान भएको GPS TRACKER RECORDको बिश्लेषण गर्दा उक्त गाडिहरु चाईनिज नागरिकहरु ALEX भन्ने YAO PUCHENG, STEPS भन्ने LI. NENGKAI, ALI OR LI भन्ने LI, WEN –T SUNG  र SAUTEN भन्ने DING SHENGNFA ले रेडि ट्रेड प्रा.लि.समेतका कम्पनीले हङकङबाट नेपाल पैठारी भई आएका ब्रेक सु समेतका मालबस्तुमा छिपाई राखेको अवैध सुन विभिन्न स्थानमा भएको गोदामबाट जिल्ला काठमाडौं टोखा नगरपालिका वडा नं. २ मा रहेको चाईनिज नागरिक Dou Chuanjun (Passport No: EG3871313) ले भाडामा लिएको जग्गामा रहेको टहरामा लगि सुनलाई पगालि निश्चित आकार दिई तौल र साईज मिलाई बिक्री गर्ने समेतका प्रयोजनमा प्रयोग भएको देखिएको, उक्त गाडिहरु उल्लिखित प्रतिवादीहरुले प्रयोग गर्ने गरेको भनी बुझिएका मानिस बिपना लामा, अशोक क्षेत्री समेतले मानिसको फोटो समेत सनाखत गरी कागज गरेको, सो गाडिहरु गएको बिभिन्न स्थानको  CCTV Footage समेत संकलन गरी सो को विश्लेषण गरी हेर्दा उल्लिखित चाईनिज नागरिकहरुले उक्त गाडिहरु प्रयोग गरी अवैध सुन राखेको बिभिन्न गोदाममा आबत जावत गरी ठमेल स्थित भियना होटेलको कम्पाउण्ड भित्र रहेको ईलिभेट लाउन्ज एण्ड क्वल ( KTV) मा समेत गई सो क्लबका संचालन  गर्ने भनिएका चाईनिज नागरिक WEN T SUNG र MI –TIAN संग भेटघाट गरी प्रत्यक्ष रुपमा संलग्न भई, योजना र बिस्तारित तयारीका साथ अवैध सुन पैठारीमा संलग्नता रहेको देखिन आएकोले निज चाईनिज नागरिकहरु मिली विदेश हङकङवाट नेपालको AIRPORT को बाटो प्रयोग गरी भारतीय बजार समेतमा सुनको व्यापार गर्ने योजना बनाई, टासि भन्ने थुप्तिन छिरिङ्ग, दावा छिरिङ्ग, हर्कराज राई र चाईनिज राहदानी नं. .E 94446558 भएका LIN ZE QIANG समेतलाई परिचालन गरी संगठित रुपमा अबैध सुन पैठारी गर्ने कार्यमा संलग्न रहेका उल्लिखित चाईनिज नागरिकहरुलाई पनि पक्राउ गरी अनुसन्धान गर्नु पर्ने देखिएकोले निजहरुको खोजतलास गर्दै जाँदा वारदात

पश्चात निज प्रतिवादीहरु जिल्ला ललितपुर ललितपुर महानगरपालिका वडा नं.२३ धापाखेलमा रहेको डाउन टाउन अपार्टमेन्टमा MI –TIAN ले दुईवटा अपार्टमेन्ट भाडामा लिई सो मध्ये B Blockको ६०८ मा चाईनिज नागरिक WEN T SUNG र MI –TIAN र B Block को ३०९मा ROGER or STEPS भन्ने LI. NENGKAI र SAUTEN भन्ने DING SHENGNFA लुकि छिपी बसेको भन्ने खुल्न आएकोले निज प्रतिवादीहरु फेला पारी नियन्त्रमा लिई नजहरु बस्ने कोठा तथा शरिरको खानतलासी गर्दा प्रतिवादी MI–TIAN को साथबाट मोवाईलहरु, राहदानी र नगद रु.१,५०,०१०।-(एक लाख पचास हजार दश) फेला परेको, प्रतिवादी WEN YONG को साथबाट मोबाईल -१, STEPS भन्ने LI. NENGKAI को साथबाट मोवाईल, नगद रु.१,१८,०००।-(एक लाख अठार हजार), सोनाम लामा काभ्रेपलान्चोक ना.प्र.नं.३०३०४२-२२५४ उल्लेख भएको राहदानी नं.१२५८९४५६को जिल्ला प्रशासन कार्यालय काभ्रेपलान्चोकवाट जारी भएको देखिने सक्कल राहदानी थान-१ (एक) र चाईनिज नागरिक SAUTEN भन्ने DING,SHENG FA मोवाईल तथा निजको फोटो रहेको राम लामा काभ्रेपलान्चोक ना.प्र.नं.३०३०४१-२२५४उल्लेख भएको राहदानी नं.१२५८९४५७को जिल्ला प्रशासन कार्यालय काभ्रेपलान्चोकवाट जारी भएको देखिने सक्कल राहदानी फेला परेकोले सो मोवाईल तथा राहदानीहरुको रितपूर्वक खानतलासी बरामदी गरी बरामदी मुचुल्का सहित प्रस्तुत कसूर अपराधमा संलग्न रहेका निम्न प्रतिवादीहरुलाई तत्काल पक्राउ नगरेको चाईनिज नागरिक भएकोले भागी फरार हुने, प्रमाण नष्ट गर्न सक्ने, अन्य प्रतिवादीहरुलाई भगाउन सक्ने भएकोले जरुरी पक्राउ पुर्जी दिई राहदानी नं. EF 4184484 बाहकMI –TIAN, राहदानी नं. EA8572733,WEN YONG, राहदानी नं. : EE7295222 बाहकSTEPS भन्ने LI. NENGKAI, राहदानी नं. EE7295379 बाहक SAUTEN भन्ने DING ,SHENG FA पक्राउ गरी निजहरु उपर संगठित अपराध निवारण ऐन, २०७० र प्रचलित कानुन बमोजिम समेत अनुसन्धान गरी पाउन भन्ने प्रहरी निरीक्षक बिष्णु प्रदिप बस्याल **समेतको प्रहरी प्रतिबेदन**

**च) प्र.ना.उ धर्मराज भण्डारीको प्रतिवेदन:**

हङकङबाट नेपालमा ल्याईएको रेडि ट्रेड प्रा.लि. समेतका बिभिन्न कम्पनीका ब्रेक शु समेतका मालवस्तुहरु भित्र अवैध सुन छिपाई भन्सार जाँचपास गरिसके पश्चात बिभिन्न स्थानमा भएका गोदाममा राखि सो गोदामबाट ब्रेक सु समेतका मालवस्तुहरु का.जि.टोखामा भएको सुन गाल्ने मेसिन समेत भएको गोदाममा लगि ती मालवस्तुबाट सुन निकाली तौल र आकार बनाई सो सुन बिक्री गर्ने समेतका अपराधीक कार्यमा प्रयोग हुने सुन गाल्ने मेशिन चाईनाबाट दावा छिरिङले भने बमोजिम किशोर बस्नेतले पैठारी गरेको भनी बुझिएको मानिस बिक्रम चन्दले कागज गरि दिएको, साथै निज प्रतिवादी किशोर बस्नेतले प्रयोग गर्ने मोवाईल नम्वर ९८४०००६१७१ र दावा छिरिङले प्रयोग गर्ने मोवाईल नम्बर ९७६१७००००० विच सम्पर्क स्थापित भएको देखिन आएको सोही मेशिन प्रयोग गरी अवैध रुपमा ब्रेक शु समेतका मालवस्तुहरु भित्र सुन लुकाई छिपाई ल्याएको सुन गाली बिभिन्न तौल र आकार बनाई विक्री वित्तरण गर्ने कार्यमा संलग्नता पुष्टि हुन आएको हुँदा निज किशोर बस्नेतलाई पक्राउ गरी संगठित अपराध निवारण ऐन, २०७० बमोजिम कारवाही गरीपाँउ भन्ने समेत व्यहोराको प्रतिवेदन रहेको ।

**छ) प्र.ब.ना.नि. रवि घिमिरेको प्रतिवेदन:**

हङकङबाट Air cargo मार्फत ईलेक्ट्रिक मालवस्तु, सेभर, घडी, अटोपार्टस (ब्रेक सु) लगायतका मालवस्तुहरुमा लुकाई छिपाई नेपालमा पैठारी गर्ने क्रममा ६०.७१६ के.जि. सुन वरामद भएको अवैध सुन

पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको क्रममा पक्राउ परी आएको प्रतिवादी ALEX भन्ने YAO PUCHENG ले सोधपुछको क्रममा अवैध रुपमा मालवस्तु भित्र लुकाई छिपाई ल्याएको सुन पगाली १ के.जि.,२ के.जि. समेतका SIZE का सुनका बिष्कुट समेत बनाई पटक पटक मोवाईल ९८४७२६५३१५ नं.को मोवाईल प्रयोग गर्ने सुमन खरेललाई दिएको भनी खुलाएकोमा निज सुमन खरेलले वारदातको क्रममा IMEI :353828103502578 भएको IPHONE 11 मा ९८४७२६५३१५ नं. को मोवाईल प्रयोग गर्ने गरेको देखिन आएको, निज सुमन खरेल वारदात पश्चात फरार रही हाल भारतीय नम्वर मोवाईल नं.+918116796035 प्रयोग गरेको समेत खुल्न आएको, निज सुमन खरेलले प्रयोग गर्ने मोवाईल नं. ९८४७२६५३१५ र ALEX भन्ने YAO PUCHENG ले प्रयोग गरेको मोवाईल नं. ९८२०२२०८२९ को नं. विच सम्पर्क स्थापित भएको समेत देखिन आएबाट अवैध रुपमा ब्रेक शु समेतका मालवस्तुहरु भित्र सुन लुकाई छिपाई ल्याएको सुन गाली बिभिन्न तौल र आकार बनाए पश्चात विक्री वितरण गर्ने कार्यमा सुमन खरेलको संलग्नता पुष्टि हुन आएको हुदा निज सुमन खरेललाई पक्राउ गरी संगठित अपराध निवारण ऐन, २०७० बमोजिम अनुसन्धान गरी पाउ भन्ने समेत व्यहोराको प्रतिवेदन।

**ज) प्र.ब.ना.नि. रवि घिमिरेको प्रतिवेदन :**

राजस्व अनुसन्धान विभागको पत्र जाहेरीले बादी नेपाल सरकार प्रतिबादी दिलिप भुजेल समेतका व्यक्तिहरुको नाममा कम्पनीहरु खडा गरि हङकङबाट Air cargo मार्फत ईलेक्ट्रिक मालवस्तु, सेभर, घडी, अटोपार्टस (ब्रेक शु) लगायतका मालवस्तुहरुमा लुकाई छिपाई नेपालमा पैठारी गर्ने क्रममा ६०.७१६ के.जि. सुन वरामद भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको क्रममा पक्राउ परी आएको प्रतिवादी सुमन खरेलको सोधपुछको क्रममा ALEX भन्ने YAO PUCHENG सँग लिएको सुन जिल्ला बारा कलैया वस्ने मोवाईल नं. ९८४५०३७३५१ र मोवाईल नं.९८२८१३९५३१ प्रयोग गर्ने शिव सरार्फलाई बिक्री गरेको भनी खुलाएको, निज प्रतिवादी सुमन खरेलले प्रयोग गरेको मोवाईल नं. ९८४७२६५३१५ र निज शिव सरार्फले प्रयोग गर्ने मोवाईल नं. ९८४५०३७३५१ नं. मा १२० पटक फोन सम्पर्क भएको र शिव सरार्फले प्रयोग गर्ने मोवाईल नं. ९८२८१३९५३१ नं. को मोवाईलमा ३१ पटक फोन सम्पर्क स्थापित भएको समेत देखिन आएबाट अवैध रुपमा ब्रेक शु समेतका मालवस्तुहरु भित्र सुन लुकाई छिपाई ल्याएको सुन गाली बिभिन्न तौल र आकार बनाए पश्चात सो सुन शिव प्रसाद सरार्फले खरिद गरेको देखिन आएबाट अबैध सुनको कारोवारमा निज शिव सरार्फको संलग्नता रहेको पुष्टि हुन आएको हुँदा निज शिव प्रसाद सरार्फलाई पक्राउ गरी संगठित अपराध निवारण ऐन,२०७० बमोजिम अनुसन्धान गरी पाउ भन्ने समेत व्यहोराको प्रतिवेदन।

**झ) प्र.उ. संजय सिंह थापाको प्रतिवेदन :**

राजस्व अनुसन्धान विभागको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्कराज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा राजस्व अनुसन्धान विभागबाट मिति २०८०।०४।०२ गते त्रि.वि.अन्तराष्ट्रिय भन्सार कार्यालय सानो गौचरको गेट अगाडिबाट हङकङबाट रेडि ट्रेड प्रा.लि.को नाममा नेपालमा पैठारी भई आएको ८ कार्टुन अटो पार्टस ब्रेक प्याड बरामद गरी परीक्षण गर्दा सुन फेला परेकोले उक्त सुन छिपाएको ब्रेक प्याडलाई सुरक्षित राख्नको लागि नेपाल राष्ट्र बैंक, टक्सार विभाग थापाथलीमा पठाएको र उक्त टक्सार विभागबाट सुन छुट्याई तौल गर्नको लागि सुन छिपाएका ८ कार्टुन ब्रेक प्याड खोली हेर्दा प्रति एक कार्टुन भित्र सानो साईजको १० वटा प्याकेट रहेको (८×१०×४=३२०) , सो सानो

प्याकेट भित्र २ वटा सानो र २ वटा ठूलो साईजका गरी दुई सेट ब्रेक प्याड रहेको, ती सवै ८ कार्टुन ब्रेक प्याडहरु खोली ठूलो साईजका ब्रेक प्याड छुट्याई हेर्दा १६० वटा रहेकोमा ती ठूलो साईजका ब्रेक प्याडको परीक्षण गर्दा सुन फेला नपरेको र सानो साईजको १६० वटा ब्रेक प्याडमा सुन फेला परेकोले सोमा भएका क्लिप तथा रवरको भागलाई हटाई सुन पगाल्ने मेशिनमा राखि पगाल्दा जम्मा १६० सानो साईजको ब्रेक प्याडमा ६० किलो ७१६ ग्राम शुद्ध सुन रहेको भनी नेपाल राष्ट्र बैंक, टक्सार विभागबाट तयार भएको मुचुल्का तथा च.नं.०९ मिति २०८०।०४।३० गतेको पत्रबाट देखिन आएको।

उल्लिखित मुद्दाको अनुसन्धानको सिलसिलामा उक्त रेडि ट्रेस प्रा.लि. को नाममा हालसम्म प्राप्त भएका ब्रेक प्याडको प्रज्ञापन पत्रहरु हेर्दा जम्मा ११८० सेट ब्रेक प्याड नेपालमा पैठारी भई आएको भन्सार कार्यालय गौचरको च.नं.२२ मिति २०८०।०४।२६ गतेको पत्र समेतबाट देखिएको साथै का.जि.का.म.न.पा.वडा नं. १६ सोह्रखुट्टेमा प्रकाश महर्जनको सटर / गोदामको खानतलासी गर्दा खोलिएको अवस्थामा ६६ कार्टुन ब्रेक प्याड फेला परेको राजस्व अनुसन्धान विभागबाट मिति २०८०।०४।१० गते गरिएको खानतलासी बरामदी मुचुल्काबाट देखिएको।

सो ६६ कार्टुन ब्रेक प्याडहरु खोली हेर्दा ६५ कार्टुनमा प्रति एक कार्टुनमा १० वटा सानो साईजको १० प्याकेट रहेको र बाँकी एक कार्टुनमा सानो साईजको ७ प्याकेट रहेको र सोही काटुनमा खुल्ला रुपमा ४८ वटा ठूलो साईजको ब्रेक प्याड रहेको देखिएको, यसरी उल्लेखित ६५ कार्टुन मध्ये १० कार्टुनमा भएको ब्रेक प्याडहरुमा हेर्दा जम्मा उक्त ब्रेक प्याडहरु हेर्दा १० कार्टुनमा रहेको १०० वटा सानो साईजको प्याकेटमा ४०० वटा ठूलो साईजको ब्रेक प्याडहरु र खुल्ला ४८ वटा गरी जम्मा ४४८ बटा अर्थात २२४ सेट ठूलो साईजको ब्रेक प्याडहरु रहेको र ती ब्रेक प्याडहरु यथास्थितमा रहि परीक्षण गर्दा सुन रहेको समेत नदेखिएको साथै बाँकी ब्रेक प्याडहरुको कार्टुन हेर्दा सानो साईजका ब्रेक प्याड फुटाई बिच भागमा हुने भागलाई निकाली क्लिप तथा रवर प्याड मात्र देखिएको।

उल्लिखित तथ्यहरुलाई हेर्दा रेडि ट्रेड प्रा.लि.को नाममा हङकङबाट नेपालमा जम्मा ११८० सेट अर्थात एक सेट भन्नाले एक सानो र एक ठूलो ब्रेक प्याड हुने र मिति २०८०।०४।०२ गते बरामद भएको ८ कार्टुनमा पनि एक सानो र एक ठूलो साईजको गरी एक सेट मिलाई ल्याएको देखिएको साथै का.जि. का.म.न.पा.वडा नं. १६ सोह्रखुट्टेमा बरामद भएको ब्रेक प्याडमा पनि सानो साईजको ब्रेक प्याडको विचको भाग निकालिएको देखिएकोले प्रतिवादीहरुले सोही सानो साईजको ब्रेक प्याडमा सुन लुकाई छिपाई ल्याएको देखिन आएकोले नेपालमा पैठारी भई आएको ११८० सेट ब्रेक प्याडहरु मध्ये २२४ सेटमा सुन नभएको र बाकी ९५६ सेटमा सुन लुकाई छिपाई ल्याएको अवस्थामा मिति २०८०।०४।०२ गते बरामद भएको १६० सेटका ठूलो साईजको ब्रेक प्याडको साईज र बाँकी ७९६ सेटमा भएको ठूलो साईजको ब्रेक प्याडको साईज समान साईजको देखिएको साथै सानो साईजको ब्रेक प्याडको विचको भागबाट फुटाई क्लिप र रवर प्याड मात्रै रहेकोले यी ६६ कार्टुनमा पनि सानो साईजको ब्रेक प्याडमा सुन लुकाई छिपाई नेपालमा पैठारी गरेको स्पष्ट देखिन आएकोले १६० सेट सानो साईजको ब्रेक प्याडहरु पगाल्दा ६० किलो ७१६ ग्राम देखिएकोले प्रति सानो साईजको एक थान ब्रेक प्याडको तौल ००.३७९ ग्राम ४७५ मिलि ग्राम भएकोले सोही अनुसार ७९६ सेटको सानो साईजको ब्रेक प्याडको जम्मा तौल ३०२ किलो ०६२ ग्राम हुने देखिन्छ।

यसरी, प्रतिवादी हर्कराज राई समेतले रेडि ट्रेड प्रा.लि.को नाममा हङकङबाट नेपाल पैठारी भई आएको ११८० सेट ब्रेक प्याड मध्ये ९५६ सेट ब्रेक प्याडमा अवैध रुपमा सुन लुकाई छिपाई ल्याएको र सो ९५६ सेट ब्रेक प्याडमा जम्मा ३६२ किलो ७७८ ग्राम हुने देखिएकोले उक्त सुन बरामद भएको मिति २०८०।०४।०२ गतेको नेपाल राष्ट्र बैंकबाट कायम भएको मूल्य प्रति तोला रु.१,१२,५००।– का दरले जम्मा मूल्य रु.३,५०,०२,१६,५५२।३१ (तीन अर्व पचास करोड दुई लाख सोह्र हजार पांच सय बाउन्न रुपैया एकतिस पैसा) हुने देखिएकोले सोही अनुसार मूल्य कायम गरी पाँउ भन्ने प्रतिवेदन ।

**ञ) प्रहरी प्रतिवेदन:**

राजस्व अनुसन्धान विभागको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्कराज राई समेत भएको अबैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ परी आएका प्रतिवादीहरु हर्कराज राई र तिब्बतियन मुलका भारतिय नागरिक टासि भन्ने थुप्तिन छिरिङले हङकङबाट नेपालमा ईलेक्ट्रीक समेतका DEVICEहरुमा लुकाई छपाई अबैधरुपमा सुन पैठारी गर्ने उदेश्यका साथ प्रतिवादी दिलिप भुजेलको नाममा रेडी ट्रेड प्रा.लि. नामक कम्पनी खडा गरेको, सोही कम्पनी मार्फत बिभिन्न मितिहरुमा सन् २०२३-०४-२४ देखि सन् २०२३-०७-१८ सम्म पटक पटक ब्रेक प्याड (BRAKE PADS ), सेभर SHAVER समेतका मालवस्तु पैठारी गरेको देखिन आएको, भन्सार जाँच पास गर्ने क्रममा X-RAYमा खटिने कर्मचारी, जाँचकी कर्मचारी, मुल्यांकन शाखा, प्रमुख भन्सार अधिकृत (उप सचिव),जोखिम ब्यबस्थापन शाखा (WAN) र भन्सार अधिकृत संलग्न रही भन्सार जाँचपास गर्ने प्रकृया रहेको, रेडी ट्रेड प्रा.लि.ले पैठारी गरेको विभिन्न प्रज्ञापन नं. मा उल्लेख भएको सामानहरु मध्ये प्रज्ञापन नं.३५०७९ मिति २०८०।०४।०२गते बाट पैठारी भएको ब्रेक प्याड (BRAKE PADS)रहेको प्याड हटाई EDX उपकरणबाट परीक्षण गर्दा 99.55% सम्म सुन रहेको देखिन आएकोमा उल्लिखित सुन गाली तौल गर्दा ६०किलो ७१६ ग्राम देखिन आएको प्रस्तुत मुद्दामा त्रि.बि. भन्सारमा ब्रेक प्याड पैठारी भई आएपश्चात सो सुन रहेको मालवस्तु ब्रेक प्याड (BRAKE PADS) जाँचपास गर्ने प्रकृयामा हाल पक्राउ परी हिरासतमा रहेको भन्सार अधिकृत सन्तोष चन्द, जाँचकी खरिदार कुमार ढकाल र X-RAY मा सरोज श्रेष्ठ बाहेक मुल्यांकन शाखामा अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली,जोखिम ब्यबस्थापन शाखा (WAN) मा अधिकृत पदमा पुष्पा जोशी र नायब सुब्बा पदमा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा श्रीधर टण्डन (उप सचिव) संलग्न रही उल्लेखित सुन रहेको मालबस्तु जाँचपास गरी Exitनोट समेत दिई भन्सारबाट बाहिर निस्केको अवस्थामा सुन रहेको ब्रेक प्याडहरु बरामद भएको देखिन आएको,प्रतिवादी अधिकृत सन्तोष चन्दले अधिकार प्राप्त अधिकारी समक्ष बयानको क्रममा भन्सार जाँचपास प्रकृयामा मुल्यांकन शाखामा कार्यरत अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यबस्थापन शाखा (WAN) मा कार्यरत अधिकृत पुष्पा जोशी र नायब सुब्बा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत श्रीधर टण्डन (उप सचिव)समेत संलग्नता रहेको भनी खुलाई लेखाई दिएको, त्रि.वि.भन्सार विभागको पत्रवाट मुल्यांकन शाखामा कार्यरत अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यबस्थापन शाखा (WAN) मा कार्यरत अधिकृत पुष्पा जोशी र नायब सुब्बा कमल परियार र प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत श्रीधर टण्डन (उप सचिव)प्रकृयामा संलग्न रहेको भनी पत्र प्राप्त हुन आएबाट प्रतिवादीहरुले सुन रहेको ब्रेक प्याड X-RAY गर्ने क्रममा कैफियत देखिन आएको, Red Channel बाट आएको मालवस्तु पुन: X-Ray गर्ने, भौतिक रुपमा एक/एक गरेर भौतिक परीक्षण समेत गरी

मालबस्तुको एकिन गरी उपलब्ध कागजात,बिलबिजक,मालबस्तुको मुल्यको स्व-घोषणा, ब्राण्ड,उत्पती मुलुक,साईज, गुणस्तर लगायतका बिबरणको आधारमा चेकजाँच गर्नु पर्ने सोवाट समेत एकिन नभएमा भन्सार विभागमा रहेको ल्याबमा परीक्षण गराई एकिन गरी मालवस्तु जाँचपास गर्नु पर्नेमा सो बिधी र प्रकृया समेत पुरा नगरी मालबस्तु पास गरेको देखिन आएकोमा त्रिभुवन विमानस्थल,भन्सार कार्यालयमा कार्यरत रहेका प्रमुख भन्सार अधिकृतको रुपमा कार्यरत उप सचिव श्रीधर टण्डन,त्रिभुवन विमानस्थल,भन्सार कार्यालयमा कार्यरत रहेका मुल्यांकन शाखामा अधिकृत गणेश पौडेल,जिल्ला कैलाली धनगढी -५ स्थायी वतन भई हाल त्रिभुवन विमानस्थल,भन्सार कार्यालय जोखिम व्यवस्थापन शाखामा शाखा अधिकृत पदमा कार्यरत रहेका श्री पुष्पा जोशी,जिल्ला स्याङ्गजा चापाकोट-१० स्थायी वतन भई हाल त्रिभुवन विमानस्थल,भन्सार कार्यालय जोखिम व्यवस्थापन शाखामा नायव सुव्वा पदमा कार्यरत रहेको श्री कमल परियार र त्रिभुवन विमानस्थल, भन्सार कार्यालयमा कार्यरत रहेका नायब सुब्बा बिरेन्द्र नेपाली उपर अनुसन्धान हुन प्रतिवेदन पेश भएको देखिन आएको प्रहरी प्रतिवेदन।

ट) **प्र.ब.ना.नि. सुर्य भक्त श्रेष्ठको प्रतिवेदन :**

**Ready Trade Pvt. Ltd. को नाममा २०८० 18) ०२/०४/July (2023आएको Consignment मा Gold Smuggling को LINK CHART विश्लेषण गरिएको विवरण-:**

१) हङकङमा रहेको Ms LI र MR LIN द्धारा Dorgguan Sutu Transportation Co., Jiangmen Fengtong Transportation Service Co. र Talmud Co. Ltd Shipper Company हरू समेतसंग समन्वय गरी कच्चा सुनलाई Break Pad, हरूमा राखी मालबस्तु बनाई Karry On Global Logistics Ltd मार्फत 18th July 2023 मा Carthay Pacific Air Flight No. CS 603 मा नेपाल पठाएको।

२) Karry On Global Logistics Ltd. Hong Kong क्याथे प्यासेफिक एअरलाईन्स मार्फत मालबस्तु त्रिभुवन बिमानस्थल भन्सार कार्यालयमा पठाई Air Bill समेतका कागजातहरू Trans Global Services Pvt. Ltd. Nepal मा पठाएको।

३) चिनिया नागरिक Alex भन्ने Yao Pucheng तथा Roger भन्ने Li Nengkhai मार्फत टासी भन्ने थुप्तिन छिरिङलाई हङकङबाट मालबस्तु नेपाल आएको जानकारी गराउने, निज टासी भन्ने थुप्तिन छिरिङले पनि सो कुरा हर्कराज राईलाई जानकारी गराउने साथै Trans Global Services Pvt. Ltd. Nepal ले Air Bill समेतका कागजातहरु प्राप्त भए पश्चात Ready Trade Pvt. Ltd. को मालवस्तु आएको भनी हर्कराज राई तथा राजेन्द्र कुमार राईलाई खवर गरी राजेन्द्र कुमार राईल Trans Global Services Pvt. Ltd. Nepal सम्पर्क गर्ने र भन्सार एजेन्टको काम गर्ने राजेन्द्र कुमार राई गई समन्वय गरी पारिवहान गोदाममा रहेको मालबस्तु छुटाउन Trans Global Services Pvt. Ltd. Nepal का संञ्चालक कृष्ण कुमार श्रेष्ठले Delivery Order तयार गरी पठाएको।

४) उक्त Delivery Order को आधारमा भन्सार ऐजेन्ट यादव पराजुलीको तर्फबाट राजेन्द्र कुमार राईले प्रज्ञापन पत्रमा मालवस्तुको मूल्य, परिमाण, लाग्ने कर समेतको विवरण सहित घोषणा गरी भन्सार एजेन्टको दस्तखत गरी राजेन्द्र राईले भन्सार कार्यालयमा रहेको सिष्टम ASYCUDA मार्फत कार्यालयमा पेश गरेको।

५) उक्त प्रज्ञापन पत्र सहितका आवश्यक कागजातहरु नेपाल पारवहन तथा गोदाम व्यवस्था क.लि.मा समेत पेश गरे पछी भन्सार कार्यालयको मालवस्तु X-ray मा आउने र सो मालवस्तु भन्सार कार्यालयका टेलिफोन

अपरेटर पद भएका सरोज श्रेष्ठले X-ray गरेकोमा निजले प्रज्ञापन पत्र नं. M35079 मा आएका ८ वटा कार्टुन मध्ये ४ वटा काटुनमा  RC (Re-Check) लेखेको, सो प्रज्ञापन पत्रको भौतिक जाँचमा खटिएका खरिदार कुमार ढकालले ८ वटा काटुन मध्ये तिनवटा कार्टुनमा मात्र भौतिक चेकजाँच गरेको, सो प्रज्ञापन पत्रको भौतिक जाँच गर्ने अधिकृत भन्सार अधिकृत सन्तोष चन्द समेतले  कुनै कैफियत नदेखाएको।

- मुल्यांकन शाखामा कार्यरत अधिकृत गणेश पौडेल र नायब सुब्बा बिरेन्द्र नेपाली मुल्याङकन कार्यमा खटिएको तर निजहरुले कागजपत्र अनुसार मूल्य ठिक रहेको भनी सिफारिस गरेको कुनै कैफियत नदेखाएको।
- भौतिक निरीक्षण र  मुल्यांकनबाट सिफारिस भए पश्चात प्रमुख भन्सार अधिकृत  (उप सचिव)श्रीधर टण्डनले  सिष्टमबाट Green  गरी सदर गरेको।
- प्रमुख भन्सार अधिकृत (उप सचिव) श्रीधर टण्डन GREEN गरे पश्चात भन्सार अधिकृत सन्तोष चन्दले प्रज्ञापन पत्र अनुसार राजेन्द्र कुमार राईलाई  राजस्व तिर्न लगाएको र निज राजेन्द्र कुमार राईले राजस्व तिरी सके पश्चात भन्सार अधिकृत सन्तोष चन्द Exit Note जारी गरी खरिदार कुमार ढकालले Exit Note सहित मालवस्तु जिम्मा लगाएको।
- प्रज्ञापन पत्र नं.M35079 भन्सार जाँचपास भएको दिन अर्थात मिति २०८०/०४/०२ गते भन्सार कार्यालयको जोखिम व्यबस्थापन (LAN) डिउटीमा खटिएका अधिकृत पुष्पा जोशी र नायब सुब्बा कमल परियारले भन्सार एजेन्टले प्रज्ञापन पत्र सिष्टममा दर्ता गरे देखी अन्तिम सिष्टममा Green नभएसम्म पेश तथा तयार भएका सम्पूर्ण कागजपत्रहरू अध्ययन नगरेको, सो जाँचपास प्रकृयामा कुनै कैफियत नदेखाएको साथै मालवस्तुको सम्वन्धमा कुनै नुसन्धान विश्लोषण नगरेको।

६) उक्त प्रज्ञापन पत्र नं.M35079 बाट भन्सार जाँचपास भएका मालवस्तुको EXIT NOTE जारी भए पश्चात राजेन्द्र कुमार राईले बा २ ज २३२४ नम्बरको ट्याक्सी भाडामा लिई सो ट्याक्सीमा लोड गरी भन्सार गेटबाट निकाली गन्तब्य तर्फ लाने क्रममा सिनामंगल स्थित सडकमा राजस्व अनुसन्धान विभागको टोलिले बा २ ज २३२४ नम्बरको ट्याक्सीबाट मालबस्तु वरामद गरेको, मिति २०८०/०४/०३ गते हर्क राज राईले चालक अशोक लामा र  राजेन्द्र कुमार राईलाई मालबस्तु लिन पठाउदा नियन्त्रणमा लिई अनुसन्धान भएको।

७) प्रतिवादी विदेशी चाईनिज नागरीकहरूको निर्देशनमा थुप्तिन छिरिङले हर्क राज राईलाई नेपालको विभिन्न व्यक्तिहरूको नाममा सुन पैठारी गर्न कम्पनीहरू खडा गरी रेडी ट्रेड प्रा.लि. दिलिप बुझेलको नाममा दर्ता गराएको।  कम्पनी खडा गरी टासी भन्ने थुप्तिन छिरिङ र हर्कराज राईले सटरहरू समेत रेखदेख गर्ने गरेको। विदेशी चाईनिज नागरिकहरूले  टासी भन्ने थुप्तिन छिरिङलाई हङकङबाट सामान आएको छ भनि भन्सारमा गएर सामान ल्याउन लगाउने गरेको।

८) टासी भन्ने थुप्तिन छिरिङ र हर्क राज राईले रेखदेख गरेको विभिन्न स्थानको गोदाम सटरबाट दुई समूह द्धारा गाडीहरू प्रयोग गरी सामान लोड गरी Yao Pucheng (Alex) को समूह Ding SHENG Fa (Sauten), Wen Tsung Li (Ali) र  Rojar भन्ने Nengkai Li (Steffs (ले टोखा स्थित सुन गाल्ने गरेको गोदाम र SAM @ Zhong Jingchuan को समूह Zhong Jianhua ,Lin Zeqiang ,Bing भन्ने र HUA भन्नेले लाजिम्पाट स्थित सुन गाल्ने गोदाममा लगी सुन गाल्ने गरेको। सो कार्यमा चाईनिज नागरिक Daojin Wang समेत Feng Cheng Lin ,Peng Lingfeng र XIN@ Peng Yongxin ले Yao Pucheng (Alex) र

SAM @ Zhong Jingchuan लाई समन्वय गरी कार्य गर्ने गरेको । जिम्मी भन्ने कर्मा शेर्पाले चाईनिज नागरिकहरूलाई Yao Pucheng (Alex) ,Ding SHENG Fa (Sauten) ,Wen Tsung Li )Ali) , Nengkai Li (Steffs) र बेलजियम नागरि Dawa Tsering समेतलाई नेपाली नागरिकता र राहदानी बनाउन सहयोग गरेको ।

९) नेपालमा सुन लिने व्यक्तिले Hong Kong मा MS Li र MR LIN लाई सुन लिने कुरा भए पछी लिने व्यक्तिले नेपाली नोटको फोटो we chat मार्फत टोकनको रूपमा Hong Kong मा पठाउने र सो टोकन Hong Kong को MS Li र MR LIN समेतले we chat मार्फत नेपालमा Zhong Jingchuan, Alex समेतलाई नोटको फोटोको टोकन पठाउने र सो फोटो टोकन अनुसारको नेपालमा समय निर्धारण गरी नेपालमा सुन लिनेले टोकन अनुसारको सक्कल नोट लागि सुन लेनदेन गर्ने गरेको ।

१०) Yao Pucheng (Alex) ले बारा बस्ने सुमन खरेललाई सुन बिक्री गरेको र सुमन खरेलबाट शिव कुमार सर्राफ, भोला साह सुनार, भारतिय नागरिक सन्दिप भन्ने र भारतिय नागरिक बम्बैया भन्ने समेतलाई सुन वितरण भएको KTV संञ्चालन गर्ने चिनिया नागरिक Wen Yang , Mi-Tian , Hotel Vienna संञ्चालन गर्ने बेल्जियम नागरिक Dawa Tsering र नेपाली किशोर बस्नेतले समेत नेपालमा अवैध सुन पैठारी गर्ने समूहलाई सहोयोग गर्ने गरेको ।

**ठ) प्रहरी बरिष्ठ उपरीक्षक दिनेश कुमार आचार्यको प्रतिवेदन:**

प्रस्तुत मुद्दाको अनुसन्धानको क्रममा थप अनुसन्धानको लागि हङकङ राष्ट्रमा खटिई गई सम्बन्धीत राष्ट्रका प्रहरी अधिकारीहरु समेत सँग आवश्यक समन्वय गरी ई.सं. २०२३/०७/१८ मा CATHEY PACIFIC को जहाजबाट एयर कार्गो मार्फत हंगकंग बाट काठमाण्डौं सम्म सुनको अवैध पैठारी गर्ने क्रममा सामान पठाउन प्रयोग गरिएका स्थानहरुको स्थलगत भ्रमण, नेपालमा सामान पठाउने कार्गो कम्पनीका जिम्मेवार कर्मचारीसँग गरिएको छलफल, घटनामा संलग्न आशंका गरिएको नेपाली नागरिक रोशन लिम्बु संग गरिएको सोधपुछ समेतबाट खुल्न आएका तथ्यहरु :-

- प्रथम पटक २०२२.७.३० मा रोशन लिम्बु ले Carry on global logistics मार्फत ६६केजि motorcycles parts भनि Rubina traders Bhotahiti ले पाउने गरि सामान पठाएको, सामान पठाउनको लागि we chat group create गरेको, उक्त group मा रोशन लिम्बु र Carry on globals company का ३ जना members रहेको रोशन लिम्बुको मार्फत एकपटक मात्र सामान पठाएको ।
- उक्त सामान नेपाल पठाएको अन्दाजि ३ महिना १५ दिन पछि एकजना Ms Li भन्ने महिला ले contact गरि आफुलाई नेपालीले सम्पर्क नंबर दिएको र auto parts नेपाल पठाउनु छ भनि कुराकानी गरेको ।
- सामान पठाउदा sender र receiver कोनाम मिस लि ले नै पठाउने गरेको, address china को भए पनि सबै सामान हङकङको बिभिन्न स्थान बाट pick up गर्ने गरेको ।
- २०२२ Nov-Dec शुरुवात तिर Tau ma Tei Canton road 618-632, Dickson Building 1/F room C बाट auto parts and electronics watch पठाउने गरेको ।
- Parkes Street no 1-11, Parkes Mansion बाट अधिकांश समय auto parts पठाउने गरेको ।
- Tsuen Wan Chai Wan Kwok street Golden Bear Industrial Centre 1/Fl room G बाट अधिकांश समय wrapping machine पठाउने गरेको ।

- सामान pick up गर्न को लागि Karry on Global Company ले sub contractor Well King Transportation Company लाइ जिम्मा दिएको
- सामान pick up गरेपछि Transportation company ले सिधै Airport पुर्याउने गरेको ।
- Ms Li को Wechatgroup मा Ms li र 2 जना Mr Lin, र ४ जना Karry on Globals को member रहेको ।
- Mr Lin कोwhatsapp number 91057069, □Ms Li को whatsapp number 54390521 रहेको ।
- Karry on Global Company ले पाउनु पर्ने सम्पुर्ण रकम cash bank deposit हुने गरेको ।

अवैध रुपमा सुन तस्करी गर्ने प्रयोजनार्थ निम्न उल्लेखित ठेगाना बाट नेपालमा सामान पठाएको देखिएपनि वास्तविकतामा हङकङबाट Ms Li ( whatsapp number 54390521) रMr Lin (whatsapp number 91057069) ले Karry on Global Logistics मार्फत सुन नेपालमा पठाएको देखिएको सो सामान पठाउन Tau ma TeiCanton road 618-632, Dickson Building 1/F room C, Parkes Street no 1-11, Parkes Mansion and Tsuen Wan Chai Wan Kwok street Golden Bear Industrial Centre 1/Fl room G समेतका स्थानहरु प्रयोग भएका भन्ने प्रतिवेदनबाट खुल्न आएको ।

**२. खानतलासी वरामदी मुचुल्काहरु :**

**क धापाखेल स्थित डाउनटाउन अपार्टमेन्टको B-608 नं मा गरीएको खानतलासी वरामदी मुचुल्का:**

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं. २३ धापाखेलमा रहेको डाउनटाउन अपार्टमेन्टको B-608 नं.को योगेश्वर रोमखामीको फ्याटमा फ्याट लिई वसेका राहदानी नं.EA8572733 YANG WEN & राहदानी नं.EF 4184484 MI TIAN को साथवाट नगद रु.१,५०,०१०।- (एक लाख पचास हजार दश हजार) मोवाईलहरु समेत वरामद भएको देखिन आएको ।

**ख धापाखेलस्थित डाउनटाउन अपार्टमेन्टको B-309 मा गरीएको खानतलासी वरामदी मुचुल्का:-**

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं. २३ धापाखेलमा रहेको डाउनटाउन अपार्टमेन्टको B-309 को फ्याटमा LI NANGKAI र DING SHENGFA बस्ने गरेकोमा सो फ्याटमा रहेको दराजमा रहेको अवस्थामा नगद रू.१,१८,०००।-(एक लाख अठार हजार) DING SHENGFA को साथवाट मोवाईल थान २(दुई), LI NANGKAI साथवाट मोवाईल थान २(दुई), CHINE UNION PAY लेखिएको एटिएम कार्ड थान १(एक), UNITED ARAB EMIRATES को सवारी चालक अनुमती पत्र, UNITED ARAB EMIRATESको RESIDENT IDENTIFY CARD, ALCLCAL LICENCE – DUBAI लेखिएको कार्ड थान १(एक), DELL COMPANY को ल्याटप थान-१, DING SHENGFA को राहदानी थान १(एक), LI NANGKAIको राहदानीको छांयाकपी थान १(एक), LI NANGKAI को फोटो भएको जिल्ला प्रशासन कार्यालय काभ्पलान्चोकवाट जारी भएको देखिने सोनाम लामाको नाममा जारी भएको राहदानी नं. १२५८९४५६ भएको नेपाली राहदानी थान (एक), DING SHENGFA को फोटो रहेको जिल्ला प्रशासन कार्यालय काभ्पलान्चोकवाट जारी भएको देखिने राहदानी नंङ १२५८९४५७ भएको नेपाली राहदानी थान १(एक) समेत वरामद भएको खानतलासी वरामदी मुचुल्का ।

**ग** **खानतलासी वरामदी मुचुल्का** :

जिल्ला काठमाडौ बुढानिलकण्ठ नगरपालिका वडा नं.०४ स्थितमा रहेको प्रतिवादी हर्कराज राईको घरमा रहेको अवस्थामा भुजेल ईलेक्ट्रोनिक्स प्रा.लि.ले पैठारी गरेको OKEM लेखिएको INVERTER WELDER थान १(एक) वरामद भएको देखिन आएको।

**घ** **खानतलासी वरामदी मुचुल्का:**

जिल्ला काठमाडौं टोखा नगरपालिका वडा नं.२ मा रहेको प्रतिवादी SEUTIN भन्ने DINGSHE FA समेत वस्ने गरेको घरको प्रतिवादी LI NENGAKI को कोठावाट IFLYTKA लेखिएको ETL SALAT लेखिएको 899711221274913 7713 नम्वर भएको Mobile Device/Language Translater थान १(एक) बरामद भएको।

**ङ** **खानतलासी वरामदी मुचुल्का:-**

जिल्ला काठमाडौ बुढानिलकण्ठ नगरपालिका वडा नं.७ डडुवामा रहेको राहदानी नं. EJ6632698 बाहक LING FANG PENG ले भाडामा लिएको घर खानतलासी गर्दा BS-BSHRINK PACKAING MACHINE मेशिन थान १८, ELECTRIC LOUDSPEAKER थान १३६ वरामद भएको देखिन आएको।

**च** **खानतलासी वरामदी मुचुल्का** : -

जिल्ला काठमाडौ. बुढानिलकण्ठ नगरपालिका वडा नं. ३ रुद्रेश्वर मार्गमा रहेको चाईनिज नागरिक YONGXIN PENG ले भाडामा लिएको घरमा खानतलासी गर्दा सो घरमा रहेको अवस्थामा ब्रेक प्याडहरु समेत वरामद भएको देखिन आएको।

**छ** **खानतलासी वरामदी मुचुल्का :-**

प्रतिवादी राजेन्द्र कुमार राईको घर खानतलासी गर्दा रेडीट्रेड प्रा.लि.को प्रमाण पत्र,प्यान दर्ता प्रमाण पत्र समेतका कागजातहरु, हर्कराज राईको नाममो Air bill, राजस्व विभागमा पेश गर्न तयार गरेको निवेदन,दिलिप भुजेलको नामको सक्कल नागरिकता, चेक बुक थान १ समेत र सुन गाल्न प्रयोग भएको वरामद भएको देखिन आएको ।

**ज** **खानतलासी वरामदी मुचुल्का :-**

जिल्ला काठमाडौं का.म.पा. वडा नं.२ मा रहेको घर नं.३०३/३४ को घर CHINE GUANGDONG राहदानी नं. EJ5053290 बाहक ZHONG JIANHUA, CHINE GUANGDONG राहदानी नं. EJ5053396 बाहक ZHONG JINGCHUAN र CHINE GUANGDONG राहदानी नं. E94446558 बाहक LIN ZEQING बस्ने गरेकोमा सो घर खानतलासी गर्दा सुन गाल्ने क्रममा प्रयोग हुने चिम्टाहरु थान ३, सुन राख्न प्रयोग गरीएको सेफ थान १, MR1007-1336M1007MTMC3800-212052 लेखिएको अवस्थामा रहेको ब्रेक प्याडको सानो भागको किल्प थान ८१ (एकासी) समेत बरामद भएको, प्रतिवादी LIN ZEQING को CHINE SOUTHERN को टिकट थान १, सुन पगाली SIZE & SHAPE दिनको लागी प्रयोग हुने फलामको साँचो थान ३, inc-co लेखिएको TOOL BOX थान १, सुन गाल्नको लागी प्रयोग गरिएको तार, कालो लागेको अवस्थामा रहेको पन्जाहरु, सेतो रङको विचमा प्वाल भएको किटको प्लेटहरु बरामद भएको, घरको पहिलो तलामा तीनवाट बेडरुम रहेको, दोस्रोतलामा रहेको

कोठामा तारहरु रहेकोमा सो कोठासगै रहेको बाथरुममा सुन पगाने क्रममा धुवाले कालो भएको र भुईमा समेत कालो लेदो फालेको अवस्थामा रहेको सोही घरमा ब्रेक पयाड समेतमा लुकाई छिपाई ल्याएको सुन पगाली बेचविखन गरीएको भन्ने घटनास्थल रहेको।

**झ** **खानतलासी वरामदी मुचुल्काः**

जिल्ला काठमाडौं का.म.पा. वडा नं.०२ मा रहेको सुरेन्द्रमान डंगोलले निर्माण गरेको सटरमा SHRINK PACHAINGMACHINE- १४ थान, SAVER-२८३० थान, ELECTRIC WATCH-७४३३ नं.को समेत वरामद भएको देखिन आएको खानतलासी वरामदी मुचुल्का रहेको।

**ञ** **खानतलासी वरामदी मुचुल्का**:

जिल्ला काठमाडौ का.म.पा. वडा नं. ३ पानीपोखरी स्थितमा रहेको COMFORT HOUSING को B BLOCK को प्रतिवादी थुप्तिन छिरिङ 6B-2 फ्याटमा खानतलासी गर्दा जिल्ला प्रशासन कार्यालय काठमाडौबाट जारी भएको देखाईएको जिल्ला काठमाडौं का.म.पा. वडा नं.०६ वस्ने टाण्डुप लामाको छोरा छिरीङ लामाको नाम उल्लेख भएको ना.प्र.न. २७३२०६४-४९२१ भएको सक्कल नागरिकता भेटिएको सो नागरिकतामा बाहकको औठाछाप लगाएको नपाईएको,CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKHANDA-6 KATHMANDU VAT NO: 610199770 भएको बिल थान १,तोङ फाङ ईन्टरनेशनल प्रा.लि.को प्रबन्धपत्र, नियमावली समेतका कागजातहरु, ZHANG YATUAN को बिडिङ पास र त्रि.वि. भन्सार कार्यालयबाट ZHANG YATUAN को सामान जफत निस्सा, DOU JUNXIANUI नामको राहदानी, सानिमा बैंक लि.को SWIFT सम्वन्धि कागजातहरु वरामद भएको देखिन आएको।

**ट** **खानतलासी वरामदी मुचुल्का :**

मिति २०८०।०४।२४ गते जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.४ स्थितमा अमित राज शाक्यको घरमा हर्कराज शाक्य र थुप्तिन छिरिङ् (टाँसी) समेतले भाडामा लिएको सटरमा खानतलासी गर्दा खोलिएको अवस्थामा रहेका काटुनहरु भेटिएको, सो काटुनहरुमा भन्सारको विवरण देखिने स्टिकरहरु हटाएको अवस्थामा रहेको, कुनै Device हरु भित्रमा पाटपुर्जाहरु नरहेको, Device हरु खोलिएको अवस्थामा भेटिएकोमा उल्लेखित Device हरु वरामद भएको।

**ठ** **खानतलासी वरामदी मुचुल्काः-**

जिल्ला काठ का.म.न.पा. वडा नं. २६ सोह्रखुट्टेवाट वरामद भई दाखीला हुन आएकाMAITE BREAK PADS लेखिएको ६६ काटुनहरु मधे २ वटा कार्टुनहरुमा RC लगाएको देखिन आएको,एउटा काटुनमा CATHAY PACIFIC AIRWAYS KOGKTM 3877, Airway bill no: 160 5022 6805 लेखिएको अवस्था रहेको, अर्को काटुनमा Malaysia Airlines KOGKTM 3919 लेखिएको अवस्था रहेको, ६६ काटुनहरुमा प्रत्येक काटुनमा २ (दुई) सेट ब्रेक प्याड हट्ने १०/१० वटा सानो प्याकेटहरु रहेको ति प्याकेटहरु खोल्दा निम्न अनुसार देखिन आएकोमाउल्लेखित ६६ काटुनहरुमा नै प्रतिवादीहरुले अवैध रुपमा सुन लुकाई छिपाई पैठारी गरेको देखिएको।

- ६६ काटुनहरु मध्ये ५५ काटुनहरुमा ५५० वटा सानो प्याकेटहरु रहेकोमा सो प्याकेटहरुमा सानो र ठूलो ब्रेक प्याडहरु रहेकोमा ठूलो ब्रेक प्याडहरु यथास्थितीमा रहेको र सानो ब्रेक प्याडहरु रहेको बिचको बाग झिकी साईडको भाग र सोमा लाग्ने किल्पहरु मात्र रहेको देखिन आएको।
- ६६ काटुनहरु मध्ये१ (एक) काटुनमा ७(सात) वटा प्याकेटमा दुईवटा ठूलोर सानो गरी २८ वटा ब्रेक प्याड रहेकोमा ठूलो ब्रेक प्याड यथास्थितीमा रहेकोमातर सानो ब्रेक प्याडहरु रहेको बिचको भाग झिकी साईडको भाग र सोमा लाग्ने किल्पहरु मात्र रहेको देखिन आएको र सोही काटुनमा ४८ पिस ठूलो ब्रेक प्याड यथास्थितीमा रहेको।
- ६६ काटुनहरु मध्ये १०(दश) काटुनमा प्रत्येकमा १०/१० वटा सानो र ठूलो प्याकेटहरु रहेको सो प्याकेटहरुमा ठूलो साईजको ब्रेक प्याड ४०० (चार सय) वटा यथास्थितीमा रहेको उल्लेखित प्याकेटहरु सानो साईजको ब्रेक प्याड रहेको नदेखिएको।
- खानतलासी वरामदी मुचुल्का:जिल्ला काठमाडौ बुढानिलकण्ठ नगरपालिका वडा नं.३ मा YONGXIN PENG ले भाडामा लिएको घर कोठावाट ३६ वटा ठूलो साईजको ब्रेक प्याड र ४० थान सानो साईजको ब्रेक प्याड रहेको मेशिनगरी पार्टहरु समेत वरामद भएको देखिन आएको।

**३. आवश्यक पत्रहरु:**

**क) त्रिभुवन विमानस्थल भन्सार कार्यालय गौचर काठमाडौंको पत्र:-**

पैठारीकर्ता Ready Trade Pvt.Ltd. र मालवस्तु बोकी ल्याउनेकार्गो कम्पनी ट्रान्स ग्लोवल सर्भिसेस प्रा .लि. बीच भएको सम्झौताको पत्रयस कार्यालयमा नहुने उल्लेख गरेको, Ready Trade Pvt. Ltd. (EXIM Code : 6104779730113NP) ले यस कार्यालयबाट जाँचपास भएका ३५ वटा Consignment का प्रज्ञानपत्र, Invoice, प्याकिङ्ग लिष्ट लागयतका सम्बद्ध कागजातहरुको प्रतिलिपि पठाएको,सुदर्शन गौतम .नं.प्र.ना) .लाई भन्सार एजेण्ट नं (८३२३४४६ को प्रतिनिधिको रुपमा काम गर्नका लागि भन्सार नियमावली, २०६४ को नियम ३७ को उपनियम १२ बमोजिम नियुक्ति गरिएको प्रतिनिधिको नियुक्ति पत्रकोप्रतिलिपि पठाएको देखिन आएको।

राजेन्द्र कुमार राईको सम्बन्धमा भन्सार प्रशासनलाई कुनै किसिमको जानकारी नरहेको भनी उल्लेख गरेको देखिन आएको भन्सार क्षेत्रभित्र प्रवेश गर्ने प्रस्थानविन्दुमा नेपाल उड्डयन प्राधिकरणको कर्मचारी रहने र निजको अनुमती विना कुनै पनि व्यक्ति भन्सार यार्डभित्र प्रवेश गर्न नसक्ने उल्लेख रहेको

**ख) कम्पनी रजिष्ट्रार कार्यालय त्रिपुरेश्वरको पत्र :**

मिति २०७७।०५।२१गतेजिल्ला थवाङ वडा नं.०६ वस्ने मुलमान बुढाको छोरी (ना.प्र.न.४४१०४ रोल्पा) अमला रोक्का र जिल्ला काठमाडौं का.म.पा. वडा नं. २९ वस्ने मोती बहादुर श्रेष्ठको छोरा ना.प्र.नं. २४२/ ०५१/०५२ काठमाडौं मंन्जिल श्रेष्ठको नाममा होटल भियना प्रा.लि.दर्ता रहेको देखिन आएको।

जिल्ला काठमाडौं का.म.पा.वडा नं.०६ वस्ने टाण्डुप लामाको छोरा (ना.प्र.न. २७३२०६४-४९२१काठ) छिरीङ लामाको नाम उल्लेख गरीएको उल्लेखित नागरिकता नं. वाट जिल्ला काठमाडौं का.म.पा. वडा नं.१५ वतन देखाई राहदानी विभागवाट राहदानी नं. १२६२३०४५ मिति २०२२-०१-१६ लिएको देखिन आएको, राहदानी नं. १२६२३०४५ को आधारमा CHE RING LAMAमिति 2022-05-13 Time:20:08:07 मा Departed भएको देखिन आएको।

**ग) <u>जिल्ला प्रशासन कार्यालय काठमाडौंको पत्र :</u>**

चलानी नं.२६६, मिति २०८०।०४।३० गतेको पत्रवाट टान्डुप लामाको छोरा छि-रिङ लामाको नाममा ना.प्र.नं.२७३२०६४-४९२१ यस कार्यालयबाट जारी भएको नदेखिएको भन्ने ब्यहोराको पत्र प्राप्त भएको ।

**घ) <u>राहदानी विभाग त्रिपुरेश्वर काठमाडौंको पत्र :</u>**

चलानी नं.१४१, मिति २०८०।०४।३० गतेको पत्रबाट छि-रिङ लामाको नाममा ना.प्र.नं.२७३२०६४-४९२१ को नाममा राहदानी नं.१२६२३०४५, मिति २०२२ जनवरी १६ भएको राहदानी जारी भएको देखिन आएवाट किर्ते गरी तयार गरेको नागरिकताको आधारमा राहदानी लिएको देखिन आएको।

**ङ) <u>आन्तरिक राजस्व कार्यालय विभागको पत्र</u>** :

स्थायी लेखा नं. ६१०४७७९७३ का करदाता रेडी ट्रेड प्रा.लि.ले बुढानिलकण्ठ नगरपालिका वडा नं. ०४, पासिकोटमा व्यावसायिक ठेगाना राखी मिति २०७१/१२/२१ मा आयात सम्बन्धी कारोवार, निर्यात सम्बन्धी कारोवार, विजुली बत्तिका सामानहरुको खुद्रा विक्री, घरायसी प्रयोजनका विभिन्न सामानहरुको खुद्रा विक्री सम्बन्धी व्यावसायिक कारोवार गर्ने उदेश्यले आन्तरिक राजस्व कार्यालय महाराजगंजमा आय करमा मात्र दर्ता भएको यस विभागको कम्प्यूटर प्रणाली Integrated Tax Systena बाट प्राप्त तथ्याकं बमोजिम देखिन्छ। साथै मूल्य अभिवृद्धि करमा दर्ता हुनुपर्ने हो वा होईन ? भन्ने सम्बन्धमा मूल्य अभिवृद्धि कर नियमावली, २०५३ (संसोधन सहित) को नियम ६(१) मा नियम ३ मा जुनसुकै कुरा लेखिएको भए तापनि ऐनको दफा ९ मा उल्लेख भए वमोजिम विगत बाह्र महिनामा वस्तुको हकमा पचास लाख रुपैयासम्म र वस्तु तथा सेवा मिश्रित कारोवार र सेवाको हकमा बीस लाख रुपैयासम्मको कारोबार गर्ने व्यक्तिले आफ्नो कारोवार दर्ता गराउनु पर्ने छैन ।यसरी कारोबार दर्ता गराउन नपर्ने व्यक्तिले आफ्नो कारोबार स्थलमा वस्तुको हकमा पचास लाख रुपैयासम्म र वस्तु तथा सेवा सेवा मिश्रित कारोबार र सेवाको हकमा बीस लाख रुपैयासम्मको कारोबार मात्र भएकोले दर्ता हुनु नपर्ने भन्ने सूचना सबैले देखे गरी राख्नु पर्नेछ, तर नेपालभित्र कर छुटको कारोबार गर्ने व्यक्तिको आफ्नो उपयोगका लागि आफै पैठारी गर्नेदेखि बाहेक अन्य कुनै पनि व्यक्तिले एक पटकमा दश हजार रुपैया भन्दा वढीको करयोग्य वस्तु पैठारी गर्दा आफ्नो कारोबार दर्ता गराउनु पर्नेछ भन्ने व्यवस्था रहेको हुदाँ उक्त करदाताले एक पटकमा दश हजार रुपैया भन्दा बढीको करयोग्य वस्तु पैठारी गर्दा मूल्य अभिवृद्धि करमा दर्ता गराउनुपर्ने कानूनी व्यवस्था रहेको उल्लेख भएको।

**च) <u>नेपाल बिद्युत प्राधिकरण महाराजगंजको पत्र :</u>**

तोङ फाङ ईन्टरनेशनल प्रा.लि.का संचालक DOU JUNXIANG Passport no. EF5970642, Baqiao Village no.10 TianJin Chine रहेको देखिन आई सो कम्पनीको नाममा जडान भएको बिद्युत मिटरमा निम्न अनुसार बिद्युत खपत गरेको देखिन आएको :

| साल | महिना | खपत Units | साल | महिना | खपत Units |
|---|---|---|---|---|---|
| 2079 | 4 | 8 | 2079 | 5 | 47 |
| 2079 | 6 | 54 | 2079 | 7 | 67 |
| 2079 | 8 | 111 | 2079 | 9 | 94 |
| 2079 | 10 | 123 | 2079 | 11 | 157 |
| 2079 | 12 | 153 | 2080 | 1 | 103 |
| 2080 | 1 | 132 | 2080 | 2 | 155 |
| 2080 | 3 | 263 | 2080 | 4 | 135 |

सोही स्थानमा गार्ड बस्नको लागी बनाएको घरमा लक्ष्मी श्रेष्ठको नाममा मिटर जडान भएको देखिन आएकोमा सो तोङ फाङ ईन्टरनेशनलप्रा.लि.को नाममा रहेको बिद्युत सुन गाल्न मात्र प्रयोग हुने देखिएबाट सबै भन्दा धेरै असार महिना सुन गाल्न प्रयोग गरिएको स्पष्ट हुन आएको ।

**छ)** **एभरेष्ट बैंक लि.को पत्र :**

प्रतिवादी थुप्तिन छिरिङको नाममा रहेको खातामा हाल रु.३,१०,१३,७४९.४० कारोवार गरेको देखिन आएको र हाल रु.५४००७१.५०बैक मौज्दात रहेको देखिन आएको , प्रतिवादी कमल परियारको नाममा रहेको खातामा रु.१०७१४५४६.७०को कारोवार गरेको देखिन आई हाल खातामा रु.१०,०४,४७४.०४बैक मौज्दात रहेको देखिन आएको,प्रतिवादी पुष्पा जोशीको खातामा रु.१०३६५०२९.३३ कारोवार गरेको देखिन आएको हाल खातामा रु.४२२५३५.७१ मौज्दात रहेको देखिन आएको । प्रतिवादी कमल नेपालीको नाममा रहेको ग्लोबल आइएमई बैंक लि. को खाताको रु.७८३९९२.०८ मौज्दात रहेको देखिन आएको।

**ज)** **प्रभु बैक लि.को पत्र**:

भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नाममा रहेको खाता नं. ३४५७०९०६२६४०००१८ को खातामा नेपालमा मालवसस्तु पैठारी गर्ने प्रयोजनको लागी रु.३,००,०००।–(तीन लाख) बैक ग्यारेन्टी जारी भएको देखिन आएकोमा उल्लेखित रोक्का रेहेको देखिन आएको ।

**झ)** **नेपाल राष्ट्र बैंक, मुद्रा व्यवस्थापन विभागको प्रतिवेदन**:

केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगञ्ज परिसरमा रहेको मेशिन सुन गाल्ने ४ के. जी. क्षमताको मेशिन थान १(एक), टोखा स्थित कारखाना/ गोदाममा रहेको सुन गाल्ने-४ के. जी. क्षमताको मेशिन थान ३ (तीन), र सोही गोदाममा सुन गाल्ने-१ के.जी. क्षमताको थान दुई (२) मेशिनहरु र केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगञ्ज परिसरमा सुन गाल्ने - २ के.जी. क्षमताको थान २ (दुई) र बालुवाटारस्थित गोदाममा सुन गाल्ने -२ के.जी. क्षमता थान २ (दुई) मेशिनहरु गरी जम्मा १० थान मेशिनहरु हाम्रो योग्यता र कार्यअनुभवका आधारमा धातुहरु (सुन,चाँदी, तामा आदि) गाल्ने कार्यको लागि प्रयोग हुने Electrical Induction Furnace रहेको भन्ने उ.नि. गुलाब धवल (जि.२३५) समेतको प्रतिवेदन वाट देखिन आएको ।

**ञ)** **राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको पत्र** :

प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङ मिति २०६७।०९।१९ गते वन्यजन्तु गैडाको खाग ओसार प्रसार तथा खरीद बिक्री कुसरमा पक्राउ परी मिति २०७१।०५।२१ गते फैसला हुदा १० (दश) वर्ष कैद र रु. १,००,०००।-(एक लाख) फैसला भएकोमा पुनरावेदन अदालतबाट शुरु फैसला सदर भएकोमा मिति २०७४।०१।१४ गते सर्वोच्च अदालतवाट फैसला हुदा ५ वर्ष कैद र रु. १,००,०००।-(एक लाख) कायम हुने गरी फैसला भएको देखिन आएको ।

**ट)** **नेपाल राष्ट्र बैंक मुद्रा व्यवस्थापन विभाग, टक्सार महाशाखाको पत्र:**

मिति २०८०।०४।३० गतेको चलानी नं.९ को पत्रवाट ब्रेक प्याड समेत सुन रहेको भनिएको सिलबन्दी काटुन वान जम्मा एकमुष्ठ तौल १५५-४६८-००० (कि.ग्रा. ग्राम- मि.ग्रा.) मा रहेको सुन भनिएको धातुको परिमाण यकिन तथा गलान लगायतका कारबाही हाल उक्त मुद्दाको अनुसन्धान गरिरहेको नेपाल प्रहरी प्रधान कार्यालय, केन्द्रीय अनुसन्धान ब्यूरोका प्रतिनिधिको उपस्थितिमा हुने गरी व्यवस्था मिलाउन अनुरोध भएको साथै, श्री नेपाल सरकार, गृह मन्त्रालय, नेपाल प्रहरी प्रधान कार्यालय, केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगञ्ज,

काठमाडीको पत्र संख्या: (२०८०/०८१) मु.द.न.२ ब.न.१३०० मिति २०८०/०४/२८ का पत्रानुसार राजस्व अनुसन्धान विभाग, पुल्चोकको पत्रसाथ टक्सार महाशाखामा पठाइएका सुन प्रतिनिधिहरुको रोहबरमा कानुन बमोजिम गलाउने र परिमाण यकिन गर्ने प्रक्रिया गरी परिमाण यकिन गरी ब्यूरोमा खुलाई पठाई दिई अनुसन्धान कार्यमा सहयोग गरि दिने व्यवस्था गरि दिन हुन अनुरोध भए बमोजिम सुन भनिएको धातुको मिति २०८०/०४/२९ र मिति २०८०/०४/३० गते गरी २(दुई) कार्य दिनमा नेपाल राष्ट्र बैंक नगद सम्बन्धी विनियमावली, २०६३ को विनियम ११ मा भएको व्यवस्था बमोजिम सम्बन्धित कार्यालयहरु एवम् यस बैंकको टक्सार महाशाखा, आन्तरिक लेखापरीक्षण विभाग तथा वित्त व्यवस्थापन विभागका प्रतिनिधिहरूको रोहबरमा सुन रहेको भनिएको सिलबन्दी काटुन थान-८ खोली प्याक सामग्री तथा बेक प्याड लगायत अन्य वस्तुहरु हटाई भौतिक परीक्षण पश्चात् प्रतिनिधिहरूको रोहबरमा सुन भनिएको धातु गलान गर्दा देहाय बमोजिम प्राप्त भएको :

| धातु | गलान अधिको तौल (कालो रङ्ग सहित) | गलानको जर्ती<br>के.जि.-ग्राम.मि.ग्राम | गलान पछिको तौल के.जि.-ग्राम.मि.ग्राम | आस्से तौल | आस्से नमुना पश्चात |
|---|---|---|---|---|---|
| सुन भनिएको धातु | ०६०-७८९-००० | ०००-०७३-००० | ०६०-७१६-००० | ०००-१२२-००० | ०६०-५४९-००० |

यस बैंकमा हस्तान्तरण भई आएको उपरोक्त परिमाण शुद्धता (टंच) नखुलेको धातुको प्रयोगशालामा परीक्षण गरी सोमा गएको जर्ति कटाई बांकी रहेको भनिएको धातुको शिद्धता(टच) अनुसार नेपाल राष्ट्र बैंक खरिद विनियमावलीको,२०७१ को विनियम १३४ बमोजिम नेपालसारकारको आदेशनुसार भुक्तानी पठाईने उल्लेख भई सुन भनिएको धातु बाहेका प्याकिङ्ग सामाग्री तथा ब्रेक प्याड लगायत अन्य वस्तुहरु यस व्यूरोमा पठाएको देखिन आएको।

**ठ)** **<u>भन्सार बिभागको पत्र</u>** :

मिति २०८०।०४।२४ गतेको पत्रवाट EXIME CODE प्रदान गर्दा निकासी पैठारी सङ्केत नम्बर प्रदान गर्ने कार्यविधि, २०७९ को दफा ४ को उपदफा (१) मा मालवस्तु निकासी वा पैठारी वा दुवै कारोबार गर्न चाहनेले तोकिए बमोजिम योग्यता भएको व्यक्तिले भन्सार ऐन, २०६४ को दफा ८९ख बमोजिम निकासी वा पैठारी सङ्केत नम्बर प्राप्त गर्न प्रणालीमा भएको ढाँचामा विवरण प्रविष्टि गरी विद्युतीय माध्यमबाट निवेदन सम्प्रेषण गर्नु पर्ने भन्ने व्यवस्था गरेको छ। साथै सोही कार्यविधिको दफा ४ को उपदफा (१) (ग) मा स्थायी लेखा नम्बर प्रमाणपत्र प्राप्त गरेको र (घ) मा मूल्य अभिवृद्धि कर लाग्ने वस्तु पैठारी गर्नेको हकमा मूल्य अभिवृद्धि कर दर्ता भएको भनी उल्लेख रहेकोमा,उक्त व्यवस्था बमोजिम विभागबाट EXIME CODE प्रदान गर्दा विभागको स्वचालित प्रणालीमा तोकिएका कागजात समेत अपलोड गरी प्रणाली मार्फत नै प्रदान गर्ने गरिएको छ। प्रस्तुत व्यवस्था बमोजिम मू.अ.कर लाग्ने मालवस्तु पैठारी गर्ने भएमा पैठारीकर्ता मूल्य अभिवृद्धि करमा दर्ता हुनु पर्दछ। उक्त EXIME CODE प्रदान गर्दा यस विभागको शाखा अधिकृत ललिता ज्ञवाली (फोन नम्बर ९८५११४३५३५) को देखिएको भन्ने व्यहोराको पत्र रहेको।

**क)** मिति २०८०/०४/०२ गते त्रिभुवन विमानस्थल भन्सार कार्यालयको रेडि ट्रेड प्रा.लि.ले पैठारी गरेको ब्रेक प्याड समेतका मालवस्तुहरु नियन्त्रणमा लिई अनुसन्धान गर्दा ब्रेक प्याडमा रहने धातु सुनको बनाई ल्याएको विषय

हाल अनुसन्धानको क्रममा रहेको र सोही सन्दर्भमा अन्दाजी २० दिन अगाडि सोही प्रकृतिको मालवस्तु Break pads र Shaver भन्सार एजेन्ट नं. १०३१ की रुक्मिनां सुब्बा गौरादह-१ झापाले त्रिभुवन विमानस्थल भन्सार कार्यालयबाट आफ्नो एजेन्ट नं. प्रयोग गरी जाँचपास गरेको देखिएको देखिन आएको,

**ख)** जिल्ला चितवन,रत्ननगर नगरपालिका वडा नं.१२निपनीचोक स्थायी ठेगाना भएका सुदर्शन गौतमले सोही प्रकृतिको मालवस्तु Break pads र Shaver त्रिभुवन विमानस्थल भन्सार कार्यालयबाट आफ्नो भन्सार एजेन्ट नं. ४४६ प्रयोग गरी जाँचपास गरेको देखिन आएको,

**ग)** जिल्ला सिन्धुपाल्चोक,बलेफी गाउँपालिका वडा नं.०७ खाडीचौर स्थायी ठेगाना भएका भन्सार एजेन्ट नं. ७८२ का यादव पराजुलीले प्रज्ञापन पत्र नं.३५०७९ मिति २०८०/०४/०२गतेको मालवस्तु Break Pad त्रिभुवन विमानस्थल भन्सार कार्यालयबाट आफ्नो एजेन्ट नं. प्रयोग गरी जाँचपास गरेको ,

**घ)** आन्तरिक राजस्व कार्यालय महाराजगंजको पत्रवाट प्राप्त विवरणवाट रेडी ट्रेड प्रा.लि.ले जिल्ला काठमाडौं बुढानिलकण्ठ नगरपालिका वडा नं.०४ मा  बस्ने रत्न कुमारी भण्डारीको घरमा मासिक रुपमा रु.६०,०००।- (साठी हजार) तिर्ने गरी घर बहाल सम्झौता पेश गरेको देखिन आएको,सो कागजातहरुमा  दिलिप भुजेलको सम्पर्क नं.९७४६२७४८४५उल्लेख भएको देखिन आएको, कम्पनीको नियमावली अधिवक्ता गंगा देवी श्रेष्ठले (९८६५५९७४३२) तयार गरेको देखिन आएको, साक्षीको महलमा जिल्ला उदयपुर साउने गाविस वडा नं. ९ वस्ने नागरिकता नं. ६३४९२ नं. का भिम बहादुर मगर रहेको देखिन आएको, रेडी ट्रेड प्रा.लि.ले भन्सार विभागवाट EXIM CODE लिनको लागी संचालक दिलिप भुजेलले जिल्ला उदयपुर साउने घर भएका भिभ बहादुर मगरलाई प्रतिनिधी बनाई पठाएको देखिन आएको, राष्ट्रिय बाणिज्य बैंक लि.मा रु.३,००,०००।- (तीन लाख) धरौटीमा राखेको देखिन आएको,

**ङ)** रेडि ट्रेड प्रा.लि. दर्ता गर्न दिलिप भुजेलले धादिङ जिल्ला गजुरी गा.पा. वडा नं.३ बस्ने नारायण प्रजालाई अख्तियारी दिइ पठाइएको, कम्पनीको User Name र Password लिँदाका बखत फोन नं. ९७४९४८२०५५ र इमेल – readytrade@outlook.com उल्लेख गरेको भन्ने कम्पनी रजिष्ट्रारको पत्रबाट देखिन आएकोमा ९७४९४८२०५५नं.को मोवाईल प्रतिवादी दिलिप भुजेलले प्रयोग गरेको देखिन आएको,

**च)** Solution Tours and Travels का संचालक केशव श्रेष्ठ र WHAD ELECTRIC SUPPlIERS का संचालक उल्लेख गरी हर्क राज राई (ना.प्र. न.३३३४/१०५७१) बिच 10 Febuary 2023मा  बा १६ च १७७१को SUZUKI BREZZA, 01April 2023 मा बा १६ च ९३०० को Hyundai Creta गाडी र BAB 5989को DUSTER गाडी 01 December2022 मा भाडामा लिएको देखिन आएकोमा उल्लेखित गाडीहरुमा GPS जडान गरिएको भन्ने केशव श्रेष्ठको कागजवाट देखिन आएकोमा GPS को विवरण मिसिल संलग्न रहेको।

**छ)** **ईन्टरपोल शाखाको पत्र :**

प्रस्तुत मुद्दामा INTERPOLHong Kong China ले Customs & Excise Department Hong Kong वाट जवाफ प्राप्त भए पश्चात पठाईने भन्ने व्यहोराको ईमेल रहेको ।

**ज)** **NCELLको SUBSCRIPTION FORM:**

प्रतिवादीहरु ALEX भन्ने YAHOO PUCHING समेतको नाममा नागरिकता र राहदानी समेत बनाईदिने जिमी भन्ने कर्म शर्पाको नाममा  मोवाईल नं.९८१४०७६८८३ वित्तरण गरिएको भन्ने देखिन आएको,निजको

नाममा जिल्ला प्रशासन कार्यालय काठमाडौंवाट मिति २०५८।११।१५ गते ना.प्र.न. २७ / २२६१/६२८१८ उल्लेख भएको नागरिकता प्रमाण पत्र पेश भएको देखिन आएको ।

**झ) MAHJONG ENTERTAINMENT PVT LTD को पत्र :**

DING SHENFA ले रु.२०,०००।–(वीस हजार) , YAO PUCHENG को समेत रु. २०,०००।-(वीस हजार) चिप्स खरिद गरेको देखिन आएको ।

**ञ) आन्तरिक राजस्व विभागको पत्र:**

विभागको Integrated Tax system (ITS) वाट छुन्गुक ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. (स्थायी लेखा नं. ६१०१९९७७०), भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. (स्थायी लेखा नं. ६१०३१८५४४),ह्यादा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. (स्थायी लेखा नं. ६१०३२५०४३),पवटी ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. (स्थायी लेखा नं. ६१०३६१४७४), दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.(स्थायी लेखा नं. ६१०३९७७६७) रेडी ट्रेड प्रा.लि. स्थायी लेखा नं. ६१०४७७९७७३)मु.अ. करमा दर्ता नभएको भन्ने खुली आएको देखिन आएको र सरिता सप्लायर्स ईलेक्ट्रिक सप्लायर्स म्याटमा दर्ता रहेको देखिन आएको तर कारोवार नभएको ।

**ट) उद्योग विभागको पत्र :**

| सि.न. | नाम | राहदानी | देश | विदेशी लगानी स्वीकृती नं. / मिति | कम्पनी दर्ता नं मिति |
|---|---|---|---|---|---|
| 1. | LIN, ZEQIANG | E 94446558 | **CHINA** | **5747/2023-05-09** | **312325/79/080 2080-01-27** |
| 2. | TANG, XIAOXUE | EJ 3297844 | **CHINA** | **5745/2023-05-09** | **छैन्** |
| 3. | DING ,SHENG FA | EE7295379 | **CHINA** | अभिलेखमा नभेटिएको | **छैन्** |
| 4. | YAO ,PU CHENG | EB0563022 | **CHINA** | अभिलेखमा नभेटिएको | **छैन्** |
| 5. | ZHONG,JIAN HUN | EJ5053290 | **CHINA** | अभिलेखमा नभेटिएको | **छैन्** |
| 6. | DOU CHUANJUN | EG3871313 | **CHINA** | अभिलेखमा नभेटिएको | **छैन्** |
| 7. | DOU JUNXIANG | EF5970642 | **CHINA** | अभिलेखमा नभेटिएको | **छैन्** |
| 8. | WEN YONG | EA8572733 | **CHINA** | **5762/2023-05-18** | **312906/79/080 2080-02-05** |
| 9. | CHEN WEICUNG | ED 1666176 | **CHINA** | **5697/2023-03-10** | **309345//079/080 2078-12-06** |
| 10. | LI, WEN –TSUNG | 360387660 | **TAIWAN** | **5837/2023-06-28** | **छैन्** |
| 11. | LI. NENGKI | EE7295222 | **CHINA** | **5837/2023-06-28** | **छैन्** |
| 12. | MI -TIAN | EF 4184484 | **CHINA** | **5868 /2023-07-19** | **315534/080/81 2080-04-07** |
| 13. | ZHONG,JING CHUAN | **EG 5053396** | **CHINA** | **5745 /2023-04-28** | **छैन्** |
| 14. | WANG DAOJIN | **ED 7991343** | **CHINA** | **5447/2079-02-16** | **छैन्** |

विदेशी लगानी स्वीकृति गर्न Passport copy, Financial Creadibility Certificate, Project Proposal Joint Venture Agreement (दुई वा दुईभन्दा बढी व्यक्तिको हकमा), शुरु विदेशी लगानी स्वीकृतिको लागि कम्पनी दर्ता गर्नु पर्दैन, कम्पनी दर्ता भैसकेका विदेशी लगानीकर्ताले कम्पनी दर्ता गरेको

कागजातहरु- कम्पनी दर्ता प्रमाणपत्र, कम्पनीको पत्र र नियमावलीविदेशी लगानी स्वीकृति पश्चात नेपाल राष्ट्र बैंकबाट अनुमति लिई बैंकिङ च्यानलबाट नेपालमा लगानी बापतको रकम भित्रिएपछि सो लगानीको नेपाल राष्ट्र बैंकमा लेखाकंन गर्नुपर्ने प्रावधान रहेको भन्ने उल्लेख भएको देखिन आएको ।

ठ) **जिल्ला प्रशासन कार्यालयको पत्र** :

कर्म शेर्पाको नाममा जारी भएको भनिएको ना.प्र.नं.२७-२२६१-६२८१८ काठमाडौको नागरिकता प्रमाण पत्रको अभिलेख फेला नपरेको भन्ने व्यहोराको पत्र रहेको ।

ड) **भन्सार विभागको पत्र :-**

रसुवा भन्सार कार्यालयवाट सन् २०२३/०६ /०६ मा Tamang Pranju Traders Pvt ltd Kathamandu Gokarneshwor Mun, Nayayan Prakash Lama ले खरीद गरेको मालवस्तुहरुसगै प्रज्ञापन पत्र नं. M२६५७ वाट GOLD MELT MACHINE (2SETS) आएको देखिन आएको ।

ढ) **नाडा अटिमोवाईल्सको पत्र**:-

वरामद भई आएको MAITE BREAK PADहरु HODA ACCORD CAR मा प्रयोग हुने वस्तु भएको उक्त ब्रान्सको कार नेपालमा अत्यन्तै न्यून मात्रामा रहेको, उल्लेखित DISK BREAK PADS को लागी यस एशोसिएशन अन्तगर्त नेपालमा कुनै आधिकारीक पैठारीकर्ता नरहेको उल्लेख भएको ।

ण) **राहदानी विभागको पत्र:**

जिल्ला काभ्रपलान्चोक नवोबुद्ध वडा नं.११ बस्ने मोवाईल नं.९९६३९१३३३१ प्रयोग गर्ने अमला रोक्काको श्रीमान उल्लेख भएको जन्म मिति १९८४-०४-२७ भएको नागरिकता नं.३०-०१-७४-११८६८ (जारी मिति : २०७४-०९-२०) निमा तामाङको नाममा राहदानी नं. १०७४२५५० र १०८०५८०८ जारी भएको देखिन आएकोमा राहदानी लिनको लागी पेश गरिएको निवेदनमा प्रतिवादी बेल्जिम राददानी नं. GA4597364 बेल्जियम दावा छिरिङ्ग (DAWA TSERING)को फोटो रहेको देखिन आएको, जिल्ला काभ्रपलान्चोक माझीफेदा -१ वस्ने कर्मा लामाको छोरा सोनाम लामाको नाममा राहदानी नं. १२५८९४५६ जारी भएकोमा सो राहदानी लिन पेश गरेको निवेदनमा चाईनिज राहदानी नं.EE7295379 बाहक प्रतिवादी DING,SHENFA (SAUTEN)को फोटो रहेको देखिन आएको, जिल्ला काभ्रपलान्चोक माझीफेदा -१ वस्ने हरी लामाको छोरा राम लामाको नाममा राहदानी नं.१२५८९४५७ जारी भएकोमा सो राहदानी लिन पेश गरेको निवेदनमा चाईनिज राहदानी नं.EE7295222 बाहक प्रतिवादी LI. NENGKAI (STEPS & ROGER) को फोटो रहेको देखिन आएको ।

त) **नेपाल राष्ट्र बैंकको पत्र :**

मिति २०८०।०४।३० गते गलान भएको ६०.७१६ के.जि. सुन सिलवन्दी गरी ढुकुटीमा राखिएको देखिन आएको ।

थ) **WALDO DYNESTY को पत्र :**

प्रतिवादी YAO PUCHEINGको खाता नं. १५४२५ को खातामा ७ करोड २८ लाख ११ हजार छ सय पचास, Li Wen Tsung को खाता नं. ११६२० मा २० लाख १० हजार रकम जम्मा गरेको देखिन आए ।

४. **सनाखत कागजहरु:**

क) **काली सिंह ठकुरीले गरि दिएको सनाखत कागज:**

चाईनिज नागरिक STEPS भन्ने LI NENGKAI लाई देखि हेरे चिने, निज समेत उषा गिरीको नाममा रहेको घर मेरो रेखदेखमा रहेकोमा सो घरमा मासिक रु.१,५०,०००।–(एक लाख पचास हजार) लिई STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING, SHENG FA समेत वस्ने गरेका थिए ।निजले कहिले मलाई नम्बर याद नभएको कुच्चिएको अवस्थामा रहेको सेतो रङको गाडी, र खैरो रङको गाडी समेत चलाउने गरेको देखेको हो।निज STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING, SHENG FA बिपना नाम गरेकी नेपाली १ जना केटी वस्ने गरेको समेत विगत ३ महिना पहिले देखी वस्ने गरेको र र हिन्दी भाषा बोल्ने हाल नाम थाहा भएको थुप्तिन छिरिङ र अन्य चाईनिज २/३ जना समेत आउने गरेका थिए, निजहरु सुन सहित मानिस पक्राउ परे पश्चात घरमा आउन छोडी भाग्दा घरमा रहेको एसि र बत्ति समेत समेत बन्द नगरी भागेको थिए, किचनमा खानाहरु समेत यसै छोडेको कारण कुहिएर दुर्गन्ध समेत आएको थियो, यस व्यूरोवाट खटिएको टोली खानतलासी गर्दा निजहरुले प्रयोग गर्ने सिम रहेको मोवाईल जस्तो देखिने मोवाईल समेत वरामद भएको हो, निजहरु मेरो रेखदेखमा रहेको घरवाट भागेपछि ललितपुरमा कोठा लिई वस्ने गरेको र निजहरुले नेपाली नागरिकता समेत बनाएको भन्ने समाचारमा समेत सुनी थाहा पाएको हुँ, निजहरु घरमा रहदा वस्दा निजहरुको कपडाहरु धोई दिने, किचन सफा गरी दिने निजहरुले प्रयोग गर्ने गाडी हिलो हिलो हुने भएकोले पखाली दिने समेत गरेको थिए । मैले SAUTEN भन्ने DING, SHENG FA देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेको भनी काली सिंह ठकुरीले गरि दिएको सनाखत कागज ।

ख) **काली सिंह ठकुरीले गरि दिएको सनाखत कागज:**

जिल्ला काठमाडौं टोखा नगरपालिका वडा नं. ०५ मा रहेको उषा गिरीको नाममा रहेको घरमा वस्ने चाईनिज नागरिक STEPS भन्ने LI NENGKAI लाई देखि हेरे चिने, निज समेत उषा गिरीको नाममा रहेको घरमा मासिक रु.१,५०,०००।–(एक लाख पचास हजार) लिई STEPS भन्ने LI NENGKAI SAUTEN भन्ने DING, SHENG FA समेत वस्ने गरेका थिए । निजले कहिले मलाई नम्बर याद नभएको कुच्चिएको अवस्थामा रहेको सेतो रङको गाडी, खैरो रङको गाडीसमेत चलाउने गरेको देखेको हो। निज STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING, SHENG FA बिपना नाम गरेकी नेपाली १ जना केटी वस्ने गरेको समेत विगत ३ महिना पहिले देखी वस्ने गरेको र र हिन्दी भाषा बोल्ने हाल नाम थाहा भएको थुप्तिन छिरिङ र अन्य चाईनिज २/३ जना समेत आउने गरेका थिए, निजहरु सुन सहित मानिस पक्राउ परे पश्चात घरमा आउन छोडी भाग्दा घरमा रहेको एसि र बत्ति समेत समेत बन्द नगरी भागेको थिए, किचनमा खानाहरु समेत यसै छोडेको कारण कुहिएर दुर्गन्ध समेत आएको थियो, यस व्यूरोवाट खटिएको टोली खानतलासी गर्दा निजहरुले प्रयोग गर्ने सिम रहेको मोवाईल जस्तो देखिने मोवाईल समेत वरामद भएको हो, निजहरु मेरो रेखदेखमा रहेको घरवाट भागेपछि ललितपुरमा कोठा लिई वस्ने गरेको र निजहरुले नेपाली नागरिकता समेत बनाएको भन्ने समाचारमा समेत सुनी थाहा पाएको हुँ, निजहरु घरमा रहदा वस्दा निजहरुको कपडाहरु धोई दिने, किचन सफा गरी दिने निजहरुले प्रयोग गर्ने गाडी हिलो हिलो हुने भएकोले पखाली दिने समेत गरेको थिए । मैले STEPS भन्ने LI NENGKAI देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेको भनी काली सिंह ठकुरीले गरि दिएको सनाखत कागज ।

ग) **<u>उर्किन छिरिङ्ग लामाले गरिदिएको सनाखत कागज:</u>**

राजस्व अनुसन्धान विभाग हरिहर भवन ललितपुरको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्क राज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ प्रतिवादी चाईनिज नागरिक राहदानी नं. EE7295222भएका STEPS भन्ने LI NENGKAIलाई देखि हेरे चिने, निज समेतका चाईनिज नागरिक म सुरक्षा गार्ड रहेको का.जि.टोखा न.पा.वडा नं. २ स्थितमा चाईनिज नागरिक राहदानी नं. EG3871313 भएकी Dou Chuanjun ले भाडामा लिएको जग्गामा रहेको टहरामा रातिको समयमा आवत जावत गरेकका थिए । निजले कहिले मलाई नम्बर याद नभएको डष्टर र कहिले ब्रेजा गाडि चलाउने गरेको देखेको हो । निज समेतका अन्य चाईनिज रातिको समयमा उक्त टहरा आई ३/४ घण्टासम्म टहरा भित्रै गाडि राखि बस्ने गरेका थिए । मैले देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेकोले सोहि व्यहोरा लेखाई सनाखत गर्दछु भनी उर्किन छिरिङ्ग लामाले सनाखत गरि दिएको ।

घ) **<u>उर्किन छिरिङ्ग लामाले सनाखत सनाखत कागज :-</u>**

राजस्व अनुसन्धान विभाग हरिहर भवन ललितपुरको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्क राज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ प्रतिवादी चाईनिज नागरिक राहदानी नं. 360387660 भएका ALI OR LI भन्ने LI.WEN-TSUNG लाई देखि हेरे चिने, निज समेतका चाईनिज नागरिक म सुरक्षा गार्ड रहेको का.जि.टोखा न.पा.वडा नं. २ स्थितमा चाईनिज नागरिक राहदानी नं. EG3871313 भएकी Dou Chuanjun ले भाडामा लिएको जग्गामा रहेको टहरामा रातिको समयमा आवत जावत गरेकका थिए । निजले कहिले मलाई नम्बर याद नभएको डष्टर र कहिले ब्रेजा गाडि चलाउने गरेको देखेको हो । निज समेतका अन्य चाईनिज रातिको समयमा उक्त टहरा आई ३/४ घण्टासम्म टहरा भित्रै गाडि राखि बस्ने गरेका थिए । मैले देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेकोले सोहि व्यहोरा लेखाई सनाखत गर्दछु भनी उर्किन छिरिङ्ग लामाले सनाखत गरि दिएको ।

ङ) **<u>उर्किन छिरिङ्ग लामाले सनाखत सनाखत कागज:-</u>**

राजस्व अनुसन्धान विभाग हरिहर भवन ललितपुरको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्क राज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ प्रतिवादी चाईनिज नागरिक राहदानी नं. EB0563022 भएका ALEX भन्ने YAO PUCHENGलाई देखि हेरे चिने, निज समेतका चाईनिज नागरिक म सुरक्षा गार्ड रहेको का.जि.टोखा न.पा.वडा नं. २ स्थितमा चाईनिज नागरिक राहदानी नं. EG3871313 भएकी Dou Chuanjun ले भाडामा लिएको जग्गामा रहेको टहरामा रातिको समयमा आवत जावत गरेकका थिए । निजले कहिले मलाई नम्बर याद नभएको डष्टर र कहिले ब्रेजा गाडि चलाउने गरेको देखेको हो । निज समेतका अन्य चाईनिज रातिको समयमा उक्त टहरा आई ३/४ घण्टासम्म टहरा भित्रै गाडि राखि बस्ने गरेका थिए । मैले देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेकोले सोहि व्यहोरा लेखाई सनाखत गर्दछु भनी उर्किन छिरिङ्ग लामाले सनाखत गरि दिएको ।

च) **<u>उर्किन छिरिङ्ग लामाले सनाखत सनाखत कागज:-</u>**

राजस्व अनुसन्धान विभाग हरिहर भवन ललितपुरको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्क राज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ प्रतिवादी चाईनिज नागरिक SAUTEN भन्ने DINGSHENGNFAलाई देखि हेरे चिने, निज समेतका चाईनिज

नागरिक म सुरक्षा गार्ड रहेको का.जि.टोखा न.पा.वडा नं. २ स्थितमा चाईनिज नागरिक राहदानी . EG3871313 भएकी Dou Chuanjun ले भाडामा लिएको जग्गामा रहेको टहरामा रातिको समयमा आवत जावत गरेकका थिए। निजले कहिले मलाई नम्बर याद नभएको डष्टर र कहिले ब्रेजा गाडि चलाउने गरेको देखेको हो। निज समेतका अन्य चाईनिज रातिको समयमा उक्त टहरा आई ३/४ घण्टासम्म टहरा भित्रै गाडि राखि बस्ने गरेका थिए। मैले देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेकोले सोहि व्यहोरा लेखाई सनाखत गर्दछु भनी उर्किन छिरिङ्ग लामाले सनाखत गरि दिएको।

**छ) उर्किन छिरिङ्ग लामाले सनाखत सनाखत कागज:**

राजस्व अनुसन्धान विभाग हरिहर भवन ललितपुरको पत्र जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हर्क राज राई समेत भएको अवैध सुन पैठारी तथा संगठित अपराध मुद्दाको अनुसन्धानको सिलसिलामा पक्राउ प्रतिवादी चाईनिज नागरिक राहदानी नं. EB0563022 भएका ALEX भन्ने YAO PUCHENG लाई देखि हेरे चिने, निज समेतका चाईनिज नागरिक म सुरक्षा गार्ड रहेको का.जि.टोखा न.पा.वडा नं. २ स्थितमा चाईनिज नागरिक राहदानी नं. EG3871313 भएकी Dou Chuanjunले भाडामा लिएको जग्गामा रहेको टहरामा रातिको समयमा आवत जावत गरेकका थिए। निजले कहिले मलाई नम्बर याद नभएको डष्टर र कहिले ब्रेजा गाडि चलाउने गरेको देखेको हो। निज समेतका अन्य चाईनिज रातिको समयमा उक्त टहरा आई ३ /४ घण्टासम्म टहरा भित्रै गाडि राखि बस्ने गरेका थिए। मैले देखेकोले निजको रुप रङ्ग निजको शरिरको वनावट समेतबाट चिनेकोले सोहि व्यहोरा लेखाई सनाखत गर्दछु भनी उर्किन छिरिङ्ग लामाले सनाखत गरि दिएको।

**५. प्रतिवादीहरुको वयान:**

**क. शंकित अशोक लामाको बयान:**

काठमाडौं उपत्यकामा बा २ ज २३२४ नं को ट्याक्सी भाडामा लिई चलाउने क्रममा मिति २०८०।०४।०२ गते त्रिभुवन अन्तराष्ट्रिय विमानस्थल भन्सार कार्यालयको गेट बाहिर सडकमा हर्कराज राई भन्ने व्यक्तिले ८ वटा कार्टुन सामान वालुवाटारसम्म लैजानु छ भनेकोले ट्याक्सि भाडा रु.५००।–पाउने गरी SHAVER रहेको १ कार्टुन र BRAKE PADS भएको ८ कार्टुन सामानहरु ट्याक्सीको डिकिमा लोड गरी सकेपछी निज हर्कराज राईले मेरो फोन नम्बर मागी लिई मेरो स्कुटर छ, म स्कुटरमा अघि अघि जान्छु भाई तिमि मेरो पछी पछी आउनु भनेकोले निज हर्कराज राई अघि लगाई पछी ट्याक्सी चलाई हिडी त्रिभुवन अन्तराष्ट्रिय विमानस्थल भन्सार कार्यालयको मुल गेटमा पुगेपछी निज हर्कराज राईले भन्सार चलानी कागज (प्रज्ञापन पत्र) देखाए पछी मुल गेटमा सादा पोषाक लगाएका कर्मचारीले प्रज्ञापन पत्र हेरी जाँची ठिक छ जानुस भनेपछी हामी गेट बाहिर निस्कनासाथ राजस्व अनुसन्धान बिभागका कर्मचारीले राजस्व अनुसन्धान बिभाग हरिहरभवन ललितपुरमा लगेको मैले यो सामान हर्कराज राईको हो भनेपछी राजस्व अनुसन्धान बिभागका कर्मचारीले हर्कराज राईको तीनपुस्ते बिबरण समेत रजिष्टरमा टिपी अभिलेख गरी भोली आउनु भनि छोडि दिएका थिए।

भोलीपल्ट मिति २०८०।०४।०३ गते बिहान १०:३० बजे राजस्व अनुसन्धान बिभाग हरीहरभवन, ललितपुर पुगेकोमा त्यहाँ हर्कराज राई नआई निजको प्रतिनिधीको रुपमा राजेन्द्र कुमार राई आएका र निजले म र रेडी ट्रेड प्रा.लि.को प्रतिनिधिको रुपमा हर्कराज राईको साटोमा आएको भने पछी राजस्व अनुसन्धान विभागबाट गाडी खोलुवा मुचुल्का गरी ट्याक्सीबाट उल्लेखित ८ कार्टुन बाट ब्रेक शु आकारको नमूना थान- ४

(चार) निकाली म र राजेन्द्र कुमार राई लाई  नियन्त्रणमा लिई भन्सार बिभागको प्रयोगशालामा नमूनाहरु पठाई EDX उपकरणबाट परीक्षण गर्दा ३ वटा नमूनामा 99.55% सम्म सुन रहेको देखिन आएको भनी गरेको मुचुल्कामा दस्तखत र औठाछाप गराएको भन्ने समेत व्यहोराको बा २ ज २३२४ नं को ट्याक्सी चालक शंकित अशोक लामाको बयान।

ख. **प्रतिवादी Trans Global Services Pvt. Ltd. का संचालक कृष्ण कुमार श्रेष्ठको बयान:**

Trans Global Services Pvt. Ltd. ले Ready Trade Pvt. Ltd. संग कुनै लिखित सम्झौता गरेको छैन। Ready Trade Pvt Ltd. ले CNF अन्तर्गत Trans Global Services Pvt. Ltd. संग सम्पर्कमा रहेको हङकङको Karry on Global logistics Ltd. ले सामान बुझी हङकङमा सम्पूर्ण सामानको जिम्मा लिई नेपालको काठमाडौं Airport सम्मको भाडा लगायत अन्य लाग्ने चार्जहरु हङकङमा नै लिई तिर्नु पर्ने सबै तिरी हङकङबाट Plane उडेपछी Trans Global Services Pvt. Ltd. लाई उक्त नेपालमा पठाएको सामानको कागजपत्र पठाउँछ त्यसपछी काठमाडौं बिमानस्थलमा ल्याण्ड भै नेपाल पारबहन तथा गोदाममा Airlines कम्पनीले Delivery गरेपछी Trans Global Services Pvt. Ltd. बाट उक्त सामानको Delivery Order Issue  गरिन्छ।

उक्त Delivery Order लाई मेरो कार्यालयमा Ready Trade Pvt. Ltd. का भन्सार एजेन्टले बुझी उक्त  Delivery Order लिई सो बापतको सेवा शुल्क रु.२,५००।– र त्यस बापत लाग्ने भ्याट रकम रु.३२५।- समेत गरी एकमुष्ट रू.२,८२५।– तिरी सामान लिन त्रिभुवन बिमानस्थल भन्सार कार्यालय जाने गर्दछ। मिति २०८०।०४।०२ गते जारी प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान हङकङ देखि नेपाल आयात गरिएको सामानको Delivery Order म संचालक अध्यक्ष भएको Trans Global Services Pvt.Ltd. बाट जारी भएको थियो। उक्त सामानको Delivery Order भन्सार एजेन्ट यादव पराजुलीको प्रतिनिधीको रुपमा राजेन्द्र कुमार राईको मलाई नाम थाहा नभएको कर्मचारी आई लिई गएका हुन।

उक्त भन्सार प्रज्ञापन पत्रमा उल्लेखित समान BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र SHAVER सेट ८० थानमा सुन रहेको भन्ने मलाई कुनै जानकारी छैन। हङकङबाट सम्बन्धित Seller ले नेपाली Buyer लाई Airway bill पठाउँछ र उक्त Airway bill लिएर आउने ब्यक्तिलाई  हङकङको Karry on Global logistics Ltd. ले सामान बुझी हङकङमा सम्पूर्ण सामानको जिम्मा लिई नेपालको काठमाडौं Airport सम्मको भाडा लगायत अन्य लाग्ने चार्जहरु हङकङमा नै लिई तिर्नु पर्ने सबै तिरी हङकङबाट Plane उडेपछी Trans Global Services Pvt. Ltd. लाई पठाएको सामानको कागजपत्रको आधारमा भन्सार एजेन्ट यादव पराजुलीको तर्फबाट राजेन्द्र राईको कर्मचारीलाई Airway bill को आधारमा कागजपत्र चेक जाँच गरी  Delivery Order दिई पठाएको हो।

Trans Global Services Pvt.Ltd. लाई हङकङको Karry on Global Logistics Ltd. ले पठाएको कागजातको आधारमा सामान यो भन्नेसम्म खुल्छ तर उक्त समान भित्र सुन छ/छैन भन्ने सम्बन्धमा मलाई थाहा हुदैन। मिति २८०।०४।०२ गते Trans Global Services Pvt.Ltd. बाट जारी भएको Cargo Delivery Order अन्तर्गत भन्सार एजेन्ट यादव पराजुलीको परिचय पत्रको आई डि प्रयोग भई जारी भएको प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट

SHAVER सेट ८० थान सामान राजस्व अनुसन्धान बिभागले नियन्त्रणमा लिई परीक्षण गर्ने क्रममा BRAKE PADS भित्र सुन फेला परेपछी मिति २०८०।०४।०४ गते अनुसन्धान बिभागका कर्मचारीले छापा मारी खानतलासी गरी रेडी ट्रेड प्रा.लि. को नाममा आएका सामानको Cargo Delivery Order लेखिएको Job File थान -३५ समेत बरामद गरेको ठिक साँचो हो भन्ने समेत व्यहोराको प्रतिवादी Trans Global Services Pvt. Ltd. का संचालक कृष्ण कुमार श्रेष्ठको बयान।

ग. **प्रतिबादी रेडि ट्रेड प्रा.लि.का संचालक दिलिप कुमार भुजेलको बयान:**

मेरो मामा राम कुमार भुजेलले जिल्ला काठमाडौं चाबहिलमा २०७९ साल फाल्गुन महिनामा मामाले फोनमा कुराकानी गरी हर्कराज राईलाई भेटाई दिनु भएको थियो। निज हर्कराज राईले एउटा कम्पनी दर्ता गरी दिएमा नगद रु.१,५०,०००।- (एक लाख पँचास हजार) पाउछ भनेकोले उक्त रकम पाउने विश्वासमा कम्पनी रजिष्ट्रार कार्यालय त्रिपुरश्वरमा गई हर्क राज राईले तयार गरी ल्याएको कागजातहरुमा सही गरी कम्पनी दर्ता गरेको हो। सो पश्चात प्यानमा दर्ता गर्ने, बैकमा खाता खोल्ने गरेको हो। बैंक खातामा हर्कराज राईले कहि रकम जम्मा गरेको थिए, के कति रकम जम्मा गरे मलाई थाहा छैन्। कम्पनी दर्ता गरे पश्चात मलाई दिने भनिएको रकम नगद रु.१,५०,०००।- (एक लाख पँचास हजार) हर्क राज राईले दिएका थिए।

कम्पनी दर्ता गर्दा ईलेक्ट्रिक सामानहरु ल्याउनको लागी कम्पनी खडा गरेको भनि हर्क राज राईले भनेका थिए, मेरो नाममा रहेको रेडी ट्रेड प्रा.लि. भ्याटमा र एक्जिम कोड दर्ता रहेको वा नरहेको मलाई जानकारी छैन्। मिति २०७९।१२।२८ गते भन्सार बिभागमा मेरो नामबाट दिएको निवेदन देखाउदा देखी पाए सो निवेदनको ब्यहोरा र सोमा रहेको दस्तखत मेरो होईन निज भिम बहादुर मगरलाई चिनेको छैन् मेरो नाम राखी उल्लेखित किर्ते कागज निज हर्कराज राईले तयार गरी पेश गरेको हुनु पर्छ,भन्सारका कर्मचारीहरु मैले चिनेको छैन् भन्ने समेत व्यहोराको प्रतिवादी दिलिप कुमार भुजेलको बयान।

घ. **शंकित Aries Trans Global Pvt.Ltd. संचालक राजन कुमार श्रेष्ठको बयान:**

मेरो काका कृष्ण कुमार श्रेष्ठले Trans Global Services Pvt.Ltd. नामक कार्गो सर्भिस कम्पनी संचालन गरिरहनु भएकोमा आफ्नो नाममा पहिले नै उस्तै प्रकृतीको कम्पनी दर्ता भई सकेकोले अर्को कम्पनी खोल्दा आफूलाई टेण्डर हाल्नको लागी सजिलो हुने र म समेतको नामबाट कम्पनी खोल्दा दुईवटा कम्पनीबाट आफुले गर्न सक्ने भनि म संचालक अध्यक्ष काकाको छोरा अबिनाश श्रेष्ठ, पुष्कर राज भट्टको छोरा विपिन भट्ट र अनिस श्रेष्ठको नाममा कम्पनी रजिष्ट्रार कार्यालय त्रिपुरेश्वरमा Aries Trans Global Pvt.Ltd. कार्गो सर्भिश गर्ने (कार्गो गरी नेपाल ल्याउने/लैजाने) उदेश्यका साथ दर्ता गरिएको हो।

Aries Trans Global Pvt.Ltd. को म संचालक अध्यक्ष रहे पनि सोको सम्पूर्ण कामकाज मेरो कान्छो काका कृष्ण कुमार श्रेष्ठ र पुष्कर राज भट्टले नै गर्दै आई रहनु भएको छ। उहाँहरुले नै आफ्नो छोराहरु समेतलाई संचालकमा राखी दर्ता गरेको कम्पनी भएकोले सबै काम/कारोबार उहाँहरुले नै गर्दै आई रहनु भएको छ, Aries Trans Global Pvt.Ltd. र Trans Global Services Pvt.Ltd. काठमाण्डौं महानगरपालिका वडा नं. ३२ तिनकुनेमा स्थित रहेको एउटै भवनको एकै फ्ल्याट, रहेको तथा Aries Trans Global Pvt.Ltd. को कारोबार पनि Trans Global Services Pvt.Ltd. का संचालकहरु कृष्ण कुमार श्रेष्ठ र पुष्कर राज भट्टले नै संचालन गर्ने भएको कारण Aries Trans Global Pvt.Ltd. कागजातहरु Trans Global Services Pvt.Ltd. कम्पनीमा देखिएको हो।

कृष्ण कुमार श्रेष्ठ र पुष्कर राज भट्ट संचालक रहेको Trans Global Services Pvt.Ltd. को कार्गो सहयोगमा रेडी ट्रेड प्रा.लि.ले प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS–८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान नेपाल आयत गरिएकोमा सो ब्रेक शु आकारको नमूना परीक्षण गर्दा 99.55% सम्म सुन आएको सम्वन्धमा एकिन थाहा छैन् भन्ने समेत व्यहोराको शंकित Aries Trans Global Pvt.Ltd. संचालक राजन कुमार श्रेष्ठको बयान।

ङ. **<u>प्रतिबादी खरिदार कुमार ढकालको बयान:</u>**

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा खरिदार (जाँचकी) को रुपमा बि.सं. २०७८ माघ/फागुन देखी हालसम्म कार्यरत रहेको, प्रज्ञापन पत्र नं. M35079 मिति २०८०।०४।०२ गते आशिकुडाबाट जाँचकीको रुपमा मलाई तोक लागेकोमा उल्लेखित प्रज्ञापन पत्रमा भएका मालवस्तुको जाँचपास गरेको हो।

उक्त मालवस्तुमा RC लेखेको बारे मलाई कही कतैबाट पनि जानकारी प्राप्त नभएको, उल्लेखित मालवस्तुहरू मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभाग हरिहरभवन, ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा प्रतिबादी अशोक लामाले चलाएको बा २ ख २३२४ नं. को ट्याक्सीबाट नियन्त्रणमा लिई सो ब्रेक शु आकारको सामान मिति २०८०।०४।०३ गते भन्सार बिभागको प्रयोगशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा 99.55% सम्म सुन रहेको देखिन आएकोमा सो १६० सेट BRAKE PADS बाट सुन पगाली निकाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको रहेछ, सो दिन X-ray मा टेलिफोन अपरेटर पदका सरोज श्रेष्ठ खटिएका थिए।

प्रज्ञापन पत्र नं. M३५०७९ बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० सेटहरु जाँचकीको रुपमा म खटिएको थिए। भन्सार एजेन्टका रुपमा एजेण्ट नं. ७८२ भएका यादब पराजुली आएका थिए, भन्सार ऐन २०६४ को दफा २८ मा मालवस्तुको भौतिक परीक्षण गर्दा एक/एक गरी वा बीच बीचमा छड्के गरी वा केही प्रतिशत मात्र खोल्न र जाँच गर्न सक्ने यसरी भौतिक रुपमा मालवस्तु परीक्षण गर्दा मालवस्तुलाई शंका लागेमा च्यातेर, खोलेर, काटेर, घोटेर, कोतरे र र फोडेर समेत हेर्न सकिने, त्यती गर्दा पनि मालवस्तु यही नै हो भनि एकिन हुन नसकेमा भन्सार अधिकृतलाई प्रतिबेदन गरी बोलाई अधिकृतकै रोहबरमा पुन: एक्सरे समेत गरी हेर्न सकिने त्यती गर्दा पनि एकिन हुन नसकेमा भन्सार बिभागको प्रयोगशालामा परीक्षण गर्न सकिने, भन्सार अधिकृतले आफू मातहतका कुनै कर्मचारीलाई खोल्न र जाँच्न आदेश दिन समेत सक्ने ब्यबस्था रहेकोमा प्रज्ञापन पत्र नं. M३५०७९बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० थान मालवस्तुको विल विजक घोषणा हेर्दा प्रज्ञापन पत्र अनुसार दुरुस्त देखेपछी उल्लेखित कुनै पनि बिधिबाट परीक्षण नगरी मूल्यांकन पत्रमा दस्तखत गरी मूल्यांकन शाखामा सम्पूर्ण कागजात सहित प्रतिबेदन गरेको हुँ।

Red Channel बाट आएको मालवस्तुलाई पूर्ण रुपमा जाँच गरी मालवस्तु एकिन नभएमा आबश्यकता अनुसार पुन: X-Ray गर्ने, भौतिक रुपमा एक/एक गरेर वा मालवस्तुबाट नमूना छनौट गरेर भौतिक परीक्षण समेत गरी मालवस्तुको एकिन गरी उपलब्ध कागजात, बिल बिजक, मालवस्तुको मूल्यको स्व-घोषणा, ब्राण्ड, उत्पती मुलुक, साईज, गुणस्तर लगायतका बिबरणको आधारमा मालवस्तुको मूल्य निर्धारण गरी भन्सार जाँचपास गर्ने मिति २०८०।०४।०२ गते X-ray मा खटिएका कर्मचारी सरोज श्रेष्ठले मलाई उक्त मालवस्तुमा RC लेखेको सम्बन्धमा मौखिक जानकारी नगराएको हुँदा उक्त मालवस्तु ठीकै छ भनी

जाँचपास गरेको हुँ। मूल्यांकन शाखामा खटिने कर्मचारी स्थायी रुपमा दक्ष/बिज्ञ कर्मचारीको रुपमा खटिएका हुन्छन र निजहरूलाई प्रत्येक दिन मालवस्तुको ब्राण्ड, मोडल, साईज, संख्या, उत्पती, गुणस्तर स्व-घोषणाको आधारमा मालवस्तु भौतिक रुपमा हेरी उपलब्ध कागजात र बिल बिजक अनुसार मिले नमिलेको हेरी मालवस्तु भौतिक रुपमा हेर्दा फरक परेको भए सोही अनुसार मूल्य निर्धारण गरी मूल्यांकन कायम गरी सदर गर्नु पर्ने प्रमुख कर्तब्य र जिम्मेवारी हो । मिति २०८०।०४।०२ गते प्रज्ञापन पत्र नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु मूल्यांकन शाखाका नायब सुब्बा बिरेन्द्र नेपालीले मूल्यांकन पत्रमा मालवस्तुको मूल्यांकन ठिक छ भनि के आधारमा दस्तखत समेत गरे मलाई थाहा भएन । मूल्यांकन शाखाका अधिकृत गणेश पौडेलले सिष्टममा Click गरी मूल्यांकन के आधारमा गरे मलाई थाहा छैन र प्रमुख भन्सार अधिकृत (उप सचिव) समेतले मूल्यांकन सिष्टममा Click गरी के आधारमा सदर गरे म भन्न सक्दिन ।जोखिम ब्यबस्थापन शाखा (WAN) मा खटिएका कर्मचारीले मालवस्तु के हो शंका लागेमा आबश्यकता अनुसार भौतिक परीक्षण गरी एकिन गर्नु पर्ने हो ।

मालवस्तुको सम्बन्धमा शंका लागेमा उक्त शाखालाई Document lock गर्ने वा Query मा राख्ने र भन्सार अधिकृतबाट Green भईसकेका Document समेतलाई Re-check गराउन सक्ने अधिकार छ । लेटर अफ क्रेडिट (LC) नखोली किन उस्तै प्रकारका मालवस्तु पटक पटक दोहोरिएर आईरहेका छन भन्ने सम्बन्धमा जोखिम ब्यबस्थापन शाखा (WAN) र मूल्यांकन शाखाले हेर्नु पर्ने हो ।

जोखिम ब्यबस्थापन शाखा (WAN) स्थापना गर्नुको मुल उद्देश्य नै यस्तै प्रकृतिका राजस्व छलि लगायतका जोखिम पहिचान, नियन्त्रण र ब्यबस्थपन गर्नु हो । जोखिम ब्यबस्थापन शाखाले प्रत्येक दिनको भन्सार जाँचपासको प्रकृया अध्ययन गरिरहने हुँदा US डलर ५०० (पाँच सय) भन्दा कम गरी पटक पटक एउटै प्रकृतिको सामान आईरहेकोमा सो किन र कसरी आईरहेको छ भनि हेर्नु पर्ने जिम्मेवारी समेत हो तर सो मालवस्तुको सम्बन्धमा चुपचाप बसेको देखियो, निज X-Ray अपरेटर सरोज श्रेष्ठले RC लेखेकोमा सो को भौतिक (मौखिक) र लिखित जानकारी गराउनु पर्ने हो तर निजले भौतिक (मौखिक) र लिखित दुबै जानकारी गराएनन्, EXIM (Export Import Code) कोड भन्सार एजेण्टले मालवस्तुको मूल्य स्वघोषणा गरी सिष्टममा प्रज्ञापन पत्र दर्ता गर्दा अनिबार्य रुपमा चाहिन्छ भन्ने समेत व्यहोराको प्रतिबादी खरिदार कुमार ढकालको बयान ।

च. **प्रतिबादी Trans Global Services Pvt. Ltd.का संचालक पुष्कर भट्टको बयान:**

Trans Global Services Pvt. Ltd. ले Ready Trade Pvt Ltd. संग कुनै लिखित सम्झौता गरेको छैन । Ready Trade Pvt Ltd.ले CNF अन्तर्गत Trans Global Services Pvt. Ltd. संग सम्पर्कमा रहेको हङकङको Karry on Global logistics Ltd. ले सामान बुझी हङकङमा सम्पूर्ण सामानको जिम्मा लिई नेपालको काठमाडौं Airport सम्मको भाडा लगायत अन्य लाग्ने चार्जहरु हङकङमा नै लिई तिर्नु पर्ने सबै रकम तिरी हङकङबाट Plane उडेपछी Trans Global Services Pvt. Ltd. लाई उक्त नेपालमा पठाएको सामानको कागजपत्र पठाउँछ ।

काठमाडौं बिमानस्थलमा ल्याण्ड भै नेपाल पारबहन तथा गोदाममा Airlines कम्पनीले Delivery गरेपछी Trans Global Services Pvt. Ltd. बाट उक्त सामानको Delivery Order Issue गरिन्छ । उक्त Delivery Order लाई मेरो कार्यालयमा Ready Trade Pvt.Ltd. का भन्सार एजेन्टले बुझी उक्त Delivery

Order लिई सो बापतको सेवा शुल्क प्रति Airway Bill रु.२,५००।- (पच्चिस सय) र त्यस बापत लाग्ने भ्याट रकम रु.३२५ समेत गरी एकमुष्ट रू.२,८२५।- तिरी सामान लिन त्रिभुवन बिमानस्थल भन्सार कार्यालय जाने गर्दछ।

Ready Trade Pvt.Ltd. ले Trans Global Services Pvt.Ltd. बाट हाल सम्म करिब ३५-३६ वटा Consignment ल्याए वापत करिब १(एक) लाख रकम लिएको, हङकङबाट कार्गो गरी नेपाल सामान पठाउने कम्पनी (Forwarder) Karry on Global logistics Ltd. का संचालक Joseph भन्ने ब्यक्तिसंग मेरो र कृष्ण कुमार श्रेष्ठको चिनजान रहेकोले शुरु देखी नै निजसंग कारोबार गर्दै आईरहेको (हङकङबाट नेपालमा सामान पठाउदा हाम्रो कम्पनी Trans Global Services Pvt.Ltd. नाममा पठाउने र हामिले नेपालबाट हङकङमा सामान पठाउदा Karry on Global logistics Ltd. को नाममा पठाउने गरेको) हुँदा Ready Trade Pvt. Ltd. ले हङकङ र चिनबाट खरिद गरेको अटो पार्टस र शेभर सामानहरुको Freigst Prepaid भएको Airway bill लिएर आउने ब्यक्तीबाट हङकङको Karry on Global logistics Ltd. ले सामान बुझी हङकङमा सम्पूर्ण सामानको जिम्मा लिई नेपालको काठमाडौं Airport सम्मको भाडा लगायत अन्य लाग्ने चार्ज रकम हङकङमा नै लिई हङकङबाट सम्बन्धित Shipper (सामान बिक्री गर्ने कम्पनी) ले नेपाली Consignee (सामान आयात गर्ने कम्पनी Ready Trade Pvt. Ltd ) लाई Airway bill सामानको Delivery Order लिने कम्पनीको नाम, ठेगाना र सम्पर्क नम्बरमा म समेत संचालक रहेको Trans Global Services Pvt. Ltd को नाम राखि पठाएको हुँदा Trans Global Services Pvt. Ltd लाई पठाएको सामानको Airway bill अनुसारको Delivery Order भन्सार एजेन्ट यादव पराजुलीको तर्फबाट राजेन्द्र राईको कर्मचारीलाई Airway bill को आधारमा कागजपत्र चेकजाँच गरी Delivery Order दिई पठाएको भन्ने समेत व्यहोराको प्रतिबादी Trans Global Services Pvt. Ltd.का संचालक पुष्कर भट्टको बयान।

छ. **प्रतिबादी भन्सार अधिकृत सन्तोष चन्दको बयान:**

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थलमा बिदेशबाट कार्गो Air माध्यमबाट आएकोमा सम्बन्धित Airlines कम्पनीहरुले उक्त सामन र कागजपत्र त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थलमा नेपाल पारवहन तथा गोदाम ब्यबस्थापन कं.लि. लाई जिम्मा लगाई उक्त कम्पनीले सम्पूर्ण कार्गोहरूलाई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र रहेको गोदाममा भण्डारण गरी राख्दछ । कार्गो/कुरीयर सेवा प्रदायक संस्थाहरूले Airway Bill को आधारमा Delivery Order जारी गर्छ।

उक्त Delivery Order को आधारमा सामान छुटाउन खटिएको भन्सार एजेन्टले सामानको नाम, तौल, संख्या, Plane भाडा तथा लागेका चार्ज लगायतका बिबरण खुलाएर सामान अनुसार Master Airway Bill/House Airway Bill सहित खुलाएर नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन क.लि. मा कागजात पेश गरेपछी भन्सार एजेन्टले भन्सार प्रज्ञापन पत्र समेत Online भरी आशिकुडा सिष्टममा दर्ता गर्छ। यसरी भन्सार एजेन्टले प्रज्ञापन पत्र दर्ता गर्दा सामानको मूल्य US डलर ५०० भन्दा बढी भए अनिबार्य रुपमा भुक्तानीको Terms/Mode of payment समेत खुलाउँछ।

त्यसपछी आशिकुडा सिष्टमले कामको चापको आधारमा १ जना जाँचकी र १ जना भन्सार अधिकृत तोकिदिन्छ। X-ray मा खटिने कर्मचारी X-ray मा खटिने कर्मचारीको हकमा भन्सार कार्यालयको प्रमुख भन्सार प्रशासक (सह सचिव) ले १ दिन अगाबै वा बिहान १०:०० बजे अगाबै सूचना निकालि कर्मचारी तोकी

खटाउने गर्दछ। नेपाल पारवहन तथा गोदाम ब्यबस्थापन क.लि. मा भन्सार एजेन्टले सामान निकाल्न कागजात पेश गरी प्रज्ञापन पत्र आशिकुडा सिष्टममा दर्ता गरेपछी गोदामबाट सामान निकालि X-ray मा जान्छ।

X-ray मा खटिएको कर्मचारीले सामानको प्रष्ट आकृती नदेखेमा RC लेख्न सक्छ। यसरी RC लेखेमा र मालवस्तु हेरेर एकिन नभएकोमा जाँचकी कर्मचारी, मूल्यांकन शाखाका कर्मचारी, प्रमुख भन्सार अधिकृत र भन्सार अधिकृत लगायतले पुन सामान चेक जाँच तथा परीक्षण गर्न लगाउनु पर्दछ।

**जाँचकी कर्मचारी**: कार्गो सामनको X-ray भएपछी लोडरले सामान यार्डमा राखी भन्सार एजेन्टले कागजपत्र जाँचकी कर्मचारीकोमा पेश गरी जाँचकी कर्मचारी आई सामान निरीक्षण गरी सामानको स्व-घोषणा बमोजिमको मूल्य छ/छैन, सामानको सख्या एकिन, लेबल, ब्राण्ड, रुपरंग, उत्पती मुलुक तथा स्थान, साइज र गुणस्तर लगायतको विवरण जाँच गरी भन्सार अधिकृतलाई देखाई प्रतिवेदन गर्छ। यदी उल्लेखित बिबरणमा कैफियत वा गलत बिबरण प्रबिष्ट गरेको भेटिए आशिकुडा सिष्टममा समेत सोही बिबरण समेत जनाउन सक्नेछ।
**मूल्यांकन शाखा**: त्यसपछी सामान र कागजात मूल्यांकन शाखामा जान्छ। उक्त शाखामा दक्ष मूल्यांकन कर्ताको रुपमा १ जना भन्सार अधिकृत र १ जना नायब सुब्बा स्थायी रुपमा खटिएको हुन्छ। उक्त शाखाले मूल्यांकनको आधारमा राजस्व निर्धारण गर्ने, भौतिक रुप, ब्राण्ड, गुणस्तर, साईज, स्पेसिफिकेशन, Country of Orgine, रुप रंग लगायतका बिबरण अनुसार मूल्यांकन गर्ने, स्वघोषणा बमोजिम भए नभएको हेरी मूल्यांकन शाखाका नासुले मूल्यांकन पेजमा सबै बिबरण लेखी मूल्यांकन बढाउनु पर्ने भए थपी बढाई लेखी दस्तखत समेत गर्दछ। त्यसपछी मूल्यांकन पेजमा मूल्यांकन शाखाको ना.सु. र जाँचकी कर्मचारीले दस्तखत गरी मूल्यांकन अधिकृतलाई प्रतिवेदन गर्दछन। प्रमुख भन्सार अधिकृत (उप सचिव) मूल्यांकन अधिकृतले मूल्यांकन थप गर्न पर्ने भए आशिकुडा सिष्टममा थपी Valuation Control मा Click गरी सम्पूर्ण कागजात सहितको बिबरण प्रमुख भन्सार अधिकृत (उप सचिव) समक्ष पेश गर्दछ। प्रमुख भन्सार अधिकृतले सम्पूर्ण कागजातहरू अध्ययन गरी ठिक भए आशिकुडा सिष्टमबाटै मूल्यांकन सदर गर्न सिष्टममा Click गरी दिने गर्दछन।

**जोखिम ब्यबस्थापन शाखा (WAN),** जोखिम ब्यबस्थापन शाखा (WAN) भन्सार एजेन्टले प्रज्ञापन पत्र सिष्टममा दर्ता गरे देखी अन्तिम सिष्टममा Green नभएसम्म पेश तथा तयार भएका सम्पूर्ण कागजपत्रहरू अध्ययन गरिरहेको हुन्छ। यदी कुनै पनि चरणमा शंका लागेमा सिष्टममा लक गर्ने वा Query मा राख्न सक्छ। यदी लक गरेमा वा Query मा राखेमा सो गर्ने जोखिम ब्यबस्थापन शाखा (WAN) का कर्मचारीसंग समन्बय गरी लक वा Query मा राख्नुको कारण सोधी आबश्यक समन्वय गरी सोही अनुसारको आबश्यक प्रकृया वा कागजात पुर्याई अन लक गरिन्छ। कहिले काँही जोखिम ब्यबस्थापन शाखा (WAN) ले Green भई सकेको प्रज्ञापन पत्रलाई पनि Re-check गराउन सक्छ।

**भन्सार अधिकृत,** सम्पूर्ण कागजात अध्ययन गरी जाँचकीको कमेण्ट वा मौखिक जानकारी, मूल्यांकन शाखाबाट मूल्यांकन सदर भए नभएको, प्रमुख भन्सार अधिकृतले सदर गरे नगरेको हेरी उपलब्ध गराईएका कागजातहरू दर्ता भएको प्रज्ञापन पत्रसंग भिडाई CONTROL RESULT गरी सिष्टममा DOCUMENT लाई GREEN गरेपछी भन्सार एजेन्टलाई राजस्व ONLINE PAYMENT गर्न लगाउँछ। त्यसपछी भन्सार एजेण्टले राजस्व भुक्तानीको रसीद जाँचकीकोमा पेश गरी ठिक भए नभएको हेरी जाँचकीले ठिक भए प्रज्ञापन पत्रमा दस्तखत गरी पुन उक्त रसिद सहित भन्सार अधिकृतकोमा आई रसिद हेरी ठिक भए भन्सार अधिकृतले

प्रज्ञापन पत्रमा दस्तखत गरेपछी जाँचकीले Exit Note जारी गर्छ । अन्तिममा त्यही Exit Note सम्बन्धित सामानवालाले सामान बुझी त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको बाहिर जाने मुल गेटमा उक्त Exit Note देखाई सामान लिएर जान्छन ।

प्रज्ञापन पत्र नं. M35079 मा मिति 2080/04/02 गते आशिकुडाबाट भन्सार अधिकृतको रुपमा मलाई तोक लागेकोमा प्रज्ञापनका मालवस्तुको (ब्रेकप्याड) भौतिक परीक्षण गरी गर्दा उक्त मालवस्तुको परिमाण अनुरुप नै रहेको भन्ने जानकारी आएपछि त्यही प्रकृतीको BRAKE PADS केही दिन अगाडी मैले भौतिक रुपमा परीक्षण गरि भन्सार जाँच पास समेत गरी सकेको हुँदा मूल्याङ्कन शाखाका नायव सुब्बाले मालवस्तुहरुको Document Verification र मूल्याङ्कन अधिकृत र प्रमुख भन्सार अधिकृतबाट Validate भएर आएपछि, Control Result गरी प्रज्ञापन पत्र Green रहेकोमा मालवस्तुमा RC लेखेको बारे मलाई कही कतैबाट पनि जानकारी प्राप्त नभएकोले जाँचपास गरेको हुँ ।

X-ray मेसिनबाट RC लेखिएको भनेको विषय मालवस्तुको X-Ray स्क्यानिङ गर्दा उक्त मालवस्तुको ईमेज X-ray मा क्लियर नआएमा र मालवस्तु यही नै हो भनि एकिन गर्न नसकेमा X-ray मा खटिएको कर्मचारीले RC (Red Channel) लेख्ने गर्दछ । प्राय: गरी मोटर पार्टस, व्याट्री भएका मालवस्तु, पानी तान्ने मोटर लगायतका मालवस्तुमा सामान्यतया RC लेख्ने गरेको पाईन्छ ।

RC लेखेको मालवस्तुमा जाँचकीले भौतिक परीक्षण गर्दा शंका लागेमा उक्त मालवस्तु पुनः X-Ray गर्न सक्छ, सो गर्दा पनि मालवस्तु यही नै हो भनि एकिन हुन नसकेमा आशिकुडा सिस्टममा बिबरण खुलाई कैफियत लेख्न सकिने व्यवस्था छ । भन्सार अधिकृतलाई समेत मौखिक रुपमा RC लेखेको जानकारी दिनु पर्छ।

मिति २०८०।०४।०२ गते X-ray मा खटिएका कर्मचारी सरोज श्रेष्ठले उक्त मालवस्तुमा RC लेखेको सम्बन्धमा निज सरोज श्रेष्ठ र जाँचकी खरिदार कुमार ढकालले समेत मलाई जानकारी नगराएको हुँदा उक्त मालवस्तु ठीकै छ भनी जाँचपास गरेको, मालवस्तुमा कुनै शंका लागेमा X-ray मा खटिएका कर्मचारीले RC लेख्ने र उक्त मालवस्तुलाई तुरुन्तै रोकी जाँचकी र भन्सार अधिकृतलाई जानकारी गराउनु पर्ने कर्तब्य हो तर निज सरोज श्रेष्ठले मौखिक तथा लिखित कुनै जानकारी गराएनन् ।

उल्लेखित मालवस्तुहरू मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभाग हरिहर भवन,ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा प्रतिबादी अशोक लामाले चलाएको बा २ ख २३२४ नं. को ट्याक्सीबाट नियन्त्रणमा लिई सो ब्रेक शु आकारको सामान मिति २०८०।०४।०३ गते भन्सार बिभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा 99.55% सम्म सुन रहेको देखिन आएको भन्ने समेत व्यहोराको प्रतिबादी भन्सार अधिकृत सन्तोष चन्दको बयान ।

ज. **प्रतिबादी X-Ray Technician सरोज श्रेष्ठको बयान:**

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थलमा बिदेशबाट कार्गो हवाई माध्यमबाट आएकोमा सम्बन्धित Airlines कम्पनीहरुले उक्त सामन र कागजपत्र त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थलमा नेपाल पारवहन तथा गोदाम ब्यबस्थापन कं. लि. लाई जिम्मा लगाई उक्त कम्पनीले सम्पूर्ण कार्गोहरूलाई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र रहेको गोदाममा भण्डारण गरी राख्दछ ।

भन्सार एजेण्ट; कार्गो/कुरीयर सेवा प्रदायक संस्थाहरूले Airway Bill को आधारमा Delivery Order जारी गर्छ । उक्त Delivery Order को आधारमा सामान छुटाउन खटिएको भन्सार एजेन्टले सामानको नाम, तौल, संख्या, Plane भाडा तथा लागेका चार्ज लगायतका बिबरण खुलाएर सामान अनुसार Master Airway Bill/House Airway Bill सहित खुलाएर नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन कं. लि. मा कागजात पेश गरेपछी भन्सार एजेन्टले भन्सार प्रज्ञापन पत्र समेत On line भरी आशिकुडा सिष्टममा दर्ता गर्छ । भन्सार एजेण्टले प्रज्ञापन पत्र आशिकुडा सिष्टममा दर्ता गर्दा मूल्यको स्व-घोषणा के कसरी गर्छ मलाई थाहा भएन । यसरी भन्सार एजेन्टले प्रज्ञापन पत्र दर्ता गर्दा सामानको मूल्य US डलर ५०० भन्दा बढी भए अनिबार्य रुपमा भुक्तानीको Terms/Mode of payment समेत खुलाउँछ ।त्यस पछी आशिकुडा सिष्टमले कामको चापको आधारमा १ जना जाँचकी र १ जना भन्सार अधिकृत तोकिदिन्छ X-ray मा खटिने कर्मचारी; X-ray मा खटिने कर्मचारीको हकमा भन्सार कार्यालयको प्रमुख भन्सार प्रशासक (सह सचिव) ले १ दिन अगाबै वा बिहान १०:०० बजे अगाबै सूचना निकालि कर्मचारी तोकी खटाउने गर्दछन् ।

नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन कं.लि.मा भन्सार एजेन्टले सामान निकाल्न कागजात पेश गरी प्रज्ञापन पत्र आशिकुडा सिष्टममा गर्ता गरेपछी गोदामबाट सामान निकालि X-ray मा जान्छ । X-ray मा खटिएको कर्मचारीले सामानको प्रष्ट आकृती नदेखेमा वा शंका लागेमा RC लेख्न सक्छ । यसरी RC लेखेमा र मालवस्तु हेरेर एकिन नभएकोमा जाँचकी कर्मचारी, मूल्यांकन शाखाका कर्मचारी, प्रमुख भन्सार अधिकृत र भन्सार अधिकृत लगायतले पुन सामान चेक जाँच तथा परीक्षण गर्न लगाउनु पर्दछ,

प्रज्ञापन नं. M३५०७९ मा उल्लेखित मालवस्तुको आकृतीलाई Zoom गरी हेर्दा मालवस्तुको चारै तिर निलो रंग र बिचको भागमा कालो देखिएकोमा उक्त आकृतीलाई Full Zoom गरी हेर्दा कुनै भागमा Ray Pass भएको र कुनै भागमा Ray Pass नभएको हुँदा खोलेर चेक जाँच गर्नु पर्छ भनि मैले ८ कार्टुन मालवस्तु मध्ये ४ कार्टुनमा रातो पर्मानेण्ट मार्कर पेन ले ठुलो अक्षरमा प्रष्ट देखिने गरी RC लेखी पठाएको, मैले कोही कसैलाई मौखिक तथा लिखित रिर्पोट गरिन, जाँचकी  कुमार ढकालले मैले RC लेखेपछी मालवस्तुको प्रत्येक कार्टुन खोली भौतिक रुपमा चेक जाँच गरी प्रत्येक सामान एक/एक गरी हेरी आबश्यक परेमा कोतरी, च्याती एकिन हुन नसकेमा नमूना छानी सामान फोडी वा खोली समेत हेर्नु पर्ने कर्तब्य हो । त्यसो गर्दा समेत मालवस्तु यही हो भनि एकिन हुन नसकेमा भन्सार अधिकृत समक्ष प्रतिवेदन गरी भन्सार अधिकृत र जाँचकीको रोहबरमा पुन: मालवस्तुको X-Ray गर्न सकिनेमा जाँचकी खरिदार कुमार ढकालले राम्रोसंग मालवस्तु नहेरी, मलाई समेत केही कुरा नसोधी मालवस्तुको X-ray गर्दा ८ वटा मध्ये मैले ४ वटा कार्टुनमा प्रष्टसंग RC लेखेकोलाई बेवास्ता गरी जाँचपास गरेको देखिन्छ । मूल्यांकन शाखाका नायब सुब्बा बिरेन्द्र नेपाली र अधिकृत गणेश पौडेलले पनि मूल्यांकनको क्रममा कागजात र मालवस्तु चेकजाँच नगरी मैले मैले ४ वटा मालवस्तु भएको कार्टुनमा प्रष्टसंग RC लेखेकोमा म संग सोधपुछ तथा समन्बय नगरी नजर अन्दाज गरी मूल्यांकन गरेको देखियो।

प्रमुख भन्सार अधिकृत श्रीधर टण्डन (उप सचिव) ले समेत RC लेखेको मालवस्तु लाई राम्रोसंग नबुझी, मालवस्तुलाई राम्रो संग पुन: भौतिक रुपमा चेकजाँच गर्न नलगाई के कसरी आशिकुडा सिष्टममा सदर गर्नु भयो,भन्सार अधिकृतले समेतले जाँचकी र मूल्यांकन शाखासंग समन्बय गरी मालवस्तु राम्रोसंग यही नै हो भनि एकिन भए/नभएको सम्बन्धमा बुझी आबश्यकता परे म (x-ray) संग समेत बुझी पुन: उक्त मालवस्तुको

X-Ray गराउनु पर्नेमा मालवस्तुमा  RC लेखेको प्रष्ट देखिने हुँदा हुँदै के कति कारणले भन्सार जाँच पास गरी सिष्टममा Control Result गरी सिष्टममा Document लाई Green गर्नु भयो र भन्सार अधिकृतले सामान यही हो भनी एकिन गरी सिष्टममा Control Result गरी सिष्टममा Document लाई Green गर्नु पर्नेमा सो नगरी के कस्तो कारणले मालवस्तु पास गर्नु भयो एकिन भएन भन्ने समेत व्यहोराको प्रतिबादी X-Ray Technician सरोज श्रेष्ठको बयान।

झ. **प्रतिबादी भन्सार अधिकृत गणेश प्रसाद पौडेलको बयान:**

प्रज्ञापन पत्र नं.M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० थान सामानहरू म समेत भई भन्सार जाँच पास गरी पठाईएको सामान हो। ऊक्त प्रज्ञापन पत्रमा उल्लेखित सामान जाँच पास गर्ने क्रममा X-ray मा खटिएको कर्मचारी सरोज श्रेष्ठ, जाँचकी कर्मचारी खरिदार कुमार ढकाल, मूल्यांकन शाखाका नायब सुब्बा बिरेन्द्र नेपाली, जोखिम ब्यबस्थापन शाखा (WAN) मा खटिएका कर्मचारीहरु लगायतले कुनै कैफियत नगरेपछी मैले संलग्न कागजात, बिलबिजक भिडाई मूल्यांकन गरी मुल्याकन सदरको लागि सिफारिस गरेको हुँ। उक्त दिन जाँचपासको लागी खटिएका भन्सार अधिकृत, जाँचकी र मूल्यांकन शाखाका नायब सुब्बा बिरेन्द्र नेपाली लगायताट कुनै कैफियत नभएको र मूल्यांकन सिटमा जाँचकी कुमार ढकाल र नायब सुब्बा बिरेन्द्र नेपालीले ठिक छ भनि दस्तखत समेत गरेको आधारमा र मिति २०८०।०४।०२ गते को प्रज्ञापन पत्र नं. M३५०७९ र  M३५१०३ मा उल्लेखित प्रकृतिका मालवस्तुहरु नियमित आईरहने सामान हो भनी भौतिक रुपमा समेत नहेरी परीक्षण समेत नगरी मूल्यांकन सदरको लागी सिफारिस गरी पठाएको हुँ।

प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु मालवस्तुको सम्बन्धमा मैले कारोबार मूल्यको आधारमा उल्लेखित प्रकृतिका मालवस्तुहरु नियमित आईरहने सामान हो भनी भौतिक रुपमा समेत नहेरी परीक्षण समेत नगरी मूल्यांकन सदरको लागी प्रमुख भन्सार अधिकृत (उप सचिव) समक्ष सिफारिस गरी पठाएको हुँ। शंकास्पद मालवस्तुमा वा राजस्व चुहावट हुन सक्ने ब्यक्तीगत झिटीगुण्टाका सामानहरुमा ब्यापारीक प्रयोजनका सामानहरु पाईएमा वा सामान्यतया RC लेख्ने गरेको पाईन्छ साथै अबैध मालवस्तु छ भन्ने शंका लागेमा त्यस्तो मालवस्तु नियन्त्रणमा लिई प्रमुख भन्सार अधिकृत समेतलाई जानकारी दिनु पर्छ। RC लेखेको मालवस्तुमा जाँचकीले भौतिक परीक्षण गर्दा शंका लागेमा उक्त मालवस्तु पुनः X-Ray गर्न सक्छ, सो गर्दा पनि मालवस्तु यही नै हो भनि एकिन हुन नसकेमा थप बिज्ञ कर्मचारीद्वारा परामर्श लिई आबश्यकता अनुसार ल्याबमा परीक्षण समेत गर्नु पर्दछ।

आशिकुडा सिस्टममा समेत बिबरण खुलाई कैफियत लेख्न सकिने व्यवस्था छ। भन्सार अधिकृत, मूल्यांकन शाखालाई समेत मौखिक वा लिखित रुपमा RC लेखेको जानकारी जाँचकी र X-Ray अपरेटरले दिनु पर्छ। मिति २०८०।०४।०२ गते X-ray मा खटिएका कर्मचारी सरोज श्रेष्ठले उक्त मालवस्तुमा RC लेखेको सम्बन्धमा निज सरोज श्रेष्ठ र जाँचकी खरिदार कुमार ढकाल समेतले मलाई मौखिक तथा लिखित जानकारी नगराएको हुँदा उक्त मालवस्तु ठीकै छ भनी मूल्यांकन गरेको हुँ। मालवस्तुमा कुनै शंका लागेमा X-ray मा खटिएका कर्मचारीले RC लेख्ने र उक्त मालवस्तुलाई तुरुन्तै रोकी जाँचकी र भन्सार अधिकृत र मूल्यांकन शाखालाई जानकारी गराउनु पर्ने कर्तब्य हो तर निज सरोज श्रेष्ठ र जाँचकी कुमार ढकालले मौखिक तथा लिखित कुनै जानकारी गराएनन्।

X-ray अपरेटरलाई शंका लागेमा मालवस्तुलाई एकिन गर्न उक्त मालवस्तु खोलि हेरी पुन: X-Ray गरी सोको जानकारी जाँचकी कर्मचारी, भन्सार अधिकृत र मूल्यांकन शाखालाई समेत जानकारी गराउनु पर्थ्यो, Red Channel बाट आएको मालवस्तुलाई तत् सम्बन्धी कागजात समेत पूर्ण रुपमा जाँच गरी मालवस्तु एकिन नभएमा आबश्यकता अनुसार पुन: X-Ray गर्ने, भौतिक रुपमा एक/एक गरेर वा मालवस्तुबाट नमूना छनौट गरेर भौतिक परीक्षण समेत गरी मालवस्तुको एकिन गरी उपलब्ध कागजात, बिलबिजक, मालवस्तुको मूल्यको स्व-घोषणा, ब्राण्ड, उत्पती मुलुक,साईज, गुणस्तर लगायतका बिबरणको आधारमा मालवस्तुको मूल्य निर्धारण गरी भन्सार जाँचपास गर्ने गरिन्छ, रडी ट्रेड प्रा.लि.को नाममा आएको मालवस्तुहरु मध्ये कुल १०८० (एक हजार असी) थान ब्रेक प्याड म समेतले मूल्यांकन गरी सिफारीस गरेको, X-Ray अपरेटर सरोज श्रेष्ठले X-Ray Scanning गरे पछी ८ कार्टुन मालवस्तु भएकोमा ४ वटा कार्टुनमा प्रष्ट बुझिने गरी RC भनि लेखेकोमा जाँचकी खरिदार कुमार ढकालले उल्लेखित ४ वटा कार्टुन खोली भौतिक रुपमा परीक्षण गरे वा गरेनन् मलाई मौखिक तथा लिखित रुपमा प्रतिवेदन गरेनन् तर उल्लेखित मालवस्तु भौतिक रुपमा परीक्षण गरी कुनै कैफियत नलेखी मूल्यांकन सिटमा दस्तखत समेत गरेका थिए र पहिला पनि मैले त्यस्तै सामान मूल्यांकन गरि सकेको हुँदा तेही अनुभब, संलग्न कागजात, बिल बिजक, मूल्यांकन शाखाका ना.सु. बिरेन्द्र नेपालीले समेत मूल्यांकन सिटमा कुनै कैफियत नलेखी दस्तखत गरी मलाई प्रतिबेदन गरेका, जोखिम ब्यबस्थापन शाखाबाट पनि कुनै कैफियत नजनाएकोले मैले मूल्यांकन गरी प्रमुख भन्सार अधिकृत समक्ष मूल्यांकन सदर गर्न सिफारीस गरेको हो।

मलाई X-Ray अपरेटर, जाँचकी तथा भन्सार अधिकृत, मूल्यांकन शाखाका ना.सु. कोही कसैले पनि उल्लेखित मालवस्तु भएको ४ वटा कार्टुनमा RC लेखेको सम्बन्धमा कुनै पनि कर्मचारीले प्रतिबेदन गरेनन् र भन्सार एजेन्टले पनि स्व-घोषणा गरेको मालवस्तु सबै ठिक छ फरक परे कानून बमोजिम सहुँला भनि दस्तखत गरेकोले सबैको बिश्वासमा परि उल्लेखित मालवस्तु ब्रेक प्याड नै हो भनि भौतिक रुपमा मैले नहेरी मुल्यांङकन गरी सदरको लागी पेश गरेको हुँ।

जोखिम ब्यबस्थापन शाखा (WAN) स्थापना गर्नुको मुल उद्देश्य नै यस्तै प्रकृतिका राजस्व छलि लगायतका जोखिम पहिचान, नियन्त्रण र ब्यवस्थापन गर्नु हो। जोखिम ब्यबस्थापन शाखाले प्रत्येक दिनको भन्सार जाँचपासको प्रकृया अध्ययन गरिने हुँदा US डलर ५०० (पाँच सय) भन्दा कम गरी पटक पटक एउटै प्रकृतिको सामान आई रहेकोमा सो किन र कसरी आईरहेको छ भनि हेर्नु पर्ने जिम्मेवारी समेत हो। मैले उक्त दिनको सबै काम कारबाही सामन्य नै रहेकोले म भन्दा माथिका कार्यालय प्रमुख लागायतका अधिकृतहरूलाई रिपोर्टिङ समेत गरेको थिईन भन्ने समेत व्यहोराको प्रतिबादी अधिकृत गणेश प्रसाद पौडेलको बयान।

ञ. **प्रतिबादी टाँसी भन्ने थुप्तिन छिरिङ (THUPTING TSERING) को बयान**:

प्रतिबादी ALI भन्ने LI Wen Tsung ले सन २०२२ मार्च महिनामा भेटी नेपाली नागरिकको नाममा कम्पनी दर्ता गरी ईलोक्ट्रोनिक्स मालवस्तु चिन देखी ल्याई ब्यापार गर्नु पर्यो त्यसको लागी कम्पनी खोल्न नेपाली नागरिकता भएको ब्यक्ती चाहियो मानिस खोज भनि मलाई भने पछी मैले मेरो सम्पर्कमा रहेका साथी हर्कराज राईलाई कम्पनी दर्ता गर्न मानिस खोज राम्रो पैसा दिउँला भनेको थिए। निज हर्कराज राईले आफ्नै गाँउघर भोजपुर बताउने मलाई नाम थर थाहा नभएको मानिस ल्याई मैले ALI भन्ने LI Wen Tsung संग २ लाख ५० हजार रुपैया रकम लिई निज हर्कराज राईलाई उक्त कम्पनी दर्ता गरिदिन तयार भएको मानिसलाई रु.

२,००,०००।– (दुई लाख) दिनु भनि दिई निज हर्कराज राईले निज ब्यक्तीको नाममा CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA -6 KATHMANDU नामको कम्पनी दर्ता गराई बैक खाता समेत खोली उक्त खातामा कम्पनी संचालन गर्न ALI भन्ने LI Wen Tsung ले रु.३,००,०००।– (तीन लाख) समेत डिपोजिट गर्न लगाई भन्सार बिभागबाट EXIM CODE नं. समेत लिई बिदेशबाट ईलेक्ट्रोनिक्स मालवस्तु आयात गर्न थाले देखी म मेरो भुमिका चाईनिज नागरिकहरुलाई चाहिने सटर कोठा, घर, गाडी लगायतका ब्यबस्थापकिय कार्य गर्नु पर्ने भनि मेरो सम्पर्कमा रहेका ALI भन्ने LI Wen Tsung ले भनेपछी मैले हर्कराज राई मार्फत निजहरुको आबश्यकता अनुसारको सटर कोठा, घर, गाडी खोजी हर्क राज राईको नाममा नै सम्झौता गराई सटर कोठा, घर, गाडी उपलब्ध गराउन थाले भने बिदेशबाट मालवस्तु आएपछी म त्रिभुबन बिमानस्थल भन्सार गई भन्सार एजेण्ट खोज्ने क्रममा नाम थाहा नभएको कार्की थर भएका ९८५१०४५३७५ नं. भएका भन्सार एजेण्टलाई भेटी कुरा गरी मालवस्तु पहिलो पटक छुटाई ल्याएको हो।

मालवस्तु ALI भन्ने LI Wen Tsung बौद्ध आई सामान बुझी मेरै डेराकोठामा स्टोर गरी राखी बिस्तारै बिस्तारै अन्य ठाउमा लैजाने गरेका थिए कता लान्थे मलाई थाहा हुदैनथ्यो । पछी जति पनि CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA -6 KATHMANDU को नामबाट मालवस्तु पैठारी भई आँउथ्यो ALI भन्ने LI Wen Tsung पैसा दिई Airway Bill, प्याकिङ लिष्ट र ईनभ्वाईस मेरो WhatsApp पठाउथे र मैले उक्त Document सबै कार्कीलाई पठाई राजस्व लगायतका खर्च कहिले नगदै र कहिले बैक ट्रान्फर गरी पठाउथे भने कार्कीले मालवस्तु बौद्ध ल्याई मलाई डेलिभरी दिन्थे र ALI भन्ने LI Wen Tsung आई म संग मालवस्तु बुझी लिई लान्थे पछी महाराजगंजमा सटरकोठा खोज भनि भनेपछी मैले हर्क राईलाई खोज्न लगाई महाराजगंज बाँसबारीमा सटर खोजि मालवस्तु स्टोर गरी राखी काम गर्न थालेका थिए।

सन् २०२२ अप्रिल महिना देखी CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA -6 KATHMANDU को नाममा बिदेशबाट मालवस्तु पठाउन बन्द गर्यो त्यसपछी बासबारीमा भएको सटर बन्द गरी CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA-6 KATHMANDU को बाँकी सामान महाराजगंज गंगालाल अस्पताल नजिक पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.,को लागी खोलिएको सटर कोठामा ल्याई राख्न थालेका थिए। STEPS भन्ने LI NENGKAI ले मलाई भेटी कम्पनी दर्ता गर्नु पर्यो भनि राम कुमार भुजेलको नाममा STEPS भन्ने LI NENGKAI बाट रु. ५ लाख २५ हजार लिई राम कुमार भुजेलाई मैले रु. १ लाख पचास हजार दिई हर्क राज राईलाई जिम्मा लगाई कम्पनी रजिष्टारको कार्यालयमा गई भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. दर्ता गरेको हो । राम कुमार भुजेलको दाई नाता पर्ने कुमार भुजेलेको नाममा STEPS भन्ने LI NENGKAI ले मलाई रु. ५ लाख २५ हजार दिई मैले कुमार भुजेललाई रु.१ लाख ५० हजार दिई हर्क राई मार्फत कम्पनी दर्ता गर्न पठाई निज कुमार भुजेलको नाममा HWADA ELECTRIC SUPPLIERS PVT LTD नामको कम्पनी दर्ता गरेको हो। पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. दर्ता गर्न निज STEPS भन्ने LI. NENGKAI ले मलाई रु. ५ लाख २५ हजार दिई मैले हर्क राईलाई रु. १ लाख ५० हजार दिनु भनि राम बहादुर भुजेलको नाममा पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.नामको कम्पनी दर्ता गरेको। भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. HWADA ELECTRIC SUPPLIERS PVT. LTD, पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. गरी तीनै कम्पनीको नाम बाट EXIM CODE नं. लिन बैक खाता खोलि ३/३ लाखका

दरले रकम बैक खातामा डिपोजिट गरी STEPS भन्ने LI NENGKAI ले सबै डिल गरी तीनै कम्पनीबाट ईलेक्ट्रोनिक्स मालवस्तु आयात आएका मालवस्तुका Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस STEPS भन्ने LI NENGKAI ले मेरो WhatsApp पठाई मैले भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को मालवस्तु छुटाउन भन्सार एजेण्ट मधुसुदन नेपाललाई कहिले सिधै सम्पर्क गरी कहिले हर्कराज राई मार्फत पैसा र डकुमेण्ट पठाई निज मधुसुदन नेपालले मालवस्तु गोपीकृष्ण चाबहिलमा डेलिभरी गर्थे । समान आउने बेलामा भन्सार एजेण्टले फोन मार्फत मलाई र हर्कराज राईलाई फोन गरी हर्कराज राई गई सटर खोली सामान ईन गराउथे । HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को मालवस्तु आएपछी STEPS भन्ने LI NENGKAI ले मलाई पैसा र Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस पठाई मैले राकेश भण्डारी नामको भन्सार एजेण्टलाई कहिले WhatsApp मार्फत र कहिले हर्कराज राई मार्फत पैसा र Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस पठाई निज भन्सार एजेण्ट राकेश भण्डारीले मालवस्तु सामाखुसी सटर कोठामा ल्याई हर्कराज राईलाई डेलिभरी दिन्थे । पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.को नामको मालवस्तु दुई/तीन पटक मात्र आए जस्तो लाग्छ उक्त सामानहरु महाराजगंज सटरमा स्टोर गर्ने गरेको हो सो बारेमा डिटेलमा हर्कराज राईले हेर्ने गरका थिए ।

STEPS भन्ने LI NENGKAI संग SAUTEN भन्ने DING SHENG FA मिलेर काम गर्ने गरेका छन, निजहरु मिलेर ईलेक्ट्रोनिक्स सामान पैठारीको काम गर्दछन । Alex भन्ने Yao Pucheng ले सन २०२३ जनवरी तिर कम्पनी खोली काम गर्नु पर्यो भनि नेपाली नागरिकता भएको मानिस खोज भनि मलाई भनेकोमा मैले पहिले नै कम्पनी खोलि सकेका मेरो सम्पर्कमा रहेका राम बहादुर भुजेलसंग सम्पर्क गरी निजकै भाई बिकुन्द्र भुजेलको नाममा हर्कराज राईलाई कम्पनी रजिष्टारको कार्यालयमा पठाई दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. नामको कम्पनी दर्ता गरी मैले Alex भन्ने Yao Pucheng संग रु. ५ लाख २५ हजार लिई मैले बिकुन्द्र भुजेलाई दिनु भनि रु. १ लाख ५० हजार दिऐको हुँ र कम्पनी दर्ता भएपछी बिकुन्द्र भुजेलकै नाममा बैक खाता समेत खोल्न लगाई बैकमा रु. तिन लाख डिपोजिट गरी भन्सार बिभागबाट EXIM CODE नं. समेत निकाली Alex भन्ने Yao Pucheng ले बिदेशबाट स्मार्ट वाच (घडी), सेभर लगायतका सामान आयात मलाई त्रि.बि. भन्सार कार्यालयबाट मालवस्तु छुटाउन Alex भन्ने Yao Pucheng ले मगाई आबश्यक पैसा र Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस मलाई WhatsApp मार्फत पठाई मैले उक्त कागजात र पैसा समेत हर्कराज राईलाई दिई त्रि.बि. भन्सार कार्यालयमा गई हर्कराज राईले भन्सार एजेण्टको रुपमा काम गर्ने राजेन्द्र कुमार राई मार्फत मालवस्तु छुटाई हर्कले ल्याईसके पछी उक्त सामान कसलाई जिम्मा लगाउने भनि Alex भन्ने Yao Pucheng लाई फोन मार्फत सोध्दा निजले उक्त सामानहरु लाजिम्पाटमा गई LIN ZEQIANG लाई जिम्मा दिनु भनि भनेकाले मैले हर्कराज राईलाई सोही कुरा भनि निज हर्कराज राईले लाजिम्पाटको घरमा LIN ZEQIANG लाई सामान बुझाएका थिए ।

सन् २०२३ मार्च महिना तिर पुन: Alex भन्ने Yao Pucheng ले अर्को कम्पनी दर्ता गर्नु पर्यो भनेपछी मैले राम बहादुर भुजेललाई सम्पर्क गरी मानिस पठाउ भनेपछी निजले आफ्नै छोरा प्रतिबादी राम कुमार भुजेलका भान्जा दिलिप भुजेललाई ल्याई मैले Alex भन्ने Yao Pucheng संग रु. ५ लाख २५ हजार लिई हर्कराज राईलाई निज दिलिप भुजेलको नाममा कम्पनी दर्ता गरी निजलाई रु. १ लाख ५० हजार दिनु र निजकै नाममा प्रभु बैकमा खाता समेत खोलि रु. तिन लाख समेत डिपोजिट गर्नु भनि पैसा दिई निज हर्क राज राईले कम्पनी रजिष्टारको कार्यालयमा लिई गई रेडी ट्रेड प्रा.लि. नामको कम्पनी दर्ता गरी निज हर्कराज राईले नै भन्सार

बिभागबाट EXIM CODE नं. निकाली हङकङबाट Alex भन्ने Yao Pucheng ले ब्रेक प्याड, सेभर लगायतका मालवस्तु पैठारी गरी नेपाल ल्याई भन्सार कार्यालयबाट मालवस्तु छुटाउन मलाई सम्पूर्ण कागजात र लाग्ने पैसा समेत निज Alex भन्ने Yao Pucheng ले मलाई दिई मैले उक्त कागजात हर्कराज राईलाई दिई भन्सार कार्यालय पठाई प्रतिबादी राजेन्द्र कुमार राईको सहयोगमा हर्कराज राईले मालवस्तु छुटाई बालुवाटारको गोदाममा ल्याई हर्कराज राईले कहिले LIN ZEQIANG लाई त कहिले मैले र हर्कराज राईले समेत नचिनेका LIN ZEQIANG ले पठाएका अर्का चाईनिज मानिसलाई पैठारी भई आएका सामानहरु जिम्मा लगाउने गरेका थिए। Alex भन्ने Yao Pucheng ले मलाई भेटी पुन: अर्को कम्पनी खोल्न मानिस खोज भनि मलाई २०८० सालको बैशाख महिना तिर भनेपछी मैले हर्कराज राईलाई नेपाली नागरिकता भएको मानिस खोज भनि भने पछी निज हर्कराज राईले एक जना सरिता नामको महिला खोजि Alex भन्ने Yao Pucheng संग रु. ५ लाख २५ हजार लिई मैले निज सरिता नामको महिलालाई रु १ लाख ५० हजार दिनु भनी हर्कराज राईलाई रकम दिई निज हर्कराज राईले निज सरिता भन्ने महिलाको नाममा कम्पनी दर्ता गरी पुन: मैले बैक खाता समेत खोल्न लगाई तिन लाख समेत बैक ग्यारेण्टी रकम डिपोजिट गर्न लगाई भन्सार बिभागबाट EXIM CODE नं. लिई कम्पनीको सम्पूर्ण कागजातहरु Alex भन्ने Yao Pucheng लाई दिएको हो। उक्त सरिता सप्लायर्सको नामबाट सामान बिदेशबाट पैठारी गरेको मेरो जानकारीमा छैन।

मैले निज चाईनिज नागरिकहरुलाई कम्पनी दर्ता गर्न सहयोग गरे बापत प्रत्येक कम्पनी बापत ४०/४० हजारका दरले मैले कमिसन खाई काम गरेको हो भने मैले हर्कराज राईलाई प्रत्येक कम्पनी दर्ता गराए बापत १०/१० हजारका दरले कमिसन दिएको हो। भन्सार कार्यालयबाट दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., रेडी ट्रेड प्रा.लि.को मालवस्तु छुटाए बापत मलाई Alex भन्ने Yao Pucheng ले मालवस्तु अनुसार रु.१५ हजार देखि रु. २५ हजार सम्म रकम दिने गरेका थिए भने मैले निज Alex भन्ने Yao Pucheng संग पैसा मागी रु. ५ हजार देखी रु. ८ हजारसम्म मालवस्तु अनुसार हर्कराज राईलाई पैसा दिने गरेको थिए। CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA-6 KATHMANDU, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., HWADA ELECTRIC SUPPLIERS PVT.LTD. र पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.को मालवस्तु त्रि.बि. भन्सार कार्यालयबाट छुटाई ल्याए बापत मलाई रु. १३ हजार देखी रु. २० हजार सम्म र हर्कराज राई लाई दिनु भनि रु. ५ देखी रु. ८ हजार सम्मको रकम STEPS भन्ने LI NENGKAI ले मालवस्तुको परिमाण अनुसार दिने गरेका थिए।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट रेडी ट्रेड प्रा.लि. को नाममा बि.सं. २०८०।०४।०२ गतेको मितिमा जारी भएको प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान सामानहरू भन्सार कार्यालयबाट सम्पूर्ण जाँच पास लगायतका प्रकृया पुरा गरी पठाईएकोमा मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभाग हरिहरभवन, ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा प्रतिबादी अशोक लामाले चलाएको बा २ ख २३२४ नं. को ट्याक्सी र हर्कराज राई समेत उक्त प्रज्ञापन पत्रमा शंका मानि निजहरुलाई नियन्त्रणमा लिई राजस्व अनुसन्धान बिभाग हरीहरभवन ललितपुरबाट २०८०।०४।०३ गते भन्सार बिभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा ९९.५५% सम्म सुन रहेको भनि थाहा पाएको, उल्लेखित मालवस्तु राजस्व

अनुसन्धान बिभागले बरामद गरी नेपाल राष्ट्र बैकलाई दाखिला गरेकोमा, नेपाल राष्ट्र बैकबाट सुन पगाली निकाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको भनि थाहा पाएको हुँ।

मिति २०८०।०४।०१ गते Alex भन्ने Yao Pucheng ले रेडी ट्रेड प्रा.लि. को ब्रेक प्याड र सेभर हङकङबाट आएको छ भनि मलाई Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस मलाई WhatsApp मार्फत पठाई त्रि.बि. भन्सार कार्यालयबाट छुटाउनु भने पछी मैले हर्कराज राईलाई पैसा र Airway bill, प्याकेज लिष्ट र ईनभ्वाईस दिई सामान छुटाई लिई आउनु भनि बिहान १०:०० बजे हर्कराज राई त्रि.बि. भन्सार कार्यालय गई सामान छुटाउन भनि राजेन्द्र कुमार राईलाई लगाएकोमा रेडी ट्रेड प्रा.लि.को EXIM CODE नं. को म्याद २०८०।०३।३२ गते नै सकिएको हुँदा नविकरण गरे पछी मात्र मालवस्तु छुटाउन सकिन्छ भनि राजेन्द्र कुमार राईले बताएपछी मलाई हर्क राज राईले कम्पनी नविकरण गर्नु पर्यो पैसा चाहियो भनेपछी मैले उक्त कुरा Alex भन्ने Yao Pucheng लाई WhatsApp मार्फत भने पछी निजले नबिकरण गर्न लगाउनु कति पैसा चाहिन्छ भनेपछी मैले रु.१५,०००।– चाहिन्छ भनेपछि Alex भन्ने Yao Pucheng ले मलाई नगदै रकम दिई मैले मिति २०८०।०४।०२ गते हर्क राज राईलाई रेडी ट्रेड प्रा.लि.को दर्ता प्रमाण पत्र लगायतका कागजातहरु र नगद रु.१५,०००।– (पन्ध्र हजार) दिई पठाई निज हर्कराज राईले त्रि.बि. भन्सार कार्यालयमा गई राजेन्द्र कुमार राईलाई भेटी निज राजेन्द्र कुमार राईले प्रकृया पुर्याई रेडी ट्रेड प्रा.लि.को EXIM CODE नं. नविकरण गरी रेडी ट्रेड प्रा.लि.को नामको प्रज्ञापन नं. M३५०७९ मा उल्लेखित BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ मा उल्लेखित SHAVER सेट ८० थान भएको मालवस्तु समेत छुटाई हर्कराज राईलाई जिम्मा दिई गेट बाहिर गई मैले नचिनेका पार्किङ गरी बसेका बा २ ज २३२४ नं. को ट्याक्सी चालक, ट्याक्सी पार्किङ गरी बसेको अबस्थामा गई भेटी बालुवाटारसम्म जान ट्याक्सी रिर्जभ गरी उल्लेखित प्रज्ञापन नं. M३५०७९ मा उल्लेखित BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ मा उल्लेखित SHAVER सेट ८० थान भएको मालवस्तु ट्याक्सीमा लोडगरी भन्सार कार्यालयको गेट बाहिर निस्की जाने क्रममा राजस्व अनुसन्धान बिभागको टोलीले ट्याक्सी र सामान सहित मैले नचिनेका ट्याक्सी चालक र हर्कराज राईलाई प्रज्ञापन पत्रमा उल्लेखित मालवस्तुमा शंका लागी नियत्रणमा लिई राजस्व अनुसन्धान बिभागले अनुसन्धानको लागी लगेको रहेछ ।

भन्सारबाट आधा घण्टा भित्रमा बालुवाटार पुग्न पर्ने सामान नपुगेपछी Alex भन्ने Yao Pucheng ले मलाई WhatsApp मा कल गरी के भएको हो सामान अहिले सम्म आएको छैन भनि साँझको १८:०० बजे फोन गरेपछी के भएको हो म बुझ्छु भनि मैले हर्कराज राईलाई फोन गरी के भयो सामान किन बालुवाटार नपुर्याएको भनि सोधेकोमा हर्कराज राईले मालवस्तुमा शंका लागी राजस्व अनुसन्धान बिभागले सामान, ट्याकसी चालक र मलाई ट्याक्सी सहित ललितपुर लाँदैछ, सामान भोलि चेकजाँच गरी दिन्छ रे भोलि बिहान १०:०० बजे राजस्व अनुसन्धान कार्यालयमा सम्पर्क राख्न आउन भनेको छ भनेपछी मैले सोही कुरा Alex भन्ने Yao Pucheng लाई WhatsApp मा फोन गरी सुनाए। भोलि पल्ट हर्कराज राईले राजस्व अनुसन्धान बिभागमा जरिवाना लाग्छ रे रु ३ लाख पचास हजार चाहिन्छ भनेपछी मैले Alex भन्ने Yao Pucheng संग रु. ४ लाख जरिवाना तिर्नु पर्ने भयो पैसा चाहियो भने पछी Alex ले अहिले मसंग पचास हजार भन्दा बढी पैसा छैन भनि पैसा दिएनन् र केही पनि भनेनन्। त्यसपछी मैले सामानमा गडबड त छैन भनि Alex लाई सोधेकोमा सामान ठिक छ भनेपछी मैले हर्कराज राईलाई सामान ठिक छ भनेको हुँ। तपाईलाई भन्दा राजेन्द्र कुमार राईलाई

कानूनी ज्ञान हुने हुँदा निज राजेन्द्र कुमार राईलाई लिएर जानु के हुन्छ खबर गर्नु भने। भोलिपल्ट २०८०।०४।०३ गते निज हर्कराज राई आफु नगई रेडी ट्रेड प्रा.लि.को छाप र लेटर हेड दिई कम्पनीको प्रतिनिधी बनाएर पठाएछन। राजेन्द्र कुमार राई राजस्व अनुसन्धान बिभाग पुगेपछी निज र ट्याक्सी चालकको रोहबरमा सामान चेक जाँच गरेपछी सुन भेटीएपछी निजहरुलाई राजस्व अनुसन्धान बिभागले नियन्त्रणमा लिएको रहेछ भनि पक्राउ परेका रहेछन मलाई केही थाहा थिएन मलाई उल्लेखित सामान छुट्छ भन्ने बिश्वासमा थिए। राजस्व अनुसन्धान बिभागबाट खबर आँउछ र Alex भन्ने Yao Pucheng लाई आएको खबर सुनाई पैसा माग्छु भन्ने सोचि दिन भर बसेकोमा हर्कलाई फोन गरी के भईरहेको छ भनि सोधेकोमा हर्कले मलाई राजेन्द्र कुमार राईले सामान छुटाउन पैसा खोज्दै छु भनेको छ सामान छुट्छ रे पैसा चाहियो भनेको छ भनि फोनमा कुरा गरी Alex भन्ने Yao Pucheng संग पैसा माग्दा पैसा खोजिरहेको छु भन्दा भन्दै दिन कटाए। हर्कराज राईसंग राजेन्द्र कुमार राईले मेरो फोन नं. मागी मलाई फोन गरी सामान रु.८०,०००।– (असी हजार) मा छुटाए कहाँ ल्याईदिने हो भनेपछी मैले हर्कराज राईलाई फोन गर्नु भनेकोमा निज राजेन्द्र कुमार राईले हर्कराज राईको फोन स्विच अफ भनेको छ, फोन लागेको छैन सामान कहाँ ल्याई दिम भनेपछी मैले महाराजगंज ल्याउनु मैले स्टोर देखेको छैन म हर्क राज राईलाई लिएर आउँछु र सामान बुझाउदा तपाईको पैसा समेत दिन्छु भनि मेरो साथमा भएको एक लाख बोकी निज राजेन्द्र कुमार राईलाई दिई असी हजार दिई भोलि जसरी पनि Alex भन्ने Yao Pucheng संग ४ लाख लिन्छु राम्रै फाईदा हुने भयो भनि सोचि हर्कराज राईको घर तर्फ जाने क्रममा महाराजगंज बासबारीबाट पक्राउ परेको हुँ। कम्पनीहरु सम्वन्धमा निम्नानुसार खुलाई दिएको छु।

| सि. नं | कम्पनी | संचालक | EXIM CODE | कम्पनी खोल्न लगाउने प्रतिवादी | खोल्ने कार्यमा संलग्न रहेका |
|---|---|---|---|---|---|
| १. | HWADA ELECTRIC SUPPLIERS PVT LTD | कुमार भुजेल | 6103250430127 NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| २. | रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | EXIM CODE: 6104779730113NP | ALEX भन्ने Yao Pucheng | राम कुमार भुजेल, हर्कराज राई थुप्तिन छिरिङ र भिम ब. मगर |
| ३. | दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | बिकुन्द्र भुजेल | EXIM CODE: 6103977670145NP | ALEX भन्नेYao Pucheng | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| ४. | पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. | राम बहादुर भुजेल | EXIM CODE: 6103614740154 NP | STEPS भन्ने LI. NENGKAI&SAUTEN भन्ने DINGSHENG FA | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| ५. | सरिता सप्लायर्स | सरिता तामाङ | EXIM CODE: | ALEX भन्नेYao Pucheng | हर्क राज राई, थुप्तिन छिरिङ |

| | | | | | |
|---|---|---|---|---|---|
| | | | 6199527490162 NP | | |
| ६. | CHHUNGA K ELECTRIC SUPPLIERS BUDANILK ANTHA -6 KATHMAN DU | लेखनाथ कार्की डोली (दमाई) | EXIM CODE: 6101997700119 NP | ALI भन्ने LI Wen Tsung | हर्क राज राई, थुप्तिन छिरिङ |
| ७. | भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | EXIM CODE: 6103185440103 NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |

उल्लेखित कम्पनीहरूको देखिने साईनबोर्ड सहितको कार्यालयहरू कहि कतै स्थापना भएका छैनन् । आन्तरिक राजस्व कार्यालयबाट PAN नं. र बिदेशबाट मालवस्तु ल्याउन आबश्यक पर्ने EXIM CODE नं. लिने प्रयोजनको लागी कागजी रुपमा रेडी ट्रेड प्रा.लि. लगायतका कम्पनीहरुको कार्यालय कागजी रुपमा हर्कराज राईले मिलाएका थिए । मलाई थाहा भए अनुसार CHHUNGAK ELECTRIC SUPPLIERS PVT LTD, BUDANILKANTHA-6 KATHMANDU र पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.,को लागी महाराजगंजमा, रेडी ट्रेड प्रा.लि.को लागी बालुवाटारमा, दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को लागि लाजिम्पाटमा, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को लागि गोपीकृष्ण चाबहिल, र HWADA ELECTRIC SUPPLIERS PVT LTD को लागि सामाखुसीमा सटरकोठा भाडामा लिई प्रयोग गरिएको हो । म समेत सहभागी भई गत सन २०२२ मार्च महिनामा CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA -6 KATHMANDU दर्ता गरी एक डेढ महिनापछी पहिलो पटक बिदेशबाट मालवस्तु पैठारी गर्न शुरु गरी क्रमश: सवालमा उल्लेखित चाईनिज नागरिकहरूसंग संलग्न रही बिदेशबाट रेडी ट्रेड प्रा.लि. लगायतका कम्पनीहरुको नामबाट मालवस्तु पैठारी गर्न शुरु गरेको हो । त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाउन के कस्तो परिपञ्च के कसले मिलाएका थिए मलाई थाहा थिएन । मलाई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा CHHUNGAK ELECTRIC SUPPLIERS BUDANILKANTHA -6 KATHMANDU को नाममा सामान आइको छ छुटाई ल्याउनु भनि Ali भन्ने LI Wen Tsung ले भनि पैसा र कागजात दिने गरेका थिए । भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., र HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को मालवस्तु आउदा STEPS भन्ने LI NENGKAI ले पैसा र कागजात दिने गरेका थिए भने दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. र रेडी ट्रेड प्रा.लि. को सामानहरु आउदा Alex भन्ने Yao Pucheng कहिले STEPS भन्ने LI NENGKAI र कहिले SAUTEN भन्ने DING SHENG FA, ले पैसा र कागजात दिने गरेका थिए। निज Ali भन्ने Li Wen Tsung, STEPS भन्ने LI NENGKAI र Alex भन्ने

Yao Pucheng ले मलाई  त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा के कसरी परिपञ्च मिलाएका छन कहिल्यै भनेन् । म र हर्क राज राई समेत त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाई ल्याई रेडी ट्रेड प्रा.लि.को बालुवाटार र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को लाजिम्पाटमा ल्याई चाईनिज नागरिक LIN ZEQIANG र निजसंग हुने मैले समेत कहिल्यै नचिनेका १/२ जना चाईनिज नागरिक समेतलाई बुझाउन गरेको हो । त्यस्तै CHHUNGAK ELECTRIC SUPPLIERS PVT. LTD, BUDANILKANTHA-6 KATHMANDU र पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.को लागी महाराजगंजमा, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को लागि गोपीकृष्ण चाबहिल र HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को लागि सामाखुसीमा सटरकोठामा लगी हर्कराज राईले मालवस्तु लगी राखिदिने गरेका हुन । मैले र हर्कराज राई समेत भई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट छुटाई लिई गई चाईनिज नागरिक LIN ZEQIANG लाई बालुवाटार वा लाजिम्पाटमा जिम्मा लगाउने गरेको मालवस्तु तथा सामाखुसी, महाराजगंज, गोपीकृष्ण लगायतका स्टोरमा लगि स्टोर गरिएका मालवस्तुमा अबैध सुन पैठारी भई आउने गरेको छ भन्ने पक्राउ परे पछी मात्र म लगायतले भन्सार कार्यालयबाट छुटाउने गरेको ब्रेक प्याड, सेभर, स्मार्ट वाच, अटो पार्टस र ईलेक्ट्रोनिक्स लगायतका मालवस्तु भित्र सुन राखी अबैध पैठारी भई आउने गरेको रहेछ भनि थाहा पाएको हुँ । रेडी ट्रेड प्रा.लि. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को मालवस्तु सम्बन्धमा मलाई Alex भन्ने Yao Pucheng ले मेरो WhatsApp मा Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस कागज पठाई मालवस्तु छुटाउन लाग्ने पैसा नगदै नै दिने गरेका थिए । CHHUNGAK ELECTRIC SUPPLIERS PVT. LTD. को मालवस्तु सम्बन्धमा मलाई शुरुको २ पटक Ali भन्ने Li Wen Tsung ले मेरो WhatsApp मा Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस पठाई मालवस्तु छुटाउन लाग्ने पैसा समेत निजले नगदै दिने गरेको, त्यसपछी आउने गरेका मालवस्तु सम्बन्धमा STEPS भन्ने LI NENGKAI ले मेरो WhatsApp मा Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस कागज पठाई मालवस्तु छुटाउन लाग्ने पैसा नगदै दिदै आएका थिए । पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., र HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को हकमा शुरु देखी नै STEPS भन्ने LI  NENGKAI ले मेरो WhatsApp मा Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस कागज पठाई मालवस्तु छुटाउन लाग्ने पैसा नगदै दिदै आएका थिए ।  गोपीकृष्ण चाबहिल, महाराजगंज, सामाखुसी, टोखाको सटरकोठा तथा घर टहराहरु STEPS भन्ने LI NENGKAI ले ईलेक्ट्रोनिक्स सामानहरुको भण्डारण तथा बिक्री बितरण गर्नको लागि सटर कोठा तथा घर टहरा चाहियो खोज भनि मलाई भनेपछी मैले हर्कराज राई लाई सटरकोठा खोज्न लगाई निज हर्कराज राईले खोजी STEPS भन्ने LI NENGKAI संग मैले पैसा लिई सटरकोठाहरुको घरभाडा दिनु भनि मैले हर्कराज राईलाई पैसा दिई उल्लेखित सटरकोठा तथा घर टहरा भाडामा लिएको हो । बालुवाटार, लाजिम्पाट र सोह्रखुट्टे लगायतका सटरकोठा तथा घरहरु को कसले खोजि दिएका हुन मलाई थाहा छैन । गोपीकृष्ण चाबहिल, महाराजगंज, सामाखुसीको सटरमा मालवस्तु राख्दा हर्कराज राईले सटरकोठा खोलिदिने गरेका थिए । हर्कराज राईले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय देखी मैले निजलाई निर्देशन गरेको स्टोर सम्म रेडी ट्रेड प्रा.लि. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. र पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.,को नाममा आएका मालवस्तु प्राय ट्याक्सी भाडा गरी ढुवानी गरी ल्याउने गर्दथे भने CHHUNGAK ELECTRIC SUPPLIERS को मालवस्तु कार्की नाम गरेका भन्सार एजेण्टले महाराजगंज स्टोरमा ल्याई

डिलिभरी दिन्थे, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को मालवस्तु भन्सार एजेण्ट मधुसुदन नेपालले गोपीकृष्ण चाबहिलमा डेलिभरी दिन्थे भने HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को मालवस्तु भन्सार एजेण्ट राकेश भन्डारीले सामाखुसी स्टोरमा डेलिभरी दिने गरेका थिए। हङकङबाट रेडी ट्रेड प्रा.लि.को नामबाट BRAKE PAD र SHAVER आउने गरको मैले देखेको हुँ। दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को नाम बाट स्मार्ट वाच (घडी) आएको जानकारीमा छ। HWADA ELECTRIC SUPPLIERS PVT. LTD, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., CHHUNGAK ELECTRIC SUPPLIERS बाट ओल्डिङ मेसिन, टाटु हान्ने मेसिन, ईलेक्ट्रिक मेसिनहरु, काठ काट्ने मेसिन, नाईट कलबमा धुँवा फाल्ने मेसिन, भ्याकुम किल्नर लगायतका मैले नचिनेका ईलेक्ट्रिक मेसिन समेत आउने गरेको थियो, GOLD MELT MACHINE टोखा, लाजिम्पाटमा राखी पक्राउ प्रतिबादी चाईनिज नागरिकहरू LIN ZE QIANG, STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, LI Wen Tsung, Alex भन्ने Yao Pucheng लगायतका चाईनिज ब्यक्तिहरू भई GOLD MELT MACHINE बाट पैठारी भई आएका मालवस्तुबाट सुन पगाली निकाल्ने गरेका रहेछन, कम्पनीहरुको EXIM CODE नं. निकाल्न भनि प्रत्येक कम्पनीहरुको नाममा बैक खातामा बैक ग्यारेण्टी राख्न तीन लाखका दरले पैसा समेत दिई निज हर्कराज राईलाई जिम्मा दिएको हो, । मालवस्तु राख्न प्रयोग भएको गोदामको चाँबी हर्कराज राई र LIN ZE QIANG, STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung लाई थप चाबी बनाई मैले दिएको हुँ। प्रतिबादी LIN ZEQIANG, STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung ले प्रयोग गर्ने गाडीमा समेत उल्लेखित स्टोरहरुको चाबी राख्ने गरेका, पक्राउ प्रतिबादीहरु LIN ZE QIANG, STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung, Alex भन्ने Yao Pucheng लगायतले बिदेशबाट ईलेक्ट्रोनिक्स, अटो पार्टस लगायतका सामान पैठारी गरी नेपालमा ल्याई ब्यापार गर्ने भन्ने निजहरुको योजनामा बिश्वास गरी निजहरुले भने बमोजिम निजहरुलाई साथ दिई कमिसन तथा आर्थिक प्रलोभनमा परी उक्त कार्यमा संलग्न रहेको हो। काठमाडौं बसुन्धरा स्थित ईशान अस्पताल अगाडी उषा गिरीको घर चाईनिज नागरिक SAUTEN भन्ने DING SHENG FAलाई हर्क राज राईले रु. ५० हजार कमिसन पाउने सर्तमा भाडामा खोजिदिएको हो। बालुवाटारमा रहेको शोलुसन ट्राभल्स एण्ड टुर्स प्रा.लि. का संचालक केशब श्रेष्ठ संग हर्क राज राईको नाममा तीन वटा गाडी भाडामा लिने गरी सम्झौता गरी एउटा हुण्डाई कम्पनीको क्रेटा बा १६ च ९३०० गाडी मासिक भाडा रु. १ लाख १५ हजार, अर्को बाग्मती BAB 5989 नं. को DUSTER गाडी मासिक रु. १ लाख, अर्को ब्रेजा बा १६ च १७७१ गाडी मासिक भाडा रू. ९० हजार तर्ने गरी मैले क्रेटा बा १६ च ९३०० नं. को गाडी Alex भन्ने Yao Pucheng लाई, बाग्मती BAB 5989 नं. को DUSTER गाडी STEPS भन्ने LI. NENGKAI र SAUTEN भन्ने DING SHENG FA लाई बा १६ च १७७१ नं. को ब्रेजा गाडी ALI भन्ने LI Wen Tsung लाई जिम्मा दिएको थिए। उल्लेखित प्रतिबादीहरुले अबैध सुन पैठारी कसूर गर्न र सोको ब्यबस्थापन गर्न उल्लेखित गाडीहरु प्रयोग गरी वारदात घटाउन र ब्यबस्थापन गर्न प्रयोग गरेका बाटोहरु सहितको उल्लेखित गाडिहरुको GPS लोकेशन देखाएपछी थाहा पाएको हुँ। गाडी भाडामा लिन क्रममा हर्क राज राईले रु.५० हजार कमिसन लिएका हुन मालवस्तु राखिएको स्टोरहरुको तालाचाबी थप बनाई हर्क राज राई र LIN ZE QIANG,

STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung लाई दिएको हुँ। प्रतिबादी LIN ZE QIANG, STEPS भन्ने LI. NENGKAI, SAUTENभन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung ले प्रयोग गर्ने गाडीमा समेत उल्लेखित स्टोरहरुको चाबी राख्ने गरेका हुँदा निजहरु मध्ये को कसले कुन समयमा आई सुन पगाल्ने ठाउँमा मालवस्तु लाने गरेका र कसले सुन पगाल्ने गरेका हुन सो सम्बन्धमा मलाई केही थाहा छैन । Dongfang International Pvt. Ltd. कम्पनी संचालक चाईनिज नागरिक Dou Chuanjun चिन गए पछि फर्की नआएकोले निजको उक्त टहरालाई सन २०२२ मे/अप्रिलमा मैले उक्त घर टहरा मासिक रुपमा भाडा लिन गरी ईलेक्ट्रोनिक्स सामानहरुको गोदाम राख्न भनि मासिक रु. ३०,०००।– (तीस हजार) भाडा लिने गरी STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung लाई भाडामा दिएको हुँ । STEPS भन्ने LI. NENGKAI, ALI भन्ने LI Wen Tsung र Alex भन्ने Yao Pucheng ले मालवस्तु त्रि.बि. भन्सार कार्यालयमा आएको छ सामान छुटाउनु भनि WhatsApp मार्फत Airway Bill, प्याकिङ लिष्ट र ईनभ्वाईस पठाई नगदै पैसा समेत दिएपछी मात्रै मलाई यो कम्पनीको यो सामान आएको रहेछ भनि थाहा हुने गरेको थिए। बि.स. २०७९ जेष्ठ महिना तिर मैले हर्कराज राईलाई म बस्ने गरेको लाजिम्पाटको डेरा कोठामा बोलाई चाईनिज साथीले बिदेशबाट एउटा सानो मेसिन झिकाउनु पर्‍यो भनेकोले हर्कराज राईको नाममा एउटा मेसिन झिकाई भनेको हो । सो कामकोलागि दश हजार कमिशन लिई श्राबण महिना तिर चाईनाको XIAO DING TRANSPORTATION मार्फत २ वटा मेसिन पठाएकोमा काठमाडौं पेप्सीकोला गई २ (दुई) वटा मेसिन ल्याई बौद्ध टुसालमा छोडेको र उक्त मेसिनहरु STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI Wen Tsung र ALEX भन्ने Yao Pucheng लाई टोखामा लान भनि जिम्मा लगाएको हुँ। २०७९ को चैत्र १७/१८ तिर पुन: चाईनाबाट XIAO DING TRANSPORTATION ले अर्को दुई वटा काठको बाकसमा राखी मेसिन दुई थान पठाएकोमा निज हर्कराज राईले २ (दुई) थान मेसिन बालुवाटारमा ल्याई प्रतिबादी चाईनिज नागरिक LIN ZE QIANG लाई बुझाएको हो। २०८० आसर महिनाको १ गते अर्को २ (दुई) थान मेसिन आएकोमा गोपीकृष्ण चाबहिलको सटरमा लगेर राख्नु भनेकोमा र हाल सम्म ६ (छ) थान मेसिन आएकोमा पक्राउ परेपछी उक्त मेसिन GOLD MELT MACHINE रहेछ भन्ने थाहा भयो। उक्त GOLD MELT MACHINE टोखा, लाजिम्पाट, सोह्रखुट्टे लगायतका स्थानमा म समेतले त्रि.बि.भन्सार कार्यालयबाट छुटाई ल्याएको ब्रेक प्याड, सेभर, ईलेक्टोनिक्स लगायतका मालवस्तुमा रहेको सुन पगाल्न प्रयोग गरेको रहेछ भनि थाहा पाए । मेरो घर/कोठा खानतलासी गर्दा जिल्ला प्रशासन कार्यालय काठमाडौबाट जारी भएको देखिएको टाण्डुप लामाको छोरा छिरीङ लामाको नाम उल्लेख भएको ना.प्र.न.२७३२०६४-४९२१ भएको सक्कल नागरिकता भेटिएको र सो नागरिकतामा चाईना ताईबानका नागरिक ALI भन्ने LI Wen Tsung ले सन २०२२ डिसेम्बर महिनामा मलाई सुरक्षीत राखी दिनु होला भनि दिएको सक्कली नेपाली नागरिकता प्रमाणपत्र हो । मैले सन २०११ जनवरीमा गैडाको खाग तस्करी गरेको अपराधमा नेपालगंजबाट पक्राउ परी बर्दिया राष्ट्रिय निकुञ्जबाट मुद्दा चलि सोही कसुरमा ५ बर्ष जेल समेत बसी १ लाख जरिवाना समेत तिरी छुटेको हुँ भन्ने समेत व्यहोराको प्रतिबादी टाँसी भन्ने थुप्तिन छिरिङ (THUPTING TSERING) को बयान।

ट. **शंकित व्यक्ति नरेश तामाङको बयान:**

चाईनिज भाषा अनुवादकहरुले We Chat ग्रुप मार्फत भाषा अनुबादक माग गरेमा निजहरुले ग्रुपमा उपलब्ध गराएको नम्बरमा सम्पर्क गरी चाईनिज नागरिकहरुलाई भेटी भाषा अनुवादकको रुपमा काम गर्ने क्रममा चाईनिज नागरिक LIN ZEQIANG सँग चिनजान भएको र निजले घडी बिक्री गर्नको लागी सटरकोठा खोजि दिन अनुरोध गरे बमोजिम बालुबाटरमा सटर भाडामा खोजि दिएको हो। निजको राहदानी हेरी भिसा चेक गरी रु.१५ हजार मासिक भाडा दिने गरी घरबेटीसँग सहमती गराई सटर भाडामा लिएको र मैले सटर खोजे वापत कमिसन रु.७,५००।– नगद लिएको हो । मिति २०८०।०४।०२ गते जारी प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरुमा ६० किलो ७१६ ग्राम सुन निस्केको भन्ने थाहा पाएको हुँ, मैले पक्राउ परेका अन्य प्रतिवादीहरुलाई चिन्दिन। मैले 9808976959 नम्बरबाट लथेन नामको We Chat ID मा चाईनिज नागरिक LIU LISHAN संगै बस्ने Chen भन्ने ब्यक्ती सम्पर्कमा गरी काठमाडौं बसुन्धारामा स्नेहा कोलोनीमा एउटा घर अं.१ बर्ष अगाडी भाडामा खोजिदिएको र मेरो नाममा दर्ता रहेको Honda कम्पनीको पुरानो स्कुटर दैनिक रु.५००।– का दरले भाडा दिने सर्तमा १ बर्ष अघि दिएको थिए भन्ने समेत व्यहोराको प्रतिबादी दोभाषेको काम गर्ने नरेश तामाङको बयान।

ठ. **प्रतिबादी भन्सार एजेन्टका प्रतिनिधी राजेन्द्र कुमार राईको बयान :**

प्रतिवादी हर्कराज राईले Ready Trade Pvt. Ltd. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.ले हङकङबाट आयात गरेको ब्रेक प्याड, सेभर, स्मार्ट वाच (घडी) लगायतको सामानहरु त्रि.वि. भन्सार कार्यालयबाट निकाल्नको लागी हर्क राज राईले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा मालवस्तु हङकङबाट आएपछी उक्त मालवस्तुको कागज पत्रहरु WhatsApp मार्फत मेरो मोबाईलमा पठाउने गरेका थिए । मेरो भन्सार एजेन्ट नियुक्ती पत्र मिति २०८०/०३/३२ गते देखी म्याद सकिएकोले मेरो नामको भन्सार एजेण्ट आई डी बाट काम गर्न नपाईने भएकाले हर्क राईले दिएका Airways bill लगायतका कागजात मैले सुदर्शन गौतमलाई मालवस्तु जाँचपास गराई छुटाउन भनि दिने गरेको थिए। उक्त काम भन्सार एजेन्ट प्रमाण पत्र आई डी भएका व्यक्तिले मात्र गर्न पाउने भएकोले सुदर्शन गौतमको सम्पर्क र चिनजानमा रहेका भन्सार एजेन्ट प्रमाण पत्र भएका यादव पराजुली र रुक्मिना सुब्बा लगायतका ब्यक्तीको भन्सार एजेण्ट प्रमाण पत्रको आई डी नं. प्रयोग गरी भन्सार कार्यालयको आशिकुडा सिष्टममा मूल्य स्वघोषणा गरी प्रज्ञापन पत्र One line Entry गरी प्रज्ञापन पत्र दर्ता गरी Ready Trade Pvt. Ltd. ले हङकङबाट आयात गरेको ब्रेक प्याड लगायतको मालवस्तुहरु त्रि.वि. भन्सार कार्यालयबाट जाँचपास प्रकृया पुरा गराई छुटाउने गरेको थिए । मैले हाल सम्म १६ पटक Ready Trade Pvt Ltd. लगायतका कम्पनीले आयात गरेको ब्रेक प्याड, सेभर र घडी जस्तो मालवस्तुहरु भन्सार कार्यालयबाट छुटाएको छु, मालवस्तु छुटाउन Trans Global Services PVT LTD तिनकुनेबाट मैले Delivery Order Issue गराउँदा रु. २,८५०।- मालवस्तुको प्रति किलो २ रुपैया ५० पैसा लेबर खर्च, स्टोरेज चार्जमा प्रति किलो ६ रुपैया, मूल्यांकन अनुसारको राजस्व रकम र मेरो चार्ज रु. ५,०००।– (पाँच हजार) लाग्ने गरेको छ। उक्त सबै पैसा हर्कराज राईले दिने गरेका र निजले राजस्व सहित मेरो चार्ज रु. ५०००।– (पाँच हजार) समेतको रकम लिई Ready Trade Pvt. Ltd. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को मालवस्तु त्रि.वि. भन्सार कार्यालयबाट जाँचपास प्रकृया पुरा गराई छुटाउने गरेको हो। उक्त कार्य गरे वापत प्राप्त हुने रकम रु. ५,०००।– परिश्रमिकको रुपमा लिई उक्त रकम सुदर्शन गौतम र भन्सार एजेण्ट बिच बाँडी लिने गरेका थियौ।

मिति २०८०।०४।०२ गते प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान सामानहरू राजस्व अनुसन्धान बिभागले नियन्त्रणमा लिएकोमा सो मालवस्तु राजस्व अनुसन्धान बिभागबाट के-कसरी छुटाउने भन्ने मलाई थाहा छैन् भनि निज हर्कराज राइले मैले प्रयोग गर्ने ९८५११०२१९२ मा फोन गरी तपाईलाई आईडिया हुन्छ तपाईले मलाई सहयोग गरिदिनु पर्यो उल्लेखित ब्रेक प्याड समेतको मालवस्तुहरु राजस्व अनुसन्धान बिभागबाट छुटाएर ल्याउनु पर्यो के-कति रकम लाग्छ म लिएर आउछु भनि सिनामंगलमा आई मलाई भेटी रेडि ट्रेड प्रा.लि. कम्पनीको छाप र लेटर प्याड समेत दिई र राजस्व अनुसन्धान बिभागबाट निजको सामान छुटाइदिए वापत तपाईलाई मैले केही रकम पनि दिन्छु भनेकोले निजले मलाइ करिब २० पटक भन्सारबाट मालवस्तु निकाल्न काम दिएकोले निजलाई पनि मेरो सहयोग हुने र रकम पनि कमाई हुने भनि म मिति २०८०।०४।०३ गते राजस्व अनुसन्धान बिभागमा गई उक्त सामानको बारेमा सोधपुछ गर्दा बिभागको कर्मचारीले शुरुमा निवेदन लेखी पेश गर्नु भनेकोले सो कुरा मैले हर्कराज राईलाई जानकारी गराउदा निजले कम्पनीको लेटर प्याडमा निवेदन लेखी कम्पनीको छाप लगाई पेश गर्नु म पैसा लिएर बाटोमा आउदै छु भनि भनेकोले मैले रेडि ट्रेड प्रा.लि.ले पैठारी गरेको उल्लेखित मालवस्तु छुटाई पाँउ भनि रेडि ट्रेड प्रा.लि. को नामको लेटर प्याडमा कम्पनीको छाप लगाई दस्तखत नगरिकनै निवेदन पेश गरेको हुँ । मिति २०८०।०४।०३ गते भन्सार बिभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना म समेतको रोहबरमा निकाली परीक्षण गर्दा 99.55% सम्म सुन रहेको देखिन आएकोमा सोमा सुन पगाली  निकल्दा  ६० किलो ७१६ ग्राम सुन निस्केको थाहा पाएको हुँ, त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र प्रवेश गर्ने प्रबेश पास छैन । त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र प्रवेश गर्ने भन्सार एजेन्ट प्रतिनिधीको म्याद सकिएको पास छ तर उक्त पास म्याद सकिएकाले काम गर्दैन । हाल म ग्लोबल फाष्ट लिंक प्रा.लि. नामको कार्गो कम्पनीको कर्मचारी समेत भएकोले सोही कम्पनीको परिचय पत्र र त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र प्रवेश गर्ने भन्सार एजेन्ट प्रतिनिधीको म्याद सकिएको पास समेत देखाई कार्यालयमा प्रवेश गर्ने गरेको थिएँ । मलाई उल्खित म्याद सकिएको पास देखाउदा कुनै पनि कर्मचारीले राम्रोसंग प्रबेश पास चेक जाँच नगरी प्रत्येक पटक भित्र प्रबेश गर्न दिन्थे । PAN मा मात्रै दर्ता भएको संस्थाले US डलर ५०० भन्दा कम मूल्यको मालवस्तु ल्याउँदा VAT मा कम्पनी दर्ता हुन आबश्यक छैन । भन्सार बिभागबाट जारी हुने EXIMCODE नं. भएपछी  PAN मा मात्रै दर्ता भएको संस्थाले VAT रकम नेपाल सरकारलाई जाने गरी प्रज्ञापन पत्र जारी गर्न मिल्छ । रेडी ट्रेड प्रा.लि.का मालवस्तु आएका प्रज्ञापन पत्र नं. २४८७५ र २४८८८ मा मैले निजकै सहमतीमा निजको नामबाट मैले दस्तखत गरेको हुँ हेरी चिनी सनाखत समेत गरिदिए । प्रज्ञापन पत्र नं. २४८७५ र २४८८८ बाहेक उल्लेखित अन्य प्रज्ञापन पत्रमा भएका दस्तखत मेरो होईन निज रुक्मिना सुब्बाकै दस्तखत हुनु पर्छ भन्ने समेत व्यहोराको प्रतिबादी भन्सार एजेन्टका प्रतिनिधी राजेन्द्र कुमार राईको बयान ।

ङ. **प्रतिबादी रेडि ट्रेड प्रा.लि.को कम्पनी दर्ता गराउन सहयोग गर्ने राम कुमार भुजेलको बयान:**

६/७ वर्ष पहिले पक्राउ प्रतिबादी मध्येका थुप्तिन छिरिङसँग चिनजान भएकोमा ईलेक्ट्रिक सामानको कारोबार गर्ने कम्पनी खोली दिएमा प्रत्येक कम्पनी खडा गर्नको लागी नेपाली रु. १ लाख ५० हजार रूपैया दिन्छु भनेकोले प्रतिवादी थुप्तिन छिरिङमार्फत चिनेको हर्कराज राईसँग मिली मेरो नाममा भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. र नातेदारहरुको नाममा समेतका निम्न कम्पनीहरु खडा गरेको हुँ । बिदेशबाट मालवस्तु ल्याउने प्रकृया

मलाई जानकारी छैन भन्ने समेत व्यहोराको प्रतिबादी रेडि ट्रेड प्रा.लि.को कम्पनी दर्ता गराउन सहयोग गर्ने राम कुमार भुजेलको बयान।

निम्न:

| सि.न | कम्पनी | संचालक | नाता /सम्वन्ध |
|---|---|---|---|
| १) | रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | भान्जा |
| २) | Hwada Electric Suppliers Pvt.Ltd. | कुमार भुजेल | दाजु |
| ३) | दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि | बिकुन्द्र भुजेल | भान्जा दिलिप भुजेलको काका |
| ४) | पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि | राम बहादुर भुजेल | भिनाजु (दिलिप भुजेलको बाबु) |
| ५) | भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | मेरो नाममा |

ढ. **प्रतिवादी भन्सार एजेन्ट रुकमिना सुव्वाको बयान**:

Ready Trade Pvt.Ltd. ले हङकङबाट आयात गरेको मालवस्तुहरुको प्रज्ञापन पत्र नम्बर 22874, 23488, 24152, 24875, 24888, 27039, 27380, 27386, 28147, 28148, 28856, 29197, 29513, 29514, 30242 हरु मध्ये म स्वयम उपस्थित भएर करिब २-३ वटा प्रज्ञापन पत्रको भन्सार जाँचपास गराएको थिएँ। सो बाहेकका अन्य प्रज्ञापन पत्र नम्बरहरुमा उल्लेखित मालवस्तुहरु मेरो युजर प्रयोग गरी भन्सार एजेन्टका प्रतिनिधीहरु सुदर्शन गौतम र राजेन्द्र कुमार राई उपस्थित भई मेरो नामको भन्सार ऐजेन्टको युजरबाट भन्सार जाँचपास प्रकृया पुरा गरेका हुन्। प्रज्ञापन पत्र नम्बरहरु मध्ये प्रज्ञापन पत्र नम्बर 29513, 29514, 30242, 28856, 27039, 28148, 22874, 23488 मा मेरो नामको अगाडी भएको दस्तखत मेरो नै हुन् हेरी चिनी सनाखत गरिदिए। सो मध्ये म आफै उपस्थित भई भन्सार जाँचपास गरेको २-३ वटा प्रज्ञापन पत्र मात्र हुन् मेरो दस्तखत भएका अन्य प्रज्ञापन पत्र नम्बरमा मलाई सुदर्शन गौतम समेतले पछी दस्तखत गराएका हुन्। सो वाहेक अन्य प्रज्ञापन नम्बरमा मेरो नामको अगाडी भएको दस्तखत मेरो होईन, म विरामी परेकोले सुदर्शन गौतम र राजेन्द्र राई सिनियर भन्सार एजेन्ट प्रतिनिधी भएकोले काम सिक्ने सिलसिलामा निजहरुलाई मेरो भन्सार एजेन्ट आईडी दिएको थिएँ। निजहरुले मेरो युजर आई.डी. प्रयोग गरी सामान निकाल्ने भनेकोले मैले के-कस्तो सामान हो जुनसुकै सामानमा त म गर्दैन भनेकोमा निजहरुले हामी लामो समय काम गरेको मान्छे जुन पायो त्यही सामान हामी घोषणा गर्दैनौ केही फरक पर्दैन भनेपछी मैले युजर प्रयोग गर्नु भनि भनेकोले निजहरुले मेरो नामको युजर प्रयोग गरी Ready Trade Pvt. Ltd. ले आयात गरेको के-कस्ता मालवस्तु भन्सार जाँचपास गरेका छन्, मेरो युजर आई डी प्रयोग गर्न दिए बापत मैले निजहरु बाट रु.१०००।– (एक हजार) देखी रु. २०००।– (दुई हजार) सम्म पाउने गरेकी थिए भन्ने समेत व्यहोराको प्रतिवादी भन्सार एजेन्ट रुकमिना सुव्वाको बयान।

ण. **प्रतिबादी भन्सार एजेन्ट सुदर्शन गौतमको बयान :**

भन्सार कार्यालयबाट सामान निकाल्ने प्रकृया सम्वन्धमा; कुनै कम्पनीले सामान खरिद गरी कार्गो कम्पनीलाई सम्पर्क गर्दछ। कार्गो कम्पनीले खरिदकर्तासंग Invoice र Packing List मगाउछ। त्यसपछि कार्गो कम्पनीले

सामान अनुसारको कस्तो प्रकृतीको सामान हो त्यही अनुसारको Shipping Rate/Cost दिन्छ । कार्गो कम्पनीले विदेशको कार्गो एजेन्टसंग सम्पर्क गरी सामान Receive गर्नु भन्छ । विदेशको एजेन्टले सामान Receive गरी बिलमा उल्लेख भएको प्रकृतीको सामान हो होईन भनि प्याकिङ लिस्ट अनुसार भिडाउछ र कार्गोमा X-Ray गरी सामानलाई सिल गरी Shipping को लागि तयार गर्दछ । कार्गो कम्पनीले विदेशको भन्सार कार्यालयमा गई मालवस्तु घोषणा गरी भन्सार प्रकृया शुरु गर्दछ । Tax तिर्नु पर्ने सामान भए Tax तिरी र Duty Free सामान भए सामान्य प्रकृया पुरा गरी भन्सारबाट सामान जाँच Pass गर्दछ । भन्सारबाट सामान X-Ray गरी Airlines मा Load गर्दछ । सामान नेपालको एयरपोर्टमा आईपुग्छ । सामान कागज पत्र सहित नेपालमा नेपाल एरलाइन्सको Handling Department लाई सामानको प्रकृतीको विवरण सहित बुझाउछ । एरलाइन्सको Handling Department ले सामानको प्रकृतीको विवरण सहित भन्सारको गोदामलाई बुझाउने गर्दछ । भन्सार गोदाम व्यबस्थापनले सामान बुझी कस्तो किसिमको सामान हो बहुमूल्य सामान, बिग्रने सामान र सामान्य सामान अनुसार ठाँउ मिलाई ब्यबस्थापन गर्ने गर्दछ । सामान खरिद गरेको कम्पनी/ब्यक्तिले भन्सार एजेन्टलाई उपलब्ध गराएको कागजातको आधारमा भन्सार एजेन्टले भन्सार विभागको Software मा गई अनलाईन ईन्ट्री गरी मालवस्तुको घोषणा गर्दछ । अनलाईन घोषणा गरिएको मालवस्तु बिवरण अटोमेटीक प्रिन्टमा जाँचकी र भन्सार अधिकृतको तोक लागेर आउछ । प्रज्ञापन पत्रको रजिष्टेसन नम्बर अनुसार सो सामानको ट्रेस जोखिम ब्यवस्थापन शाखा, भन्सार विभाग, राजस्व अनुसन्धान विभागले सिस्टममा गई के कस्तो प्रकृतीको सामान हो कुनै शंकास्पद सामान हो होईन भनि एकिन गर्दछ । यदी शंका लागे ३ वटै निकायले Quire मा राखी प्रज्ञापन पत्र लक गरी राख्ने गर्दछ । विभागबाट सो प्रज्ञापन पत्रको नं. भन्सार कार्यालयका मूल्याङ्क फाँटमा मालवस्तु राम्रोसंग हेरी जाँचपास गर्नु भनि जानकारी गराउछन् । प्रज्ञापन पत्रको एक प्रति पारवहनको गोदाममाई दिई सोही बमोजिमको पारवहन काउण्टरमा पारवहन खर्च भुक्तानी गरी भुक्तानी रसिद लिई पारवहन गोदाममा दिइसकेपछी पारवहनमा काम गर्ने कर्मचारीहरुले उल्लेखित सामानहरु ल्याई एक्स-रे मेसिन राखिदिन्छन, एक्स-रे मेसिनमा एक्स-रे अपरेटरले चेक गरि पास गरेपछी, सो सामान शंकास्पद भए RC (Re-Check) भनि कस्तो प्रकृतीको सामान हो सोही निकायको कर्मचारीलाई खबर गर्दछन् । जस्तै X-Ray गर्दा लागु औषध जस्तो देखिए लागु औषध ब्यूरोबाट खटि आएका प्रहरी कर्मचारी र भन्सार कार्यालयको मूल्याङकन फाँटको रोहबरमा खोली हेरी एकिन गरिन्छ । त्यस्तै सुन, चाँदी जस्तो मालवस्तु देखिएमा भन्सारका उच्च कर्मचारी र गोल्ड टेष्टर बोलाई हो होईन भनि एकिन गरी त्यस्तो सामानको जाँचपास प्रकृया अगाडी बढाईन्छ । त्यसपछी सामान भएको स्थानमा जाँचकीलाई बोलाई सामान देखाईन्छ र जाँचकीको रोहबरमा सामानको सिल खोली जाँचकीलाई भौतिक निरीक्षणको लागि लगाइन्छ । जाँचकीले सामान हेरे पछि प्रज्ञापन पत्रमा हस्ताक्षर नगराई मूल्याङकनको फारममा हस्ताक्षर गराई मूल्याङकन फाँटमा गई मूल्याङकन अनुसार सामान ठिक छ छैन र के कस्तो बस्तु हो भनि शंका लागे भौतिक निरीक्षण सहित गरी हस्ताक्षर गरिन्छ । मूल्याङकन अधिकृतसंग पनि सोही अनुसारको कार्य गरिन्छ तर प्रज्ञापन पत्रको सिस्टममा गई डिजिटल हस्ताक्षर गरिन्छ । त्यस्तै मूल्याङकनको डिजिटल हस्ताक्षरको लागि भन्सारको उप-सचिवको मा पुग्दछ । मूल्याङ्कन फाँटको कार्य सकिन्छ । फेरी जाँचकीको कक्षमा गई मूल्याङ्कनको काम सकियो भनि जानकारी गराईन्छ र जाँचकीले कम्प्युटरको सिस्टमबाट डिजिटल हस्ताक्षर गर्नु हुन्छ । भन्सार अधिकृतको कार्यकक्षमा गई मालवस्तुको विवरण भनी कागजपत्र देखाईन्छ । अधिकृतलाई शंका लागे भौतिक निरिक्षण गराई कम्प्युटर

सिस्टमबाट डिजिटल हस्ताक्षर गराई ग्रिन गरिन्छ । त्यसपछि ग्रिन गरी सकेपछी राजस्व के कति लागेको हो बल्ल तिर्न मिल्छ । राजश्व तिरे पछि फेरी जाँचकी कक्षमा गई प्रज्ञापन पत्रमा हस्ताक्षर गराईन्छ । फेरी भन्सार अधिकृतको कक्षमा गई पुन: हस्ताक्षर गराईन्छ । त्यस पछि कागज पत्र छुट्टाई एक प्रति भन्सारमा राखी एक प्रति निकालिन्छ र भन्सारको स्ट्याम लगाईन्छ र सबै विलहरु संलग्न गरी भन्सार जाँचकीको कक्षमा गई गेटपास बनाईन्छ । गेटपास बनाए पछि संलग्न कागजपत्र, गेटपास र मालवस्तु भन्सार Yard मै मालवस्तु धनी वा मानलबस्तु धनि प्रतिनिधीलाई बुझाईन्छ ।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाउन सबै प्रकृया पुरा गर्दा करिब ३ देखी ४ घण्टा सम्म लाग्ने गरेको छ । मालवस्तु छुटाउन गोदाम चार्ज ७ दिन भित्र आएमा प्रति किलो ५ रूपैया ५० पैसा, अनलाईन प्रज्ञापन पत्र प्रिन्ट गरेको रु.१००।-, लोडर चार्ज प्रति किलो २ रुपैया ५० पैसा, लाग्ने राजस्व रकम र मलाई प्रत्येक पटक मालवस्तु जाँचपास प्रकृया चार्जको रुपमा राजेन्द्र कुमार राईले रु. १,०००।– (एक हजार) दिने गरेका थिए । उल्लेखित लाग्ने सम्पूर्ण खर्च सबै राजेन्द्र कुमार राईले नगदै दिने गरेका थिए र मैले मेरो बैक खाता प्रयोग गरी On Line द्वारा ConnectIPS मार्फत राजस्व लगायतका रकम भुक्तानी गर्ने गरेको थिए । उल्लेखित लाग्ने सबै रकम निज राजेन्द्र कुमार राईले रेडी ट्रेड प्रा.लि. को के कुन ब्यक्तीसंग लिने गरेका थिए र मालवस्तु कसलाई जिम्मा लगाउने गरेका थिए मलाई जानकारी छैन ।

Trans Global Services Pvt.Ltd. बाट Consignees; Ready Trade Pvt. Ltd. Kathmandu Nepal भई Delivery Order Issue भएका माथी उल्लेखित सामानहरु मध्ये मैले करिब २० (बिस) वटा प्रज्ञापन पत्रका सामानहरु रुकमिना सुब्बा, गोबिन्द गौतम, यादव पराजुली र मेरो नामको भन्सार एजेण्ट युजर आई डी प्रयोग भई मालवस्तुको मूल्य स्व:घोषणा गरी सिष्टममा प्रज्ञापन पत्र दर्ता गरी भन्सार प्रकृया पुरा गराएको हुँ । मिति २०८०।०४।०२ गते प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान सामानहरू मैले भन्सार जाँचपास प्रकृया गराई उल्लेखित मालवस्तु छुटाएको हो ।

भन्सार एजेन्ट रुक्मिना सुब्बा बिरामी भई उपस्थित हुन नसक्ने भनि मेसेज गरेको र मेरो भन्सार एजेन्ट प्रतिनिधीको लाईसेन्सको म्याद मिति २०८०।०३।३१ गते नै सकिएको हुँदा मैले मेरो युजर प्रयोग गरी काम गर्न नमिल्ने भएकोले भन्सार एजेन्ट स्वयम उपस्थित हुनु पर्ने भएकोले भन्सार एजेन्ट यादव पराजुलीलाई उक्त सामान घोषणा गर्न अनुरोध गरेको हुँ । भन्सार प्रकृया गर्ने समयमा निज यादव पराजुलीले के-कस्तो मालवस्तु हो एकिन गर्नु पर्छ, यसको भुक्तानीको स्वरुप के हो भनि मलाई सोधेकोले यो ब्रेक प्याड नै हो मैले पटक-पटक यस्ता मालवस्तुको घोषणा गरि भन्सार प्रकृया पुरा गराएको छु यसमा कुनै समस्या छैन् र यो मालवस्तु अमेरिकी डलर ५००(पाँच) सय भन्दा कम मूल्यको भएको हुँदा यसमा भुक्तानीको स्वरुप उल्लेख गर्नु पर्ने अनिवार्य छैन भनि भनेको थिएँ भन्ने समेत व्यहोराको प्रतिबादी भन्सार एजेन्ट सुदर्शन गौतमको बयान ।

त. **प्रतिबादी हर्कराज राईको बयान:**

थुप्तिन छिरीङलाई ४ बर्ष अगाडी सिराहा/सप्तरी तिर घर भएका पञ्चबिर लामा मार्फत जडिबुटीको काम गर्ने क्रममा चिनेका साथी हुन भने १४ महिना अगाडी काठमाडौं तराई जोड्ने फास्टट्रयाक अन्तर्गत गिटी बालुवा र डिजल तेल सप्लाई गर्ने कामको पिटी ठेक्का पाई मलाई निजले फोन गरी गिटी बालुवाको काम गर्ने हो भने

आउनुस मिलेर काम गरौं भनि कुरा भई म र थुप्तिन छिरीङ बिच कमिसनमा सहमती भई काम गर्न शुरु गरेपछी हाल सम्म थुप्तिन छिरीङ निरन्तर सम्पर्क र सहकार्यमा भएका मानिस हुन ।

बि.सं. २०७९ सालको जेष्ठ महिना तिर निज चाबहिलमा चिया पसलमा बसी गिटी बालुवाको हिसाब किताब गर्ने क्रममा मेरा चिनिया साथीहरु छन् निजहरुले ईलोक्ट्रोनिक्स सामानहरु बिदेश देखी आयात गरी बिक्री तथा ब्यापार गर्न चाहेका छन त्यसको लागी नेपाली ब्यक्तिहरूको नाममा कम्पनी दर्ता गर्न नेपाली नागरिकता भएको मानिसहरू चाहिएको छ बरु जसको नाममा कम्पनी खोल्न तयार हुन्छ उसलाई कति पैसा चाहिन्छ दिउँला भनि म संग सल्लाहा गरेपछी मैले हुन्छ, मान्छे खोजिदिन्छु भनि मैले मेरो गाउँ, भोजपुर जिल्ला, अरुण गा.पा. ४ चरम्दीगाँउ बस्ने बर्ष अ. ५४ को लेखनाथ कार्की डोली (दमाई) संग कुरा गरी निजले २ (दुई) लाख दिए म कम्पनी खोल्न राजी छु भनि निज लेखनाथ कार्की डोली (दमाई)को नाममा पहिलो कम्पनीको रुपमा, कम्पनी रजिष्टारको कार्यालय त्रिपुरेश्वर, काठमाडौंमा CHHUNGAK ELECTRIC SUPPLIERS PVT.LTD.दर्ता गरी थुप्तिन छिरीङले कम्पनीको कागजात लिएका हुन, सो काममा सहयोग गरे बापत मलाई १० (दश) हजार रकम दिएका थिए ।

मैले रेडी ट्रेड प्रा.लि., HWADA ELECTRIC SUPPLIERS PVT. LTD, दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., सरिता सप्लायर्स, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. लगायतका कम्पनी दर्ता देखी बिदेशबाट मालवस्तु आयात गर्ने सम्मका सम्पूर्ण काम काज लगाई निर्देशन र पैसा समेत दिने मानिस थुप्तिन छिरीङ हुन । मैले प्रत्येक कम्पनी दर्ता गर्दा लेखापढी गर्ने र नेपाली नागरिकता भएको कम्पनी दर्ता गरिदिन मानिस राजी गराईदिए बापत १०/१० (दश/दश) हजारका दरले निज थुप्तिन छिरीङबाट कमिसन बापतको रकम लिएको हुँ । पक्राउ प्रतिबादी चाईनिज नागरिकहरू LIN ZE QIANG दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को नामबाट पैठारी गरी ल्याईएका मालवस्तुमा स्मार्ट वाच (ईलेक्ट्रोनिक्स घडी) मैले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट छुटाएर ल्याए पछी काठमाडौंको लाजिम्पाट स्थित गोदाममा सामान बुझ्ने क्रममा चिनेको हो र पछी रेडी ट्रेड प्रा.लि. को मालवस्तु त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट छुटाएर ल्याए पछी बालुवाटारमा समेत निज LIN ZEQIANG ले नै बुझ्ने गरेका थिए ।

६ महिना अघि बालुवाटारमा क्रेटा कम्पनीको गाडी थुप्तिन छिरीङले कुरा गरी मैले ३० हजार कमिसन खाई गाडी धनी र म बिच सम्झौता भई क्रेटा गाडी भाडामा लिई निज Alex भन्ने Yao Pucheng ले गाडी लिएर जाने क्रममा पहिलो पटक चिनेको हो भने STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING SHENG FA, LI Wen Tsung, Alex भन्ने Yao Pucheng यी ४ जनालाई ४ महिना भन्दा अगाडी ठमेल बजारमा टाँसी भन्ने थुप्तिन छिरीङलाई भेट्न जाँदा ज्याठा स्थित सडकमा भेट भई देखेका मानिसहरु हुन।

थुप्तिन छिरीङ मलाई सम्पूर्ण काम काज लगाई निर्देशन र पैसा समेत दिने मानिस हुन भने अन्य चाईनिज प्रतिबादीहरूसंग मेरो सिधा सम्पर्क र सम्बन्ध छैन निज चाईनिज प्रतिबादीहरूसंग सम्पर्क र समन्बय निज थुप्तिन छिरीङ मार्फत हुने गरेको थियो । प्रतिबादी टाँसी भन्ने थुप्तिन छिरीङले पक्राउ प्रतिबादी चाईनिज नागरिकहरु मार्फत बिदेशबाट ईलोक्ट्रोनिक्स लगायतका मालवस्तु आयात गरी बिक्री बितरण लगायतका ब्यापार गर्नको लागी कम्पनी दर्ता गर्न नेपाली नागरिकता भएका नेपाली नागरिकहरुको नाममा रेडी ट्रेड प्रा.लि., HWADA ELECTRIC SUPPLIERS PVT LTD, दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., सरिता सप्लायर्स, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., CHHUNGAK ELECTRIC

SUPPLIERS लगायतका कम्पनी खोल्न निजहरुलाई सम्झाई प्रलोभनमा पारी कम्पनी दर्ता गर्न मनाउने कार्य, कम्पनी दर्ता गर्न कागजात तयार पर्ने लगायतका कार्य, पैठारी भई आएका मालवस्तु राख्न घर सटरकोठा लगायत चाईनिजहरुलाई बस्ने घर, चढ्ने गाडी खोजी ब्यबस्था गर्ने र बिदेशबाट पैठारी भई आएका मालवस्तु त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट रेडी ट्रेड प्रा.लि. लगायत सबै कम्पनीका सामानहरू छुटाई तोकिएका स्टोरहरुसम्म ल्याई बुझाउने लगायतका ब्यबस्थापकिय कार्य गर्ने गरी मलाई टाँसी भन्ने थुप्तिन छिरीङबाट जिम्मेवारी दिईएको थियो।

मैले उक्त जिम्मेवारी निर्बाह गरे बापत कम्पनी दर्ता गर्न नेपाली नागरिक खोजी मनाउने कार्य, कम्पनी दर्ता गर्न कागजात तयार पर्ने लगायतका कार्य बापत प्रत्येक कम्पनी बापत रु.१०/१० (दश/दश) हजार, स्टोर कोठा खोजी ब्यबस्था गरीदिए बापत सामाखुसी, महाराजगंज र गोपिकृष्णको स्टोर बापत शुरुमा ७/८ हजारका दरले टाँसी भन्ने थुप्तिन छिरीङबाट रकम बुझेको र मासिक रुपमा प्रत्येक स्टोरको १५ हजारको दरले मासिक ४५ हजार रकम मलाई टाँसी भन्ने थुप्तिन छिरीङले दिने गरी सहमती भई खटिएको थिए। गाडी खोजेबापत रु. ५० हजार कमिसन टाँसी भन्ने थुप्तिन छिरीङबाट बुझेको हुँ।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट रेडी ट्रेड प्रा.लि.को नाममा बि.सं. २०८०।०४।०२ गतेको मितिमा जारी भएको प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान सामानहरू भन्सार कार्यालयबाट सम्पूर्ण जाँचपास लगायतका प्रकृया पुरा गरी पठाईएकोमा मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभाग हरीहरभवन, ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा प्रतिबादी अशोक लामाले चलाएको बा २ ख २३२४ नं. को ट्याक्सी र म ट्याक्सी अगाडी स्कुटरमा भएकोमा उक्त ठाँउमा राजस्व अनुसन्धान बिभागबाट खटिएका कर्मचारीले शंका लागी ट्याक्सी रोकी चेकजाँच गर्न थालेपछी म उक्त मालवस्तुको प्रज्ञापन पत्र लिई राजस्व अनुसन्धान बिभागबाट खटिएका कर्मचारीलाई देखाएकोमा निजहरुले उक्त प्रज्ञापन पत्रमा शंका मानि म समेत नियन्त्रणमा लिई राजस्व अनुसन्धान बिभाग हरिहरभवन ललितपुर लिई गएकोमा मेरो र ट्याक्सी चालक अशोक लामाको सम्पूर्ण बिबरण अभिलेख राखि भोलि श्राबण ३ गते बिहान १०:०० बजे आउनु भनि ट्याक्सी र प्रज्ञापन पत्रमा उल्लेखित मालवस्तु राजस्व अनुसन्धान बिभाग हरीहरभवन ललितपुरमै राखी पठाएकोमा उल्लेखित बा २ ख २३२४ नं. को ट्याक्सीमा रहेको सो ब्रेक शु आकारको सामान मिति २०८०।०४।०३ गते भन्सार बिभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा 99.55% सम्म सुन रहेको भनि पक्राउ गरेपछी उल्लेखित १६० सेट BRAKE PADS बाट सुन पगाली निकाल्दा ६० किलो ७१६ ग्राम सुन रहेको भन्ने थाहा पाएको हुँ।

म र टाँसी भन्ने थुप्तिन छिरीङसमेत भई पक्राउ प्रतिबादी चाईनिज नागरिकहरुले बिदेशबाट ईलोक्ट्रोनिक्स लगायतका मालवस्तु आयात गरी बिक्री बितरण लगायत ब्यापार गर्नको लागी निम्न कम्पनीहरु खोलिएको भनि खुलाएको:

| सि.नं | कम्पनी | संचालक | EXIM CODE | कम्पनी खोल्न लगाउने प्रतिवादी | खोल्ने कार्यमा संलग्न रहेका |
|---|---|---|---|---|---|
| १. | HWADA ELECTRICSUP | कुमार भुजेल | 6103250430127NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन |

| | | | | | |
|---|---|---|---|---|---|
| | PLIERS PVT LTD | | | | छिरिङ |
| २. | रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | EXIM CODE: 6104779730113NP | ALEX भन्ने Yao Pucheng | राम कुमार भुजेल, हर्कराज राई थुप्तिन छिरिङ र भिम ब. मगर |
| ३. | दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | बिकुन्द्र भुजेल | EXIM CODE: 6103977670145NP | ALEX भन्नेYao Pucheng | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| ४. | पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. | राम बहादुर भुजेल | EXIM CODE: 6103614740154NP | STEPS भन्ने LI. NENGKAI&SAUTEN भन्ने DINGSHENG FA | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| ५. | सरिता सप्लायर्स | सरिता तामाङ | EXIM CODE: 6199527490162NP | ALEX भन्नेYao Pucheng | हर्क राज राई, थुप्तिन छिरिङ |
| ६. | CHHUNGAK ELECTRICSUPPLIERS BUDANILKANTHA -6 KATHMANDU | लेखनाथ कार्की डोली (दमाई) | EXIM CODE: 6101997700119NP | ALI भन्ने LI Wen Tsung | हर्क राज राई, थुप्तिन छिरिङ |
| ७. | भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | EXIM CODE: 6103185440103NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |

बि.सं. २०७९ श्राबणको मध्ये तिर थुप्तिन छिरीङले सम्पर्कमा ल्याई निज थुप्तिन छिरीङले नै के कति पैसा दिई मनाई मैले कम्पनी दर्ता गर्न कम्पनी रजिष्टारको कार्यालयमा पक्राउ प्रतिबादी राम कुमार भुजेलका दाई कुमार भुजेल लाई लिई गई लेखापढी गर्ने उदयपुर साउने-९ घर बताउने फोन नं. ९८१३६४९३६५ र ९८६५४९४३२ भएका भिम मगर लाई भेटाई सम्पूर्ण कागजात तयार गरी कुमार भुजेलको नाममा HWADA ELECTRIC SUPPLIERS PVT LTD दर्ता गरेको हो।

थुप्तिन छिरीङले राम कुमार भुजेलसंग कुरा गरी कम्पनी खोल्ने मानिस खोज भनि भनेपछी निज राम कुमार भुजेलले सिफारिस गरी पठाएका बहिनी ज्वाई नाता पर्ने राम बहादुर भुजेललाई थुप्तिन छिरीङले कुरा गरी पैसा दिएका तर कति पैसा दिए मलाई थाहा भएन त्यसपछी मैले त्रिपुरेश्वरमा निज राम बहादुर भुजेललाई भेटी लेखापढी गर्ने भिम मगरकोमा लगी कागजी प्रकृया पुर्याई कम्पनी रजिष्टारको कार्यालयमा पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. नामको कम्पनी दर्ता गरी त्यसको कम्पनी दर्ता प्रमाण पत्र निज थुप्तिन छिरीङलाई लगी मैले दिएको हुँ।

राम बहादुर भुजेलले अरु कम्पनी खोल्न परेमा मलाई सिधै भन्नु भनेपछी मैले थुप्तिन छिरीङसंग कुरा गरे पछी मानिस बोलाउ भनि थुप्तिन छिरीङले भनेपछी मैले राम बहादुर भुजेलसंग कुरा गरी निज राम बहादुर भुजेलले आफ्नै सहोदर भाई बिकुन्द्र भुजेललाई लिई मलाई भेट्ने गरी ५/६ महिना अघि आएकोमा मैले थुप्तिन छिरीङसंग रु.१ लाख ५० हजार लिई निज राम बहादुर भुजेललाई रु. १ लाख ४० हजार दिई बिकुन्द्र भुजेललाई कम्पनी रजिष्टारको कार्यालयमा लगी लेखापढी ब्यबसायी भिम मगरलाई भेटाई सम्पूर्ण कागजात तयार गरी बिकुन्द्र भुजेलको नाममा दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. दर्ता गरेको हो।

त्यसपछी बि.स. २०७९ को चैत्र वा २०८० बैशाख महिनामा हो, पुन: आफ्नै छोरा दिलिप भुजेललाई लिई आई मलाई भेटी कुरा गरी थुप्तिन छिरीङसंग रु. १ लाख ५० हजार लिई निज राम बहादुर भुजेललाई रु. १ लाख ४० हजार दिई निजको छोरा दिलिप भुजेललाई कम्पनी रजिष्टारको कार्यालयमा लगी लेखापढी ब्यबसायी भिम मगरलाई भेटाई सम्पूर्ण कागजात तयार गरी निज दिलिप भुजेलको नाममा रेडी ट्रेड प्रा.लि. दर्ता गरी कम्पनी दर्ताको प्रमाण पत्र निज प्रतिबादी थुप्तिन छिरीङलाई लगी दिएको हुँ।

मिति २०८० बैशाख/जेष्ठ तिर जिल्ला भोजपुर, षडानन्द नगरपालिका -१० तिर घर भएकी गाँउ नजिक भएकोले चिनजानमा रहेकी सरिता तामाङलाई मैले सम्झाई थुप्तिन छिरीङसंग रु. १ लाख ६० हजार लिई निज सरिता तामाङलाई रु. १लाख ५० हजार दिई बाणिज्य बिभागमा लेखापढी गर्ने पशुपती पोखरेलको सहयोगमा निज सरिता तामाङको नाममा सरिता ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. दर्ता गरी सो कम्पनीको प्रमाण पत्र थुप्तिन छिरीङलाई दिएको हुँ।

उल्लेखित कम्पनीहरूको देखिने साईनबोर्ड सहितको कार्यालयहरू कहि कतै स्थापना भएका छैनन् । आन्तरिक राजस्व कार्यालयबाट PAN नं. लिने प्रयोजनको लागी कागजी रुपमा रेडी ट्रेड प्रा.लि.को कार्यालय रहने भनि मेरो सहोदर दाजु डेमराज राईको श्रीमती मेरो भाउजु नाता पर्ने माया भण्डारीको नाममा जिल्ला काठमाडौं, बुढानिलकंठ न.पा. वडा नं. ४ मा रहेको घर रेखदेख गर्ने भनि मैंरै जिम्मामा रहेको र दाजु भाउजु हङकङ बस्ने भएको कारण मसंग भाउजुको नागरिकताको छायाँप्रति कागज रहेको हुँदा सोही नागरिकताको कागज प्रयोग गरी किर्ते कागजात बनाई भाउजु माया भण्डारीको नामको किर्ते दस्तखत समेत गरी किर्ते कागजात पेश गरी PAN नं. लिएको हो।

राम कुमार भुजेलको नाममा रहेको कम्पनी भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को खाता प्रभु बैकमा छ। अन्य कम्पनीहरुको राष्टिय बाणिज्य बैकमा खाता खोलिएका छन त प्रत्येक खातामा तीन/तीन लाखका दरले रकम समेत जम्मा गरिएका छन। उल्लेखित बैक खाताहरुमा कम्पनी संचालन गर्न भनि तीन/तीन लाखका दरले राखिएका सबै रकम मलाई थुप्तिन छिरिङले दिई मैले सम्बन्धित संचालकको नामबाट जम्मा गर्न लगाएको छु। उक्त पैसा बैंक खाताहरुमा बिदेशबाट मालवस्तु ल्याउन आबश्यक पर्ने EXIM CODE नं. भन्सार बिभाग त्रिपुरेश्वरबाट लिन बैंक ग्यारेण्टीको रुपमा राखिएको मौज्दात रकम हुन ।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र प्रबेश गर्ने प्रबेश पास छैन। हाम्रो कम्पनीको मालवस्तु आएको छ र उक्त मालवस्तु राजेन्द्र कुमार राईले छुटाएका छन भनि गेटमा खटिएका नेपाली सेनाका कर्मचारीलाई भनेपछी बिना रोकतोक त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको भन्सार जाँचपास भई मालवस्तु गाडीमा लोड गर्ने स्थानसम्म मात्र जाने गरेको थिए।

रेडी ट्रेड प्रा.लि. को प्रत्येक पटक आएको सबै मालवस्तु र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को शुरु शुरुमा ६/७ पटक आएको स्मार्ट वाच (घडी) सम्बन्धमा मलाई टाँसी भन्ने थुप्तिन छिरिङले मेरो WhatsApp मा Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस कागज पठाउने गरेका थिए, त्यसपछी मैले सबै Airway bill, प्याकिङ लिष्ट र ईनभ्वाईस कागज भन्सार कार्यालयबाट मालवस्तु छुटाउन भनि राजेन्द्र कुमार राईलाई निजको WhatsApp मा पठाउने गरेको थिए। त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा मालवस्तु छुटाउन अपनाउने प्रकृया के हो मलाई थाहा छैन, मैले सबै भन्सार जाँचपपास गरी मालवस्तु छुटाउने जिम्मा राजेन्द्र कुमार राईलाई दिने हुँदा निजले नै Trans Global Services Pvt. Ltd. तिनकुने लगायतका कार्गो कम्पनीसंग समन्वय गरी मालवस्तु छुटाउने गरेका थिए।

रेडी ट्रेड प्रा.लि. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.बाहेकका मालवस्तु आउदा थुप्तिन छिरिङले लगायतका भन्सार एजेण्ट मधुसुदन नेपाल र कहिले अर्का भन्सार एजेण्ट राकेश भण्डारीले मालवस्तु गाडीमा राखि स्टोर सम्मै डेलिभरी गर्ने गर्दथे, यसरी मालवस्तु डेलिभरी गर्नु पुर्व निज थुप्तिन छिरिङ र भन्सार एजेण्ट मधुसुदन नेपाल तथा भन्सार एजेण्ट राकेश भण्डारीले मलाई फोन गरी सामान आउँदै छ भनि म गएर स्टोरको सटर खोली सामन बुझी राखिदिई सटरकोठा बन्द गरी छोडी दिने गरेको थिए।

रेडी ट्रेड प्रा.लि. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को मालवस्तु भन्सार कार्यालयबाट छुटाई बालुवाटार र लाजिम्पाट ल्याई बुझाए बापत मलाई ट्याक्सी भाडा समेत गरेर थप ३ देखी ७ हजार सम्म थुप्तिन छिरिङले दिने गरेका थिए, सो कम्पनीहरुमा आएको सामनहरु चाईनिज नागरिक LIN ZE QIANG र मैले नचिनेका र अहिले सम्म पक्राउ समेत नपरेका १/२ जना चाईनिज नागरिक समेत तोकिएको सटरमा आई मालवस्तु बुझि लिने गरेका थिए।

बिदेशबाट आएका मालवस्तु स्टोर गरी राख्न रेडी ट्रेड प्रा.लि.को मालवस्तु बालुवाटार सटरकोठामा, HWADA ELECTRIC SUPPLIERS PVT. LTD. को मालवस्तु सामाखुसी सटर कोठामा, दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को लाजिम्पाटको सटर कोठामा, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को मालवस्तु गोपीकृष्ण चाबहिल स्थित सटर कोठामा, पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., र CHHUNGAK ELECTRIC SUPPLIERS को मालवस्तु महारजगंज स्थितको सटर कोठामा भण्डारण गरी राख्ने गरेको थिए, उल्लेखित सटर कोठाहरु टाँसी भन्ने थुप्तिन छिरिङले भने अनुसार निज थुप्तिन छिरिङका चाईनिज साथीहरुले बिदेशबाट ईलेक्ट्रोनिक्स लगायतका मालवस्तु आयात तथा पैठारी गरी नेपालमा ल्याई बिक्री बितरण लगायतका ब्यापार गर्ने उद्देश्यले लिएका सटर कोठाहरु हुन । उक्त सटर कोठा मध्ये मैले गोपीकृष्ण चाबहिल, महाराजगंज, सामाखुसीको सटर कोठा घर धनि संग मैले ईलेक्ट्रोनिक्स सामानहरुको ब्यापार गर्ने भनि भाडामा लिएको हो । सटर कोठा भाडामा लिदा तिर्नु पर्ने भाडा लगायतका रकम निज टाँसी भन्ने थुप्तिन छिरिङले मलाई दिई मैले घर धनिलाई तिर्ने गरेको थिए।

हङकङबाट रेडी ट्रेड प्रा.लि.को नामबाट BRAKE PAD र SHAVER आउने गरको मैले देखेको हुँ। दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को नाम बाट स्मार्ट वाच (घडी) आएको जानकारीमा छ । सरिता सप्लायर्सको नामबाट कुनै पनि मालवस्तु आएको मलाई थाहा छैन । HWADA ELECTRIC SUPPLIERS PVT.LTD, भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., CHHUNGAK ELECTRIC SUPPLIERS बाट ओल्डिङ मेसिन, टाटु हान्ने मेसिन, ईलेक्ट्रिक

मेसिनहरु, काठ काट्ने मेसिन, नाईट कलबमा धुँवा फाल्ने मेसिन लगायतका मैले नचिनेका ईलेक्ट्रिक मेसिन लगायतका सामानहरु समेत आउने गरेको थियो।

म संलग्न रहेका रेडी ट्रेड प्रा.लि. १०० पटक भन्दा बढी लगायतका कम्पनीको नाममा ब्रेक प्याड, सेभर, अटो पार्टस, ईलोक्ट्रोनिक्स सामान लगायतका मालवस्तु पैठारी भई आएका छन् त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाउन कुन कुन कार्गो कम्पनीसंग सम्झौता भएको छ मलाई थाहा छैन सो सम्बन्धमा राजेन्द्र कुमार राईले मालवस्तु छुटाउने हुँदा निजलाई थाहा होला।

रेडी ट्रेड प्रा.लि.ले भन्सार बिभागबाट EXIM CODE नं. लिदा कम्पनी रजिष्टारको कार्यालयमा लेखापढी काम गर्ने उदयपुर साउने- ९ घर बताउने फोन नं. ९८१३६४९३६५ र ९८६५४९४३२ भएका भिम मगर मलाई कम्पनीको छाप र लेटरहेड दिनुहोस भनि मैले निज भिम मगरलाई दिई रेडी ट्रेड प्रा.लि.को तर्फबाट भन्सार बिभागलाई EXIM CODE नं. पाऊँ भनि लेखेको पत्र तथा तयार भएका कागजातमा दिलिप भुजेलको नाम भएको ठाउँमा निज भिम मगरले नै दस्तखत गरी EXIM CODE लिएका दिलाएका हुन।

काठमाडौं बसुन्धरा स्थित उषा गिरीको घरमा चाईनिज नागरिक SAUTEN भन्ने DING SHENG FA लाई ५० हजार कमिसन पाउने सर्तमा खोजिदिएको हो। टाँसी भन्ने थुप्तिन छिरीङलाई बालुवाटारमा शोलुसन ट्राभल्स एण्ड टुर्स प्रा.लि. का संचालक केशब श्रेष्ठसंग मेरो नाममा तीन वटा गाडी भाडामा लिने गरी सम्झौता गरी एउटा हुण्डाई कम्पनीको क्रेटा बा १६ च ९३००, अर्को बाग्मती BAB 5989 नं. को DUSTER गाडी, अर्को ब्रेजा बा १६ च १७७१ गाडी लिई दिएको हो। पछी पक्राउ परेपछी बुझ्दा चाईनिज प्रतिबादीहरुले अबैध सुन पैठारी गरेको सुन ब्यबस्थापनमा प्रयोग गरेको भनि उल्लेखित गाडिहरुको GPS सहितको लोकेशन देखाए पछी थाहा पाएको हुँ। उक्त गाडी खोजि दिई सम्झौता गरे बापत रु. ५० हजार कमिसन गाडी धनि केशब श्रेष्ठबाट पाएको थिए।

रेडी ट्रेड प्रा.लि. को उक्त छाप र लेटरहेड निज राजेन्द्र कुमार राईलाई असार मसान्तबाट EXIM CODE नं. को म्याद सकिएकोले सो EXIM CODE नं. भन्सार बिभागबाट नविकरण गर्न भनि निज राजेन्द्र कुमार राईलाई रेडी ट्रेड प्रा.लि. को उक्त छाप र लेटरहेड र सम्पूर्ण कागजात समेत दिई पठाई निजले नविकरण समेत गरे देखी निजले नै रेडी ट्रेड प्रा.लि. को उक्त छाप र लेटरहेड र सम्पूर्ण कागजातहरू आफुसंगै राखेका छन फिर्ता गरेका छैनन्।

प्रतिबादी राजेन्द्र राई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट रेडी ट्रेड प्रा.लि. को नाममा आएका सबै मालवस्तु छुटाएका र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. को अं. ७ पल्ट जस्तो लाग्छ स्मार्ट वाच घडी भन्सार एजेण्ट यादब पराजुली, गोबिन्द गौतम, रुक्मिना सुब्बा लगायतका भन्सार एजेण्टका प्रतिनिधी भएर मालवस्तु छुटाउने मानिस हुन।

दिलिप भुजेल रेडी ट्रेड प्रा.लि. का संचालक हुन निज पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. का संचालक समेत रहेका राम बहादुर भुजेलका छोरा हुन, राम कुमार भुजेल र टाँसी भन्ने थुप्तिन छिरीङका साथी हुन र निज थुप्तिन छिरीङ मार्फत भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. नामको कम्पनी दर्ता गर्ने क्रममा चिनेका मानिस हुन। चाईनिज नागरिकहरू LIN ZE QIANG दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नामबाट पैठारी गरी ल्याईएका मालवस्तुमा स्मार्ट वाच (ईलेक्ट्रोनिक्स घडी) मैले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट छुटाएर ल्याए पछी काठमाडौंको लाजिम्पाट स्थित गोदाममा सामान बुझ्ने मानिस हुन।

६ महिना अघी बालुवाटारमा क्रेटा कम्पनीको गाडी थुप्तिन छिरीङले कुरा गरी मैले ३० हजार कमिसन खाई गाडी धनी र म बिच सम्झौता भई क्रेटा गाडी भाडामा लिई निज Alex भन्ने Yao Pucheng ले गाडी लिएर जाने क्रममा पहिलो पटक चिनेको हो।

STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING, SHENG FA, LI Wen Tsung, Alex भन्ने Yao Pucheng यी ४ जनालाई ४ महिन भन्दा अगाडी ठमेल बजारमा टाँसी भन्ने थुप्तिन छिरीङलाई भेट्न जाँदा ज्याठा स्थित सडकमा भेट भई देखेका मानिसहरु हुन । अर्का प्रतिबादी अशोक लामालाई मिति २०८०।०४।०२ गते त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु बालुवाटार लान भनी ट्याक्सी खोज्ने क्रममा फेला परेका ट्याक्सी चालक हुन सो भन्दा अगाडी निज संग चिनजान तथा सम्पर्क थिएन। बि.स. २०७९ जेष्ठ महिना तिर टाँसी भन्ने थुप्तिन छिरिङले मलाई निज बस्ने गरेको लाजिम्पाटको डेरा कोठामा बोलाई चाईनिज साथीले बिदेशबाट एउटा सानो मेसिन झिकाउन कुरा गरेको छ त्यसको लागी तपाईको नाम र ठेगाना अंग्रेजीमा लेखि दिनु पर्यो भनेपछी मैले मेरो नाममा मेसिन झिकाउदा मलाई के फाईदा हुन्छ भनि सधेकोमा एउटा मेसिन बापत तपाईलाई दश हजार दिन्छु भने पछी मैले हुन्छ भनि निज टाँसी भन्ने थुप्तिन छिरिङलाई मेरो नाम र ठेगाना अंग्रेजी अक्षरमा लेखी दिएकोमा असार हो वा श्रबण महिना तिर हो मलाई काठमाडौं पेप्सीकोलाबाट फोन गरी तपाईको नाममा २ वटा Gold Melt Machine चाईनाबाट Xiao Ding Transportation ले पठाएको छ लिन आउनुहोस भनेकोमा मैले उक्त कुरा टाँसी भन्ने थुप्तिन छिरिङ लाई सुनाएपछी निजले गएर सामान लिएर आउ भनेपछी म काठमाडौं पेप्सीकोला (अफिसको नाम याद नगरेको) गई हेर्दा २ (दुई) वटा Gold Melt Machine आएको रहेछ, उक्त मेसिनहरु ठुलै थिए। एउटा मेसिनलाई १ जना मानिसले सजिलै उचाल्न नसक्ने गरुह्गो काठको बाकसमा थियो। त्यस पछी उक्त २ थान Gold Melt Machine टाँसी भन्ने थुप्तिन छिरिङलाई बौद्ध टुसालमा छोडी म घर फर्के पछी बुझ्दा उक्त २ थान Gold Melt Machine निज टाँसी भन्ने थुप्तिन छिरिङले STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING, SHENG FA, ALI भन्ने LI Wen Tsung र ALEX भन्ने Yao Pucheng लाई टोखामा लान भनि जिम्मा लगाएका रहेछन। पछी फरी २०७९ चैत्र महिनाको १७/१८ गते तिर पुन: चाईनाबाट XIAO DING TRANSPORTATION ले अर्को दुई वटा काठको बाकसमा राखी GOLD MELT MACHINE दुई थान पठाएकोमा मैले २ (दुई) थान मेसिन मैले थुप्तिन छिरिङलाई सोधी निजले भने अनुसार बालुवाटारमा ल्याई प्रतिबादी चाईनिज नागरिक LIN ZE QIANG लाई बुझाएको हो। पछी २०८० को असार १ गतेको फेरी अर्को २ (दुई) थान GOLD MELT MACHINE आयो त्यस पछी उक्त मेसिनलाई के गर्ने हो भनि थुप्तिन छिरिङलाई सोधेकोमा उक्त मेसिनलाई गोपीकृष्ण चबहिलको सटरमा लगेर राख्नु भनेपछी मैले त्यहाँ लगेर राखिदिएको हुँ। मैले कुनै पनी GOLD MELT MACHINE खोलि हेरीन उक्त मेसीनहरुको सिलबन्दीनै मैले बुझाएको हुँ । मेरो जानकारीमा भए अनुसार हाल सम्म ६ (छ) थान GOLD MELT MACHINE आएको हो भन्ने समेत व्यहोराको प्रतिबादी हर्कराज राईको बयान।

थ. **प्रतिबादी चिनिया नागरिक राहदानी नं.360387660 वाहक ALI भन्ने LI WEN TSUNG को बयान :**

सन २०२२ मार्च वा अप्रिलमा चाईनिज मुलका मानिस टाँसी भन्ने थुप्तिन छिरिङसंग भेट भई चिनजान भएको निज थुप्तिन छिरिङले महाराजगंज स्थित अमेरीकन राजदुताबास नजिक कोठा समेत खोजि दिएका, Alex भन्ने

Yao Pucheng ले भने अनुसार मलाई बिजनेस भिषा लगाउन सहयोग गरेको, टाँसी भन्ने थुप्तिन छिरिङलाई Alex भन्ने Yao Pucheng काम लगाउने समेत गरेका थिए । हर्कराज राईलाई गोपीकृष्ण चाबहिल र महाराजगंजको गोदाम रहेको सटरमा समानहरु झिक्ने क्रममा चिनेको देखेको हुँ । चाईनिज नागरिकहरू MI – TIAN र YANG WEN KTV रेष्टुरेन्टको साहु साहुनी हुन । निज MI –TIAN र YANG WEN संग मेरो चिनजान, सम्बन्ध राम्रै छ । मिति २०८०।०४।०२ गते त्रि.बि.भन्सार कार्यालय बाहिर सिनामंगलबाट सुन भएको ब्रेक प्याड शु समेतका सामानहरु समातिए पछी MI –TIAN र YANG WEN पनि भागेका थिए । निजहरुसंग Alex भन्ने Yao Pucheng ले समन्वय गर्थे, निज Alex भन्ने Yao Pucheng को अनुरोधमा म, Alex भन्ने Yao Pucheng, STEPS भन्नेLI. NENGKAI, SAUTEN भन्ने DINGSHENG FA लाई लुकाई राख्न नयाँ नयाँ ठाँउहरु खोजी हामीलाई लुकाउन सहयोग गरेका थिए । निजहरुकै सहयोगमा नयाँ डेरा कोठा खोजी लुक्ने क्रममा ललितपुर धापाखेल स्थित डाउनटाउन अपार्टमेण्टमा दुई वटा फ्लाट भाडामा लिई एउटा फ्ल्याटमा STEPS भन्ने LI. NENGKAI, SAUTEN भन्ने DING SHENG FA गोप्य रुपमा राखी अर्को फ्ल्याटमा ठमेल KTV बाट भागी लुकी बसेको अबस्थामा सोही डाउनटाउन अपार्टमेण्टमाबाट निज MI –TIAN र YANG WEN पक्राउ परेका हुन ।

सन २०२२ सेप्टेम्बर महिनाको दोस्रो हप्तातिर त्रि.बि. बिमानस्थलबाट Alex भन्ने Yao Pucheng लाई लिई बौद्ध स्थित सिचवान होटलमा लगि राखेको हो । निज Alex भन्ने Yao Pucheng सिचवान होटलमा बस्न थाले भने २०२२ डिसेम्बर महिना देखी म र STEPS भन्ने LI. NENGKAI बसी रहेको घरको भाडा रकम Alex भन्ने Yao Pucheng ले तिरिदिन थाले । पछी म ताईबान बाट फर्की आए पछी सन २०२३ February २२/२३ तारीख तिर निज Alex भन्ने Yao Pucheng, STEPS भन्ने LI. NENGKAI र SAUTEN भन्ने DINGSHENG FA सहित ४ जना भई महाराजगंज अमेरीकन राजदुताबास नजिकको घरमा बसी ईलेक्ट्रोनिक्स सामान लगायतका मालवस्तु भित्र सुन लुकाई नेपालमा पैठारी गरी सुनको ब्यापार गर्ने बिषयमा छलफल भई सोही अनुसार काम गरेको हो । मेरो Alex भन्ने Yao Pucheng, STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DINGSHENG FA संग सम्बन्ध राम्रो छ र निरन्तर फोन सम्पर्क समेत भई रहने गर्दथ्यो । फोन नं. ९८१३५०७७५४, ९७०३०८९८३१, ९८२८१६२४८० हरु Lao Hu भन्ने चाईनिज नागरिकको भारत दिल्लीमा बस्ने प्रेमिका Dami (तामी) ले दिएकी हुन , भारतको दिल्ली स्थित गुडगाँउमा बस्दा सुन केशमा पक्राउ परेकोमा राहदानी र रु. ५,००,०००।–(पाँच लाख) भारतीय रुपैया धरौटी Xiao Wang ले राखि दिएकोमा छुटी सो पश्चात सन् २०२२ जनवरीमा नेपाल पहिलो पटक बिना भिषामा भारतबाट गाडीमा लुकी छिपी गरी नेपाल प्रवेश गरेको थिए ।

Lao Hu ले नेपाली नागरिकता प्रमाण र राहादानी मिलाई दिन्छु भनेकोले निज Lao Hu ले RMB १०,०००।– लिई मलाई घरमै नेपाली छिरीङ लामा नाम राखि फोटो समेत टाँसिएको ना.प्र.प.नं. २७३२०६४-४९२१ काठमाडौं भएको नागरिकता प्रमाण पत्र र छिरीङ लामा नाम बाटै नेपाली राहादानी नं. १२६२३०४५ भएको मेसिन रिडेवल पासपोर्ट समेत ल्याई दिएकोमा सोही राहादानी प्रयोग गरी सन २०२२-०५-१३ मा सिंगापुर र सिंगापुरबाट ताईबान गई Toutist VISA मा र पुन: सन् २०२२-८-०९ तारीखमा नेपाल आएको हुँ।

Alex भन्ने Yao Pucheng ले सन २०२२ डिसेम्बर महिनाको शुरु तिर मसंग नेपालमा बिदेशबाट ब्रेक प्याड, सेभर, स्मार्ट वाच (घडी), ईलेक्ट्रोनिक्स सामानहरु मगाई उक्त मालवस्तु भित्र सुन लुकाई राखी अबैध पैठारी गरी नेपालमा ल्याई उल्लेखित ब्रेक प्याड लगायतका मालवस्तु भित्र रहेको सुन पगाल्ने काममा मलाई खटाई सुन रहेका मालवस्तुबाट सुन निकाली पगाली काम गरे वापत RMB 10,000।– तलब र नेपालको खर्च निज Alex भन्ने Yao Pucheng र STEPS भन्ने LI NENGKAI ले सबै ब्यहोरी दिने कुरा भए पछी सन २०२३ जनवरी ४ मा ताईबान गई बसी सन २०२३ फेब्रुअरी १५ मा नेपाल आई निज Alex भन्ने Yao Pucheng, STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA संग मिलेर काम गरी पैसा कमाउने उद्देश्यले नेपाल आएको हुँ। टाँसी भन्ने थुप्तिन छिरिङ र Alex भन्ने Yao Pucheng ले सन २०२३-०७-२७ मा बिजनेस भिषा प्राप्त गरेको हुँ।

STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA भई काठमाडौंको गोपीकृष्ण चाबहिल, महाराजगंज र सामाखुसीको गोदामबाट सुन भएका मालवस्तु झिकी ब्रेजा गाडी, DUSTER गाडी र क्रेटा गाडी समेत प्रयोग गरी टोखामा खोलिएको सुन पगाली निकाल्ने कारखानामा लगी सुन पगाली निकाली निस्किएको सुन निज Alex भन्ने Yao Pucheng लाई जिम्मा लगाई निज Alex भन्ने Yao Pucheng सुन लिई एक्लै बेच्न जाने गर्दथे । सुन म सहित STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA ले मिलि पगाल्ने गरेका थियौ। निज Alex भन्ने Yao Pucheng सुन लिएर कता जान्थे मलाई थाहा हुदैनथ्यो।

मिति २०८०।०४।०२ गते बालुवाटार गोदाम जाने सुन अबैध पैठारी भई आएको ब्रेक प्याड लगायतका सामानहरू LIN ZEQIANG ले लाजिम्पाटमा लगी सुन निकाल्ने सामान थियो भनेर निज Alex भन्ने Yao Pucheng ले भने पछी म सहित STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA भने पछी थाहा पाई हामी सतर्क भई भाग्ने योजनामा थियौ। जब टाँसी भन्ने थुप्तिन छिरिङको फोन एकाएक बन्द भयो भनि Alex भन्ने Yao Pucheng ले भने पछी म समेत भई निज टाँसी भन्ने थुप्तिन छिरिङलाई बारम्बार सम्पर्क गर्दा फोन अफ भएपछी अब हामी पनी भाग्नु पर्छ नत्र प्रहरीले पक्राउ गर्छ भने पछी हामी ४ जना भई भागेका हौ र Alex भन्ने Yao Pucheng ले सतर्क रहनु है भनि MI–TIAN र YANG WEN लाई समेत जानकारी गराएकोमा सो सामान १६० सेट BRAKE PADS बाट सुन पगाली निकाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको थाहा पाएको हो।

चिन, हङकङ लगायत देशबाट मालवस्तु पैठारी गर्न सकिदैन त्यसको लागी नेपाली नागरिकता भएको ब्यक्ती खोजी नेपाली नागरिकको नाममा कम्पनी दर्ता गरी बिदेशबाट ईलोक्ट्रोनिक्स, ब्रेक प्याड, सेभर लगायतका मालवस्तुमा सुन राखी आयात तथा पैठारी गरी सुनको ब्यापार गर्नु पर्छ भने पछी मैले निज टाँसी भन्ने थुप्तिन छिरीङसंग कम्पनी खोल्न नेपाली नागरिक खोज भनेकोमा निजले को कसलाई खोजे मलाई थाहा छैन कम्पनी खोल्न पैसा चाहियो भनि निजले भनेपछी निजले सबै प्रकृया गर्न रु. ५ लाख ५० हजार चाहिन्छ भने पछी मैले Alex भन्ने Yao Pucheng संग उक्त पैसा मागी दिएको थिए।

Hwada Electric Suppliers Pvt. Ltd., रेडी ट्रेड प्रा.लि., दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., सरिता सप्लायर्स, Chhungak Electric Suppliers र भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. लगायतका कम्पनीहरु चाईनिज नागरिकहरु Ali भन्ने Li Wen Tsung, Steps भन्ने Li

Nengkai र Alex भन्ने Yao Pucheng को योजना र लगानीमा थुप्तिन छिरिङ र हर्कराज राई समेत भई कम्पनीमा संचालकहरुलाई रु.५ लाख ५० हजार रुपैया दिनु भनी मैले रकम दिएको हुँ।

सामाखुसी गोदाममा आएका मालवस्तुमा ३ पटक सुन आएको थियो भने गोपीकृष्ण चाबहिलको गोदाममा आएका मालवस्तुमा ३ पटक सुन राखी आएको थियो । एक लटको मालवस्तु पगाली सुन निकाल्दा २ किलो देखी ३ किलोसम्म सुन निस्कने गरेको थियो ।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाउन के कस्तो परिपञ्च को कसले मिलाएका थिए मलाई थाहा छैन । मालवस्तु छुटाउन Alex भन्ने Yao Pucheng ले टाँसी भन्ने थुप्तिन छिरीङलाई WhatsApp मार्फत भन्ने गरको सुनेको हुँ । मालवस्तु छुटाउदा के कति खर्च लाग्छ मलाई थाहा छैन, उक्त खर्च Alex भन्ने Yao Pucheng ले दिने गरेको थिए ।

हालसम्म सबै कम्पनीको गरेर सामाखुसी, गोपीकृष्ण चाबहिल र महाराजगंजको गोदाममा१३३ पटक भन्दा बढी मालवस्तु पैठारी भई आएको छ । उल्लेखित सामानहरु पैठारी गरे वापत के कुन माध्यमबाट कसरी भुक्तानी भएको छ मलाई थाहा छैन ।

उल्लेखित सामाखुसी, गोपीकृष्ण चाबहिल र महाराजगंजको गोदाममा स्थानहरूमा स्टोर गरी राखिएका मालवस्तुहरू म लगायतले अबैध सुन पैठारी गरी ल्याएका मालवस्तु हुन र टोखामा रहेका ३ वटा मेसिन सुन पगाल्ने कार्यमा प्रयोग गरिएका मेसिनहरु हुन । उल्लेखित सामानहरुमा मलाई जानकारी भए अनुसार सामाखुसी र गोपीकृष्ण चाबहिलको गोदाममा आएका मालवस्तुमा ३/४ पटक सुन पैठारी भई आएको हो । महाराजगंजको गोदाममा सुन आएको मलाई थाहा छैन ।

मलाई निज Alex भन्ने Yao Pucheng ले काम लगाई मालवस्तुमा सुन राखी अबैध सुन पैठारी गरी सुन सहित आएका मालवस्तुबाट सुन निकाल्ने मेसिन प्रयोग गरी सुन पगाली निकाली निज Alex भन्ने Yao Pucheng कै निर्देशनमा सुन निकाली निजलाई नै सुन दिई उक्त सुन बेच्न के कता लैजान्छन मलाई थाहा छैन । निज Alex भन्ने Yao Pucheng ले के कसरी बिदेशबाट मालवस्तुमा सुन राखि के कुन मानिसहरु संग मिलि नेपालमा मालवस्तु पठाउथे मलाई थाहा छैन । मालवस्तु गोपीकृष्ण चाबहिल, महाराजगंज, सामाखुसीको निज Alex भन्ने Yao Pucheng कै निर्देशनमा म समेत भई सुन पगाली निकाली निज Alex भन्ने Yao Pucheng लाई नै हस्तान्तरण गरेको हो ।

बा १६ च ९३०० नं. को क्रेटा गाडी Alex भन्ने Yao Pucheng ले चढ्ने गरेको गाडी हो । BAB ५९८९नं. को DUSTER गाडी STEPS भन्ने LI. NENGKAI र SAUTEN भन्ने DING SHENG FA ले चढ्ने गरेको गाडी हो भने बा १६ च १७७१ नं. को ब्रेजा गाडी मैले चढ्ने गरेको गाडी हो ।

उल्लेखित गाडीहरु म समेतका प्रतिबादीहरुले अबैध सुन पैठारी कसूर गर्न र सो को ब्यबस्थापन गर्न प्रयोग भएका गाडीहरु हुन । उक्त डिभाईसमा GPS रेकर्ड भएको लोकेसन सहितको नक्सा म लगायतका प्रतिबादीहरुले उल्लेखित गाडी प्रयोग गरी अबैध सुन पैठारी गरी सो को ब्यबस्थापन गर्दा हामीले प्रयोग गरेको बाटो र हामी पुगेको स्थान सहितको GPS डिभाईसमा रेकर्ड भएको लोकेसन सहितको नक्सा हो हेरी चिन्ही सनाखत समेत गरी दिए । टोखाबाट ईलेक्ट्रोनिक्स मेसिन लगायतका मालवस्तुबाट सुन पगाल्ने मेसिनद्वारा सुन पगाली निकालिएको सुन निज Alex भन्ने Yao Pucheng ले बेचबिखन गर्ने गरेको सो बाहेक अन्य स्थानमा सुन गाल्ने स्थान वारेमा मलाई जानकारी छैन् ।

मेरो नेपालमा आम्दानीको स्रोत भनेको निज Alex भन्ने Yao Pucheng ले निजकै निर्देशनमा अबैध सुन पैठारी र सो को ब्यबस्थापनमा काम गरे बापत मासिक रुपमा पाउने तलब RMB १०,०००।– (दस हजार) हो, सो भन्दा अन्य आय श्रोत छैन। म बस्ने गरेको घरको कोठा भाडा र बस्न खान चाहिने खर्च निज Alex भन्ने Yao Pucheng ले नै ब्यहोर्ने गरेका थिए।

मैले अबैध सुन पैठारी र सो को ब्यबस्थापनमा काम गरे बापत मासिक रुपमा पाउने तलब RMB १०,०००।– (दस हजार) लिने गरेको सि बाहेक मेरो आम्दानीको श्रोत केही छैन् , मेरो वाल्डो क्यासिनोको खातामा. Alex भन्ने Yao Pucheng ले रु. २० लाख १० हजार जम्मा गरेको होलान मैले रु. १ लाख मात्र जुवा खेलेको छु।

टोखामा सुन गालेको स्थानमा पाईएका खाली काटुन देखाउदा देखे, उक्त काटुनमा भएका सामानहरु पठाउने कम्पनीका सबै स्टिकरहरु Steps/Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई हङकङ देखी म्यानेजरले च्यात्नु पर्छ भनेकोले हामीहरु मिलेर सामानहरु आउने बित्तिकै स्टिकरहरु च्यात्ने गरेको थियौं। निज Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई स्टिकर च्यात्न लगाउने म्यानेजरलाई मैले चिन्दिन। उक्त म्यानेजरसंग प्राय: Alex भन्ने Yao Pucheng को कुरा हुने गरेको थियो। उक्त माल सामनहरुमा भएका स्टिकरहरु च्यातेको खण्डमा सामान कुन एयरलाईन्सबाट कहाँ देखी कुन कम्पनीको सामान आएको हो भनि नचिनियोस भनेर स्टिकरहरु च्यातिएको हो।

टोखाको घरमा ३ वटा सुन पगाल्ने मेसिन प्रयोग गरिएको थियो। अन्य स्थानमा को कसले सुन पगाल्ने मेसिन प्रयोग गरी सुन पगाल्ने स्थान बनाएका छन मलाई थाहा छैन। लाजिम्पाटमा भएको ३ वटा सुन पगाल्ने मेसिन निज Alex भन्ने Yao Pucheng ले चाईना देखी मगाई ल्याएका हुन निजले के कसरी उक्त मेसिन ल्याएका हुन मलाई थाहा छैन। उक्त मेसिनहरु टाँसी भन्ने थुप्तिन छिरिङले सन २०२२ को मे/जुन महिना तिर Alex भन्ने Yao Pucheng, Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई काठमाडौं बौद्धमा २ (दुई) वटा मेसिन दिएका थिए रे उक्त मेसीन त्यही समयमा टोखामा लगेर टोखामा राखेका रहेछन। म पहिलो पटक सन २०२२ को अगष्ट वा सेप्टेम्वर महिनामा टाँसी भन्ने थुप्तिन छिरिङले गोदाम देखाउन लाँदा मैले उक्त २ वटा मेसिन टोखामा देखेको हुँ। पछी सन २०२३ मार्च हो या अप्रिल महिनामा म र Yao Pucheng, Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa समेत गोपीकृष्ण चाबहिलको गोदामबाट अर्को एउटा सुन पगाल्ने मेसिन टोखा लगी राखेको हो। उक्त मेसिन समेत Alex भन्ने Yao Pucheng ले मगाएका हुन।

पक्राउ प्रतिबादी टाँसी भन्ने थुप्तिन छिरिङले भाडामा लिई बस्ने गरेको पानीपोखरी स्थितमा रहेको Comfort Housing को B-Block को 6B-2 घर खानतलासी गर्दा जिल्ला प्रशासन कार्यालय काठमाडौबाट जारी भएको टाण्डुप लामाको छोरा छिरीङ लामाको नाम उल्लेख भएको ना.प्र.न. २७३२०६४-४९२१ भएको नेपाली नागरिकता प्रमाण पत्र मेरो हो।

मैले चलाउने गरेको डार्क ग्रे कलरको बा १६ च १७७१ नं. को ब्रेजा गाडीमा म धेरै पटक टोखा गएको छु, सुरुको १/२ पटक सुन गाल्ने ठाँउ तयार गर्न गयौ र बाँकि सुन पगाल्ने प्रयोजनको लागि नै जाने गरेका हौ। Still police office, How police know ding and goger place, goger and ding house knock is by police लगायतका म्यासेजहरु लेख्ने Askin Zingkai मेरो Girl friend हुन। निजसंग Steps भन्ने

Li Nengkai र Sauten भन्ने Ding Sheng Fa र KTV को मालिक Yang Wen संगै Mi-Tian समेत पक्राउ परेपछी मलाई समेत प्रहरीले खोजेका छन भन्ने प्रसंगमा Wechat मा गरेको कुराकानी हो।

मैले मेसिन प्रयोग गरी सुन पगाल्ने तालिम लिएको छैन। मलाई निज Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa ले नै सुन यसरी पगाल्नु पर्छ भनि मोबाईलमा देखाए पछी टोखामा लगी सुन मेसिनमा राखी पगाली पगालेको हो।

भारतमा सन २०२१ मा अप्रेसन Molten Metal मा IGIA बाट ८३.५३ किलो सुन बरामद भएको कसुरमा म पक्राउ परेको थिए। उक्त कसूरमा मैले कहिले १ किलो कहिले २ किलो सुन कोरीयन नागरिक OUO नाम गरेको ब्यक्तिसंग लिई उक्त सुन पिन्टु नाम गरेको भारतिय नागरिक लाई १ किलो सुन बराबर भा.रु. ५० लाख मूल्यमा बेची आएको पैसा कोरीयन नागरिक OUO लाई दिन्थे, उक्त समयमा १ महिनामा १५ किलो सुनसम्म बेच्ने गरेको थिए भन्ने व्यहोराको प्रतिबादी चिनिया नागरिक ALI भन्ने LI WEN TSUNG को बयान।

द. **<u>प्रतिबादी चिनिया नागरिक राहदानी नं. E94446558 वाहक LIN ZEQIANG को बयान :</u>**

नेपालमा चाईनिज नागरिक Zhong Jing Chuan ले मासिक RMB १०,०००।– (चाईनिज YUAN) तलबमा सुनको काम गर्ने गरी नेपाल बोलाएपश्चात नेपाल बस्दा चाईनिज नागरिक Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले चिनाईदिएका अलिअलि नेपाली समेत बोल्ने चाईनिज नागरिक Chen Jun Tang (छन चुङ थाङ) ले फोन नं. ९८१३४३०९७० र ९८११४१३७६६ भएको सिम कार्ड रु. ३०० का दरले रु. ६०० मा लिएको थिए। उल्लेखित सिमहरु चाईना फिर्ता जाने भनि पेलेन टिकट समेत काटी जान तयारी गरी पक्राउ पर्नु भन्दा अघिल्लो रातको भेटमा तपाईलाई चाईनामा यो सिम र मोबाईल काम लाग्दैन भनि हामीलाई दिनुस भनि चाईनिज नागरिक ZHONG JIANHUA (चोङ चेनह्वा) र BING (पिङ) ले मागेपछी मैले दिएको हुँ।

चाईनिज नागरिक Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) चाईनामा हामी एकै ठाँउमा बस्ने १० बर्ष अगाडी देखी चिनेका निज नेपाल आएपछी समेत फोनमा सम्पर्क भई रहने चाईनामा हुँदा स्नुकर खेल्ने साथी हुन। निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) को नेपालमा बोलाउने उप नाम कहिले Hennry कहिले Jackie Chan त कहिले SAM नाम भनि परिचय गर्ने गर्थे। निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) हाल चाईनामा छन, निज २०२३ को जुन महिनामा चाईना गएका हुन। निजको तीन पुस्ते सहितको विवरण मलाई थाहा छैन निज Zhong Jing Chuan को राहादानी नं. EJ5053396 चिन देशबाट जारी भएको हो। निजको वतन चिन देशको Guangdong प्रान्तमा Shang Wei Haifong सहर हो। निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) नेपालमा ब्रेक प्याड, गाडीका पार्टपुर्जा, सेभर, ईलेक्ट्रोनिक्स लगायत मालवस्तुमा अबैध सुन राखी बिदेशबाट सुनको अबैध कारोबार गर्ने मानिस हुन।

सन २०२३ को मे महिनामा मलाई बिजनेस भिषा दिलाउन Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले कुरा गरी मलाई फोन नं. ९८१३४३०९७० र ९८११४१३७६६ भएको सिमकार्ड दिने चाईनिज नागरिक Chen Jun Tang (छन चुङ थाङ) लाई बोलाई मेरो पासपोर्ट निज Chen Jun Tang (छन चुङ थाङ) दिई निजले के कुन कम्पनी मेरो नाममा दर्ता गरी बिजनेस भिषा लिन सहयोग गरेका हुन। मेरो नाममा के कसरी कुन प्रकृयाद्वारा कम्पनी दर्ता गरेका हुन थाहा छैन। मेरो नामको कम्पनी दर्ता गर्दा लगेको सबै रकम निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले तिरेको हुँदा कती रकम तिरे सो समेत मलाई थाहा छैन।

मलाई काम लगाउने चाईनिज नागरिक Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) सन २०२३ जुन २० तारिख देखी चाईनामा नै बसी आएका छन । निजले मलाई चाईनाबाट १ घण्टा अगाडी अबैध सुन भएका सामानहरु आएको छ बुझ्नु है भनि WhatsApp बाट फोन कल गरी भन्ने गर्दथे र निजले भने अनुसार म कहिले स्वयम गई त्रि.बि. भन्सार कार्यालयबाट त कहिले शुरुमा लाजिम्पाट र पछी बालुवाटार स्टोर भएको ठाउँमा गई पक्राउ परे पछी नाम थाहा भएका नेपाली नागरिक हर्कराज राईले फरक फरक ट्याक्सी भाडा गरी स्टोर भएको ठाउँमा सामान ल्याए पछी मैले सामान बुझी निज हर्कराज राईलाई पठाई दिई निज गए पछी सामान थोरै भए मोटरसाईकलमा र सामान धेरै भए बाटोमा गई ट्याक्सी खोजी सामानहरुलाई लाजिम्पाट स्थित निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले भने अनुसार कहिले गोदाममा र कहिले हामी बस्ने गरेको घरमा ल्याई स्टोर गर्ने गर्थे । अर्का चाईनिज नागरिक Zhong Jianhua (चोङ चेनह्वा) म संगै बालुवाटार सामान बुझ्न जाँदा संगै जाने गर्दथे । कहिले BING (पिङ) त कहिले  Zhong Jianhua (चोङ चेनह्वा) जाने गर्दथे । म, Zhong Jianhua (चोङ चेनह्वा) र BING (पिङ) ले Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले भने अनुसार निजकै निर्देशनमा बालुवाटारबाट लाजिम्पाटको गोदाममा र कहिले लाजिम्पाट कै बस्ने घरमा सामान ल्याई स्टोर गरी राखी Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) कै निर्देशन बमोजिम बस्ने गरेको घरमा ल्याएको सामानलाई मलाई नाम थाहा नभएको सुन गाल्ने मेसिनमा हाली सुन पगाली निकाल्ने काम मिलेर गर्दछौ ।

मलाई थाहा भए अनुसार लाजिम्पाटको गोदाममा रखिएको सामानहरुमा सुन हुदैन थियो । उक्त सामानहरु म लगायत Zhong Jianhua (चोङ चेनह्वा) र BING (पिङ) मिलि स्टोर गरे पछी निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाजिम्पाट गोदामको सामानहरु सम्बन्धमा केही गर्न भन्दैन थे । गोदाममा सामान राखेपछी म लगायत BING (पिङ) त कहिले  Zhong Jianhua (चोङ चेनह्वा) लाई केही मतलब हुदैनथ्यो । लाजिम्पाटको गोदाम ठूलो थियो सामानहरु घटे नघेटको सम्बन्धमा हामीलाई मतलब हुदैनथ्यो किन कि उक्त सामानहरुमा सुन थिएनन् । हामीले बस्ने गरेको लाजिम्पाटको घरमा ब्रेक प्याड, सेभर, स्मार्ट वाच, अटोपार्ट लगायतका मालवस्तुबाट पगाली निकाली निज  Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) हुँदा निज आफैले लिएर जान्थे भने निज नहुँदा निजले मेरो मोबाईल फोनमा WhatsApp मार्फत कहिले रु.५ र कहिले रु.१० को नोटको फोटो पठाई सुन लिन आउने मानिसको हुलिया र निजले लगाउने कपडाको रंग र हुलिया बताई म र BING (पिङ) भई निजले भने अनुसार लाजिम्पाट स्थित The Last Friday र कहिले Tukuche Café मा गई बताईएको हुलिया अनुसारको मानिसलाई भेटी निजले हामीलाई मेरो मोबाईलमा Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले पठाईएको फोटोसंग मिल्ने नोट दिए पछी उक्त नोट मोबाईलमा भएको फोटोसंग भिडाई नोटको नं. मिलेमा निजलाई सुन हस्तान्तरण गर्ने गरेका थियौं ।

HUA (ह्वा) भन्ने चाईनिज नागरिकलाई निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले घरायासी काम गरी घर कुरेर बस्ने काम लगाई राखेको मानिस हुन । Zhong Jianhua (चोङ चेनह्वा), BING (पिङ) र HUA (ह्वा) लाई मैले पहिला चिनेको थिईन । मलाई निजहरुसंग Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले लाजिम्पाटको घरमा चिनाएका हुन । Zhong Jianhua (चोङ चेनह्वा) को चिन देशबाट जारी राहादानी नं. EJ5053290 हो भने BING (पिङ) र HUA (ह्वा) को घर चाईनाको Guangdong प्रान्तका मानिसहरु हुन भन्ने सम्म थाहा छ त्यो भन्दा बढी मलाई केही थाहा छैन । मेरो

निजहरुसंगको सम्बन्ध भनेको त्यही लाजिम्पाटमा बसी निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले भने अनुसार काम गर्ने सम्मको मात्रै सम्बन्ध हो ।

म र BING (पिङ) भई निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले भने अनुसार कहिले The Last Friday Cafe र कहिले Tukuche Café मा सुन लगि बुझाउने गरेका मानिस मध्ये कहिले The Last Friday Cafe मा सामान बुझ्न आउने मानिसको नाम थर, ठेगान, तिनपुस्ते बिबरण र सम्पर्क नं. समेत थाहा छैन । निजको हुलियामा अं. ६ फिट भन्दा अग्लो र मोटो शरीर, गँहु गरो, दाह्री मेसिनद्वारा काटी खस्रो देखिने, ठुलो र मोटो अनुहार, तालुको धैरै भागमा कपाल झरेको, कालो कपाल भएको, प्राय निलो कलरको टिसर्ट लगाउने हुलिया भएका मानिस चाईनिज मुलको होईनन, नेपाली हुन वा ईण्डीयन मुलका हुन मैले छुट्याउन सकिन । मैले निज मानिसलाई ५ पटक भेटेको हो भने Tukuche Café मा सुन लगि बुझ्न आउने मानिसलाई दिने गरेको थिए ।

मैले The Last Friday Cafe मा भेटी सुन बुझाउने गरेको मानिसलाई ५ पटक भेटेर सुन बुझाएको हो । निज लाई ५ पटकमा ७ वटा सुनका बिष्कुट बुझाएको हुँ । उक्त सुनका बिष्कुट कुनै १ किलोका, कुनै ९०० ग्रामका त कुनै ८०० ग्राम भन्दा माथिका तौल भएका थिए । Tukuche Café मा पनि ५ पटक भेटी ७ वटै सुनका बिष्कुट दिएको हुँ । उक्त बिष्कुटका तौल अं. १ किलो बराबरको थिए । उक्त दुबै स्थानमा बुझाईएका सुनका मूल्य के कति हुने गरेको थियो निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले नै कुरा गरी पठाउने हुँदा हामीलाई थाहा हुदैनथ्यो । सुन को भुक्तानी के कसरी हुने गरेको थियो त्यो समेत हामीलाई थाहा हुदैन । म र BING (पिङ) लाई निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले कहिले The Last Friday Cafe र कहिले Tukuche Café मा गई निजले हुलिया बताए अनुसारको मानिसलाई भेटी सुन बुझाउनु अन्य केही गर्नु पदैन भनि सम्झाई पठाउने गरेका थिए ।

मिति २०८०।०४।०२ गते मलाई ब्रेक प्याड शु र सेभर सामान आउदै छ भनि मलाई १६:०० बजे तिर निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले चाईनाबाट WhatsApp मा मलाई फोन गरी खबर गरेकोमा म सामान आउँदै छ भनि म र BING (पिङ) बालुवाटार गोदाममा गई बसि कुरीरहेको थियौ । रातको २२:०० बजे सम्म कुरेर बस्दा पनी सामान नआएपछी निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले मलाई WhatsApp मा फोन गरी यति बेलुका भई सक्यो सामान आउँदैन घर जाऊ भनि भनेपाछी म र BING (पिङ) हामी बस्ने घर लाजिम्पाट गयौं । पछी राती फेरी निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले WhatsApp मा मलाई फोन गरी तिमी चाईना नगएको धैरै भयो भोलिको टिकट पठाई दिएको छु तिमी चाईना आउ भने पछी मैले उक्त रातीनै सबै मेरा सामानहरु झोलामा प्याक गरी म पक्राउ पर्नु भन्दा तीन दिन अगाडी मात्र नेपाल आएका कहिले काँही पहिला लाजिम्पाट आउँदा मैले King भनि बोलाउने बास्तबिक नाम Peng Ling Feng (फङ लिङ फोङ) भएका मानिस मिति २०८०।०४।०२ गते साँझ हामी बस्ने घरमा आईसंगै सुति भोलि पल्ट २०८०।०४।०३ गते म र King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) चाईना जान भनि निज संगै ट्याक्सीमा चढी त्रिभुवन अन्तराष्ट्रिय बिमानस्थल जान क्रममा मलाई King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) प्लेन टिकट दिएकोमा उक्त मेरो नामको टिकट त्रिभुवन अन्तराष्ट्रिय बिमानस्थलको अध्यागमन शाखाको काउण्टरमा देखाउदा मलाई नियन्त्रणमा लिई छुट्टै कोठामा लगेर राखे भने निज King

भन्ने Peng Ling Feng (फङ लिङ फोङ) चाईना उडी गए । उल्लेखित ब्रेक प्याडमा रहेको सुन पगाली निकाल्दा ६० किलो ७१६ ग्राम निस्केको थाहा पाएको हुँ ।

जे जति ब्रेक प्याड, सेभर, स्मार्ट वाच (घडी) लगायतका सामान मलाई एक पटक टाँसी भन्ने थुप्तिन छिरिङ र अन्य हरेक पटक हर्कराज राईले कहिले लाजिम्पाट गोदाम र बढी जसो बालुवाटार गोदाममा ल्याई बुझाउने गरेका थिए । Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले चाईना देखी सामान आउदै छ भनि मलाई खबर गरे पछी निजले जुन गोदाम भन्छन त्यही गोदाममा म गई कुरी बसी हर्कराज राईले सामानहरु ल्याए पछी मैले बुझ्ने गरेको थिए । हर्कराज राईलाई को कसले काम लगाउछ र म खटिएकै गोदाममा मालवस्तु लानु भनि कसले भन्छ एवम् मालवस्तुका कागजात लगायत मालवस्तु छुटाउन लगाउने पैसा कसले दिन्छ मलाई थाहा छैन मेरो हर्कराज राईसंग सम्पर्क हुदैनथ्यो । हर्कराज राई समेतले मलाई हाल सम्म ९७ पटक जति मालवस्तु बुझाएका हुन् ।

सन २०२३ को मार्च महिना देखी शुरुमा स्मार्ट वाच (घडी) मा सुन नराखी पैठारी गरेको र त्यसरी दुई तीन पटक पछी स्मार्ट वाच (घडी)मा सुन राखी ल्याउन शुरु गरेको हो । एउटा स्मार्ट वाच (घडी) मा २० ग्राम जति सुन हुन्थ्यो । स्मार्ट वाच (घडी) मा सुन राखी ल्याउन थालेपछी त्रि.बि. भन्सार कार्यालयबाट बेला बेलामा स्मार्ट वाच (घडी) केही संख्यामा हराउन थाले, एक पटक ८ थान स्मार्ट वाच (घडी) हराए पछी सेभर र ब्रेक प्याड शु लगायतका मालवस्तुमा सुन राखी ल्याउन थालेको हो । मलाई जानकारी भए अनुसार सेभरमा २ पटक सुन राखी आएको थियो । एउटा दाह्री काट्ने सेभरको स्ट्याण्ड भित्र लुकाई ५० ग्राम सुन आउँथ्यो । मालवस्तुमा कहिले सुन राखी र कहिले सुन नराखी आउने गर्दथे । ब्रेक प्याड शुमा राखेको सामान कहिल्यै हराउँदैनथ्यो र एक सेट ब्रेक प्याडमा ५०० ग्राम सुन देखी ६०० ग्राम सम्म सुन हुने गर्थ्यो । उक्त मालवस्तुहरु Zhong Jing Chuan (चोङ चिङ छह्वाङ), Zhong Jianhua (चोङ चेनह्वा) र BING (पिङ) र Alex भन्ने Yao Pucheng समेत संलग्न रही बिदेशबाट रेडी ट्रेड प्रा.लि. लगायतका कम्पनीहरुको नामबाट मालवस्तु पैठारी गर्न शुरु गरेको हो ।

मलाई Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) र नेपालमा बसी समन्वय गर्ने Alex भन्ने Yao Pucheng समेतले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा के कसरी परिपञ्च मिलाएका छन कहिल्यै मलाई भनेन् । मालवस्तु भित्र सुन राखी कसरी मालवस्तु छुटाउन संभब भयो मलाई थाहा छैन । मालवस्तु छुटाउदा के कती खर्च लाग्छ र उक्त खर्च कसले दिने गरेको छ भन्ने सम्बन्धमा मलाई काम लगाउने निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) वा नेपालमा बसी समन्बय र सहयोग गर्ने भनि मलाई निज Zhong Jing Chuan ले बताएका मानिस Alex भन्ने Yao Pucheng लाई थाहा होला ।

निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले हामी बस्ने घरमा लान लगाए पछी उक्त सामानमा सुन छ भनि थाहा पाउथे । जुन मालवस्तु गोदाममा स्टोर गर्न लगाउथे उक्त मालवस्तुमा सुन छैन भनि मैले थाहा पाउथे । सोह्रखुट्टेको गोदाम हेर्न भनि मलाई १ हप्ता जति अगाडी Zhong Jianhua (चोङ चेनह्वा) ले लिई गई देखाएका हुन तर मैले उक्त स्टोरमा मालवस्तु लगेको छैन । हात्तीगौडामा निज Zhong Jing Chuan ले संगै जानु भनेपछी, म King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) संग ५/६ पटक गएको छु । उक्त ठाँउमा समेत ईलेक्ट्रिक मेसिनहरु लगेर राखेको रहेछ ।

बालुवाटार र लाजिम्पाटको गोदाम सुन नभएका मालवस्तुहरु राख्न लिएका हुन भने लाजिम्पाटको हामी बस्ने गरेको घरमा मालवस्तुमा भएको सुन समेत पगाली निकाल्न सुन पगाल्ने मेसिन सहित ब्यवस्था गरिएको हो। उक्त गोदाम र घरको भाडा लगायतका रकम तिर्न भनि निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले मलाई दिने गरेका थिए। हात्तीगौडाको गोदामको लागी भाडा तिरी दिनु भनि एक पटक मलाई निज Zhong Jing Chuan ले रु.४० हजार दिई मैले घरबेटीलाई दिएको हुँ। सोह्खुट्टेको गोदाम घर मलाई पक्राउ पर्नु भन्दा १ हप्ता अगाडी ZHONG JIANHUA (चोङ चेनह्वा) ले देखाएका हुन।

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट Brake Pad, Shaver, स्मार्ट वाच (घडी) लगायतका सामाहरु छुटाई हर्कराज राईले म समेतलाई जिम्मा लगाएका सामान मध्ये निज Zhong Jing Chuan ले हामी बस्ने घरमा लान लगाए पछी उक्त सामानमा सुन छ भनि थाहा पाउथे । जुन मालवस्तु गोदाममा स्टोर गर्न लगाउथे उक्त मालवस्तुमा सुन छैन भनि मैले थाहा पाउथे। मलाई जानकारी भए अनुसार स्मार्ट वाच (घडी) एक पटक थान ७५ वटामा सुन आएको थियो, सेभरको हकमा एक पटकमा ७५/७६ वटा गरी दुई पटक सुन राखि आएको थियो भने ब्रेक प्याडको हकमा १९/२० पटक सुन राखी आएको थियो।

बालुवाटार, लाजिम्पाट, हात्तीगौडा स्थानहरूमा स्टोर गरी राखिएका मालवस्तुहरू म लगायतले अबैध सुन पैठारी गरी ल्याएका र सुन पगाल्ने कार्यमा प्रयोग गरिएका मेसिनहरु हुन । उल्लेखित सामानहरुमा मलाई जानकारी भए अनुसार स्मार्ट वाच (घडी) एक पटक थान ७५ वटामा सुन आएको थियो। सेभरको हकमा एक पटकमा ७५/७६ वटा गरी दुई पटक सुन राखि आएको थियो भने ब्रेक प्याडको हकमा १९/२० पटक सुन राखी आएको थियो । पक्राउ परे पछी बुझ्दा उल्लेखित सामानहरु रेडी ट्रेड प्रा.लि. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नाममा आएका मालवस्तुहरु रहेछन भनि थाहा पाएको थिए।

मलाई निज Zhong Jing Chuan ले काम लगाई मालवस्तुमा सुन राखी अबैध सुन पैठारी गरी सुन सहित आएका मालवस्तुबाट सुन निकाल्ने मेसिन प्रयोग गरी सुन पगाली निकाली निज Zhong Jing Chuan कै निर्देशनमा सुन निकाली निजले तोकेको ब्यक्तीलाई तोकिए कै स्थानमा लगी दिएको हुँ। निज Zhong Jing Chuan ले के कसरी बिदेशबाट मालवस्तुमा सुन राखि के कुन मानिसहरुसंग मिलि नेपालमा मालवस्तु पठाउथे मलाई थाहा छैन। हर्कराज राईले मलाई मालवस्तु बुझाए पछी मैले Zhong Jianhua (चोङ चेनह्वा) र Bing (पिङ) को सहयोगमा उक्त मालवस्तु स्टोर गर्ने र सुन पगाली निज Zhong Jing Chuan ले भने अनुसार सुनको ब्यबस्थापन गर्ने गरेको हुँ। BAB ५९८९ नं. को Duster गाडी Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa ले चढ्ने गरेको देखेको हो। बा १६ च १७७१ नं. को ब्रेजा गाडी Ali भन्ने Li Wen Tsung ले चढ्ने गरेको मैले देखेको हो । पक्राउ परेपछी बुझ्दा उल्लेखित प्रतिबादीहरुले अबैध सुन पैठारी कसुर गर्न र सो को ब्यबस्थापन गर्न उल्लेखित गाडीहरु प्रयोग गरी वारदात घटाउन र ब्यबस्थापन गर्न प्रयोग गरेका बाटोहरु सहितको उल्लेखित गाडिहरुको GPS लोकेशन देखाएपछी थाहा पाएको हुँ।

सुन पगाल्ने क्रममा बिजुलीको पावरले नधाने पछी पटक पटक MCB डाउन हुने गरेकोले निज Zhong Jing Chuan ले बिजुलीको काम गर्ने मानिस बोलाई सुन पगाल्न बिजुलिको पावर बढी चाहिने हुँदा मेन स्विचबाट डाईरेक्ट बिजुलिको लाईन बनाई तारहरु प्रयोग गरी सुन पगाल्न आबश्यकता अनुसार प्रयोग गर्न मिल्ने गरी बिजुलिको तार तीन तला माथी लगी सुन पगाल्न प्रयाप्त बिजुलीको पावर हुने गरी मिलाईएको हो ।

म काम गर्ने तथा बस्ने लाजिम्पाटको घरमा २ वटा सुन पगाल्ने मेसिन प्रयोग गरिएको थियो। अन्य स्थानमा को कसले सुन पगाल्ने मेसिन प्रयोग गरी सुन पगाल्ने स्थान बनाएका छन मलाई थाहा छैन। लाजिम्पाटमा भएको २ वटा सुन पगाल्ने मेसिन निज Zhong Jing Chu (चोङ चिङ छहवाङ)ले चिन देखी मगाई ल्याएका हुन।

Zhong Jing Chuan ले काम लगाएका मसंगै मिलि काम गर्ने Zhong Jianhua, Bing र HUA लाई तलब निज Zhong Jing Chuan ले दिन्थे निजले मेरो हकमा मेरो नाममा रहेको चाईना स्थित बैकमा राखि दिने गरेका हुन्।

बरामदी मुचुल्कामा उल्लेखित ब्रेक प्याडका ८१ थान क्लिप सुन पगाली निकाले पछी काम नलाग्ने भई फालेका ब्रेक प्याडका क्लिपहरु हुन। चिम्टा र पन्जाहरु सुन पगाल्न प्रयोग गरीएका हुन र सुन पगाल्दा पन्जामा कालो लागेको हो। ट्याईलेमा भएको कालो लेदो सुन पगाल्ने मेसिनलाई ट्याईलेमा राखी ब्रेक प्याड लगायतका मालवस्तुबाट सुन पगाल्ने क्रममा निस्किएको फोहोर कालो लेदो हो।

IMEI No. ३५६४२४१०६६२३८३० भएको मोबाईल फोन सेटलाई बैज्ञानिक परीक्षण गराउँदा देखिन आएको RC लेखेको दुई काटुन सुन भएको ब्रेक प्याड बुझी ट्याक्सीमा राखी लाजिम्पाट बस्ने घरसम्म ल्याउने क्रममा बाटोमा चिनमा भएकी श्रीमतीसंग Wechat मा कुरा गर्ने क्रममा खिचेको भिडियो हो। उक्त ब्रेक प्याड भएको काटुन लाजिम्पाट स्थित बस्ने घरमा ल्याई मेसिनमा राखी सुन पगाली निकाल्दा १२ किलो जति सुन निस्केको थियो। उक्त सुन निज Zhong Jing Chuan लाई म समेत भई बुझाई निजले के कता लगी बेचे मलाई थाहा छैन भन्ने व्यहोराको प्रतिबादी चिनिया नागरिक LIN ZEQIANG को बयान।

ध. **प्रतिबादी चिनिया नागरिक राहदानी नं.EF8572733 वाहक YANG WEN को बयान :**

म नेपालमा आए पछी ज्याँठामा Fujian Restaurant भाडामा लिई संचालन गरेकोमा पछी ठमेलमा रहेको भियना होटलमा लिएर गई रेष्टुरेन्टमा कुकको काम गरेको थिएँ। सोही रेष्टुरेन्टमा कुकको काम गर्दा गर्दै सन् २०२२ मा देखी KTV रेष्टरेन्ट मैले संचालन गरी सो वापत प्राप्त भएको रकमलाई रेष्टुरेन्टको भाडा रकम तिरी बाँकी भएको नाफा रकम भियाना होटलका संचालक र मैलै आधा आधा हुने गरी फाईदा भएको रकम बाँडफाँड गर्ने गरेका थियौ। मिति २०८०।०४।३०गते जिल्ला ललितपुर, ल.पु.म.न.पा. वडा नं. २३ स्थित रहेको डाउनटाउन अपार्टमेन्टको B-Block को आठौँ तलाको B-608 नं. फ्ल्याटबाट प्रहरीले वरामद गरेको खानतलासी तथा वरामदी मुचुल्कामा उल्लेखित सामानहरु र मेरो साथी प्रेमिका MI TIAN को नै हो।

Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई निजहरु दुबै जनासंगै KTV रेष्टुरेन्टमा आउने भएकोले ग्राहकको रुपमा मात्र चिनको हुँ। Li Wen Tsung KTV रेष्टुरेन्टमा आउने गरेको हुँदा निजलाई पनि ग्राहकको रुपमा मात्र चिनेको हुँ। Yao Pucheng लाई वाल्डो क्यासिनोमा गएको समयमा भेट भई चिनेको हुँ। निज Yao Pucheng ले रेष्टुरेन्टमा व्यवसाय हुने र उनिहरुको पनि कमाई हुने भनी भारतिय मुलका ग्राहकलाई खाना दिने, उनिहरुले अडर गरेको अल्कोल गिलासमा राखि दिने कामको लागी भनी १८/२० जना केटीहरुलाई लिएर आएको हुँदा निजसंग कहिले काही WeChat कुराकानी हुने गरेको थियो। सो वाहेक निज चाईनिज नागरिक प्रतिवादीहरुसंग मेरो कुनै सम्बन्ध, सम्पर्क र लेनदेन केही पनि छैन्।

मैले जम्मा ४ (चार) पटक व्यवसाय भिषा लगाएको छु। शुरुमा एकजना ठमेल नरसिंह चोक भित्र रहेको कानून व्यवसायीको कार्यालयमा रहेका कानून व्यवसायीको सहयोगमा व्यवसाय भिषा लगाएको थिए। सो पश्चात WeChat भित्र रहेको Mai Dou भन्ने साईटमा गई कुराकानी गरि सोही आधारमा एक जना

नेपाली मेरो पासपोर्ट लिएर गई भिषा लगाइदिने गरेका थिए। सो वापत एक पटक ६(छ) महिनाको भिषाको लगाएको रु २,४५,०००।–(दुई लाख पैतालिस हजार) लिने गरेका थिए।

मैले नेपालमा मेरो रकम लगानी गरी व्यवसाय गर्नको लागी चिनबाट We Chat मार्फत नेपाली रु १० लाख रकम लिएर आएको थिएँ। मैले हाल सम्म WeChat मार्फत नेपालबाट चाईनिज RMB १०,००० (दश हजार) रकम पठाएको छु।

मेरो KTV का रेष्टुरेन्टमा Alex भन्ने Yao Pucheng, Ali भन्ने Li Wen Tsung, Roger भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng fa पनि आई राख्ने भएकोले चिनजान थियो। Waldo Casino का म्यानेजर लाउसेसंग मेरो राम्रो चिनजान थियो। नेपालमा अवैध सुन पैठारी गरेको सम्बन्धमा राजस्व अनुसन्धान विभागबाट अनुसन्धान हुँदाको बखतमा उक्त Waldo Casino को म्यानेजर लाउसेलाई बोलाएका थिए। मेरो रेष्टुरेन्टसंगै भएका भियना होटेलका संचालक दावा छिरिङ्गलाई पक्राउ गरेका र मेरो रेष्टुरेन्टमा आई राख्ने Roger भन्ने Li Nengkai समेत भागि रहेकोले मलाई पनि पक्राउ गर्छ भन्ने डरले मैले मेरो Girlfriend Mi Tian समेत लिई आफूले संचालन गरी राखको रेष्टुरेन्ट छाडि पाटनको एक होटेलमा गई बसेको थिए। सो को भोलिपल्ट त्यही नजिकै एउटा ट्याक्सी चालकलाई सोधी नजिकै एउटा अपार्टमेन्टमा कोठा लिई बसेका थियौ। सो अपार्टमेन्टमा बस्ने समयमा Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng fa संग Whatsapp मार्फत कुराकानी हुदाँ निजहरुलाई पनि कोठा घर चाहिएको छ, प्रहरीले हामीलाई खोजि रहेको छ भनेकोले मेरो Girlfriend Mi Tian ले हामी पक्राउ परेको DownTown मा रहेको अपार्टमेन्टमा हाम्रो पहिचान लुकाउनको लागि चाईनिज नागरिक LIJIAN को नाममा कोठा BOOK गरी Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng fa र हामी बसेको अपार्टमेन्टमा लुकी बसेको अवस्थामा हामीलाई पक्राउ गरेको हो।

Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng fa संग घर कोठा खोज्ने कुरा भएपछी मेरो Girl friend Mi Tain ले Internet मार्फत Air BNB मा Request गरेको र Air BNB बाट हामी पक्राउ परेको DownTown अपार्टमेन्टको सम्पर्क नम्बर प्राप्त हुन आएकोले सो नम्वरमा सम्पर्क गरी सो स्थान फेला परेको हो। सो अपार्टमेन्टको भाडा रकम Girlfriend Mi Tain ले WeChat मार्फत तिरेकी हुन। उक्त अपार्टमेन्ट हेर्न गएकी थिईन। मैले Girl friend Mi Tian Steps/Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Shengfa लाई पाटनमा भएको लबिम महलमा लिन गई Down Town को अपार्टमेन्ट ल्याई राखको हो। मैले नेपालमा KTV रेष्टुरेन्ट र भियना होटलमा रहेको रेष्टुरेन्ट व्यवसाय गरी वार्षिक चाईनिज RMB १,००,०००।– (एक लाख) नेपाली सटही गरी हुन आउने करिब रु.२०,००,०००।–(बिस लाख) रकम आम्दानी गर्ने गरेको छु। KTV रेष्टुरेन्ट र भियना होटलमा रहेको रेष्टुरेन्ट भियना होटलकै भएकोले KTV रेष्टुरेन्टको छुटै भ्याट बिल नभएको हुँदा भियना होटललाई नै मैले नगद रकम बुझाई भियना होटलको भ्याट बिलबाटै राजस्व बुझाउने गरेको थिएँ।

मेरो नाममा वाल्डो क्यासिनोमा देखिएको करिब नेपाली रु १,००,००,०००।–(एक करोड) माथिको कारोबार मेरो चाईनिज साथी YE ZONG ( पुरा नाम थाहा नभएको) ले वाल्डो क्यासिनोमा गई जुवा खेलेकोमा निजले साथमा लिएर गएको करिब नेपाली रु १,००,००,०००।–(एक करोड) रकम मेरो नामबाट ईन्ट्री गराएको हुँदा मेरो नाममा कारोबार देखिएको हो। निजले सो करिब नेपाली रु. १,००,००,०००।– (एक

करोड) रकम त्यही क्यासिनोमा जुवा खेल्दा हारेका थिएँ । मेरो नाममा वाल्डो क्यासिनोमा मेम्बरसिप कार्ड रहेको छ । मेरो नामबाट वाल्डो क्यासिनोमा के-कति रकम Deposit र Withdraw भएको छ भन्ने एकिन बिवरण मलाई थाहा छैन् ।

मैले WeChat भित्र रहेको Mai Dou भन्ने साईटमा गई ग्राहक सेवाका चाईनिज नागरिकसंग कुराकानी गरेकोमा निजले नेपालमा व्यवसाय भिषा थप गर्नको लागी सहयोग गर्ने भनि कुरा गरेपछी निजले ठमेलमा आई मेरो राहदानी लिएर गई व्यवसाय भिषा थप गरिदिएका हुन् । निजले के-कसरी भिषा थप गरिदिएका हुन् मलाई थाहा भएन । मैले कुनै पनि कागजातहरुमा मेरो दस्तखत समेत गरेको छैन् । को-कसले के-कसरी मेरो नाममा उद्योग बिभागमा झाङ एलिस कार्गो प्रा.लि. दर्ता गरेको हो मलाई थाहा छैन् । मैले मेरो उपस्थितिमा कुनै पनि कम्पनी दर्ता गरेको र कुनै कागजातहरुमा दस्तखत गरेको छैन् । झाङ एलिस कार्गो प्रा.लि. बाट हाल सम्म के-कस्ता सामान (मालवस्तु) हरु कार्गो गरी ल्याईएको छ भन्ने पनि मलाई जानकारी छैन् ।

चाईनिज नागरिक Yao Pucheng, Li Wen Tsung, Li Nengkai, Ding Sheng Fa ले होटेल भियनामा कोठा खोजि दिन अनुरोध गरेको र मैले चिनेका मानिसहरु भएकोले निजहरुसंगै बस्ने भारतिय नागरिक Tammila Zingkhai को नामबाट होटेल भियनामा कोठा BOOK गर्न सहयोग गरेको हो । निजहरु होटेलमा कोठामा बसे पछी कहाँ गएका मलाई थाहा थिएन भन्ने समेत व्यहोराको प्रतिबादी चिनिया नागरिक YANG WEN को बयान ।

न. **प्रतिबादी चिनिया नागरिक राहदानी नं. EF 4184484 वाहक MI-TIAN को बयान :**

प्रतिवादीहरु मध्ये दावा छिरिङलाई निजले संचालन गरेको होटल भियनाको कम्पाउण्डमा मेरो प्रेमीले Yang Wen ले सन् २०२० मा भियना होटलसंगै रहेको रेष्टुरेन्ट खरिद गरी KTV संचालन गरेको हुँदा सोही समय देखी निजलाई चिनेको हुँ ,अन्य चाईनिज नागरिकहरु प्रतिवादीहरु Steps भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng Fa, Ali भन्ने Li Wen Tsung, Alex भन्ने Yao Pucheng लाई चिन्दछु । Yang Wen मेरा प्रेमी हुन् । अन्य चाईनिज नागरिकहरु Steps भन्ने Li. Nengkai, Sauten भन्ने Ding,Sheng Fa, Ali भन्ने Li Wen Tsung, Alex भन्ने Yao Pucheng मैले संचालन गरेको चाइनिज बार बि क्यू रेष्टुरेन्टमा बार बि क्यू खानको लागी आईरहने भएकोले मात्र चिनेको हुँ । मिति २०८०।०४।३० गते जिल्ला ललितपुर, ल.पु.म.न.पा. वडा नं. २३ स्थित रहेको डाउनटाउन अपार्टमेन्टको B-Block को आठौँ तलाको B-608 नं. फ्ल्याटबाट प्रहरीले पक्राउ गरेको हो ।

मैले नेपालमा आई व्यवसाय गर्नको लागी मेरो घर परिवारबाट पटक-पटक गरी विगत ५ बर्षमा चाईनिज RMB करिब ९० हजार रकम मेरो चाईनिज नम्बर 15619940104 बाट संचालन गरेको डिजिटल भुक्तानी प्रणाली WeChat, Wallet र Ali Pay मार्फत ल्याई उक्त रकम नेपालमा व्यवसाय गर्नु भएका ब्यक्तिहरुको नाममा ट्रान्सफर गरिदिए पछी निजहरुबाट नेपाली रकम नगदमा लिने गरेको थिए । रकमको स्रोत मेरो आमाको पेन्सन रकम, सटर भाडामा दिए वापत आएको भाडा रकम हो । मैले हालसम्म मेरो आमालाई डिजिटल भुक्तानी प्रणाली WeChat, Wallet र Ali Pay मार्फत करिब ४० हजार चाईनिज RMB रकम पठाएको छु । सो रकमको स्रोत मैले कपडा व्यवसाय र अलिबाबाको साईटमा लाईभ बसी सोहीबाट कपडा बिक्री गरे वापत आर्जन गरेको रकम हो ।

मेरो प्रेमी चाईनिज नागरिक Yang Wen ले संचालन गरेको KTV रेष्टुरेन्ट र मैले संचालन गरेको बार बि क्यू रेष्टुरेन्टमा हाल पक्राउ परेका चाइनिज नागरिकहरु Steps भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng Fa, Ali भन्ने Li Wen Tsung, Alex भन्ने Yao Pucheng समय-समय आई खाजा खाने गरेको र निजहरुलाई प्रहरीले खोजिरहेको भनि वाल्डो क्यासिनोका मेनेजर Xie Zong ले मेरो प्रेमी Yang Wen लाई जानकारी गराएको हुँदा निज Alex भन्ने Yao Pucheng ले KTV रेष्टुरेन्टमा भारतिय केटीहरु समेत कामको लागी ल्याई राखेको हुँदा प्रहरीले Yang Wen समेतको मिलेमतो छ भनि पक्राउ गर्न सक्छ भनि निजको बिबरण लुकाउनको लागी डाउनटाउन अपार्टमेन्टमा फ्लाट बुक गर्दा अर्को चाईनिज नागरिक Lijian को राहदानीको छाँयाकपी दिएको हुँ।

चाईनिज नागरिक Lijian ले म संग पैसा सापटी लिएको र निजले मेरो रेष्टुरेन्टमा खाएको उधारो रकम तिर्न बाँकी रहेकोले निजको राहदानीको फोटो म संग राखेको थिए, मैले डाउन टाउन अपार्टमेन्टमा फ्लाट बुक गर्दा मेरो र मेरो प्रेमी Yang Wen को पहिचान लुकाउन मैले निज चाईनिज नागरिक Lijian को राहदानीको छाँयाकपी अपार्टमेन्टमा बुझाएकी हुँ। निज चाईनिज नागरिक Lijian को राहदानी राखी फ्लाट बुक गर्दा प्रहरी समेत चेक गरी हाल्यो भने पनि यहाँ बस्ने मानिस मेरो प्रेमी Yang Wen नभई चाईनिज नागरिक Lijian रहेछन भनि झुक्याउन सकिन्छ की भनेर निज चाईनिज नागरिक Lijian को नामको राहादानी प्रयोग गरिएको हो। Steps भन्ने Li. Nengkai, Sauten भन्ने Ding Sheng Fa लाई प्रहरीले खोजि रहेको छ निजहरुलाई प्रहरीले समात्यो भने मलाई समेत पक्राउ गर्न सक्छ भनि मेरो प्रेमी Yang Wen ले भने पछी मैले कोठा खोजिदिएको हो।

प्रतिवादीहरु Yang Wen, Steps भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng Fa, Ali भन्ने Li Wen Tsung, Alex भन्ने Yao Pucheng समेत ले KTV मा को कसलाई भेट गर्ने गरेका थिए र कस्तो सुनको कारोबार गर्ने गरेका थिए मैले कहिल्यै याद गरिन र मलाई सो सम्बन्धमा मेरो प्रेमी Yang Wen ले कहिल्यै भनेका थिएनन। मलाई थाहा भए अनुसार Alex भन्ने Yao Pucheng ले मेरो प्रमी Yang Wen लाई KTV मा भारत मणिपुर तिरका १८/२० जना केटीहरु काममा लगाई चाईनिजहरुलाई केटी चाहिएमा Yang Wen उपलब्ध गराई दिने गरेका थिए। Alex भन्ने Yao Pucheng को र मेरो प्रमी Yang Wen बिचको सम्बन्ध र सम्पर्क राम्रो थियो भन्ने व्यहोराको प्रतिबादी चिनिया नागरिक MI-TIAN को बयान।

ञ. **प्रतिबादी किशोर बस्नेतको बयान :**

यस मुद्दामा पक्राउमा परेका प्रतिवादीहरु मध्ये दावा छिरिङलाई मात्र चिन्दछु। दावा छिरिङको श्रीमती अमला रोक्कालाई मैले करिब १४/१५ बर्ष अगाडी देखी जडिबुटी बिक्री गर्ने सिलसिलामा चिनेको हुँ भने दावा छिरिङलाई करिब १० बर्ष अगाडी निजको श्रीमती अमला रोक्का मार्फत चिनजान भएको हो। सो पश्चात दावा छिरिङलाई मैले जडिबुटी बिक्री गर्ने गरेको थिए। दावा छिरिङले चाईनिज साथीहरुलाई राख्नको लागी नक्साल, बालुवाटार, चुनदेबीतिर घर खोज्दिनु हामी चाईनिज रेष्टुरेन्ट खोल्छौ भनेका थिए। चाईनिज रेष्टुरेन्ट खोले पश्चात बिना लगानी रेष्टुरेन्टको १०% शेयर मलाई दिने भनेका थिए। सो पश्चात म दावा छिरिङले भने अनुसारको घर खोज्नको लागी प्रहरी प्रधान कार्यालय नक्साल पछाडी, बालुवाटार चुनदेबी गएको थिए। दावा छिरिङसँग मेरो भेटघाट भई रहन्थ्यो विश्वब्यापी रुपमा फैलिएको कोभिड महामारी पश्चात दावा छिरिङले का.जि. ठमेलमा होटल भियना नामको होटल संचालन गरेका हुन्।

करिब ४ महिना अगाडी मलाई दावा छिरिङले चाईनिज साथीहरुलाई जडिबुटी खरिद गर्न ४/५ दिनको लागी भारत लानु पर्ने भएको हुँदा ४/५ दिन सम्म बसी फर्किनको लागी के कती रकम चाहिन्छ बुझ्नु भनी मलाई भनेका थिए। मैले चिनेका गाडीवालाहरुलाई बुझ्दा नेपाली रु.५,००,०००।– लाग्छ भनेको हुँदा मैले सोही कुरा दावा छिरिङलाई बताएको थिए।

मेरो जडिबुटीको कारोबार का.जि. ज्याठा र ठमेल एरियामा भईरहने हुँदा निज दावा छिरिङले आज भन्दा करिब ३ महिना अगाडी मलाई मेरो मोबाईल नं.९८४००६१७१ मा फोन गरी मेरो गाडी का.जि. ठमेल संचयकोष अगाडी हिमालयन जाभाको साईडमा आएको छ, सो गाडीको मान्छेलाई मेरो होटल भियनाको लोकेशन थाहा छैन। सो गाडीलाई मेरो होटल भियना सम्म ल्याईदिनु भनी गाडी नं. दिए पश्चात सो गाडीलाई मैले दावा छिरिङको होटल भियनासम्म पुर्याई दिएको हुँ। सो गाडीमा नेपाली चालक मात्र थिए। सो गाडीमा सानो भ्यान जस्तो थियो। सो गाडीमा पानी सफा गर्ने डिटरजेन्ट पाउडर ल्याएको भनी दावा छिरिङले भनेका थिए। मैले होटल भियना सम्म पुर्याई दिएर म फर्किएको थिए। सो बापत मलाई दावा छिरिङले भोलिपल्ट नेपाली रु.२०,०००।– दिएका थिए।

सिभिल महलमा हिमालयन बिन्स कफी नामको रेष्टुरेन्ट संचालन गर्ने पेम्बा भतिज भन्ने पेम्बा शेर्पालाई भेटी कुराकानी गर्ने क्रममा दावा छिरिङले डिटरजेन्ट पाउडर भनी सुन पगाल्न प्रयोग हुने केमिकल ल्याएको रहेछ भनी मैले पेम्बा भतिज भन्ने पेम्बा शेर्पालाई बताएको थिए।

निज दावा छिरिङ यस मुद्दामा पक्राउ पर्नु भन्दा अं. १५ दिन अगाडी मलाई निज दावा छिरिङले फोन गरी का.जि.लाजिम्पाट स्थित क्याफे डि स्यालोनमा अं.१५:०० बजे तिर बोलाई भेटघाट गर्ने क्रममा दावा छिरिङले सुनको बिस्कुट भएको फोटो देखाई का.जि ठमेलमा अन्य चाईनिजहरुले यस्तो किसिमको सुन ल्याउदैछन्, सुन खरिद गर्ने मानिस खोज्नु, सुन बिक्री गर्ने र खरिद गर्नेले आफै कारोबार गर्छ, सो बापत प्रति के.जी. बिस हजार (२०,०००।-) नेपाली रकम कमिशन तपाईलाई आउछ भनेका थिए। सो दिन मैले निज दावा छिरिङलाई बिस हजार (रु.२०,०००।-) मा काम गर्दिन भनी फर्किएको थिए। निज दावा छिरिङ र आगो भन्ने चाईनिज नागरिक पुल्चोक जान भनी हिडेका थिए। सो भेटघाट भएको भोलिपल्ट दावा छिरिङलाई राजस्व अनुसन्धान विभागले पक्राउ गरे पश्चात मलाई समेत पक्राउ गर्ने डरले म भारत तिर गएको थिए।
म, दावा छिरिङको भाई गम्बु (Gamboo) र आगो भन्ने चाईनिज नागरिक का.जि.ठमेल छाया सेन्टर स्थित रहेको हिमालयन जाभा सेन्टरमा कफि खाएर बसि राखेको समयमा दावा छिरिङको भाई गम्बु (Gamboo) र आगो भन्ने चाईनिज नागरिकले चाईनिज भाषामा निज दावा छिरिङले गाडीमा ल्याएको डिटरजेन्टले सुन सफा गर्न प्रयोग हुने भनी कुरा गरेका थिए। म अली अली चाईनिज भाषा बुझ्ने र बोल्न सक्ने भएको मैले थाहा पाएको हुँ। सोही कारण मैले पेम्बा भतिज भन्ने पेम्बा शेर्पालाई दावा छिरिङले डिटरजेन्ट पाउडर भनी सुन पगाल्न प्रयोग हुने केमिकल ल्याएको रहेछ भनी बताएको हुँ।

IMEI नं. 354850095851192 भएको IPhone 10 मोबाईलको परीक्षण प्रतिवेदनमा Related Application:WeChat, Filename:224.pic.jpg, 284.pic.jpg, 273.pic.jpg, 2565.pic_thum.jpg, 51.pic.jpg,144.pic.jpg समेतमा विभिन्न आकारका सुनको बिस्कुटहरुको फोटोहरु गुगलबाट Search गरी राखेको हुँ। मोबाईल नं. ९८४०००६१७१ को Wechat मा भएको Outgoing म्यासेज देखाई

सोधनी गरिन्छ की “I send to person found the gold” भनी पठाएको म्यासेज हुवाई माईन्स कम्पनीका Chen भन्ने ब्यक्तिलाई पठाएको हुँ।

Gold business person he is Nepal”, every day he trade 50 kilo gold” भनी मैले चाईनिज महिला Lie लाई पठाएको हुँ। Lie चाईनाको बैंकमा काम गर्ने केटी हुन। सो दैनिक ५० किलो सुनको कारोबार गर्ने ब्यक्ति Hissan भन्ने ब्यक्ति हुन। निजको दुबईमा सुनको पसल रहेको छ । Audio Clips सुनाई सोधनी गरिन्छ की “Gold का बात आप भैया से बात किजिएगा, मे आपने जो Account दिया हे, यो एक कराहा हुँ आप Gold के बारेमा एक बार भैया से बात किजियगा, किशोर मैया से बात किजियगा” भन्ने Audio बर्माको राजु भन्ने ब्यक्ति र भारतका हरिश राणा बिच सुनको कारोबारको गर्ने क्रममा भएको कुराकानीको Audio Clips मलाई बर्माको राजु भन्ने ब्यक्तिले पठाएको हो।

Audio Clips सुनाई सोधनी गरिन्छ की “अ दाई एकजनाको मोटो सामान आईपुगेको रहेछ, ५ के.जी जती छ रे, लासामा सामान लिने मान्छे कोई छ चिनेको भन्ने कुरा गरेको चिनमा बस्ने उमेश के.सी भाई र म बिच भएको कुराकानीको Audio clip हो। उमेश के.सी भाईले लासामा यार्सागुम्बा ५ के.जी आएको छ, ल्हासामा कोही चिन्ने मान्छे की भनेर मलाई सोधेको थिए। मोटो सामान भनेको यार्सागुम्बा हो भन्ने समेत व्यहोराको प्रतिबादी किशोर बस्नेतको बयान।

प. **प्रतिबादी बेल्जियम नागरिक राहदानी नं.GA4597364 वाहक दावा छिरिङ्को बयान:**

Mi Tian, Yang Wen र Yao Pucheng लाई चिन्दछु। Yang Wen ले मैले संचालन गर्दै आईरहेको भियना होटल सँगै रहेको KTV रेष्टुरेन्ट संचालन गरिरहेको र भियना होटलमा बस्दै आईरहेका छन्। Yao Pucheng मैले संचालन गर्ने भियना होटलमाबस्दै आएको र निज ले पालैपालो करिब १०/१५ जना भारतिय केटीहरु भियना होटलमा लिएर आउने गरेका थिए। निजले Hundai कम्पनीको सेतो गाडी लिएर आउने गरेका थिए। मेरो श्रीमती अमला रोक्का मगर र मन्जिल श्रेष्ठको नाममा संयुक्त रुपमा होटल भियना दर्ता गरी संचालन गर्दै आईरहेको छु। मैले मेरो बेल्जियमको राहदानीको फोटोकपी पेश गरिअध्ययन भिषाको लागि नेपालमा स्ट्याण्डर्ड चाटर्ड बैंकमा खाता खोलेको छु उक्त खातामा करिब नेपाली ४ लाख रकम मौज्दात छ।
प्रतिवादी चाईनिज नागरिकहरू Mi Tian, Yang Wen, Yao Pucheng बस्दै आएका छन। निज Yao Pucheng लाई पनि भियना होटलमा लिइ आउने ब्यक्ति Yang Wen हुन्। निजहरुसंग अन्य मेरो सम्पर्क छैन। Yang Wen लाई मसंग सम्पर्क गराउने ब्यक्ति Jiangsu रेष्टुरेन्टका संचालक Lou Yao भन्ने चाईनिज नागरिक हुन।

मलाई Yulong भन्ने चाईनिज नागरिकले ३/४ जना चाईनिज नागरिक भारत जान खोजेका छन्। कोही भारतसम्म लगिदिने मान्छे भइ खोजिदिनु भनेको हुँदा मैले किशोर बस्नेतलाई भारतसम्म लगिदिने कोही ब्यक्ति भए खोज्नु भनेको थिए। किशोर बस्नेतले खोजेको मानिसले ४/५ लाख लाग्छ भनेको हुँदा मैले सोही कुरा Yulong लाई भनेको थिए।

तिब्बतको भाई गोम्बो (Gamboo) ले डिटरजेन्ट पाउडर मगाउनु पर्ने छ। कोही ल्याउने ब्यक्ति छ भने खोजिदिनु भने पश्चात मैले किशोर बस्नेतलाई फोन गरी मेरो होटलमा बोलाई सो डिटरजेन्ट पाउडर खोजेर ल्याउनु भनु पठाएकोमा किशोर बस्नेतले केही समय पश्चात केमिकल लिएर गाडी तपाईको होटलमा आउदैछ भनी फोन गरेका थिए। सो पश्चात गोम्बो (Gamboo) आई सो गाडी लिएर गएको थियो। सो डिटरजेन्ट

पाउडर सुन सफा गर्ने केमिकल हो भन्ने कुरा मलाई थाहा थिएन । सो पाउडर मगाई दिए पश्चात गोम्बो (Gamboo) ले मलाई रू.२०,०००।- र किशोर बस्नेतलाई रू. रु.२०,०००।– दिएका हुन् । सो पाउडर गोम्बो (Gamboo) ले कहाँ लिएर गए मलाई थाहा छैन । सो केमिकलको रकम गोम्बो (Gamboo) आफैले दिएका हुन् ।

मैले मेरो होटल भियनामा बस्ने क्रममा चिनेको आगो भन्ने Weng Jinguo (चाईनिज राहदानी नं. EJ7786920) चाईनिज नागरिकले म पक्राउ पर्नु भन्दा करिब १५ दिन अगाडी मलाई सुनको बिस्कुटको फोटो देखाई नेपालमा सुनको दर के कती रहेको छ भनी सोधी सुन खरिद खरिद गर्ने मानिस खोज्नु, सुन खरिद गर्ने मानिस खोजे बापत प्रति के.जी नेपाली रु.२०,०००।– दिन्छु भनेको हुँदा मैले सो फोटो मेरो मोबाईलमा हाली सोही फोटो किशोर बस्नेतलाई सुन खरिद गर्ने मानिस खोज्नु सो बापत रु.२०,०००।– कमिशन आउछ भनेको हुँ।

आगो भन्ने Weng Jinguo चाईनिज नागरिक, करिब ३ महिना अगाडी मेरो होटल भियनामा बस्न आउने क्रममा चिनेको हुँ । निज वाल्डो क्यासिनोमा गई खेल्ने गरेका थिए । चिनजान तथा परिचय भए पश्चात मैले निज आगो भन्ने Weng Jinguo चाईनिज नागरिकलाई हामीसँग खानी उत्खनन् गर्ने लाईसेन्स छ, तपाईसँग कुनै रकम लगानी गर्ने कम्पनी छ, छैन ? भनी सोध्दा निज आगो भन्ने Weng Jinguo चाईनिज नागरिकले सम्बन्धित ठाउँमा गई चेक गर्नु पर्छ भनी निज आगो भन्ने Weng Jinguo चाईनिज नागरिकले चिनबाट खानी सम्बन्धी काम गर्ने ३ जना बिज्ञहरुको टोली मगाई निज आगो भन्ने Weng Jinguo चाईनिज नागरिक र निजले मगाएको विज्ञहरुको टोली र भाषा अनुवादक हेलिकप्टर चार्टर गरी जिल्ला रोल्पामा गई ४/५ दिन बसी फर्किएका हुन् । पानी परेको र बाटोको सुबिधा नभएको कारण हाल खानी उत्खनन् गर्न सकिदैन भनी सो टोली फर्किएको हो । सो समयमा निजले मलाई सुनको बिस्कुट आकारको फोटो देखाई सो सुन खरिद गर्ने मानिस खोज्नु, सो सुन बिक्री गरे बापत प्रति के.जी. रु.२०,०००।– दिन्छु भनेका हुन् । मैले सोही फोटो पेम्बा दोर्जे शेर्पालाई सुनको फोटो देखाई सुन खरिद गर्ने मानिस खोज्नु सो बापत कमिशन आउछ भनी कुरा गरेको हुँ । मोबाईलको फोनसेटको Google Browre मा ‘gold rate today’, ‘gold price in Nepal today’, one kg gold price in india’ लगायतका विवरणहरु चाईनिज नागरिक आगो भन्ने Weng Jinguo नेपाल र भारतमा सुनको कति पर्छ भनी सोधेको हुँदा मैले मेरो मोबाईलको गुगलबाट सुनको मूल्य सर्च गरेको हुँ ।

File Name:IMG_6225.JPG को Image File को Image मा YUEXIN GOLD 1 KILO लेखिएको सुनको फोटो File name:10542.video_thum.hd को Image File मा बाक्सामा सुन भएको फोटो देखिएको हुँदा सो फोटोहरु चाईनिज नागरिक आगो भन्ने Weng Jinguo ले पठाएका हुन्, File Name:213.pic_hd भएको म्यासेजको Screenshot Image मा “I have buyers for gold, gold ? you mean Gold jewelry or Gold bars?” भनी उल्लेख भएको कुराकानी थाहा छैन् ।

केरुङ भन्सारबाट चाईनिज रक्सी, चुरोट लिलाम गर्दैछ भनी थाहा पाई सो लिलामीको बिषयमा कुरा गर्नको लागी WeChat प्रयोगकर्ता: Jhalak ram Adhikari (wxid_hlosd6zlg24422), राजस्व अनुसन्धान विभागका तत्कालिन कार्यालय प्रमुख झलकराम अधिकारीलाई मैले WeChat मा म्यासेज गरेको हुँ । निज झलकराम अधिकारीले निजको गाउँको मान्छेलाई पानी तान्ने Water Pump आयात गर्नु पर्ने भएको

हुँदा चिनबाट पानी तान्ने Water Pump आयात गर्ने कोही चिनेको मानिस छ कि भनेर मलाई सो फोटो पठाएका हुन । भाई सुनन् रेट के हो ? यो २/३ दिनमा सामान कति किलो ७ किलो जति दिएछ, ५ किलो दिएको छ, पार्टीले किनिराछ, हिजो/अस्ती कति किलो किनेको छ भने ६५ किनेको छ भनी कुराकानी भएको हो । जिवन चलाउनेको 9779851127590 नं. को Whatsapp मा जिबन चलाउनेले 30k$ sent to subu pratap kc in wells fargo bank भनी देखिएको फोटोमा भएको रकम पेम्बा दोर्जे शेर्पाको अमेरिका बस्ने आफन्तलाई अमेरिकामा बस्ने जिबन चलाउनेको चिनेको मान्छेलाई अमेरिकी डलर ३०,०००।- पठाएको भनी सो फोटो मलाई जिबन चलाउनेले पठाएका हुन । मेरो मोबाईलमा 20 July मा हङकङबाट नेपाल Kerry On ले नेपाल Deliver गर्न लागेको वा पछि Cancel गरेको बिषयमा नेपाल खबरले प्रकाशन गरेको समाचारको फोटो मलाई किशोर बस्नेतले पठाएको हो । सो समाचारको फोटो मैले अन्य मानिसहरुलाई देखाउन राखेको हुँ। अनुसन्धान भएको विमानस्थलबाट Electric Cigarate Vep मा सुन लुकाई छिपाई ल्याएको सुटकेश त्रिभुबन अन्तराष्ट्रिय बिमानस्थल भन्सार कार्यालयले नियन्त्रणमा लिए पश्चात चाईनिज नागरिक Li Funcheng ले सो Electric Cigarate Vep को फोटो पठाई सो Electric Cigarate Vep को बारेमा भन्सार कार्यालयमा बुझिदिनु भनी मलाई सो फोटो पठाएका थिए । Wechat User wxid_4isl6idnacu322 good@faith2 चाईनिज नागरिक ZHU हुन् । निज सँग USDT को बारेमा कुराकानी हुने गरेको थियो । मैले USDT को Address: TN5AVEAuUxVDEGNKwngHga pw3ccrgMZn8A चाईनिज नागरिक ZHU लाई पठाएको हो । निज सँग USDT को कारोबारको बारेमा सोधी सो Address पठाएको हुँ । निजले अमेरिकामा अमेरिकी डलर दिने र सो बापत निजलाई USDT मा भुक्तानी दिने कुराकानी गरेको हो । मैले चाईनिज नागरिक Yao Pucheng समेतलाई निजहरु समेत चाईनिज नागरिकहरु भएकोले कोठा खोजिदिएर सहयोग मात्र गरेको हुँ । मैले निज चाईनिज नागरिकहरु प्रतिवादी Yao Pucheng, Li Wen Tsung, Li Nengkai, Ding Sheng Fa मेरो होटलमा बसेका मात्र हुन् । मैले आज भन्दा १५/१६ वर्ष भन्दा अगाडी चिनेको तिब्बतियन नागरिक जिम्बा दोर्जे लामाले मलाई नेपाली नागरिकता बनाई म सँग शुरुमा रु. ५०,०००।– र सो पश्चात रु. ५०,०००।– गरी जम्मा रू. १,००,०००।– रकम र मेरो फोटो लिई गई जिल्ला प्रशासन कार्यालय, काभ्रेपलान्चोकबाट पेमा तामाङको छोरा निमा तामाङ भनी मेरो फोटो टाँस गरी नेपाली नागरिकता प्रमाण पत्र बनाई ल्याई मलाई दिएको हो । सो नागरिकता बनाउने समयमा म गएको थिईन । निज जिम्बा दोर्जे लामा (जिमी) ले के कसरी बनाई ल्याए मलाई थाहा भएन । यसरी नक्कली तथा कीर्ते कागजातको आधारमा नेपाली नागरिकता लिनु कानून बिपरितको कार्य हो । नेपाली राहदानी लिएको छैन् । मेरो मोबाईलमा भएका सुनका फोटाहरु मध्ये केही फोटो चाईनिज नागरिक आगो भन्ने Weng Jinguo ले पठाएका हुन, केही फोटो र भिडियो डाउनलोड गरिएको हो भने म्यासेजमा मैले सुनको कुरा चाईनिज नागरिक आगो भन्ने Weng Jinguo सँग मात्र गरेको छु र अडियोमा सुन सम्वन्धी कुरा गरेको छैन। मैले सुनको तस्करी गर्ने समूहलाई होटलमा कोठामात्र दिएको हुँ भन्ने समेत व्यहोराको वयान ।

मैले Crypto Wallet/Cryptocurrency खाता हालसम्म खोलेको छैन । म सन २०२३ अप्रिल १९ देखी मे महिनाको २३ सम्म चिन देशको सिचवान प्रान्तमा बस्नु भएको मेरो आमालाई भेट्न गएको थिए । उल्लेखित मिति भित्र चाईनामै रहेको बेलामा मलाई स्क्रिन सट मलाई नाम अहिले याद नभएको अमेरिकन साथीसंग भेट हुँदा निजले मेरो WeChat मा पठाई दिएको फोटो हो । CryproCurrency Address

(टल वालेटडिजि):TN5AVEAuUxVDEGNKwngHgapw3ccrgMZn8A मा भएको सन् सम्म 07/05/2023 देखि 10/03/2023Total159 transaction, TRC20 Token Transfer: Total 134 transactions, Total USDT IN:1171663.771, Total USDT OUT: 2148648 कारोवार सम्बन्धमा मलाई थाहा छैन । उक्त कारोबार भएको स्क्रिनसट कोकसले मलाई पठाई- दिएको हो सो समेत मलाई थाहा छैन । मैले crypto Wallet/Cryptocurrency प्रयोग गर्ने गरेको छैन् । साथिहरुले मसंग कुरा गरेको भएपनि मैले कुनै आईडी प्रयोग गरेको तथा कारोबार गरेको छैन भन्ने व्यहोराको प्रतिबादी बेल्जियम नागरिक दावा छिरिङको बयान।

फ. **<u>प्रतिबादी चाईनिज नागरिक राहदानी नं.EE7295222 वाहक STEPS/ROGER भन्ने LI NENGKAI को बयान:</u>**

काठमाडौं स्थित नारायणगोपाल चोक अगाडि रहेको ईसान हस्पिटल नजिक घर भाडामा लिई चिनिया नागरिक Sauten भन्ने Ding Sheng Fa सँग बसेको थियौ । Ali भन्ने Li Wen Tsung र Alex भन्ने Yao Pucheng सँगै बस्न थाले, म र Sauten भन्ने Ding Sheng Fa सँगै बस्न शुरुगरेको हौ। उक्त भाडामा बस्ने कोठा प्रतिवादी टाँसी भन्ने थुप्तिन छिरिङले खोजी दिएका हुन। टाँसी भन्ने थुप्तिन छिरिङले मेरो राहदानी लिएर नेपालमा बस्ने भिषा बनाई दिएका हुन। सोनाम लामा (Sonam Lama) नाम उल्लेख भएको 12589456 नं.को नेपाली राहदानी समेत लिएको छु।

मैले ९८१३६३०२८३, ९८१२९९८६९७ र ९८०८१४८०११ नंम्बरका नेपाली सिमकार्डहरु प्रयोग गर्दै आएको टाँसी भन्ने थुप्तिन छिरिङ Thupting Isering को माध्यमबाट भाडामा लिएका ३ वटा कार मध्ये ५९८९ नं.को जीप मैले र Roger भन्ने Li Neng Kai ले आलोपालो चलाउने गरेका थियौ। उक्त कार सुन बोक्ने क्रममा Roger भन्ने Li Neng Kai मात्र चलाउने गरेका थिए। उक्त Duster कार सन् २०२२ डिसेम्बर १ बाट भाडामा लिई चलाउन शुरु गरेका हौ। फोटोमा देखाईएको ५९८९ नं.को कार हेरी चिनी सनाखत गरिदिएँ। रेडी ट्रेड प्रा.लि.समेतको कम्पनीहरु अबैध सुन तस्करी गरी ल्याउने प्रयोजनको लागि मेरो बोस भनी Whatsappमा कुरा हुने हाल सम्म देख भेट नभएको ब्यक्तिको योजना अनुसार थुप्तिन छिरीङ मार्फत कम्पनी दर्ता गरेको हो।

चिनिया नागरिकहरू मध्ये Yang Wen मेरो साथी हो उसलाई चिनेको चार महिना भयो । Ding Sheng Fa संगै काम गर्ने पार्टनर हो । Alex भन्ने Yao Pucheng मेनेजर हो । उसले नै तलव दिने गरेको थियो। थुप्तिन छिरिङ Thupting Isering लाई क्यासिनोमा भेटघाट भई चिनजान भएको हो । चाईनिज नागरिक Ali भन्ने Li Wen Tsung लाई काठमाडौंमा क्यासिनोमा चिनजान भएको थियो।

म सन् २०२३ को मे ३१ मा रेष्टुरेन्ट ब्यबसाय गर्ने भनेर १,७०,००० RMB साथमा लिई चिनबाट नेपालमा आएको थिए। नेपाल आएपछि पक्राउ प्रतिवादी Ali भन्ने Li Wen Tsung सँग पुन: काठमाडौंमा भेट भयो। क्यासिनोमा आउने जाने क्रममा चिनिया नागरिक Alex भन्ने Yao Pucheng सँग भेट भएको थियो। चिनमा हुदै मैले Sauten भन्ने Ding Sheng Fa लाई चिनेको थिए। म नेपाल आएको बेलामा Sauten भन्ने Ding Sheng Fa संग पनि काठमाडौंमा भेट भएको थियो। मैले धुमबराहीको कोठा छोडेपछि Ali भन्ने Li Wen Tsung र Alex भन्ने Yao Pucheng सँग धापासीमा सँगै बस्न थालेंकोमा टाँसी भन्ने थुप्तिन छिरिङसंग भेट भई चिनजान भए पछी निजले ईसान हस्पिटलको पछाडि घर भाडामा मिलाई दिएकोले म र

Sauten भन्ने Ding Sheng Fa संगै बसेका थियौ। Alex भन्ने Yao Pucheng ले कम्पनी खोल्दैछु, हामी चिनिया नागरिकहरु मिलेर सँगै बिदेशबाट सुन ल्याई पगाल्ने र बिक्रि गर्ने काम गर्ने भनेकोले सो काम गर्ने भनी सल्लाह भयो।

प्रतिवादी थुप्तिन छिरिङलाई नेपाली पनि बोल्न आउने भएकोले मालवस्तु बोक्नको लागि कार भाडामा लिने भन्ने साल्लाह बमोजिम बिभिन्न मितिमा तीन वटा कार भाडामा लिएको थियौ। सो मध्ये बागमती Bab ५९८९नं.को Duster कार मैले र Ding Shegfa (Sauten) ले चलाउने गरेका थियौ। सेतो रंगको हुण्डाई (Hyundai ) कार Alex भन्ने Yao Pucheng ले र कालो रंगको सानो कार Ali भन्ने Li Wen Tsung ले चलाउने गरेका थिए। गाडि भाडा Alex भन्ने Yao Pucheng ले तिर्ने गरेका थिए।

टाँसी भन्ने थुप्तिन छिरिङले खोजी दिएको काठमाडौं टोखामा रहेको टहरामा सन् २०२२ को नोभेम्बरमा म र Sauten भन्ने Ding Sheng Fa ले भिडियो हेर्दै जडान गरेका हौ। सो सुन पगाल्ने मेशिन बिदेशबाट काठमाडौं बौद्ध नजिक रहेको स्टोरमा आएको र टोखामा जडान गरेका हौ।

मैले बोस मेनेजर भन्ने नचिनेको र नदेखेको ब्यक्तिले मालवस्तुमा सुन राखि पठाए पछी मेरो ८६१५७६९९८३१४४ नं. को Whatsapp मा Airbill लगायतका Documents पठाउने गरेको र सो Documents मैले थुप्तिन छिरिङलाई पठाउथे। निज थुप्तिन छिरिङले को कसलाई अह्राई खटाई आएको Consignment लाई भन्सारको प्रकृया पुरा गरी निकाली विभिन्न स्थानमा भएको गोदाममा मालवस्तु आएको जानकारी गराउथे र सो वापत निज थुप्तिन छिरिङलाई दिने गर्दथे।

शुरु शुरुमा मालवस्तुमा सुन बाँसबारीमा भएको स्टोर, दोश्रो सामाखुसीमा रहेको स्टोर र तेश्रो गोपीकृष्ण अगाडि भएको स्टोरमा आउने गरेको थियो। टाँसी भन्ने थुप्तिन छिरिङले ती स्टोरहरुमा मालवस्तु आएको जानकारी दिए पछी म, Alex भन्ने Yao Pucheng, Ding Sheg Fa र Ali भन्ने Li Wen Tsung सो स्टोरमा गई सुन लिएर जान्थ्यौ। हप्तामा २/३ पटक सुन लुकाईएको सामान आउने र सोही अनुसार जानकारी पाए पछी सामान टोखामा लगि सुन निकाल्ने र प्रतिवादी Ding Shegfa (Sauten) ले सुन पगाल्ने काम गर्दथे। सुन पगाली तौल र आकार बनाएको सुन Alex भन्ने Yao Pucheng ले टोखाबाट लिएर जान्थे उक्त सुन को कसलाई दिन्थे मलाई थाहा भएन। दुई पटक मैले र प्रतिवादी Ding Sheg fa (Sauten) ले टोखामा पगालेको सुन लिएर एक जना ब्यक्तिलाई काठमाडौं बौद्द जाने बाटोमा भेटि दिएका पनि थिए। ती सुन रिसिभ गर्ने ब्यक्ति फरक फरक नम्बरको मोबाईल प्रयोग गर्थे, ती नम्बरहरु मलाई याद भएन र सुन रिसिभ गर्ने बेलामा अनुहारमा माक्स, कालो चश्मा र टाउकोमा हेल्मेट लगाएका हुन्थे। सुन कुन ब्यक्तिलाइ कहाँ कति पटक दिने भन्ने बारेमा बोस मेनेजरले भने पछि Alex भन्ने Yao Pucheng मार्फत सुनको डेलिभरी गर्ने र भुक्तानी लिने काम पनि उनीहरुबाटै हुन्थ्यो।

म समेत बस्ने कोठाको मासिक भाडा नेपाली रु.१,५०,०००/- ( एक लाख पचास हजार ) थियो। एक वटा कारको भाडा मासिक नेपाली रु.१,००,०००/- ( एक लाख ) थियो। मेरो पारिश्रमिक मासिक १०,००० RMB थियो। उक्त पारिश्रमिक बराबरको रकम नेपाली रु.१,७०,०००/- ( एक लाख सत्तरी हजार ) मैले Alex भन्ने Yao Pucheng बाट लिने गरेको थिए। म समेत बस्ने कोठाको भाडा र कारको मासिक भाडा Alex भन्ने Yao Pucheng ले तिर्ने गरेका थिए। Wechat मा सम्पर्क भएका सरोज शाक्य, अर्जुन कार्कि र सन्तोष न्यौपाने भन्ने ब्यक्तिहरु काठमाडौं ठमेलमा भेट भएका नेपाली ब्यक्ति हुनुपर्छ ।

९८०८१९४६८०,९८९४१८७९३ र ९८१०२३०१४६ नम्बरका फोन प्रयोगकर्ता को हुन म नम्बरको आधारमा भन्न सकिन । हङकङबाट Mr. Teddy Chan भन्ने ब्यक्तिले +८५२६८५९२५४० बाट सामान पठाएको विल मलाइ पठाएको हुनुपर्छ । सोही बिल मैले प्रतिवादी टाँसी भन्ने थुप्तिन छिरिङलाई फरवार्ड गरेको थिए । उक्त विल कागजात अंग्रेजी भाषामा हुन्थ्यो । म अंग्रेजी राम्रो बुझ्दैन त्यसैले मैले बिल राम्ररी हेरिन् सोही बिल कागजको आधारमा टाँसि भन्ने थुप्तिन छिरिङले सुन रिसिभ गर्थे । सुन निकाल्ने र पगालेको सुन पुर्याउन जाने सो काम गरे वापत मलाई मासिक १०,००० Rmb आम्दानी हुन्थ्यो, हालसम्म जम्मा ५०,००० Rmb आम्दानी भएको छ । बरामद भएको Brake Pads मा ६० किलो ७१६ ग्राम रहेको हाल थाहा पाएको हो । मेरो हाल राहदानीमा भएको भिषा टाँसी भन्ने थुप्तिन छिरिङलाई १००० RMB दिई लगाई ल्याई दिएका हुन । यो भिषा लगाए पछि नेपालमा धेरै लामो समयसम्म बस्न पाईन्छ भनेका थिए । मलाई Ali भन्ने Li Wen Tsung ले कम्पनी खोल्ने भन्ने कुरा गरेको थाहा थियो । सामान आयात गर्ने प्रयोजनका लागि Alex भन्ने Yao Pucheng समेतको योजनामा खोलिएका हुन । त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट मालवस्तु छुटाउन काम प्रतिवादी टाँसि भन्ने थुप्तिन छिरिङले गरेका हुन । मालवस्तु छुटाउन के कति खर्च लाग्छ सो मलाई थाहा भएन । मालवस्तु छुटाउन लाग्ने खर्च कहिले कसो टाँसि भन्ने थुप्तिन छिरिङले मबाट लैजाने गरेका थिए ।

प्रतिवादीहरुले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयबाट छुटाई ल्याई बालुवाटार वा लाजिम्पाटमा जिम्मा लगाउने गरेको मालवस्तु तथा सामाखुसी, महाराजगंज, गोपीकृष्ण, सोह्रखुट्टे, हात्तीगौडा, टोखा लगायतका स्टोरमा स्टोर गरिएका मालवस्तुमा अबैध सुन पैठारी भई आउने गरेको छ भन्ने सम्बन्धमा मैले काम गर्दै जाँदा थाहा पाएको हुँ । सोह्रखुट्टे गोदामबाट बरामद भएका ६६ वटा कार्टुनमा आएको सुन लाजिम्पाटमा बस्ने Sam भन्ने Rio Zhong Xing Chuan को समूह र Alex भन्ने Yao Pucheng लाई थाहा हुनु पर्छ । टोखाबाट बरामद भएका सामानहरुमा नै सुन आउने गर्थ्यो । हामीले भाडामा लिएका गाडिमा सुन बोक्ने गरेका थियौ । सुनको ब्यबस्थापन गर्दा प्रयोग भएको गाडिमा GPS डिभाईसमा रेकर्ड जोडेको सम्बन्धमा पक्राउ परेपछि थाहा पाएको हुँ ।

सुन गाल्ने मेशिन काठमाडौं बौद्द स्थित गोपीकृष्ण हल नजिकै रहेको बाटो किनाराको सामान राख्ने स्टोरमा आएको छ भनेर मलाई सन् २०२२ को नोभेम्बर महिनामा टाँसी भन्ने थुप्तिन छिरिङले खबर गरेपछि सोही मितिमा म र Ding Shegfa (Sauten) गई उक्त मेशिन कारमा राखि दुई जनाले टोखा भन्ने स्थानमा लगेका हौ । पहिलो पटक जडान गरेको मेशिन बिग्रिएकोले बिग्रिएको मेशीन सोही कोठामा थन्क्याई तुरुन्तै अर्को मेशिन लिएर जडान गरेका हौ ।

मलाई जानकारी भए सम्म हाल सम्म चारवटा सुन पगाल्ने मेशिन झिकाईएको छ । मैले Alex भन्ने Yao Pucheng र मेरो बोस मेनेजरले Whatsapp बाट आदेश भए अनुसार सुन Delivery दिने हो । अरु सवै ब्यबस्थापन Alex भन्ने Yao Pucheng र बोस मेनेजरले गर्दथे । हङकङको बोस मेनेजर भन्ने ब्यक्तिको आदेशानुसार नेपालमा Wang Dao Jin, Sam वा Henneay भन्ने Jing Chung लगायतले लाजिम्पाट बस्ने समूहहरु समेतलाई सुनको काम गर्न परिचालन गरिएको छ भन्ने सुनेको थिए ।

सोनाम लामा (Sonam Lama) नाम उल्लेख भएको12589456 नं.को नेपाली राहदानीमा भएको फोटो तथा राहदानी मेरो हो । उक्त राहदानी ठमेलमा भेट भएको चाईनिज नागरिकले धेरै अगाडि

१०,०००RMB लिएर बनाई दिएका हुन । राहदानी बनाउने क्रममा मेरो फोटो लिएर गएका थिए । ना.प्र.प.नं. ३०३०४२-२२९४ काभ्रे उल्लेख भएको मेरो नामको नागरिकता मैले देखेको छैन । उल्लेखित चाईनिज नागरिकले मेरो नामको नागरिकता र राहदानी के कहाँ बाट कसरी बनाएका हुन मलाई थाहा छैन । उक्त राहदानी मैले नेपालबाट भारतमा प्लेनमा जाने क्रममा प्रयोग गरेको छु ।

Alex ले फोन गरेर सुनको अनुसन्धान क्रममा टाँसी पक्राउ पर्यो भनेकोले अब हामीलाई पनि प्रहरीले पक्राउ गर्छन होला भनी म र Sauten भन्ने Ding Sheg Fa उक्त कोठाबाट भागेर बौद्दमा गएर होटलमा १ दिन बस्यौ । अर्को दिन दिउसो भक्तपुरको नगरकोट गयौ । त्यहाँ केही दिन बस्यौ र पछि त्यहाँबाट फर्केर KTV क्लवका संचालक Yang Wen लाई सम्पर्क गर्दा निजले ललितपुरमा कोठा खोजी दिएकोले उक्त कोठामा बसेकोमा सोही ठाउबाट २ दिन पछाडि म र Sauten भन्ने Ding Sheg Fa पक्राउ भएका हौ ।

Delhi Expense र Mumbai Expenseभन्ने लेखिएको कागजमा Delhi Expense मा Amount 3,918540.00 र Mumbai Expense मा Amount 2,874,149.00 हिसाव म सन् २०१९ मा चिनबाट भारतको दिल्लीसम्म घुम्न गएकोमा पाँच दिन Delhi र पाँच दिन Mumbai घुमेको सोही क्रममा भएको खर्च हो । मैले प्रयोग गर्ने Iphone 13 मोवाईलको Dfl (Digital Forensic Lab) रिपोर्टमा देखिएको Binance App संचालनमा ल्याई Login गरी Bitcoin / Cryptocurrency सम्बन्धी कारोवार गरेको हो । Bitpie Wallet को Screenshot बाट देखिएको सम्बन्धमा मैले सिक्ने प्रयोजनको लागि उक्त App मोवाईलमा डाउनलोड गरी नेपालमा बसी संचालन गरेको हुँ । सन् २०२२।०७।२२ देखि सन् २०२२।१२।२६ सम्मका बिभिन्न मितिमा Usdt 11,31,423.6464 कारोबार गरेको सन्दर्भमा मैले सिक्ने प्रयोजनको लागि ५० Usd रकम बाट उक्त कारोबार शुरु गरेको थिएँ । नेपालमा सुनको कारोवार गरी आम्दानी भएको रकमबाट अलि अलि कारोवार शुरु गरेकोमा उक्त रकम धेरै भई सकेको रहेछ भन्ने समेत व्यहोराको प्रतिबादी चाईनिज नागरिक STEPS/ROGER भन्ने LI NENGKAI को थप बयान ।

सन 2022/07/22 देखि 2022/12/26 सम्म Cryptocurrency Address; TFxGF68kZe&prX8L1 PrrLKNo9iPoTBffN बाट Total 109 transactions, TRC20 Token Transfer; Total 58 Transaction, Total USDT In: 977247.6467, Total USDT Out: 977247 को कारोवार भएको सम्बन्धमा मलाई थाहा छैन । मैले कारोबार गरेको छैन् । मैले कारोबारो गरेको होईन । मलाई एकिन नाम थाहा भएन तर कुनै ब्यक्तिले मलाई पठाएको हो सो सम्बन्धमा मलाई एकिन जानकारी भएन । मेरो मोबाईल म आफैले नै प्रयोग गर्ने गरेको छु । तर कारोबार गरेको छैन् । अन्य ब्यक्तिहरुले मलाई पठाएको हो भने मलाई थाहा भएन । मैले Alex भन्ने Yao Pucheng लाई Crypto currency प्रयोग गरी रकम पठाउने तथा रकम लिने गरेको छैन् । Crypto Currency कारोबार गरेको देखिएमा नेपाल राष्ट्र बैक बिपरीत कसुरमा सजाय भएमा मञ्जुर छु भन्ने समेत ब्यहोराको प्रतिबादी चाईनिज नागरिक STEPS/ROGER भन्ने LI NENGKAI को बयान ।

ब. **प्रतिबादी चिनिया नागरिक राहदानी नं. EE7295379 वाहक SAUTEN भन्ने DING SHEG FA को बयान :**

म सन् २०२१ मार्च १८ मा पहिलो पटक टुरिष्ट भिषामा नेपाल आएको थिए । सन् २०२३ अप्रिल १३ मा नेपालमा टुरिष्ट भिषामा आई सो पश्चात Business Visa लिएको हुँ । सन् २०२३ जुलाई महिनामा बिजिनेश

भिषा लिएर सोही भिषाको आधारमा नेपालमा आएको हुँ । टाँसी भन्ने थुप्तिन छिरिङको माध्यमबाट भाडामा लिएका ३ वटा कार मध्ये ५९८९ नं.को कार मैले र Roger भन्ने Li Nengkai ले आलोपालो चलाउने गरेका थियौ । उक्त कार सुन बोक्ने क्रममा Roger भन्ने Li Neng Kai र मैले चलाउने गरेका थियौ । उक्त Duster कार सन् २०२२ डिसेम्बर १ बाट भाडामा लिई चलाउन शुरु गरेका हौ । Hwada Electricsuppliers Pvt Ltd, पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. र भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. Alex भन्ने Yao Pucheng, Roger भन्ने Li Neng Kai र Ali भन्ने Li Wen Tsung बस्थे र म समेत हामी सवै जनाको सल्लाह र योजना अनुसार बिदेशबाट मालवस्तु झिकाउने प्रयोजनको लागि टाँसी भन्ने थुप्तिन छिरीङ मार्फत खोलिएको हो। सो बाहेकका अन्य कम्पनीहरु Sam भन्ने Zhing Xing Chau र Alex भन्ने Yao Pucheng को सल्लाहमा टाँसी भन्ने थुप्तिन छिरीङ मार्फत खोलिएको हो ।

प्रतिवादी Yang Wen भियना होटल कम्पाउण्ड भित्रको बार बिक्यु रेष्टुरेण्टमा खानाखाने क्रममा चिनजान भएको हो । Alex भन्ने Yao Pucheng सँग काठमाडौं स्थित ठमेलको क्यासिनोमा चिनजान भएको हो । Roger भन्ने Li Nengkai चिनमा नै चिनजान भएको साथी हो । थुप्तिन छिरिङलाई क्यासिनोमा भेटघाट भई चिनजान भएको हो ।

सन २०२२ को जुन जुलाई महिना तिर म नेपालमा आएको बेलामा प्रतिवादी Ali भन्ने Li Wen Tsung काठमाडौंको क्यासिनोमा भेट भयो । भेटघाट हुँदा सामान्य कुराकानी भएको थियो । म सन् २०२३ को मार्च महिनामा रेष्टुरेन्ट ब्यबसाय गर्ने भनेर १००००० RMB साथमा बोकि चिनबाट नेपालमा आएको थिए । नेपाल आएपछि पक्राउ प्रतिवादी Ali भन्ने Li Wen Tsung सँग पुन: काठमाडौंमा भेट भयो । निज र म धुमबराही भन्ने ठाउमा एउटा घर भाडमा लिई बसेका थियौ । मैले धुमबराहीको कोठा छोडेपछि Ali भन्ने Li Wen Tsung र Alex भन्ने Yao Pucheng सँग धापासीमा सँगै बस्न थाल्यौ, होटल म्यारियटमा टाँसी भन्ने थुप्तिन छिरिङसंग चिनजान भई कुराकानीको क्रममा निजले मलाई सहयोग गर्छु भनेका थिए । Alex भन्ने Yao Pucheng ले कम्पनी खोल्दैछु, हामी चिनिया नागरिकहरु मिलेर सँगै काम गरौला भनेकोमा विदेशबाट सुन ल्याई पगाल्ने र बिक्रि गर्ने सल्लाह भयो ।

काठमाडौं टोखामा सुन पगाल्ने मेशिन जडान गर्ने ठाउ टाँसी भन्ने थुप्तिन छिरिङले खोजी दिएका हुन । बिदेशबाट शुरुमा सुन पगाल्ने मेशिन काठमाडौं बौद्द नजिक रहेको स्टोरमा आएपछी टोखामा लगेर सन् २०२२ को नोभेम्बर महिनामा उक्त सुन गाल्ने मेशिन म र Roger भन्ने Li Nengkai ले भिडियो हेर्दै जडान गरेका हौ। मैले बोस मेनेजर भन्ने नचिनेको र नदेखेको ब्यक्तिले मेरो ८६१५७६९९८३१४४ नं.को Whatsapp मा सुन राखी पठाएको मालवस्तुको Airbill लगायतका Documents पठाएपछि मैले उक्त Documents थुप्तिन छिरिङलाई पठाउथे र थुप्तिन छिरिङले भन्सारको प्रकृया पुरा गर्न लगाई निजले को कसलाई अह्राई खटाई आएको Consignment लाई भन्सारको प्रकृया पुरा गरी निकाली गोदामको रुपमा रहेको सटरमा ल्याई मालवस्तु सटरमा आएको जानकारी गराउथे र उक्त कार्यको लागि आवश्यक रकम मैले निज थुप्तिन छिरिङलाई दिने गर्दथे । मालवस्तु भित्र सुन शुरुमा तीन ठाउमा रहेको स्टोरमा आउथ्यो । पहिलो स्टोर बाँसबारी, दोश्रो स्टोर सामाखुसीमा र तेश्रो स्टोर गोपीकृष्ण अगाडि रहेकोमा ती स्टोरहरु मालवस्तु आएपछी टाँसी भन्ने थुप्तिन छिरिङले मालवस्तु आएको जानकारी दिने र म, Alex भन्ने Yao Pucheng, Roger भन्ने Li Nengkai र Ali भन्ने Li Wen Tsung भई टोखामा लिई जाने गरेका थियौ । हप्तामा २/३ पटक मालवस्तु टोखामा लगि

Roger भन्ने Li Nengkai समेतले सुन निकाल्ने र मैले सुन पगाल्ने काम गर्दथ्यौ । सुन पगाल्ने वेलामा हामी संगै हुन्थ्यौ । सुन पगाली तौल र आकार बनाए पछी सुन Alex भन्ने Yao Pucheng ले टोखाबाट लिएर जान्थे, उक्त सुन को कसलाई दिन्थे मलाई थाहा भएन । २/३ पटक मैले र प्रतिवादी Roger भन्ने Li Nengkai ले टोखामा पगालेको सुन लिएर एक जना ब्यक्तिलाई काठमाडौं बौद्ध जाने बाटोमा भेट गरी दिएका थियौ । ती सुन रिसिभ गर्ने ब्यक्ति फरक फरक नम्बरको मोबाईल प्रयोग गर्छन र सुन रिसिभ गर्ने बेलामा अनुहारमा माक्स, कालो चश्मा र टाउकोमा हेल्मेट लगाएका हुन्थे । ती ब्यक्तिको बारेमा म एकिन खुलाउन सक्दिन । सुन कुन ब्यक्तिलाइ कहाँ कति पटक दिने भन्ने बारेमा बोस मेनेजरले भने पछि Alex भन्ने Yao Pucheng मार्फत सुनको डेलिभरी गर्ने र भुक्तानी लिने काम पनि उनीहरुबाटै हुन्थ्यो । Alex भन्ने Yao Pucheng ले कारको भाडा र मेरो मासिक पारिश्रमिक तथा घर भाडा दिने गरेका थिए । घर भाडा र कारको भाडा वापतको रकम Alex भन्ने Yao Pucheng टाँसी भन्ने थुप्तिन छिरिङलाई दिन्थे । सुन पुर्याउन जाने बेलामा Roger भन्ने Li Nengkai ले कार चलाउने पगालेको सुन मैले साथमा राखेको हुन्थे दिने बेलामा सुन रिसिभ गर्ने ब्यक्तिलाई मैले सुन दिएका हुँ । एक पटक जादा उक्त सुन अन्दाजी २/३ के.जी. तौलको हुन्थ्यो । म समेत बस्ने घरको मासिक भाडा नेपाली रु.१,५०,०००/- ( एक लाख पचास हजार ), मेरो पारिश्रमिक मासिक १०,००० RMB, उक्त पारिश्रमिक बराबरको रकम नेपाली रु. १,७०,०००/- ( एक लाख सत्तरी हजार ) मैले Alex भन्ने Yao Pucheng ले तिर्ने गरेका थिए । घर भाडा समेतको मासिक खर्च Alex भन्ने Yao Pucheng ले ब्यबस्थापन गर्छन । उनी मेरो हाकिम हुन खर्च ब्यबस्थापनको रकम कसरी ब्यबस्था गर्दथे मलाइ थाहा छैन । सुन निकाल्ने र पगालेको सुन पुर्याउन जाने लगायतका जिम्मेवारीहरु भुमिका निर्बाह गरे वापत ५०,००० RMB आम्दानी हुने गरेको थियो ।

Sam भन्ने Zhong Jing Chuan को समूहले लाजिम्पाट क्षेत्रमा रहेको स्थानमा सुन गाल्ने पगाल्ने काम गर्दथे । हाल पक्राउ पश्चात थाहा पाएको ६०.७१६ ग्राम सुन लाजिम्पाटका समूहलाई गाल्ने पगाल्ने जिम्मेवारी दिएको हुनुपर्छ । Sam भन्ने Zhong Jing Chuan ले हामी दुवै समूह परिचालन गरेको कुरा हाल थाहा हुन आएको हो । मलाई Alex भन्ने Yao Pucheng र Ali भन्ने Li Wen Tsung ले थुप्तिन छिरिङ मार्फत नेपालीको नाममा कम्पनी खोल्ने र आएको मालसामान राख्न सटर भाडामा लिने कुरा गरेका थिए । सोही योजना अनुसार बिदेशबाट आएको मालवस्तु भाडामा लिएको कोठाहरुमा स्टोर गरी राखिएको हो ।

सन् २०२३ को जनवरी देखि सुन आउन थालेको हो । पैठारी भई आएका ईलेक्ट्रोनिक्स सामानको भित्रको पूर्जाको स्वरुपमा सुन लुकाई पठाईएको हुन्थ्यो । सामान्य उपकरणहरु प्रयोग गरेर खोलि सुन निकाल्ने गर्थ्यौं । अरु खालको चिजबस्तुमा पनि सुन आउथ्यो । ती चिजबस्तुहरु लामो चौडा खालको हुन्थे ती भित्र पनि साना-साना बक्स हुन्थे ती भित्रको सामानमा सुन राखिएको हुन्थ्यो । Ready Trade Pvt Ltd. र दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. समेतको नाममा प्राप्त हुने मालवस्तुमा सुन आएको हो तर कति परिमाणमा आयो एकिन गर्न सक्दिन । सुनको भुक्तानी दिने काम मैले गरेको छैन । विदेशबाट आएको सुन गाली सकेपछि २/४ पटक एक जना मैले नचिनेको मानिसलाइ मेनेजरले पठाएको लोकेशनमा दिएको कोड समेत हेरी दिएको हो । हामीले प्रयोग गरेको गाडिमा GPS डिभाईसमा रेकर्ड जोडेको सम्बन्धमा पक्राउ परेपछि थाहा भएको हो ।

गोपीकृष्ण हल अगाडि स्टोरमा सु गाल्ने मेशिन सन् २०२२ को नोभेम्बर महिनामा टाँसी भन्ने थुप्तिन छिरिङ ले खबर गरेपछि सोही मितिमा म र Roger भन्ने Li Neng Kai गई उक्त मेशिन कारमा राखि दुई

जनाले टोखा जडान गरेका हौ । पहिलो पटक जडान गरेको मेशिन बिग्रिएकोले बिग्रिएको मेशीन सोही कोठामा थन्क्याई तुरुन्तै अर्को मेशिन लिएर जडान गरेका थियौ । सो बाहेक अन्य ठाउमा जडान गरिएका सुन पगाल्ने मेशिन को बारेमा सुनेको हो । सन् २०२२ को मे महिनामा मैले २ वटा मेशिन मगाएको, सन् २०२३ को मार्च महिनाको अन्तिममा Sam भन्ने Zhong Jing Chuan ले २ वटा मेशिन पठाएकोमा Alex ले वालुवाटारमा राखेको हो । सन् २०२३ को मार्च अन्तिम तिर Roger भन्ने Li NengKai ले २ वटा सुन गाल्ने मेशिन मगाएको मलाई थाहा छ तर ति मेसिनहरु कहाँ छन भन्ने मलाइ थाहा छैन ।

राम लामा (Ram Lama ) नाम उल्लेख भएको 12589457 नं.को नेपाली राहदानीमा भएको फोटो र राहदानी मेरो हो । चाईनिज नागरिकले धैरै अगाडि १०,००० RMB लिएर बनाई दिएका हुन । राहदानी बनाउने क्रममा मेरो फोटो लिएर गएका थिए । ना.प्र.प.नं. ३०३०४१-२२५४ काभ्रे उल्लेख भएको मेरो नामको नागरिकता मैले देखेको छैन ।

हाल पक्राउ गरी आएका Yang Wen लाई मैले म पक्राउ पर्नु भन्दा ४/५ महिना अगाडि काठमाडौं ठमेलमा निजले संचालन गरेको KTV रेष्टुरेन्टमा जाने क्रममा चिनेको हुँ । Alex ले फोन गरेर सुनको अनुसन्धान क्रममा टाँसी पक्राउ पर्यो भनेकोले अब हामीलाई पनि प्रहरीले पक्राउ गर्छन होला भनी म र Sauten भन्ने Ding Sheg Fa उक्त कोठाबाट भागेर बौद्धमा गएर होटलमा १ दिन बस्यौ । अर्को दिन दिउसो भक्तपुरको नगरकोट गयौ । त्यहाँ केही दिन बस्यौ र पछि त्यहाँबाट फर्केर KTV क्लवका संचालक Yang Wen लाई सम्पर्क गर्दा निजले ललितपुरमा कोठा खोजी दिएकोले उक्त कोठामा बसेकोमा सोही ठाउबाट २ दिन पछाडि म र Sauten भन्ने Ding Sheg Fa पक्राउ भएका हौ ।

Waldo Casino Dynesty बाट प्राप्त मेरो A/C No. 15457 को खाता विवरण मैले चाईनाबाट नेपालमा आउदा ७०,००० RMB लिएर आएको थिए र केही रकम नेपालमा सुनको काम गर्दा आएको मासिक पारिश्रमिक तलवको रकम बाट Waldocasino Dynesty मा गएर जुवा खेल्ने गरेको थिए । सन् २०२३।०१।०१ देखि सन् २०२३।०९।०६ सम्म रु.८,३०,०००/- Cash In मा देखिएको हिसाव क्यासिनोमा Coin किनेको हिसावको रकम हो । Cash Out मा देखिएको हिसाव जुवा हारेको हिसाव हो ।
प्रतिवादी हर्क राज राईलाई पक्राउ प्रतिवादी टाँसी भन्ने थुप्तिन छिरिङले काठमाडौं ठमेलमा भेट गराएकाले निजसंग समय समयमा सम्पर्क गरेको भन्ने समेत व्यहोराको प्रतिबादी चिनिया नागरिक SAUTEN भन्ने DING SHEG FA को बयान ।

भ. **<u>प्रतिबादी चिनिया नागरिक राहदानी नं. EB0563022 वाहक ALEX भन्ने YAO PUCHENG को बयान :</u>**

टाँसी भन्ने थुप्तिन छिरिङ र नरेस तामाङलाई चिन्दछु । टाँसी भन्ने थुप्तिन छिरिङले सन २०२२ को जुन महिनामा म बस्ने गरेको धुम्बाराही स्थित Green Hill City मा लिएर आएकाले हर्कराज राईलाई देखेको हो। उक्त समयमा मैले थुप्तिन छिरिङलाई निजले मलाई काठमाडौंमा बस्न तथा बिदेशबाट बिभिन्न किसिमका मालवस्तुमा सुन राखी ल्याउने ब्यबस्थापकीय कार्यमा सहयोग गरे बापत Zhong Jing Chuan (चोङ चिङ छहवाङ) एक लाख दिनुहोस भनेकोले निज थुप्तिन छिरिङलाई पैसा दिन खोजेकोमा निज थुप्तिन छिरिङले उक्त पैसा मलाई हरेक काममा सहयोग गर्ने हर्कराज राईलाई दिनु भने पछी मैले सो रकम हर्कराज राईलाई दिएको हुँ । निज टाँसी भन्ने थुप्तिन छिरिङको सहयोगमा Steps भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng Fa,

Ali भन्ने Li Wen Tsung र म समेत चार जना मिलि बिभिन्न नेपाली नागरिकहरुका नाममा कम्पनीहरु खोली हङकङबाट नेपालमा ब्रेक प्याड, सेभर, ईलेक्ट्रोनिक्स लगायतका मालवस्तु पैठारी गर्ने काम गरेको हुँदा निजसंग मेरो निरन्तर सम्पर्क, लेनदेन तथा सम्बन्ध समेत रहेका ब्यक्ती हुन। Yang Wen ले मेरो ठमेल स्थित भियाना होटल भित्र KTV संचालन गरेको र Ali भन्ने Li Wen Tsung संग KTV गई पुन निज Yang Wen र Mi –Tian लाई भेटी निज MI –TIAN, लाई साथी बनाएको हुँ। त्यस पछी म निरन्तर Yang Wen र Mi –Tian संग सम्पर्कमा रही निजको KTV मा काम गर्न भारत मणीपुरबाट आएका म संग भारत बस्दा चिनजान तथा संम्पर्कमा रहेका १८/२० जना केटीहरुलाई काम लगाई दिएको हुँ। KTV संग समन्बय गरी चाईनिज नागरीहरुलाई केटी चाहिएमा मिलाई दिने समेत गरेको हुँ। KTV मा केटीहरु काम लगाए बापत र उक्त केटीहरु चाईनिज नागरिकहरुलाई मिलाई दिए बापत एक दिनको रु.८,०००।- मलाई निज YANG WEN ले दिने गरेका थिए। केटीहरु बस्ने घरको भाडा समेत मैले नै तिरीदिने गरेको थिए।

Steps/Rojer भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई सन् २०२२ को अक्टोवर महिनाको पहिले हप्ता तिर मेरियट क्यासिनोमा क्यासिनो खेल्न गएको बेलामा भेट भई चिनजान भएको हो। सन् २०२२ डिसेम्बर महिना देखी Ali भन्ने Li Wen Tsung संग Steps/Rojer भन्ने Li. Nengkai संगै मिलि महाराजगंज अमेरीकाको राजदुताबस नजिक रहेको घरमा भाडामा बस्न थाले, उक्त घरको भाडा रकम मैले तिरि दिने गरेको थिए। Sauten भन्ने Ding Sheng Fa म संगै चप्पल कारखानमा मैले केटीहरुलाई बस्न भाडामा लिएको घरमा बस्ने गरेका थिए। २०२३ को डिसेम्बर महिनाको अन्तिम सम्ममा निज Steps/Rojer भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa संग मेरो घनिष्ठ सम्बन्ध भई सकेको थियो। हामी तीन बिच नेपालमा कम्पनी दर्ता गरी सुन अबैध पैठारी गर्नु पर्छ भन्ने बिषयमा कुराकानी समेत हुन थालेको थियो तर कसरी गर्ने भन्ने बिषयमा तय भईसकेको थिएन।

म सन् २०१९ सेप्टेम्बर २० मा हङकङबाट ४ किलो ९८ ग्राम सुन लिई दिल्ली जाने क्रममा दिल्ली एयरपोर्टमा मैले बोकी ल्याएको हेण्ड क्यारी ब्याग चेक जाँच गर्ने क्रममा उक्त सुन सहीत मलाई नियन्त्रणमा लिई उक्त सुन अबैध पैठारी गरको कसुरमा म दुई महिना थुनिई दिल्ली अदालतमा भा.रू. ५ लाख धरौटी राखी छुटे पछी मलाई दिल्लीमा सहयोग गर्ने मानिसको खोजि गरिरहेको अबस्थामा Ali भन्ने Li Wen Tsung संग मेरो चिनजान भईहाल सम्म धेरै पुरानो सम्बन्ध रहेको थियो। निज Ali भन्ने Li Wen Tsung संग निरन्तर फोनमा कुराकानी तथा भेटघाट समेत हुन थाल्यो। पछी सन् २०२१ नोभेम्बार महिनामा सुन अबैध पैठारी तथा कारोबार गरेको कसुरमा गुडगाँउबाट प्रहरीले समातेछ। निज समातिएको मलाई थाहा भएन निज काहा गएछन भनि मैले निजलाई खोजेकोमा पछी निज Ali भन्ने Li Wen Tsung अदालतबाट धरौटीमा छुटे पछी पुन भेट भई हालसम्म पनि निरन्तर सम्पर्कमा रहेकोमा पछी म काठमाडौं आई निज संग भेटीसंगै बसी सुन अबैध पैठारी गर्ने काममा मलाई सहयोग समेत गरेका मानिस हुन। सन् २०२३ जनवरी/फेब्ररी महिनामा ठमेलबाट भारतमा रहेको घर डेकोरेसनको काम गर्ने साथी XU लाई ३० हजार RMB पठाई निजले मलाई नाम थाहा नभएका भारतिय मानिस मार्फत भारतिय पैसा दिई तिमिलाई दिन भनि भनेको छु र तिमीलाई काठमाडौंमा रहेका ९८४७२६५३१५ फोन नं. भएको सुमन खरेलले तिमिलाई भेटी नेपाली रुपैया दिनेछन भने पछी मैले उक्त नं.मा फोन गरी निज सुमन खरेललाई ठमेलमा गई भेटी रु. ५ लाख निज सुमन खरेलबाट लिने क्रममा चिनजान भई पछी निजलाई सुन समेत बिक्री गर्ने गरेको हो।

सन् २०१९ सेप्टेम्बर २० मा हङकङमा मेडिकल ब्यापारको आबरणमा अन्तराष्ट्रिय रुपमा सुनको कारोबार गर्ने चाईनिज नागरिक HONG CAI (होङ छाई) लाई म २२ बर्षको हुँदा ब्राजिल काम खोज्न गएको समयमा ब्राजिलमा कपडा पसलमा काम गर्दा म संगै काम गर्ने अर्का चाईनिज साथीले होटलमा खाना खाने क्रममा भेटघाट गराई चिनाएका ब्यक्ति हुन । निज HONG CAI (होङ छाई)ले ब्राजिलमा औषधी बच्ने काम गरेका थिए । पछी म चाईना आई सेन्जन सहरमा निज HONG CAI (होङ छाई) लाई भेटी निज संगै हङकङ जाने क्रममा तिमि भारत दिल्ली सुन लिएर जाउ, तिमि र म मिलेर सुनको भारतमा कारोबार गरौ राम्रो फाईदा हुन्छ जे जती फाईदा हुन्छ पछी सल्लाह गरेर बाडौला भनेका थिए । मैले तिमिलाई दिल्लीको होटल बुक गरीदिएको छु तिमीलाई लिन होटलको मान्छे एयरपोर्टमै आउँछ । मैले हङकङमा धेरै ईन्डियन ब्यापारीहरु चिनेको छु तिमिले धेरै चिन्ता लिनु पर्दैन सुन किन्ने ब्यापारी तिमी बस्ने होटलमा तिमिलाई भेट्न आउँछन को ब्यक्ती आउँछ मैले तिमिलाई पछी बताउने छु भनेका थिए । सन् २०१९ सेप्टेम्बर २० मा म सुन लिई आउने क्रममा दिल्ली एयरपोर्टमा समातिएँ । म थुनिए पछी निज HONG CAI (होङ छाई)ले मलाई नाम थर थाहा नभएका चाईनिज मानिस मलाई भेट्न पठाई निजले के को संग कुरा गरी अदालतमा भा.रु. ५ लाख धरौटी निजले नै राखी दिई म दुई महिना कैद बसी छुटेको हुँ । म छुटे पछी मेरो पासपोर्ट समेत मलाई अदालतबाट फिर्ता मिलेन । चिन र भारतमा कोरोनाको प्रकोप समेत शुरु भएको कारण लकडाउन शुरु भई सकेको थियो । मलाई दिल्लीमा बस्न खान लाग्ने खर्च निज HONG CAI (होङ छाई)ले नै पठाईदिएका थिए ।

दिल्लीबाट गाडीमा ट्याक्सी रिजर्भ गरी नेपाल भारतको सिमा नजिक रहेको नेपालगंज आई नेपालगंजमा भेटिएको ट्राभल एजेन्सीमा गई काठमाडौंको लागि प्लेन टिकट काटी नेपालगंजबाट प्लेन चढी सन् २०२२ सेप्टेम्बर महिनाको दोश्रो हप्ता तिर त्रि.बि. बिमानस्थलको Domestic Terminal हुँदै कठमाण्डौ आएको हुँ । काठमाडौंमा मलाई मेरो साथी Ali भन्ने Li Wen Tsung ले मलाई लिन आएका थिए । त्यस पछी म निज निज Ali भन्ने Li Wen Tsung संगै काठमाडौंको बौद्धको सिचवान होटलमा गई बसी पछी काठमाडौं चप्पल कारखाना केटीहरुसंग म सहित Sauten भन्ने Ding Sheng Fa संगै बसेकोमा सन् २०२३ जुन महिनाको पहिलो हप्तामा धुम्बाराही स्थित Green Hill City घर भाडामा लिई म र Ali भन्ने Li Wen Tsung संगै बस्न थालेकोमा मिति २०८०।०४।०२ गते त्रि.बि. भन्सार कार्यालयमा म समेत भई रेडी ट्रेड प्रा.लि.को नामबाट अबैध पैठारी भई आएको सुन भएको ब्रेक प्याड लगायतको सामानहरू राजस्व अनुसन्धान बिभागले नियन्त्रणमा लिए पछी पक्राउ पर्ने डरले धुम्बाराही स्थित Green Hill City मा हामी बस्ने गरेको घरबाट सम्पूर्ण मालसामान लिई घर समेत छोडी भागेको हो । म  नेपालमा बिना भिषा अनाधिकृत रुपमा छिरी आई गैह्र कानूनी रुपमा हालसम्म बस्दै आएको छु । म नेपाल आउनुको कारण सुनको कारोबार गरी पैसा कमाउने उद्देश्यले आएको हुँ । मेरो राहादानी भारतमा अदालतबाट फिर्ता नआएको र नेपालमा रहेका मेरो साथी Ali भन्ने Li Wen Tsung ले मैले नेपालमा नेपाली नागरिकता र पासपोर्ट बनाएको छु । तपाई पनि नेपाल आउनुहोस नेपालमा RMB १० हजार तिरे पछी नेपाली नागरिकता र पासपोर्ट बन्ने रहेछ भने पछी मैले पनि नेपालमा आई नेपाली नागरिकता र पासपोर्ट बनाई चाईना जाने अर्को उद्देश्य समेत रहेको थियो ।

Ali भन्ने Wen Tsung भारतमा सन २०२१ मा अप्रेसन Molten Metal मा DRI बाट ८३.५३ किलो सुन बरामद भएको कसुरमा पक्राउ परेका थिए । Steps/Roger भन्ने Li Nengkai  र Sauten भन्ने Ding Sheg Fa यस पक्राउ परेको सम्बन्धमा मलाई थाहा छैन । Lao Hu भन्ने Hu Huiqiang (हु

होईछ्याङ) नाम गरेका चाईनिज नागरिकसंग दिल्लीमा सन् २०२० जुन महिनामा भेट हुँदा निजले तपाईलाई आबश्यक परेको छ भने मैले नेपाली नागरिकता र पसापोर्ट तपाईको नाममा बनाईदिन सक्छु भने पछी मैले निज Lao Hu भन्ने Hu Huiqiang (हु होईछ्याङ) लाई हुन्छ मलाई बनाईदिनु पर्यो त्यसको लागी कति पैसा लाग्छ भनेकोमा निज Lao Hu ले भा.रु. २ लाख ५० हजार चाहिन्छ भने पछी मैले निजलाई उक्त रकम दिई मेरो नामको नेपाली नागरिकता प्रमाण पत्र र पसापोर्ट बनाउन मेरो फोटो Lao Hu भन्ने Hu Huiqiang (हु होईछ्याङ) ले निजकै मोबाईल फोनबाट खिचि लगी सन २०२१ अक्टोवर महिनाको अन्तिम तिर दिल्ली गुडगाँउ आई मलाई बोलाउन लगाई मलाई होटलमा भेटी मेरो फोटो टासिएको Tenzin Sonam Tamang नाममा मिति 05 Oct 2021 मा जारी भएको नेपाली राहादानी नं. १२४२६०४२ भएको मेसिन रिडेवल नेपाली पासपोर्ट बनाई ल्याई मलाई दिएका हुन तर निजले नेपाली नागरिकता प्रमाण पत्र भने मलाई दिएनन् । निजले उक्त मेरो फोटो टाँसिएको नेपाली राहदानी काठमाडौं बौद्ध तिर बस्ने Jimmy भन्ने Karma Sherpa को सहयोगमा बनाएका हो भनि मलाई राहादानी दिने बेलामा Lao Hu भन्ने Hu Huiqiang ले भनेका थिए तर के कहाँबाट बनाएको हो मलाई थाहा छैन । पछी उक्त Jimmy भन्ने Karma Sherpa लाई दिल्लीमा Lao Hu भन्ने Hu Huiqiang (हु होईछ्याङ)ले होटलमा खानाखाने क्रममा Jimmy भन्ने Karma Sherpa यिनै हुन भनि चिनाएका थिए, पछी म नेपाल आए पछी निज Jimmy भन्ने Karma Sherpa लाई वाल्दो क्यासिनोमा समेत भेटेको थिए । नेपाली राहादानी बाहेक भारतमा बस्दा मेरो ALEX नाममा सन २०२२ अप्रिल/मे महिनामा भारतिय आधार कार्ड बनाएको थिए । उक्त आधार कार्ड प्रयोग गरी नेपाल छिर्दा नेपालगंजमा प्लेनको टिकट काट्न प्रयोग गरेको थिए । उक्त आधार कार्ड नेपालमा प्रयोग नहुने हूदा मलाई खासै मतलब भएन कता हरायो मलाई थाहै भएन उक्त आधार कार्डको नं. समेत मलाई याद छैन । मेरो फोटो टासिएको Tenzin Sonam Tamang नाममा मिति 05 Oct 2021 मा जारी भएको नेपाली राहादानी नं. १२४२६०४२ भएको मेसिन रिडेवल नेपाली पासपोर्ट भारत गुडगाँउमा कोठा सर्ने क्रममा हराएको हो । उक्त पासपोर्ट म नेपाल आउने बेलामा धेरै खोजे तर भेटिन । उक्त रादादानी मैले नेपालमा ल्याएको छैन र कतै प्रयोग समेत गरेको छैन ।

नेपालमा म समेत भई सन २०२३ को मार्च महिना देखी हङकङ देखी ब्रेक प्याड लगायतका मालवस्तुमा सुन लुकाई राखी अवैध रुपमा सुन पैठारी गर्न शुरु गरेको हो । नेपालमा अबैध सुन पैठारी गर्न बिभिन्न समूहमा मानिसहरुलाई जिम्मेवारी तोकी काम बाँडफाड गरी सुन अबैध पैठारी गरी सुन ल्याई पगाली सुनको कारोबार समेत गर्ने गरेका थियौं । टोखामा सुन मालवस्तुबाट पगाली निकाली बेचबिखन सम्मको कार्य म सहित Ali भन्ने Wen Tsung, Roger/Steps भन्ने LI Nengkai र Sauten भन्ने Ding Sheg Fa समेत ले गर्ने गरेका थियौं । लालिम्पाट तथा सोह्रखुट्टेमा सुन पगाली निकाल्ने कार्य मेरो समन्वय तथा चाईनामा बसी काम गर्ने SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छ्हवाङ)को निर्देशनमा Lin Zeqiang (लिन चछ्याङ), Zhong Jiang Hua(चोङ चेनह्वा), BING (पिङ), HUA (ह्वा) र King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) समेत भई सुन पगाल्ने तथा बेच्ने समेतको काम गर्ने गरेका थिए । मैले भने अनुसार टाँसी भन्ने थुप्तिन छिरिङले बिभिन्न नेपाली नागरीहरु खोजी ल्याई हर्कराज राईलाई कम्पनी दर्ता गर्ने प्रकृया पुरा गर्न लगाई बिभिन्न ७ वटा कम्पनीहरु दर्ता गरेका थिए ।

निज टाँसी भन्ने थुप्तिन छिरिङले मलाई कम्पनीका कागजातहरु दिए पछी मैले सम्पूर्ण कागजातहरु हाल चाईनामा रहेका Hennry/Jackie Chan/Sam भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई पठाउने गरेको थिएँ। निज Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले मलाई पैठारी भई आउने मालवस्तुको Air way Bill, ईनभ्वाईस लगायतका कागजात पठाउथे र मैले उक्त मालवस्तुको बिबरण सहितको कागजात टाँसी भन्ने थुप्तिन छिरीङलाई पठाई निज थुप्तिन छिरीङ हर्कराज राई मार्फत भन्सार कार्यालयबाट मालवस्तु छुटाई गोदामा पुर्याई बुझाउथे भने कुनै मालवस्तु सिधै कार्गो एजेण्टहरुले गोदामसम्म ल्याई हर्कराज राईले गोदाममा सामान बुझि राखिदिन्थे। सामान गोदाममा आए पछी म सहित Ali भन्ने Wen Tsung, Roger/Steps भन्ने LI Nengkai र Sauten भन्ने Ding Sheng Fa समेतले टोखामा सुन पगाली मैले सुन बेच्न लाने गरेको थिए भने लाजिम्पाट तथा सोह्रखुट्टेमा सुन पगाली निकाल्ने कार्य मेरो समन्वय तथा हाल चाईनामा बसी काम गर्ने SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) को निर्देशनमा Lin Zeqiang (लिन चछयाङ), Zhong Jing Hua (चोङ चेनह्वा), Bing(पिङ), HUA (ह्वा) र King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) समेत भई सुन पगाल्ने तथा बेच्ने समेतको काम गर्ने गरेका थिए।

मिति २०८०।०४०२ गते (सन २०२३ जुलाई १८ तारीख) मा रेडि ट्रेड प्रा.लि.ले आयात गरेको ब्रेक प्याडमा लुकाई छिपाई ल्याएको अबस्थामा उक्त ब्रेक प्याडलाई पगाल्दा ६० किलो ७१६ ग्राम सुन बरामद भएको पछी थाहा पाएको हुँ। Zhong Jing Chuan ले हङकङबाट सन २०२३ जुलाई १७ मा भन्सार कार्यालयमा ब्रेक प्याड ८ काटुन र सेभर ८० सेट आएको छ सो सामानहरु छुटाउन लाई उक्त सामानहरु बालुवाटार गोदाममा लगी Lin Zeqiang लाई जिम्मा दिनु भनेकोले भन्सारमा मालवस्तु आएको भनी टाँसी भन्ने थुप्तिन छिरिङलाई भनेकोमा निज टाँसी भन्ने थुप्तिन छिरिङले भन्सार कार्यालयबाट उल्लेखित प्रज्ञापन पत्रमा उल्लेखित सामान छुटाउन हर्कराज राईलाई पठाएका थिए। सामान छुटाउन गएका हर्कराज राईले रेडी ट्रेड प्रा.लि.को आर्थिक बर्ष सकिएका कारण कम्पनीको नविकरण नगरेसम्म सामान निस्किदैन कम्पनी नविकरण गर्नु पर्यो पैसा चाहियो भनेर टाँसी भन्ने थुप्तिन छिरिङलाई भनेछन्। त्यस पछी मैले रु. १ लाख नगद रुपैया टाँसी भन्ने थुप्तिन छिरिङलाई दिई कम्पनी नविकरण गरी समान छुटाउ भनि पठाएकोमा सन् २०२३ जुलाई १८ मा हर्कराज राईले कम्पनी नविकरण गरी मालवस्तु छुटाएर भन्सार कार्यालय बाहिर ल्याएको अबस्थामा राजस्व अनुसन्धान बिभागले उक्त सुन समेत भइको ब्रेक प्याड र सेभर सहितको सामान र मानिस नियन्त्रणमा लिएर लगेको रहेछ। बालुवाटारमा समयमा सामान नपुगे पछी मलाई SAM भन्ने Zhong Jing Chuan ले WeChat मा फोन गरी सामान बालुवाटार पुगेको छैन के भएको हो बुझ भनेकोमा साँझको अं. २०:०० बजेको आसपासमा टाँसी भन्ने थुप्तिन छिरिङले सामान शंका लागी राजस्व अनुसन्धान बिभागले लगेको रहेछ भोलि छोड्छ रे भनि खबर गरे। उक्त दिन सामानहरु उक्त कार्यालयमा राखी मानिसहरुलाई भोलि आउनु भनि छोडी पठाएकोमा भोलिपल्ट निज टाँसी भन्ने थुप्तिन छिरिङले मलाई फोन गरी सामान छुटाउन हर्कराज राईले भन्सार एजेण्ट राजेन्द्र कुमार राई भन्ने मानिसलाई पठाएका छन्। सामान छुटाउन राजस्व अनुसन्धान बिभागमा रु. ४ लाख जरिवाना तिर्नु पर्ने भयो पैसा चाहियो भनि टाँसी भन्ने थुप्तिन छिरिङले मसंग पैसा मागेकोमा उक्त दिन मसंग जम्मा पचास हजार जति मात्र पैसा थियो। मैले टाँसी भन्ने थुप्तिन छिरिङलाई म पैसा खोज्दै छु सामान छुटाउन कुरा मिलाउदै गर्न भनेकोमा उक्त दिन पैसा कतैबाट पनि प्राप्त हुन सकेन। पछी

बुझ्दा भन्सार एजेण्ट, हर्क राज राई र टाँसी भन्ने थुप्तिन छिरिङ पक्राउ परेको भन्ने थाहा पाए पछी म समेत Ali भन्ने Li Wen Tsung, Steps/Rojer भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa घर छाडी भागेका हौं । रेडी ट्रेड प्रा.लि. को नामबाट यस भन्दा अगाडी १९/२० पटक ब्रेक प्याडमा सुन राखी आईसकेको थियो । Zhong Jing Chuan र Lin भन्ने मेनेजर र नेपालमा टोखाको हकमा म सहित Ali भन्ने Li Wen Tsung, Steps/Rojer भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa र लाजिम्पाटको हकमा निज Sam भन्ने Zhong Jing Chuan ले मलाई नेपालमा समन्वय गर्ने गरी जिम्मेवारी दिई Lin Zeqiang, Zhong Jiang Hua, Bing, Hua र King भन्ने Peng Ling Feng समेतको योजनामा सुन अबैध पैठारी गरी नेपालमा सुनको ब्यापार गर्न थालिएको हो ।

हङकङबाट नेपाल पैठारी भई आएको अवैध सुन बरामद भएको वारदातमा म सहित चाईनामा रहेका अबैध सुन पैठारीमा लगानी गर्ने मुख्य बोस Wang Dao Jin चाईनामा रहेका SAM भन्ने Zhong Jing Chuan र LIN, नेपालमा रहेका Ali भन्ने Li Wen Tsung, Steps/Rojer भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa, Lin Zeqiang , Zhong Jiang Hua, Bing, Hua, र King भन्ने Peng Ling Feng, टाँसी भन्ने थुप्तिन छिरिङ र हर्कराज राई समेत प्रत्यक्ष संलग्न छन भने सो बाहेक अन्य को को ब्यक्ती संलग्न छन भन्ने सम्बन्धमा अबैध सुन पैठारीमा लगानी गर्ने मुख्य बोस Wang Dao Jin, चाईनामा रहेका Sam भन्ने Zhong Jing Chuan र हङकङ्गमा बस्ने Lin लाई थाहा होला । Wang Dao Jin हाल चाईनामा बसी नेपलमा ब्रेक प्याड लगायतका मालवस्तु पठाई नेपालमा अबैध सुन पैठारी गरी सुनको ब्यापार गर्ने गरेका छन । निजको बारेमा मलाई मेनेजर निज Zhong Jing Chuan ले निज Wang Dao Jin चाईना तथा हङकङमा बसी ब्रेक प्याड, सेभर, स्मार्टवाच, ईलेक्ट्रोनिक्स मेसिन लगायतका मालवस्तुमा सुन लुकाई राखी नेपाल तथा भारत समेतमा पठाउने गरेका छन भनेका थिए । LIN र Zhong Jing Chuan ले नै मलाई भने बमोजिम दिई निजहरुले भने अनुसार मैले नेपालमा बसी अबैध सुन पैठारी तथा सुनको ब्यापार गर्ने गरेको छु ।

नेपालमा चिन तथा हङकङबाट अवैध रुपमा सुन पैठारी गर्ने प्रकृया के हो भन्ने सम्बन्धमा Wang Dao Jin र चाईनामा बसी ब्यवस्थापकिय काम गर्ने Sam भन्ने Zhong Jing Chuan र LIN भन्ने मेनेजरलाई थाहा होला, निजहरुले मलाई सुन पठाउने प्रकृया र बिधिको बारेमा भनेका छैनन । मलाई थाहा भए अनुसार निजहरुले हङकङ तथा चाईन देखी ब्रेक प्याड, सेभर, स्मार्ट वाच, ईलेक्ट्रोनिक्स मेसिन लगायतका मालवस्तु भित्र सुन राखी लुकाई नेपालमा पठाई सुन पैठारी गरेको हो र हामीले भन्सार कार्यालयबाट सुन सहीत पैठारी भएका मालवस्तु छुटाई बिभिन्न गोदाममा राखी टोखामा लगि सुन पगाल्ने मेसीनबाट सुन पगाली निकाली चाईनामा रहेका SAM भन्ने Zhong Jing Chuan र LIN ले भने अनुसार निजहरुले नै तोकेको स्थानमा गई निजहरुले भनेको मानिसहरूलाई सुन हस्तान्तरण गर्ने गरेका थियौं । SAM भन्ने Zhong Jing Chuan नेपालमा हुँदा निजले १० पटक जति १/१ किलोका सुनका बिस्कुट मलाई कहिले २ किलो त कहिले ३ किलो बेच्न भनि दिएका थिए भने निज चाईना गए पछी मलाई ५ पटक निज SAM भन्ने Zhong Jing Chuan ले मलाई सुन दिन भनि मैले नचिनेका ब्यक्तीलाई पठाई मैले सुनका बिष्कुट प्राप्त गरी लाजिम्पाट तथा सोह्रखुट्टेमा उत्पादन भएका हालसम्म मैले जम्मा जम्मी ३० किलो सुन निज SAM भन्ने Zhong Jing Chuan बाट प्राप्त गरी मेरो सम्पर्कमा रहेका सुन बेच्ने नेपाली नागरिक सुमन खरेल लाई बिभिन्न मितिमा गरी

ठमेल स्थित छाँया सेण्टरमा ६ पटक, जापनिज राजदुतावास नजिक सडकमा १ पटक, महाराजगंज स्थित भाटभटेनी सुपरमार्केट नजिक ४ पटक र ग्राण्डी अस्पताल नजिक १ पटक र म बस्ने धापसी Green Hill City को घर कोठामा बोलाई ३ पटक गरी जम्मा १५ पटक १/१ किलोका सुनका बिष्कुट गरी ३० किलो सुन दिएकोमा मैले सुन दिने बेलामा सुनको यति मूल्यमा बेच्नु भनि निजलाई सम्झाई मलाई SAM भन्ने Zhong Jing Chuan ले सुनको मूल्य भुक्तानी गर्न भनि दिएको हङकङमा पैसा जम्मा हुने गरी डिजिटल वालेटको QR CODE सहितको BAR SCANER निज सुमन खरेललाई दिई निजले सुन लिएर जान्थे । सुन कता लिएर जान्थे मलाई थाहा भएन। सुन बेची सके पछी मलाई सुमन खरेलले सुनको बेचेको पैसा खातामा आयो कि आएन भने सोध्थे त्यस पछी मैले निज SAM भन्ने Zhong Jing Chuan लाई सम्पर्क गरी सुन बेची सके पैसा खातामा आयो कि आएन भनि सोधेपछी निजले पैसा आयो भनि मलाई खबर गरे पछी मैले निज सुमन खरेललाई सुनको पैसा प्राप्त भयो भनि खबर गरिदिन्थे। त्यसरी सुन प्राय; ६३,०००।– (त्रिसट्ठी हजार) USDT मा मैले निज सुमन खरेललाई बेच्न भनि दिने गरेको थिए। मूल्य कहिले काँही तल माथी हुने गरेको थियो। टोखामा उत्पादन भएको सुन मैले चाईना वा हङकङगमा रहेको मेनेजर LIN को आदेश बमिजिम मलाई मोबाईलमा नेपाली रु. ५ कहिले रु. १० को नोटको फोटो मेरो मोबाईलमा WhatsApp मार्फत सुन लिन आउने मानिसको हुलिया समेत यस्तो हुन्छ भनि बताई टोखाको सुन पगाल्ने कारखाना देखी केही तल ग्राण्डी अस्पताल तर्फ सडक छेउको लोकेसन मलाई दिई उक्त लोकेसनमा मलाई पठाई गई हेर्दा निजले भनेको हुलिया भएको एक जना मानिस मलाई कुरेर बसेकोमा निजलाई भेटी निजले मलाई नेपाली रु. ५ र कहिले रु. १० को नोट दिने गरेकोमा उक्त नोट मेरो मोबाईलमा भएको उक्त नोटको फोटोसंग भिडाई हेर्दा नोटको नं. मिलेपछी निज सुन लिन आएको मानिसलाई सुन दिई पठाउथे। मैले उक्त मानिसलाई दिने सुनको मूल्य सुन लिन आउने मानिसले चाईनामा रहेका मेनेजरलाई नै भुक्तानी दिने हुँदा मलाई भुक्तानीको बारेमा थाहा हुँदैनथ्यो। मैले सुन लिन आएको मानिसलाई सुन दिई उक्त मानिस संग निजले ल्याएको नोट मैले निजबाट लिई म फर्किएर जान्थे भने उक्त मानिस सुन लिई कता जान्थे मलाई थाहा हुदैनथ्यो। मैले सुनको मूल्य बापतको पैसा पाईस कि नाई भनि निज LIN लाई सोध्ने गरेकोमा USDT बाट भुक्तानी भई सकेको छ भनि मलाई भन्थे। हाल सम्म मैले उक्त सुन लिन आउने मानिसलाई बिभिन्न मिति र समयमा गरी ४ पटक गरी दुई/दुई किलोको दरले ८ किलो सुन उक्त मानिसलाई दिएको छु। टोखामा उत्पादन भएको अन्य सुन Steps/Rojer भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa ले लगि बेच्ने गरेका थिए निजहरुले सुन को कसलाई बेच्थे मलाई थाहा छैन। टोखामा म सहित Ali भन्ने Li Wen Tsung, Steps/Rojer भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa समेत ४ जना भई सुन पगाली सुन निकाली सके पछी चाईनामा रहेका मेनेजर Lin लाई सुन पगालेर सकियो के गर्ने हो भनि रिपोर्ट गर्ने गरेकोमा मैले सुन लगेर बेच्न लानु पर्ने भए मलाई सोही अनुसार भन्थे। यदी Steps/Rojer भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa ले लगि सुन बेच्नु पर्ने रहेछ भनि मलाई तिमिले केही गर्नु पर्दैन भने पछी निजहरु Steps/Rojer भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheng Fa ले कोससंग कुरा गरी सुन लिएर बेच्न जान्थे मलाई थाहा हुदैन थियो।

मलाई सुन पैठारी गर्न प्रयोग भएका सबै कम्पनीको नाम सम्झना हुदैन। नेपाली नाम मलाई सम्झन गाह्रो लाग्छ। उल्लेखित ७ वटा कम्पनीहरुको नाम भनि मलाई सुनाउदा सुने। निज SAM भन्ने Zhong Jing Chuan र LIN ले बिदेशबाट ईलोक्ट्रोनिक्स, ब्रेक प्याड, सेभर लगायतका मालवस्तुमा सुन राखी नेपालमा

आयात तथा पैठारी गरी बिक्री बितरण लगायत ब्यापार गर्नको लागी खोलिएका कम्पनीहरू हुन । सन २०२२ मार्च महिनामा चाईनाबाट मेनेजर LIN ले नेपाली नागरिकको नाममा कम्पनी दर्ता गराउ भने पछी मैले सो कुरा ALI भन्ने LI Wen Tsung सुनाई निजले टाँसी भन्ने थुप्तिन छिरिङसंग कुरा गरी नेपाली नगरिक खोजि कम्पनी दर्ता गर्न पर्यो भनि मैले निज ALI भन्ने LI Wen Tsung लाई रु. ५ लाख ५० हजार दिई निज ALI भन्ने LI Wen Tsung ले टाँसी भन्ने थुप्तिन छिरिङलाई पैसा दिई निज टाँसी भन्ने थुप्तिन छिरिङले नेपाली नागरिकता भएको मानिस खोजी हर्क राज राई समेतको सहयोगमा पहिलो पटक मैले नचिनेका नेपाली नगरीकको Chhungak Electric Suppliers नामको कम्पनी दर्ता गराई मलाई टाँसी भन्ने थुप्तिन छिरिङले उक्त कम्पनीको दर्ता प्रमाण पत्र लगायतका कागजात मलाई दिई मैले चाईनामा रहेका मेनेजर LIN लाई उक्त कम्पनीका सबै दर्ता प्रमाण पत्र लगायतका कागजात पठाई दिएको हुँ । त्यस पछी बिदेशबाट ईलेक्ट्रोनिक्स मालवस्तु आयात गरी पहिला बाँसबारीमा सटर कोठा लिई पछी मालवस्तु आउन छोडेपछी उक्त सटकोठामा भएका मालवस्तु महाराजगंज स्तिथ गंगालाल अस्पताल नजिक पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि., को लागी खोलिएको सटर कोठामा ल्याई राख्न थालिएको हो । मलाई SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले नेपाली नागरिकको नाममा कम्पनी दर्ता गराउ भने पछी मैले टाँसी भन्ने थुप्तिन छिरिङ लाई नेपाली नागरिक खोजि कम्पनी दर्ता गर्न पर्यो भनि मैले निज टाँसी भन्ने थुप्तिन छिरिङ लाई कम्पनी दर्ता गर्न भनि प्रत्येक कम्पनीको लागी रु. ५ लाख ५० हजारका दरले पैसा दिई दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., रेडी ट्रेड प्रा.लि., र सरिता सप्लायर्स प्रा.लि. नामको कम्पनीहरु दर्ता गराई उक्त कम्पनीहरुका दर्ता प्रमाण पत्र लगायतका कागजातहरु मैले निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई दिई उक्त कम्पनीहरुको नामबाट ब्रेक प्याड लगायतका मालवस्तुमा सुन राखी अबैध पैठारी गरी ल्याउन थालिएको हो । मलाई मिति थाहा भएन कम्पनी खोल्ने सल्लाह भईरहेको थियो Steps/Roger भन्ने Li Nengkai ले नै टाँसी भन्ने थुप्तिन छिरिङलाई पैसा दिई हर्कराज राई समेतको सहयोगमा भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., Hwada Electric Suppliers Pvt. Ltd,, पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. दर्ता गराएका हुन र निज Steps/Roger भन्ने Li Nengkai ले नै कम्पनी दर्ता लगायतका प्रमाणपत्रहरु आफ्नो बोसलाई पठाएका हुन । मलाई निजहरुले तिन वटा कम्पनी दर्ता गरेको छ भन्ने सम्म जानकारी गराएका थियो । निजहरुले कुन बोसलाई उक्त कम्पनीहरुको कागजात दिई निजहरुले के कसरी काम गर्ने गरेका सबै मलाई जानकारी दिदैनथे । सोही रकमबाट निज टाँसी भन्ने थुप्तिन छिरिङले के कसरी मिलाई कम्पनी दर्ता गराएका हुन मलाई थाहा छैन । मैले कुनै पनि कम्पनीका संचालक रहेका नेपाली नागरिकहरुलाई मैले चिन्दिन निजहरु संग मेरो सम्पर्क समेत छैन ।

रेडी ट्रेड प्रा.लि. लगायत सबै कम्पनीहरुको नाममा हङकङ लगायतका ठाउँबाट आएका ब्रेक प्याड लगायतका मालवस्तुहरू त्रि.बि. भन्सार कार्यालयबाट छुटाउन लाग्ने रकम Chhungak Electric Suppliers दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि., रेडी ट्रेड प्रा.लि. र सरिता सप्लायर्स प्रा.लि. को हकमा मलाई SAM भन्ने Zhong Jing Chuan नेपालमा हुँदा निज स्वयमले र निज SAM भन्ने Zhong Jing Chuan चाईना गए पछी निज SAM भन्ने Zhong Jing Chuan बस्ने गरेको लाजिम्पाटको घरमा बसी पक्राउ प्रतिबादी Zin Zeqiang संग मिली संगै काम गर्ने निज SAM भन्ने Zhong Jing Chuan को आर्थिक कारोबार समेत हेर्ने गरी खटिएका Bing (पिङ) भन्ने ब्यक्तीले म बस्ने घरमै आई भेटी नगदै रकम दिई निज SAM भन्ने Zhong Jing Chuan ले चाईनाबाट उल्लेखित कम्पनीको नाममा आएका मालवस्तुको

Air way Bill लगायतका कागजात मेरो WhatsApp पठाई दिन्थे र निज Bing (पिङ)ले मलाई मालवस्तु छुटाउन लाग्ने नगदै रकम दिई मैले टाँसी भन्ने थुप्तिन छिरिङ लाई नगदै रकम दिई आएका मालवस्तुको Air way Bill लगायतका कागजात निजको WhatsApp पठाई दिन्थे र निज टाँसी भन्ने थुप्तिन छिरिङले हर्क राज राई समेतको सहयोगमा मालवस्तु त्रि.बि. भन्सार कार्यालयबाट छुटाई ल्याउथे। मालवस्तु छुटाउन लाग्ने रकम निज टाँसी भन्ने थुप्तिन छिरिङले यति रकम लाग्छ भनि म संग माग्ने गर्दथे। १३३ पटक पैठारी भई आएकोमा ६/७ पटकको सामानहरुमा सुन सामानहरु भित्र राखी अबैध सुन पैठारी भई आएको थियो भने अधिकांस ब्रेक प्याडमा सुन राखी पैठारी भई आएको थियो भने स्मार्ट वाच (घडी), सेभरमा २/३ पटक सुन पैठारी भई आएको जस्तो लाग्छ। एक पटक मालवस्तुबाट सुन गाली पगाल्दा २ देखी ३ किलो सुन निस्कने गरेको थियो। बि.स. २०७९ जेष्ठ महिना (सन् २०२२ मे/जुन) मा पहिलो पटक Sauten भन्ने Ding Sheng Fa ले २ (दुई) वटा Gold Melting Machine मगाएका हुन उक्त मेसिन टाँसी भन्ने थुप्तिन छिरिङले ल्याई म सहित Steps भन्ने Li. Nengkai, Sauten भन्ने Ding, Sheng Fa, Ali भन्ने Li Wen Tsung समेत भई टोखामा लगेर राखेको हो। उक्त मेसिन Sauten भन्ने Ding Sheng Fa ले निजको मेनेजर संग कुरा गरी मगाएको हुँदा मलाई के कुन प्रकृयाद्वारा मगाएका हुन र कसले पठाई दिएका हुन मलाई थाहा छैन । पछी फेरी २०७९ को चैत्र १७/१८ (सन् २०२३ मार्च अन्तिम) तिर मलाई Sam भन्ने Zhong Jing Chuan ले दुई थान Gold Melting Machine चाईनाबाट टिमुरे रसुवागढी नाका रसुवा हुदै सडकमार्गबाट पठाएको छु उक्त मेसिनहरु बालुवाटार गोदाममा दिनु भनि मलाई भनेकोमा मैले निज टाँसी भन्ने थुप्तिन छिरिङलाई उक्त मेसिनहरु काठमाडौंमा बुझ्न लगाई निजले बुझी ल्याई मलाई खबर गरकोमा मैले उक्त २ थान मेसिन बालुवाटारमा लगी Lin Ze Qiang लाई बुझाउनु भनि टाँसी भन्ने थुप्तिन छिरिङलाई भने पछी बालुवाटार लगी निज Lin Ze Qiang लाई बुझाएको हो। बि.स.२०८० आसर महिनाको १ गते (सन २०२३ मार्च महिनाको अन्तिम तिर अर्को २ (दुई) थान मेसिन Steps भन्ने Li Nengkai ले मगाई आएको छ भनि Steps भन्ने Li Nengkai, Sauten भन्ने Ding Sheng Fa ले भने पछी मैले फेरी २ थान Gold Melting Machine आएको थाहा पाएको हुँ। उक्त मेसिनहरुलाई Steps भन्ने Li. Nengkai ले टाँसी भन्ने थुप्तिन छिरिङलाई गोपीकृष्ण चबहिलको सटरमा राख्न लगाएका हुन। हङकङ लगायतबाट आएका सुन भएका मालवस्तुलाई त्येही मेसिनहरुमा राखी सुन पगाली निकाल्ने गरेका थियौं। बालुवाटार पठाएका २ थान Gold Melting Machine निज Sam भन्ने Zhong Jing Chuan ले चाईनाबाट पठाएका हुन भने अन्य ४ थान Gold Melting Machine Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa ले चाईनामा निजको मेनेजर संग कुरा गरी मगाएका हुन। ति मेसिनहरु के कुन प्रकृया पुरा गरी आएका हुन मलाई थाहा छैन यसको प्रकृयाको बारेमा मलाई SAM भन्ने Zhong Jing Chuan मलाई भनेका छैन। त्रि.बि. भन्सार कार्यालयका कर्मचारीहरुलाई कसरी बोस तथा मेनेजरहरुले मिलाएका थिए मलाई थाहा छैन। मलाई चाईनामा भएका मेनेजर SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) र LIN ले भन्सार कार्यालयमा मिलाएको छ त्यहा कुनै समस्या हुदैन भनेको सुनेको हुँ। भन्सार कार्यालयमा मिलाएको छ त्यहा कुनै समस्या हुदैन भनेको पटक पटक सुनेको हुँ त्येसैले हामीले कर्मचारीहरुको सम्बन्धमा मतलब गर्दैनथौं।

मैले उक्त मानिसलाई दिने सुनको मूल्य सुन लिन आउने मानिसले चाईनामा रहेका मेनेजरलाई नै भुक्तानी दिने हुँदा मलाई भुक्तानीको बारेमा थाहा हुँदैनथ्यो। मैले सुन लिन आएको मानिसलाई सुन दिई उक्त

मानिस संग निजले ल्याएको नोट मैले निजबाट लिई म फर्किएर जान्थे भने उक्त मानिस सुन लिई कता जान्थे मलाई थाहा हुदैनथ्यो । मैले सुनको मूल्यबापतको पैसा पाईस कि नाई भनि निज LIN लाई सोध्ने गरेकोमा USDT बाट भुक्तानी भई सकेको छ भनि मलाई भन्थे । सुन लिन जहिले पनी एउटै मानिस आउने गरेका थिए । एक पटक तिमिलाई खर्च चाहिने हुँदा सुन लिन आउने मानिसले तिमिलाई रु. ४० लाख रकम दिन्छन भनि मैले उक्त सुन लिन आउने मानिस संग रु. ४०,००,०००।– (चालिस लाख) मैले बुझी लिएको हुँ र उक्त रकमबाट नेपालमा बसी सुन पैठारीको ब्यवस्थापकिय कार्यमा खर्च गरेको हुँ ।

हामीलाई काठमाडौंमा बसी अबैध सुन पैठारी गर्न तथा सो को ब्यवस्थापकिय कार्य गर्न सवारी साधनहरुको आबश्यकता परी मैले टाँसी भन्ने थुप्तिन छिरिङलाई गाडी भाडामा लिनु पर्यो खोज भनि निजले हर्कराज राई समेतको सहयोगमा बालुवाटारमा रहेको सोलुसन ट्राभल्स एण्ड टुर्स प्रा.लि. का संचालक केशब श्रेष्ठसंग हर्क राज राईको नाममा तीन वटा गाडी सम्झौता गरी एउटा हुण्डाई कम्पनीको क्रेटा बा १६ च ९३०० गाडी मासिक भाडा रु. १ लाख १५ हजार, अर्को बाग्मती BAB 5989 नं. को DUSTER गाडी मासिक रु. १ लाख, अर्को ब्रेजा बा १६ च १७७१ गाडी मासिक भाडा रू. ९० हजार तिर्ने गरी सहमती भई मैले क्रेटा बा १६ च ९३०० नं. को गाडी मैले प्रयोग गर्ने गरेको हो । उक्त गाडीहरुमा GPS डिभाईस जोडेको मलाई थाहा थिएन । मैले प्रयोग गर्ने गरेको वा १६ च ९३०० नं. को गाडि भाडामा लिएको मिति सन 2023/04/01 गते देखि सन 2023/070/19 गते सम्म GPS Tracker डिभाईस Record अनुसार सो गाडिहरुमा अबैध सुन राखी पैठारी भएको मालवस्तु गोदामबाट लैजाने, सुन भएका मालवस्तुबाट सुन पगाली निकाल्न तथा सुन बेच्नको लागी तथा अन्य ब्यवस्थापकिय कार्य गर्न २४ पटक वा सो भन्दा बढी पटक पनि टोखा गएको ठिक हो ।

टोखा गोदामबाट बरामद सुन निकालिएका खाली ईलेक्ट्रिक मालवस्तुहरु राखिएको कार्टुनमा पैठारीकर्ता तथा कम्पनीको स्टीकर Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheg Fa लाई निजको चाईनामा रहेको बोस/ मेनेजर LIN ले कार्टुनमा रहेका स्टिकर च्यातेर फाल भनि आदेश दिएर म सहित भई Ali भन्ने LI Wen-Tsung, Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheg Fa ले मिलेर स्टिकर च्यातेको हो । उक्त स्टिकरहरु मालवस्तु के कहाँबाट आएको हो भनि नखुलोस भनि मालवस्तुको पैठारी कर्ता, सामान ल्याउने बिमान कम्पनी र कुन भन्सार कार्यालयबाट सामानहरु छुटेको हो भन्ने नखुलोस भनि पहिचान लुकाउन स्टिकरहरु च्याती जलाउने समेत गरेका थियौ ।

वारदात पश्चात भाग्ने क्रममा मसंग पहिला देखी चिनजानमा रहेका KTV मैले भारतबाट मणिपुरबाट आएका केटीहरुलाई काम लगाउने र उक्त KTV आएका चाईनिज नागरिकहरु लाई केटी चाहिएमा उक्त केटीहरु मिलाई दिई मलाई एक दिनको चाईनिज नागरिकहरुलाई केटी मिलाए बापत रु. ८,०००।– (आठ हजार) दिने प्रतिबादी समेत रहेका KTV का संचालक YANG WEN र निजको प्रेमिका MI TIAN हामीहरु संगै भागी निजहरुको सहयोगमा होटलमा रुम बुक गराई लुकिछिपी ललितपुर पाटन एरियामा बसेकोमा पछी निज YANG WEN र निजको प्रेमिका MI TIAN को सहयोगमा गोप्यरुपमा ललितपुर धापाखेल स्थित डाउनटाउन अपार्टमेण्टबाट Steps भन्ने Li Nengkai र Sauten भन्ने Ding Sheg Fa निजहरु पक्राउ परेका हुन ।

Casino Waldo Dynasty मा मेरो नाममा रहेको Registration नं. १५४२५ भएको Cash Diposit र Withdraw भएको देखिने Statement देखाउदा हेरे उक्त Statement मेरो नामकै Statement हो। उक्त Statement भएको Deposit र Withdraw गरेको रकम रु १३ करोड (तेह्र करोड) भन्दा बढिको कारोबार मैले नै गरेको हो। उक्त रकम मैले सुनको कारोबारबाट प्राप्त गरेको रकम हो। सुनको कारोबारबाट प्राप्त Statement मा भएको रकम मैले नेपालमा ब्यवस्थपकिय कार्य गर्दा लागेको अं. ५०/५२ लाख खर्च बाहेक अन्य रकम डिजिटल वालेट मार्फत निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई पठाई दिएको हुँ। सन 2023/02/27 मा रु.८८ लाख, सन 2023/03/06 मा रु. १ करोड, सन 2023/03/27 मा रु. २० लाख, सन 2023/03/31 मा रु.४८ लाख, सन 2023/04/03 मा रु.४० लाख, सन 2023/04/09 मा रु.२५ लाख, सन 2023/04/10 मा ९५ लाख, सन 2023/06/05 मा रु. ६० लाख र सन 20323/06/03 मा रु. ५० लाख Deposit साईडमा नगदै रु.१३ करोड जम्मा गरेको रकम भनेको बिभिन्न मिति र समयमा सुन बेचबिखन गर्दा प्राप्त हुने रकम हो। मैले सन २०२२ डिसेम्बर महिनाको शुरु तिर Ali भन्ने Li Wen Tsung संग नेपालमा बिदेशबाट मालवस्तुमा सुन राखी ल्याई उक्त सुन पगाली बेची सुनको कारोबार गरौ तपाईलाई महिनाको RMB 10,000।– तलब दिन्छु र नेपालमा बस्दाको सम्पूर्ण खर्च म सहित Steps भन्ने Li Nengkai ले सबै ब्यहोर्ने कुरा भएपछी Ali भन्ने Li Wen Tsung ताईबानबाट नेपाल आई हामी संग मिलि बिदेशबाट ब्रेक प्याड, सेभर, स्मार्ट वाच (घडी), ईलेक्ट्रोनिक्स सामानहरु मगाई उक्त मालवस्तु भित्र सुन लुकाई राखी अबैध पैठारी गरी नेपालमा ल्याई उल्लेखित ब्रेक प्याड लगायतका मालवस्तु भित्र रहेको सुन पगाल्ने काममा Ali भन्ने Li Wen Tsung खटाई सुन रहेका मालवस्तुबाट सुन पगाली निकल्ने काम गर्ने गरेको थियौ। निज Ali भन्ने Li Wen Tsung लाई नेपालमा बस्न सजिलो होस भनि मैले टाँसी भन्ने थुप्तिन छिरिङलाई रु १ लाख पचास हजार दिई निज Ali भन्ने Li Wen Tsung को नाममा बिजनेस भिषा दिलाउन लगाएको हो। निज टाँसी भन्ने थुप्तिन छिरिङले के कुन प्रकृया पुरा गरी बिजनेस भिषा Ali भन्ने Li Wen Tsung लाई दिलाएका हुन मलाई थाहा छैन। निज Ali भन्ने Li Wen Tsungताईबान जानु अगाडी मैले सुनको काम गर्ने हो। बिदेशबाट मालवस्तु भित्र सुन लुकाई पैठारी गरी ल्याई नेपालमा सुनको कारोबार गर्ने हो र सो काममा सहयोग गरे बापत RMB १०,०००।– (दस हजार) दिने र नेपालमा बसी काम गर्दाको खाने बस्ने लगायतका सम्पुर्ण खर्च ब्यहोरी दिने भनेकोले Ali भन्ने Li Wen Tsung ताईबानबाट फर्की आएका हुन। सन २०२३ फेब्रुअरी २२/२३ तिर म समेत निज Ali भन्ने LI Wen-Tsung, Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa सहित ४ जना भई महाराजगंज अमेरीकन राजदुताबास निजक रहेको म समेत बस्ने गरेको घरमा बसी ईलेक्ट्रोनिक्स सामान लगायतका मालवस्तु भित्र सुन लुकाई नेपालमा पैठारी गरी सुनको ब्यापार गर्ने बिषयमा छलफल भयो। उक्त बैठकमा को मानिसले के के काम गर्ने भन्ने बिषयमा समेत कुराकानी तथा सल्लाह भयो। उक्त छलफलमा मैले सुन भएका मालवस्तुहरु गोदाममा आएर बसेको हुन्छ। गोदामहरु फरक फरक ठाँउमा ब्यबस्था गरिएको हुन्छ। तोकिएको गोदामबाट Ali भन्ने Li Wen Tsung, Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa ले मालवस्तु झिकी सुन पगाल्ने सम्पूर्ण ब्यबस्था सहित सुन पगाल्ने कारखाना खोलिएको हुन्छ उक्त कारखानामा तपाईहरु तीन जना मिली सुन भएका ब्रेक प्याड, ईलेक्ट्रोनिक्स सामानहरु लगी सुन पगाली बेच बिखनको लागी मलाई दिनुहुनेछ भनि कामको जिम्मेवारी तोकिदिएका थिए। सोही जिम्मेवारी अनुसार Ali भन्ने LI Wen Tsung,

Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa भई निजहरुलाई देखाईएको काठमाडौंको गोपीकृष्ण चाबहिल, महाराजगंज र सामाखुसीको गोदामबाट सुन भएका मालवस्तु झिकी टोखामा खोलिएको सुन पगाली निकाल्ने कारखानामा लगी सुन पगाली निकाली निस्किएको सुन बोस/मेनेजर Lin को आदेश अनुसार कहिले मलाई जिम्मा लगाई त कहिले Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa लगाई बेच्न गरेको हो। हङकङमा बस्ने बोस/मेनेजर भन्ने Lin को निर्देशन अनुसार तत्कालिन समयमा नेपालमा बस्ने Wang Dao Jin र Sam भन्ने Zhong Jing Chuan समेतको लगानी र व्यवस्थापिक जिम्मेवारी अनुसार म समेतका Ali भन्ने Li Wen-Tsung, Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई सुन भएको मालवस्तु लिने, पगाल्ने र बेचबिखन तथा डेलिभरी दिने जिम्मेवारी तोकिएको थियो। त्यस कार्यका लागि कम्पनी खडा गर्नु पर्ने भएकोले टासी भन्ने थुप्तिन छिरिङ मार्फत विभिन्न कम्पनी खोलिएका हुन। त्यसका लागी आवश्यक रकम को जोहो Lin र Wang Dao Jin ले गरेको हो भनी Sam भन्ने Zhong Jing Chuan ले बताएका थिए। मलाई रकम दिने काम निज Sam ले गर्दथे। योजना अनुसार सुन भएका मालवस्तुहरु गोदाममा आएर बसेको हुन्छ जानकारी काहिले Lin मार्फत कहिले Sam मार्फत Whatsapp मा आउने गर्दथ्यो। गोदामहरु फरक फरक ठाँउमा ब्यबस्था गरिएको हुन्छ। तोकिएको गोदामबाट Ali भन्ने LI Wen-Tsung, Steps भन्ने Li. Nengkai , Sauten भन्ने Ding Sheng Fa र मैले मालवस्तु झिकी सुन पगाल्ने सम्पूर्ण ब्यबस्था सहित सुन पगाल्न टोखा लिएर जान्थ्यौ, सुन भएका ब्रेक प्याड, ईलेक्ट्रोनिक्स सामानहरु लगी सुन पगाली बेच बिखनको लागि बोस/मेनेजर Lin आदेश बमोजिम वा Sam आदेश बमोजिम डेलिभरी दिने वा बेच्ने गर्दथ्यौ र निज मेनेजर Lin ले मलाई केही नभनेमा निज Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa ले मिलि सुन लगी बेच्ने गरी जिम्मेवारी तोकिएको थियो। उक्त जिम्मेवारी निर्बाह गरे बापत मैले Lin संग सोधी Ali भन्ने Li Wen Tsung लाई मासिक रुपमा RMB १०,०००।– दिने गरेका थिएँ। भने Steps भन्ने Li. Nengkai र Sauten भन्ने Ding Sheng Fa लाई निजकै बोसले पैसा दिने गरेका थिए निजहरुले के कती पाउथे, मलाई थाहा छैन। यसरी काम गर्ने क्रममा SAM भन्ने Zhong Jing Chuanले लाजिम्पाटमा हामिहरुले थुप्तिन छिरिङ मार्फत खोलिएका कम्पनीबाट सामान पैठारी गरी सुन गाल्ने पगाल्ने गरेको हो, त्यसको सम्पूर्ण समन्वय मैले गर्ने गरेको थिए। साथै, Wang Dao Jin निर्देशन बमोजिम बुढानिलकण्ठ न पा वडा नं. ३ स्थित घर भाडामा लिइ Peng Yong Xin, Peng ling Feng र Feng Cheng lin बस्ने गरेको थिए। त्यो समूहले बुढानिलकण्ठ न पा वडा न ७ स्थितमा गोदाम लिइ इलोक्ट्रोनिक सामान भित्र सुन ल्याउने गरेका थिए भनि SAM भन्ने Zhong Jing Chuan ले बताएका थिए।

टोखामा सुन पगाल्ने ३ वटा मेसिन राखिएको थियो। सो बाहेक लाजिम्पाटमा Lin Zeqiang लगायतले २ वटा सुन गाल्ने मेसिन राखि सुन पगाल्ने गरेका थिए। सोह्रखुट्टको हकमा मिति २०८०।०४।०२ गते तदानुसार सन २०२३।०७।१८ मा राजस्व अनुसन्धान बिभागले सुन सहितको ब्रेक प्याड लगायतको सामान नियन्त्रणमा लिए पछी भोलि पल्ट SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) संग WhatsApp मा कुरा गर्दा सोह्रखुट्टे गोदाम भएका ब्रेक प्याडहरुबाट सुन निकालि सकिएको छ ननिकालेको भए अहिले गाह्रो पर्ने रहेछ भनि भनेको सुनेको हुँ। Trans Global Services PVT LTD तिनकुनेका संचालक अध्यक्ष कृष्ण कुमार श्रेष्ठ र प्रबन्धक पुष्कर राज भट्ट तथा एरिस ट्रान्स ग्लोबल सिपिङ्ग एण्ड

लजिस्टीक्स प्रा.लि. का संचालक राजन कुमार श्रेष्ठ  र कार्यकारी अधिकृत कृष्ण कुमार श्रेष्ठसंग मेरो चिनजान तथा कुनै सम्बन्ध छैन । बिदेशबाट बिभिन्न किसिमका मालवस्तु भित्र सुन लुकाई छिपाई राखी अबैध सुन पैठारी गर्न Trans Global Services Pvt.Ltd. लाई मात्रै किन प्रयोग गरियो भन्ने सम्बन्धमा मलाई केही थाहा छैन । निजहरु संग चाईनामा रहेका मेनेजर LIN र SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छहवाङ) ले कुनै सम्झौता गरेको भए मलाई थाहा भएन । सामाखुसी र गोपीकृष्ण चाबहिलको गोदाममा आएका मालवस्तुमा गरी ६/७ पटक सुन पैठारी भई आएको हो । महाराजगंजको गोदाममा सुन आएको मलाई थाहा छैन । ती कम्पनीको नाममा १३३ पटक आए पनि सबै मालवस्तुमा सुन आएको थिएन । म समेत संलग्न रहेको बिभिन्न कम्पनीहरुको नाममा २१५ पटक सामानहरु पैठारी भई आएको ठिक हो ।

मैले भारतको दिल्लीमा रहेका घर डेकोरेसनको काम गर्ने XU लाई मसंग भएको RMB 83,000।– (त्रियासी हजार) पठाइकोमा निजले मलाई नेपाली रकम प्राप्त गर्ने गरी निज फोन नं. ९८५१२२०७३० वाहक बिक्रम पराजुलीसंग पैसा बुझ्नु भनि भनेकाले मैले निज बिक्रम पराजुली बाट रु. १५ लाख बुझ्ने क्रममा भएको संबादको मैले प्रयोग गर्ने IMEI:358612410193080 भएको IPHONE 13 Pro Max भएको मोबाईलको स्क्रिनसट हो । निज फोन नं. ९८५१२२०७३० वाहक बिक्रम पराजुली लाई मैले चिन्दिन । स्क्रिनसट सुनको कारोबार सम्बन्धमा भएको कुराकानी हो । उक्त स्क्रिनसटमा उल्लेखित Bisleri wala भन्ने व्यक्ती सम्बन्धमा मलाई अहिले सम्झना भएन । उक्त स्क्रिनसटमा भएको कुराकानी SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छहवाङ) र Hero भन्ने मान्छे बिच भएको कुराकानी हो । मलाई उक्त स्क्रिनसट पठाई निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छहवाङ)ले भारतमा बिजनेस गर्न नसकिएला जस्तो छ, भारतमा प्रहरीले निज Hero को कामको बारेमा थाहा पाएको हुँदा निज Hero तनाबमा छन भनि SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छहवाङ)ले मलाई भनेका थिए । म भारत, दिल्लीमा बस्दा भारतिय आधार कार्ड बनाएको छु । उक्त आधारमा मेरो नामा Alex Newmai रहेको छ भने उक्त आधार कार्डको नं. ८८६९ ६२७१ ९६६९ हो । मेरो नामAlex Newmai भएको आधार कार्ड अहिले कता हरायो मलाई याद छैन । उक्त स्क्रिनसटमा भएको कुराकानी SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छहवाङ) र Hero भन्ने मान्छे बिच भएको हुँदा मलाई निज दुई बिच के प्रसंगमा कुरा कानी भएको हो मलाई थाहा भएन । उक्त संम्बाद हेर्दा १ किलो सुनको उक्त दिनको मूल्य 61,300 USDT रहेछ भन्ने बुझिन्छ । मेरो मोबाईलमा भएको Images भित्र Alex Newmai को नामको भारतिय आधार कार्ड म भारतमा बस्दा मेरो नाम Alex Newmai राखी बनाएको नं. ८८६९ ६२७१ ९६६९ भएको मेरो भारतिय आधार कार्ड हो । TENZIN SONAM TAMANG को नामको नेपाली नं. 12426042 भएको राहदानी मेरो फोटो टाँसी बनाएको मेरो नेपाली राहादानी हो । RAM LAMA को नामको नेपाली 12589457 नम्बर भएकोको राहदानी मेरो साथी पक्राउ प्रतिबादी SAUTEN भन्ने  DING SHENG FA ले बनाएको नेपाली राहदानी हो । SONAM LAMA नामको नेपाली 12589456 नम्बरको राहदानी मेरो साथी पक्राउ प्रतिबादी STEPS/ROGER भन्ने LI. NENGKAI ले बनाएको नेपाली राहदानी हो । SONAM LAMA कै नामको नेपाली 12607594 नम्बरको राहदानी भएको ब्यक्ती को हुन अहिले याद भएन । मोवाईलमा फेला परेको ANITA को नामको CQJPA7533F नम्बरको आयकर विभाग भारत सरकार स्थायी लेखा संख्या कार्ड भएको महिला को हुन अहिले याद गर्न सकिन । ण/९६ ९५८१७६ नम्बरको नेपाली रु.१० को नोटको फोटो मैले सुन किन्न तथा लिन

आउने मानिसले लियर आएको मलाई मेनेजर LIN वा SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले मेरो मोबाईलमा पठाएको नोट संग भिडाई नोटको नं. मिलेमा उक्त नोट लिई सुन लिन आएको मानिसलाई सुन हस्तान्तरण गरी मलाई प्राप्त भएको उल्लेखित नं. भएको नेपाली नोटको फोटो खिची चाईनामा मेनेजरहरुलाई चाईनामा पठाउन भनि खिचेको फोटो हो। ५०० दरका चिनिने २ बण्डल र अन्य नचिनिएका ३ वण्डल गरी कुल ५ वण्डल नोट वाँधिएको फोटो सुन बेच्दा लाजिम्पाटको सानो गल्लीमा प्राप्त भएको रु. ४० लाख रुपैया भएको २ वण्डल रु. ५०० दरको र ३ वण्डल रु. १००० दरका नोटका वण्डल हुन मैले उक्त रकमको फोटो चाईनामा रहेका मेनेजर SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई यति रकम प्राप्त भयो भनि फोटो पठाउन खिचेको फोटो हो। 111×५१×६८ CM लेखिएको कार्टुन १ थानको फोटो चाईनाबाट सुन पगाल्ने मेसिनको फोटो मेनेजर निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले पठाएको फोटो हो। 1 KILO Fine Gold 9999 समेत लेखिएको सुनका फोटो म भारत आउने क्रममा हङकङमा मैले बोकी ल्यएको सुनको फोटो हो जुन सुन सहित म भारत स्थित दिल्ली एयरपोर्टमा समातिएको थिए, उक्त फोटो मेरो We Chat सेभ भएको र पछी म भारतमा जेलबाट छुटेपछी मोबाईलमा डाउनलोड गरेको फोटो हो । तौलिदै गरेको सुनको विष्कुटको फोटो टोखामा सुन पगाली जोख्ने क्रममा खिचेको फोटो हो। कागजले र्या पिङ्ग गरेको वस्तुको फोटो के को थियो मलाई याद भएन। सिक्री लगाएको व्यक्तिको फोटो, जसको बाँया तर्फको तल्लो किनारामा mod Yadav लेखिएको व्यक्ति को हुन मैले अहिले याद गर्न सकिन । मैले प्रयोग गर्ने गरेको मोबाईलमा भएको स्क्रिनसटमा Yes Bank को A/C No. 051763400001708 नम्बरको १ थान चेक देखाउदा मैले हेरे उक्त चेकमा उल्लेखित Yes Bank को A/C No. 051763400001708 नम्बरको चेक मलाई भारतमा बस्दा RMB पैसा र भारतिय पैसा साट्ने क्रममा भारतमा मैले नचिनेका ब्यक्तीले दिएको खाली चेकको फोटो हो सो भन्दा मलाई अन्य याद छैन। मलाई देखाईएको मेरो मोबाईलमा भेटिएको कोरियन नागरिक DAEMYUNG CHUNG कोरियन राहदानी नं. M571F1085 राहदानीको फोटो मैले राजस्व अनुसन्धान बिभागले काठमाडौं सिनमंगलबाट सुन भएको ब्रेक प्याड समाते पछी भाग्ने क्रममा होटलमा बस्दा मेरो र ALI भन्ने LI Wen Tsung को नाम र चाईनिज पहिचान लुकाउन हाल कोरियामा बस्ने म भारत बस्दा चिनेका कोरियन नागरिक DAEMYUNG CHUNG नागरिक मेरो साथीलाई नेपालमा होटलमा बस्दा प्रहरीले चाईनिज नागरिक छ भने पछी चेकजाँच गर्छ तिमिले तिम्रो पासपोर्ट पठाईदिएमा प्रहरीले कोरियन नागरिक बसेको रहेछ भनेर हालीलाई चेक जाँच गर्दैन भनि निजले उल्लेखित नं. भएको राहादानी प्रयोग गरी काठमाडौं दक्षिणकाली आसपासको होटल लगायत ललितपुर पाटन एरियाको होटल बुक गर्दा उल्लेखित राहादानी प्रयोग गरी होटल बुक गरी लुकी बस्ने गरेको पासपोर्ट हो। राम बहादुर भुजेलको नाममा पवटी ईलेक्ट्रिक सप्लायर्स दर्ता गरेको प्रमाण पत्रको फोटो टाँसी भन्ने थुप्तिन छिरीङले कम्पनी दर्ता गराई मैले चिनमा रहेका मेनेजरहरुलाई फोटो खिची कम्पनीको कागजात पठाउँदा खिचेको फोटो हो। Saraswat Bank मा Mr. Gandi Rajendra Dharamshi Propritor of M/s Rai and Company ले Overdraft account No. ODPUB/014500100203839 maintain गरिएको व्यहोराको Commissioner of Customs लाई लेखेको पत्रको फोटो म भारत हुँदा खिचेको फोटो हो तर के कुन प्रयोजनको लागी के कुन ब्यक्ती संग प्राप्त गरी उक्त फोटो खिचेको थिएँ अहिले याद भएन। COCO Casino Waldo Dynasty मा काम गर्ने महिला हुन। मेरो मोबाईलमा भेटिएको COCO भन्नेसंग

भएको चिनिया भाषाको संवाद सहितको स्क्रिनसटमा भएको संबाद LAO LIU भन्ने ब्यक्ती संग COCO बिच भएको संबाद हो। उक्त सम्बादमा COCO ले आफुले सापटी दिएको पैसा फिर्ता मागको देखिन्छ र उक्त पैसा COCO पैसा Yao लाई दिनु पर्ने पैसा हो भनि मलाई दिनु पर्ने रु. १,२०,०००|– (एक लाख बिस हजार) हो भनि लेखिएको छ। निज COCO ले निज LAO LIU भन्ने ब्यक्तिलाई दैनिक २० हजार मलाई दिनुहोस भनि लेखिएको छ। Rolling Account ID 19281 को १ पेजको हिसाव सम्बन्धमा मैले COCO संग पैसा लिनु पर्ने थियो निजले निजले पैसा अहिले छैन भनिरहेकी थिईन। मैले निज COCO को Casino Waldo Dynasty मा रहेको Rolling Account ID 19281 मा कति पैसा रहेछ भनि हेरी उक्त समयमा खिचेको फोटो हो । मलाई देखाईएको मेरो मोबाईल फोनमा भेटिएको JAGADISH PRASAD PANDAY, NIRMAL KUMAR CHELARAM LAKHAMANI नामका बारकोड सहितका २ थान फारामका फोटो के प्रयोजनको लागी मैले फोटो खिची राखेको थिए मलाई अहिले याद भएन । मलाई स्क्रिन सटमा देखाईएको म संग वार्तालाप देखिएको Customs Clearance भन्ने व्यक्तिको Whatsapp Page मा निजको फोटो समेत देखिने पेज देखाईएको सम्बन्धमा मलाई के प्रसंगमा कुरा भएको हो याद भएन र Customs Clearance नाम राखि Save गरेको व्यक्ति को हुन मैले बर्सिए, अहिले खुलाउन सकिन । उनीसंग US Dollar, HK Dollar समेतको बारेमा वार्तालाप भएको भनिएको सम्बन्धमा बास्तविकता के थियो मैले अहिले खुलाउन सकिन। मलाई उक्त फोटो चाईनाबाट SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले Karry on Global Logistic Ltd. ले Dolakha Electric Suppliers Pvt.Ltd. को Consignment मा Shrink Wrapping Machine पठाउदाको 911212022 को Consignment को पठाएको सामानको बिबरण सहितको फोटो हो । उक्त फोटो नेपालमा सामन पैठारी गरी नेपालमा मलाई जानकारी दिने उद्देश्यले सो फोटो पठाएको हो । मैले Jewellery बेच्न चाहेको र Instagram ID 43466295702 ले तपाईको Instagram ID 51299031750 मा Namaste hajur भनी गहना किन्ने बेच्ने कुरा गरेको ठिक साँचो हो। मैले निज संग नेपालमा सुनको मूल्य बुझ्नको लागी निज संग Instagram मा कुरा गरेको हो। मेरो मोबाईलमा सुन तौलिदै गरेको फोटो मैले नेटबाट डाउनलोड गरेको फोटो हो। मैले काठमाडौंमा सुनको मूल्य बुझ्न उक्त फोटो डाउनलोड गरेको हो। मैले हाल सम्म सुनका गहना बनाएर बेच्ने गरेको छैन।मेरो मोबाईलमा भेटिएको Image मा Velas Bank-Exchange को Logo मा YOGI ENTERPRISE AC NO 401605002656 IFC र त्यसको तल Company Name-Rainbow Traders, Bank Name- IDBI bank, Branch- Nagpur Civil Lines, Account No- 0041102000045632, ISC-IBKL0000041 सम्बन्धमा म दिल्लीमा हुँदा चाईना देखी SHI QIANG ले मलाई उल्लेखित बिबरण पठाएका थिए। निज चाईनामा बिदेशी करेन्सीको कारोबार गर्ने मानिस भएकोले दिल्लीमा सवालमा उल्लेखित मानिहरु संग समन्बय गरी भारत र चिनको करेन्सी Exchange गर्ने गरी समन्बय गर्न मलाई उल्लेखित बिबरण पठाई मैले समन्वय गर्ने गरेको थिए। उक्त म्यासेज मलाई चाईमा रहेका SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) र भारतको दिल्लीमा बस्ने Golf खेल्ने मानिस बिचको सम्बादलाई स्क्रिनसट गरी मलाई निज भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले एठाएका हुन। निज मैले नचिनेको दिल्लीमा बस्ने मानिसले २ किलोबाट शुरू गरी hand to hand गरी पछी १० देखी २० किलो सुन सम्म लिने कुरा गरेको छ साँचै हो कि के हो मैले बुझ्नसकिन त्यो मानिस कस्तो हो सकिन्छ भने बुझ्न लागाउ भनि मलाई

पठाएको फोटो हो । उक्त मानिस संग मेरो सम्पर्क पनि भएन र दिल्लीमा रहेका मेरा साथिहरु मार्फत निजको बारेमा बुझ्न खोज्दा मैले निजको बारेमा पत्ता लगाउन सकिन ।उक्त स्क्रिनसट म भारत दिल्लीमा भएको बेलामा मलाई दिल्लीमा बसी बिदेशी करेन्सी Exchnage गर्ने मैले दिल्लीमा हुँदा चिनेको हाल मलाई नाम याद नभएको मानिसले मलाई स्क्रिनसट पठाएको हो । उक्त स्क्रिनसटमा 10ka 51n 339016 नं. भनेको भा.रु. १० को नोटको नं. हो र मैले नचिनेका Mob+919810634734 Partik g लाई भेटी ₹864800dl (भा.रु. ८ लाख ६४ हजार ८ सय) रुपैया उक्त 10ka 51n 339016 नं. भनेको भा.रु. १० भएको नोट दिई बुझी ल्याएको हो र मलाई काम लगाउने दिल्लीमा बसी बिदेशी करेन्सी Exchnage गर्ने मानिसलाई दिने गरेको रकम हो । उक्त रकम निज दिल्लीमा बसी बिदेशी करेन्सी Exchnage गर्ने मानिले सुन बेच्ने गरेको रकम हो । सुन कसले दिन्थे मलाई थाहा भएन मेरो काम पैसा उठाउने थियो । 5kg DL, Sajjad mo+917700805023 भनी २=84L.886208 को अर्थ 5kg DL भनेको ५ लाख भारु Sajjad mo+917700805023 संग लिने भनेको हो । २=84L.886208 भारू २ को नोटको नोट नं. हो उक्त नोट पैसा दिने मानिसलाई पैसा बुझ्को लागी प्रयोग गरेको हो । Sajjad पनि सुन किन्ने मानिस हुन । 100kg, 1=21F.614352Kb भनेको भा.रु. २ को नोट दिएर भा.रु. १० लाख लिने भन्ने अर्थ हो । उक्त Sajjad भन्ने मानिसलाई पनि मैले चिनेको छैन । उक्त मैले डिलेट गरेको स्क्रिनसटमा 1 lakh to 1.50 dt ready sir र 63300 matel rate sir, 1kg भएको स्क्रिनसट मलाई चाईनाबाट SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले सुन बेच्नु पुर्ब सुन बेच्ने मूल्य पर किलो 63300 USDT भनेको हो । Garve भन्ने मानिस भारतिय नागरिक हुन ।

४/५ महिना अगाडी अगाडी निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) संग सुन किन्ने बिषयमा कुराकानी भएको SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले मलाई पठाएको स्क्रिनसर्ट हो । मलाई निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) ले भने अनुसार निज Garve भन्ने मानिसले सुन किन्ने कुरा गर्यो तर सुन किनेन गफाडी रहेछ भनेर भनेका थिए । उक्त सम्बाद निज Garve र SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले बिच भएको सम्बादको मलाई निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले पठाएको स्क्रिनसर्ट हो । मलाई निज Garve भन्ने भारतिय मानिसले सुन किनेको जानकारीमा छैन । मैले चिनेको तर अहिले नाम याद नभएको भारतिय मानिस संग 2.8*1.58= 20.224 lakh Nepali rupees भनेको पैसाको हिसाब गरेको हो । निज भारतिय मानिस संग सुन बेचेको नगद रू २० लाख दिनु पर्ने थियो र निजले उक्त रकम aloft hotel अर्थात ठमेलमा रहेको छाँया सेन्टर होटलमा दिनु पर्नेमा निजले उक्त दिन पैसा दिएनन । हाल सम्म उक्त मानिसले पैसा दिएका छैनन र निज सम्पर्कमा पनि आएका छैनन । उक्त स्क्रिनसटमा भएको सम्बाद मैले कुरा गरेको होईन मैले उक्त सम्बाद सहितको चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG ले हेर त भारतमा बस्ने ईण्डियन मानिसले यसरी चाईनिज भाषामा १० मिलियन USDT तिमिलाई दिन सक्छु भनि ठुलो कुरा गरेको छ भनि निजले मलाई पठाएको स्क्रिन सर्ट फोटो हो । मैले उक्त म्यासेजमा भएको भारतिय मानिसलाई चिनेको छैन । मलाई निज चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG ले नै उक्त स्क्रिनसर्ट पठाएका हुन । मलाई भारत बस्दा नै निजले पठाएको फोटो हो । उक्त सम्बादमा भारतमा बसी भा.रु र USDT को काम गर्ने सम्बन्धमा निज चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG लेर दिल्लीमा भएका मैले चिनेका तर अहिले नाम याद नभएका MONEY EXCHANG

को काम गर्ने भारतिय मानिस बिच भएको सम्बाद हो । चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG लेर दिल्लीमा भएका मैले चिनेका तर अहिले नाम याद नभएका MONEY EXCHANG को काम गर्ने भारतिय मानिस बिच भएको सम्बाद हो । उक्त सम्बाद म दिल्लीमा हुँदा निज SHI QIANG ले स्क्रिनसर्ट पठाएका हुन । उक्त सम्बादमा भए अनुसारको कारोबार भए नभएको मलाई थाहा छैन । चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG लेर दिल्लीमा भएका मैले नचिनेका +917338659530 भारतिय मानिस बिच भएको सम्बाद हो । उक्त सम्बाद म दिल्लीमा हुँदा निज SHI QIANG ले स्क्रिनसर्ट पठाएका हुन । उक्त सम्बादमा भए अनुसारको कारोबार २ लाख भारु को कारोबार USDT जस्तो देखिन्छ । बास्तविकता के भएको थियो मलाई जानकारी भएन । उक्त मेरो मोबाईलमा भएको स्क्रिनसट मैले दिल्लीमा हुँदा सन २०२२।०५।१७ मा RMB १ लाख ६३ हजार ८ सय साटेको बेलाको स्क्रिनसट हो । उक्त पैसा मैले दिल्लीमा भएको २ वटा Money Exchange बिच पैसा साटिदिई कमिसन लिई काम गरेको पैसा हो । उक्त स्क्रिनसट सम्बन्धमा मलाई थाहा छैन । मेरो नाममा USDT खाता छैन । उक्त Crypto currency अन्तर्गतको USDT को खाता नं. TVu4J56Qx3FoVm3eR1ia4anHMoUdeRqgtN SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले मलाई पठाइको खाता हो । उक्त स्क्रिनसट मलाई निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले सुनको मूल्यको बारेमा मलाई जानकारि दिन पठाएको स्क्रिनसट हो ।

उक्त USDT का खाताहरु भएको स्क्रिनसट कसले मलाई पठाएको हो मलाई याद भएन र उल्लेखित स्क्रिनसटमा भएका USDT का खाता नं.हरु को कसको हो मलाई अहिले याद भएन । मलाई देखाईएको स्क्रिनसटमा USDT-TRC20 उल्लेख गरी 50,000.00 transfer भएको देखिन्छ उक्त स्क्रिनसट चाईनामा रहेका बिदेशी करेन्सी किन बेच गर्ने चाईनिज नागरिक SHI QIANG ले दिल्लीमा भएका मैले चिनेका तर अहिले नाम याद नभएका MONEY EXCHANG को काम गर्ने भारतिय मानिस बिच भएको कारोबारको स्क्रिनसट हो । उक्त कारोबार गर्न मैले निज दिल्लीमा भएका मैले चिनेका तर अहिले नाम याद नभएका MONEY EXCHANG को काम गर्ने मानिस संग निज SHI QIANG को आदेशमा मैले दिल्लीमा बसेर समन्वयको काम गर्ने गरेको हुँदा मलाई उक्त स्क्रिनसट निज SHI QIANG ले पठाएका हुन । उल्लेखित "Lao/old nanny s" लाई myacc भनी दिए अनुसार Crypto Currency Wallet address (TRX), TVu4J56Qx3FoVm3eR1ia$anHMoUDeRqgtN र Crypto Wallet address (ETH), ox2427a755573514784B2E05f9631CeDB687ac5c6 बाट कारोवार भएको Crypto Currency Wallet address हाल चाईनामा रहेका मेनेजर SAM भन्ने Zhong Jing Chuan ले मलाई टिपाउने गरेको USDT Account no. हो । मैले सुन बेच्दा पक्राउ प्रतिबादी सुमन खरेल लगायतका सुन किन्न आउने सुन ब्यापारीहरुलाई भुक्तानीको लागी उल्लेखित खाता नं. टिपाउने गरेको थिएँ । राजु मारवाडी दिल्लीमा बसी सुनको कारोबार गर्ने मानिस हुन । निज राजु मारवाडी र चाईनामा बस्ने मेनेजर SAM भन्ने Zhong Jing Chuan) बिच राम्रो सम्बन्ध छ । निज राजु मारवाडीलाई मैले हाल सम्म भेटेको छैन । निज राजु मारवाडीले दिल्लीमा बसी सुनको ठुलो कारोबार गर्दछन भनि मलाई निज मेनेजर SAM भन्ने Zhong Jing Chuan ले निज काठमाडौंमा हुँदा मलाई भनेका थिए ।

मलाई SAM भन्ने Zhong Jing Chuan ले राजु माडवारीले तिमिलाई भेट्ने गरी सुमन खरेल नाम गरेको मानिसलाई पठाउँछन । निज सुमन खरेल भन्ने नेपाली नागरिकले तिमिलाई WhatsApp मा फोन गरेमा भेटी कुरा गर्नु भने पछी निज सुमन खरेलले मलाई मेरो ९८२०२२०८२९ नं. मा निज सुमन खरेलको नं. ९८४७२६५३१५ बाट फोन गरी काठमाडौं ठमेलमा रहेको छाँया सेण्टर कम्पलेक्समा गई निजलाई मैले भेटेको हो । मलाई खर्चको लागी पैसा चाहिएको छ भनि मैले मेनेजर SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई भनेकोमा निज SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ)ले तिमिलाई राजु मारवाडीले रु. ८ लाख पठाईदिन्छन निज सुमन खरेलले तिमिलाई उक्त पैसा भेटेको बेलामा दिन्छ भनेका थिए । राजु मारवाडीले मलाई रु. ८,००,०००।– दिनु भनी पठाएको पैसा मैले निज सुमन खरेलसंगको भेटको क्रममा निजबाट लिएको हुँ । मैले निज शिव कुमार सरार्फलाई चिन्दिन । मैले निज सुमन खरेललाई QR Code दिई सुन बेच्न पठाउने गरेको हो र निजले उक्त QR Code सहितको खातामा पैसा आयो कि आएन भनि सोध्ने गरेकोमा मैले निज SAM भन्ने Zhong Jing Chuan लाई सोधी पैसा आयो भने पछी मैले निज सुमन खरेलाई पैसा आयो भनिदिन्थे । निज सुमन खरेलले पक्राउ पछिको भेटमा निज पक्राउ प्रतिबादी शिव कुमार सरार्फलाई तपाईबाट लिएको सुन बेच्ने गरेको थिए भनेपछी मात्र मलाई निज सुमन खरेलले मबाट लिई गएको सुन निज शिव कुमार सरार्फलाई बेच्ने गरेका रहेछन भनि थाहा पाएको हुँ । निज शिव कुमार सरार्फलाई निज पक्राउ पछी भेट भई मात्र चिनजान भएको हो । मैले टोखाको सुन बेचेको मानिसले सिधै चाईनाका बोस/मेनेजर LIN संग समन्वय गर्ने हुँदा मलाई कसरी सुनको मूल्य भुक्तानी हुन्छ थाहा भएन । निज मेनेजर SAM भन्ने Zhong Jing Chuan ले बेच्न लगाएको सुनको कहिले सिधै भुक्तानी भईसकेको छ भन्थे भने सुमन खरेल लगायतलाई सुन बेच्न पठाएकोमा निज SAM भन्ने Zhong Jing Chuan ले मलाई उपलब्ध गराएको QR Code दिई पठाई उक्त QR Code मा सुमन खरेल लगायतले सुनको मूल्य भुक्तानी गर्न लगाउथे । मेरो फोन नं. ९८२०२२०८२९ र निज सुमन खरेलको फोन नं. ९८४७२६५३१५ बिच १/२ पटक कुरा भएको भनिएको ठिक साँचो हो । सुन पगाल्न प्रयोग हुने क्यामिकल को नाम मलाई याद छैन । उक्त सुन पगाल्ने क्यामिकल (रासायनिक पदार्थ) सेतो धूलो र जर्किनमा एसिड जस्तो तरल पद्धार्थ हुन्छ । उक्त क्यामिकल कसरी प्राप्त हुने गरेको थियो मलाई थाहा छैन । उक्त क्यामिकल टोखामा मैले देख्दा प्रसस्त मात्रामा थियो । उक्त सुन पगाल्ने क्यामिकल कसले कसरी ल्याएको हो मलाई थाहा छैन । पक्राउ प्रतिबादीहरु बाहेक अन्य सुन अबैध पैठारी कसुरमा नेपाल बारेमा जानकार रहेका योजनाकार र मुख्य लगानी कर्ता मध्यको एक Wang Dao Jin र हाल चाईनामा बसी ब्यवस्थापकिय काम गर्ने मेनेजर मध्येका SAM भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) र चाइमा /हङकङमा बस्ने बोस/ मेनेजर भनि बोलाउने गरेका LIN, लाजिम्पाटमा बसी सुनको काम गर्ने ZHONG JIANG HUA(चोङ चेनह्वा), BING(पिङ), HUA (ह्वा) र केही समय अगाडि बुढानिलकण्ठमा बसी हाल नेपाल छोडि गएका भन्ने सुन्न आएका King भन्ने Peng Ling Feng (फङ लिङ फोङ) र निज King सँगै बसेका Axin भन्ने Peng YongXin समेतको संलग्नता रहेको भन्ने व्यहोराको वयान ।

म भारतमा रहेको समयमा एकिन नाम थाहा भएन एक जना चाईनिज नागरिकले मलाई पठाएका हुन तर मैले निजले भने अनुसार Crypto Currency सम्बन्धी काम गरेको छैन । एक बर्ष पहिलेको कुरा भएकोले मलाई एकिन जानकारी छैन् । मैले Sam भनि चिनेका चाईनिज नागरिकले मलाई एक्सचेन्ज दर

(सहटी दर) हेर्नको लागि भनि फोटो पठाएका थिएँ। तर मैले निजले भने अनुसार काम गरेको थिएन। उक्त स्क्रिन सट फोटोमा भएको कुराकानी मैले गरेको होईन। उल्लेखित (ETH): 0x2427a75557351478 B2E05f9631CeDB687ac5c6 आई.डी. मेरो होईन। को-कसले कहिले मलाई पठाएको भन्ने पनि मलाई एकिन जानकारी छैन्। मैले कारोबार गरेको होईन। मैले Crypto Currency कारोबार गरेको छैन्। मलाई एकिन नाम थाहा नभएका चाईनिज नागरिकहरुले पठाउने गरेका थिएँ तर मैले निजहरुको कुरालाई मतलव गर्ने गरेको थिएन। मैले Crypto Currency कारोबार गरेको देखिएमा कानून बमोजिम हुन मञ्जुर छु भन्ने समेत व्यहोराको प्रतिबादी चिनिया नागरिक ALEX भन्ने YAO PUCHENG को बयान।

म. **प्रतिबादी सुमन खरेलको बयान :**

प्रतिवादीहरु मध्ये चाईनिज नागरिक Alex भन्ने Yao Pucheng लाई आज भन्दा करिब ६/७ महिना अगाडीबाट चिनेको हुँ। मैले चाईनिज नागरिक Alex भन्ने Yao Pucheng लाई मोटे भनेर बोलाउने गरेको थिए। मेरो मामा गोपी ज्ञवालीको २०७२ साल सम्म का.जि. न्यूरोडमा कोरियन ब्ल्यान्केटको पसल, का.जि.ठमेलमा मनि एक्सचेज रहेको थियो। सो समयमा मैले मामाको ब्यवसायमा सहयोग गर्ने गरेको थिए। सो समयमा भारतिय नागरिक राजु मारवाडी मेरो मामा गोपी ज्ञवालीलाई भेटन पसलमा आईरहने गरेका थिए। सोही क्रममा मैले निज भारतिय नागरिक राजु मारवाडीलाई चिनेको थिए। निज राजु मारवाडीसँग मेरो Whatsapp मा कहिले काँही कुरा हुने गरेको थियो।

यस्तै कुरा हुने क्रममा आज भन्दा ६/७ महिना अगाडी मलाई भारतिय नागरिक राजु मारवाडीले Whatsapp मा फोन गरी नेपालमा रहेका एक जना चाईनिज नागरिकलाई मैले भारतिय रुपिया ८,००,०००|– (आठ लाख) दिनु पर्ने छ, निज चाईनिज नागरिकलाई तिमिले भेटेर नेपाली रु.८,००,०००|–(आठ लाख) देउ तिमीलाई म पछि दिउला भनी मलाई Alex भन्ने Yao Pucheng को नं.दिएका थिए। सो पश्चात मैले मेरो Whatsapp बाट Alex भन्ने Yao Pucheng लाई फोन गरी राजु मारवाडीले फोन मा बताएको कुराहरु भने पश्चात मलाई Alex भन्ने Yao Pucheng ले का.जि.ठमेल स्थित छाँया सेन्टरको कफी सपमा भेट्न बोलाए। सोही दिन दिउसो मैले मेरो सानिमा बैंकको खाताबाट रकम झिकी का.जि.ठमेल स्थित छाँया सेन्टरमा लगि Alex भन्ने Yao Pucheng लाई नगद रु.८,००,०००|- दिएको थिए। सो दिन निज Alex भन्ने Yao Pucheng लाई सो नगद रकम दिएर म फर्किएको थिए। केही दिन पश्चात Alex भन्ने Yao Pucheng र म बिच Whatsapp मा म्यासेज आदान प्रदान गरी कुराकानी हुन थाल्यो। Alex भन्ने Yao Pucheng ले अग्रेजीमा म्यासेज पठाउने गरेका थिए। मैले निज Alex भन्ने Yao Pucheng ले अग्रेजीमा लेखी पठाएको म्यासेजहरुलाई गुगल ट्रान्सलेट गरी पढी अग्रेजीमा लेखी म्यासेज पठाउने गरेको थिए। कुराकानी गर्ने क्रममा Alex भन्ने Yao Pucheng ले म सँग सुन छ, त्यो सुन बिक्री गरे पश्चात मलाई अमेरिकी डलरमा भुक्तानी दिनु पर्छ, सुन बिक्री गरी अमेरिकी डलरमा भुक्तानी दिन सक्ने भए म सँग काम गर्, सो सुन बिक्री गरे बापत प्रति केजी सुनको अमेरिकी डलर २०० कमिसन तिमिलाई आउँछ, काम गर्न सक्छौ भने म सँग काम गर्दा हुन्छ भनेका थिए। सो पश्चात मैले बुझेर खबर गर्छु भनेको थिए। सो पश्चात मैले बिगतमा न्युरोड, भुगोल पार्क नजिक चादी पसल संचालन गर्ने क्रममा चिनेका बारा घर भई सुन चाँदी ब्यवसायी संघमा आवद्ध रहेको शिव कुमार सर्राफ, शिव कुमार शर्राफ मार्फत चिनेको जिल्ला बारा घर भएका भोला साह सोनार, का.जि.चावहिलमा सुन रिफाईन पसल संचालन गरी बस्ने भारतिय नागरिक सन्दिप र न्युरोडमा पसलमा बस्दा चिनेको बम्बइया भन्ने

भारतिय नागरिकलाई Whatsapp मा फोन गरी मलाई चाईनिजले सुन दिन्छु भनेको छ, सो सुनको भुक्तानी अमेरिकी डलरमा दिनु पर्छ, नेपाली रकम दिएर हुदैन भनेको छ, तपाईहरु सुन लिई अमेरिकी डलरमा भुक्तानी गर्न सक्नु हुन्छ भनी सोध्दा निजहरुले एकपटकमा १ के जी सम्म सुन लिन सक्ने र सो सुनको अमेरिकी डलरमा भुक्तानी दिन सक्छु भने पश्चात मैले Alex भन्ने Yao Pucheng लाई म सुन बिक्री गर्न सक्छु भनी कुरा गरेको थिए। सो पश्चात करिब ४ दिन पछाडी मलाई Alex भन्ने Yao Pucheng ले का.जि.ठमेल छाँया सेन्टरमा भेट्न बोलाएका थिए। म निज लाई का.जि.ठमेल स्थित छाँया सेन्टरमा पुग्दा निज Alex भन्ने Yao Pucheng छाँया सेन्टरको गेटमा बसेका थिए। सो पश्चात मलाई छाँया सेन्टरको पार्किङमा लगी ७०० ग्रामको सुनको बिस्कुट कागजमा र्याप गरी दिएका थिए र सुनको रकम भुक्तानी गर्नको लागी रकम जम्मा गर्ने खाताको QR CODE सहितको BAR SCANER समेत मेरो Whatsapp मा हालिदिएका थिए। मैले सो सुनको बिस्कुट लिए पश्चात शिव कुमार सर्राफलाई Whatsapp फोन गरी का.जि.रातोपुलको नाम थाहा नभएको क्याफेमा शिव कुमार सर्राफलाई भेटी सो सुनको ७०० ग्रामको बिस्कुट देखाई सके पश्चात शिब कुमार सर्राफलाई Alex भन्ने Yao Pucheng ले पठाएको रकम जम्मा गर्ने खाताको डिजिटल वालेटको QR CODE सहितको BAR SCANER पठाईदिए। सो बारकोड निज शिव कुमार सर्राफले सोही स्थानबाट अन्य ब्यक्तिलाई पठाएर अमेरिकी डलर ५२,००० जम्मा गरिदिए पश्चात मैले लाई रकम जम्मा भएको हो भनी सोध्दा Alex भन्ने Yao Pucheng ले रकम जम्मा भयो भने पश्चात मैले सो सुन शिव कुमार सर्राफलाई दिएको हुँ। सो बापत मलाई १७० अमेरिकी डलर Alex भन्ने Yao Pucheng ले दिएका हुन्। निज शिव कुमार सर्राफले एकै पटक १ केजी सुन लिई सो बापत अमेरिकी डलर भुक्तानी गर्न नसक्ने भनेको कारण मैले सो कुरा Alex भन्ने Yao Pucheng लाई भनी ४०० ग्राम देखी ७०० ग्राम तौल सम्म भएका विभिन्न आकारका सुनको बिस्कुटहरु लिई १० पटक सम्ममा जम्मा करिब ७ किलो ग्राम सुन शिव कुमार सर्राफलाई काठमाडौंका विभिन्न स्थाहरुमा भेटी दिएको हुँ। निज शिव कुमार शर्राफले मागे अनुसारको ४०० ग्राम देखी ७०० ग्राम सम्मको टुक्राहरु १ पटकमा १ वटा देखी फरक फरक परिमाणको २ वटा सुनको टुक्राहरु समेत दिने गरेको दिए। मलाई याद भए सम्म का.जि.कालोपुल र रातोपुल स्थितमा चिया पसलमा भेटी दिएको हुँ। सो सुन बापतको भुक्तानी निज शिव कुमार सर्राफले Alex भन्ने Yao Pucheng ले दिएको डिजिटल वालेटको QR CODE सहितको BAR SCANER मार्फत भुक्तानी दिएका हुन। सो बापत मैले अमेरिकी डलर १४०० कमिसन पाएको हुँ। निज शिव कुमार सर्राफलाई २०८० सालको असारको पहिलो हप्ता सम्म सुन दिएको थिए। निज शिव कुमार सर्राफलाई कहिले एक हप्ता, कहिले १० दिनको ग्यापमा सुन दिने गरेको थिए। शिव कुमार सर्राफले सो दिनको प्रति के.जी सुनको बजार मूल्य निकाली कहिले प्रति के.जी.अमेरिकी डलर ६४,०००, कहिले अमेरिकी ६४,५०० बजार मूल्य अनुसार निज शिव कुमार सर्राफलाई दिएको सुनको परिमाण अनुसार हिसाब निकाली भुक्तानी दिने गरेका थिए।

भोला साह सोनार, शिव कुमार सर्राफ सँगै हिड्ने भएको हुँदा शिव कुमार सर्राफ मार्फत चिनेको हुँ। Alex भन्ने Yao Pucheng सँग सुनको बिस्कुट लिए निज भोला साह सोनारलाई मैले Whatsapp मा सम्पर्क गरी २०८० सालको असार महिनाको पहिलो हप्तामा का.जि. रातोपुल स्थित नाम थाहा नभएको चिया होटलमा १ के.जि.को सुनको बिस्कुट र असारको दोस्रो हप्तामा कालोपुल स्थित नाम थाहा नभएको चिया पसलमा १ के.जी.को सुनको बिस्कुट गरी जम्मा २ के.जी.को सुनको बिस्कुट दिएको थिए। निज भोला

साह सोनारले सो सुनको भुक्तानी  Alex भन्ने Yao Pucheng ले मलाई उपलब्ध  गराएको डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER अन्य ब्यक्तिलाई पठाई  Alex भन्ने Yao Pucheng ले पठाएको डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER बाट भुक्तानी भए पश्चात मैले Alex भन्ने Yao Pucheng लाई सम्पर्क गरी रकम जम्मा भएको एकिन गरे पश्चात निज भोला साह सोनारलाई दुई पटक गरी २ के.जी.सुनको बिस्कुट दिएको हुँ। सो बापत निज भोला साह सोनारले  सुनको सो दिनको बजार मूल्य अनुसार अमेरिकी डलरमा  हिसाब निकाली  प्रति के.जी. ६४,०००।–(चौसट्ठी हजार) अमेरिकी डलरको दरले  भुक्तानी गरेको  हो। सो २ के.जी सुन बिक्री गरे पाबत मैले अमेरिकी डलर ४००।– (चार सय) पाएको हुँ। सो रकम मलाई  ले नगदै दिएका हुन्।  मेरो मामाको न्युरोडमा रहेको होलसेल  पसलमा काम गर्ने समयमा २०७२ साल तिर निज भारतिय नागरिक सन्दिप सँग चिनजान भएको हो। निजको पुरा नाम थर थाहा छैन। निजको नाम सन्दिप भन्ने मात्र थाहा छ। निजसँग Whatsapp कुराकानी भई राख्थ्यो। निज  भारतिय नागरिक सन्दिपले का.जि.चावहिल चोकमा Refine Centre  संचालन गर्दै आईरहेको छ। निज भारतिय नागरिक सन्दिप लाई २०८० सालको बैशाखको अन्तिम  देखी असारको पहिलो हप्ता सम्म १० पटक गरी १० के.जी.सुनको बिस्कुट  Alex भन्ने Yao Pucheng सँग लिई मैले निज सन्दिपको का.जि.चावहिल नजिकै रहेको नाम थाहा नभएको चिया पसलमा लगी दिने गरेको थिए।  मलाई Alex भन्ने Yao Pucheng  ले दिएको डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER मैले सन्दिप लाई दिए पश्चात सन्दिपले सोही स्थानबाट सो डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER अन्य ब्यक्तिलाई पठाई रकम जम्मा भयो भने पश्चात मैले  Alex भन्ने Yao Pucheng लाई सम्पर्क गरी रकम जम्मा भएको एकिन भए पश्चात सुनको बिस्कुट दिने गरेको थिए।  निज  भारतिय नागरिक सन्दिपले सुनको सो दिनको बजार मूल्य निकाली सो रकम बराबरको अमेरिकी डलरमा भुक्तानी दिने गरेका थिए। कहिले प्रति के.जी. अमेरिकी डलर ६३,०००(त्रिसट्ठी हजार), कहिले ६४,०००(चौसट्ठी हजार ) भुक्तानी दिने गरेका थिए। सो बापत मलाई Alex भन्ने Yao Pucheng ले प्रति के.जि. अमेरिकी डलर २०० (दुई सय ) गरी जम्मा अमेरिकी डलर २,०००(दुई हजार) दिएका हुन्। भारतिय नागरिक बम्बइयालाई मैले न्युरोडमा मामाको  पसलमा काम गर्ने सिलसिलामा २०७२ साल तिर  चिनेको हुँ। भारतिय नागरिक बम्बइयालाई २०८० सालको बैशाख महिना देखी असार महिना सम्म पटक पटक गरी १० पटक सुनको बिस्कुट दिएको हुँ। एक पटकमा १ के.जी.को सुनको बिस्कुट दिने गरेको थिए। निज  भारतिय नागरिक बम्बइयालाई कहिले का.जि.चावहिल, कहिले का.जि.सुकेधारा स्थित चियापसलमा भेटी सो सुनको बिस्कुट दिने गरेको थिए। मलाई Alex भन्ने Yao Pucheng  ले दिएको डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER मैले बम्बइयालाई दिए पश्चात बम्बइयाले सोही स्थानबाट सो डिजिटल वालेटको QR CODE  सहितको BAR SCANER अन्य ब्यक्तिलाई पठाई रकम जम्मा भयो भने पश्चात मैले  Alex भन्ने Yao Pucheng लाई सम्पर्क गरी रकम जम्मा भएको एकिन भए पश्चात सुनको बिस्कुट दिने गरेको थिए।  निज  भारतिय नागरिक बम्बइयालाई ले सुनको सो दिनको बजार मूल्य निकाली सो रकम बराबरको अमेरिकी डलरमा भुक्तानी दिने गरेका थिए। कहिले प्रति के.जी. अमेरिकी डलर ६३,०००(त्रिसट्ठी हजार), कहिले ६४,०००(चौसट्ठी हजार) भुक्तानी दिने गरेका थिए। सो बापत मलाई Alex भन्ने Yao Pucheng ले प्रति के.जि. अमेरिकी डलर २०० (दुई सय ) गरी जम्मा अमेरिकी डलर २,००० (दुई हजार) दिएका हुन्। मैले Alex भन्ने Yao Pucheng सँग २०७९ सालको चैत्र महिनादेखी २०८० सालको

असार २०/२१ गते सम्म सुन लिई बिक्री गरेको हो। मैले Alex भन्ने Yao Pucheng लाई का.जि.ठमेलको छायाँ सेन्टरमा भेटी ४ पटक, का.जि.पानिपोखरी जापानिज एम्बेसी अगाडीको सडकमा भेटी १ पटक, का.जि.चक्रपथको भाटभटेनीमा भेटी २ पटक, का.जि.धुम्बराहीको निज ALEX भन्ने YAO PUCHENG बस्ने अपार्टमेन्टबाट ३ पटक,गाण्डी हस्पिटलमा १ पटक भेटी कहिले १ के.जी.,कहिले २ के.जी को बिस्कुट कागजमा र्याप गरि लिने गरेको थिए। मैले जम्मा २९ के.जि.सुनको बिस्कुट निज Alex भन्ने Yao Pucheng सँग लिई बिक्री गरेको हुँ। म Alex भन्ने Yao Pucheng सँग सुनको बिस्कुट लिए पश्चात कहिले ट्याक्सीमा कहिले पठाओ मोटरसाईकलमा चढी सम्वन्धित स्थानमा जाने गरेको थिए। सो मलाई बिक्री गर्न दिएको सुनको परिमाण Alex भन्ने Yao Pucheng ले लेखेर दिने गरेका थिए। बिक्री गर्ने समयमा परिमाण जोख्ने गरेको थिएन। राजस्व अनुसन्धान विभागले त्रिभुवन अन्तराष्ट्रिय बिमानस्थलबाट ब्रेक प्याडमा अबैध सुन लुकाई ल्याएको भनी अबैध सुन लुकाई ल्याएको ब्रेक प्याड नियन्त्रणमा लिनु भन्दा दुई दिन अगाडी मलाई Yao Pucheng ले Whatsapp मा म्यासेज गरी कार्गो अफिसमा कोही चिनेको छ भनी सोधेका थिए। मैले चिनेको छैन भनी जवाफ दिए। मैले निज Alex भन्ने Yao Pucheng लाई सुन एयरपोर्टबाट ल्याउने गरेको हो भनी सोध्दा निज Alex भन्ने Yao Pucheng ले कुनै जवाफ दिएनन्। निज Alex भन्ने Yao Pucheng र म बिच कुराकानी भएको दुई दिन पछाडी राजस्व अनुसन्धान विभागले त्रिभुवन अन्तराष्ट्रिय बिमानस्थलबाट ब्रेक प्याडमा अबैध सुन लुकाई ल्याएको भनी सो सुन भएको ब्रेक प्याड नियन्त्रणमा लिएको कुरा अनलाईन समाचारहरुबाट थाहा पाएको हुँ।

सो समाचार आए पश्चात मैले Alex भन्ने Yao Pucheng लाई Whatsapp मा सम्पर्क गर्न खोज्दा सम्पर्क नभए पश्चात मलाई समेत पक्राउ गर्ने डरले भारत तिर गएको हुँ। मलाई ब्रेक प्याडमा अबैध सुन लुकाई ल्याएको सम्वन्धमा केही थाहा छैन। निज Alex भन्ने Yao Pucheng ले के कसरी अबैध सुन नेपाल भित्राउथे मलाई थाहा छैन। मैले Alex भन्ने Yao Pucheng सँग काठमाडौंका बिभिन्न स्थानहरु ठमेलको छाँया सेन्टर, पटक पटक भेट गरी जम्मा २९ किलो सुनको बिस्कुट लिई बिक्री गरेको हुँ। के कति कारणले निज Alex भन्ने Yao Pucheng ले मैले ३० के.जी.सुनको बिस्कुट लिए भनी खुलाए मलाई थाहा छैन। मैले Sam भन्ने Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) लाई चिनेको छैन। मैले Alex भन्ने Yao Pucheng सँग सुनको बिस्कुट लिएर गए पश्चात Alex भन्ने Yao Pucheng ले पठाएको डिजिटल वालेटको Qr Code सहितको Bar Scaner सुनको बिस्कुट बिक्री गरेको शिव कुमार सर्राफ समेतलाई पठाई दिई सो डिजिटल वालेटको Qr Code सहितको Bar Scaner बाट सम्वन्धित खातामा रकम जम्मा भयो भएन भनी Alex भन्ने Yao Pucheng लाई सम्पर्क गरी रकम जम्मा भएको एकिन भए पश्चात सुन दिने गरेको थिए। Alex भन्ने Yao Pucheng ले पठाएको डिजिटल वालेटको Qr Code सहितको Bar Scaner बाट के कुन देशको के कुन बैकमा रहेको के कसको खातामा रकम जम्मा हुने गरेको थियो। मलाई थाहा छैन। मैले सो खाता कुन देशको कुन बैंकको के कसको खाता हो भनेर कहिले पनि निज Alex भन्ने Yao Pucheng लाई सोधिन।

Alex भन्ने Yao Pucheng ले के कसरी सुन नेपाल भित्राउथे मलाई थाहा छैन। Alex भन्ने Yao Pucheng ले मलाई बिक्री गर्न दिएका सुनका बिस्कुटहरु मोबाईल आकारका थिए। सो सुनका बिस्कुटहरुमा कुनै लोगो, चिन्ह थिएन। सो सुनका बिस्कुट बनाउन सुन गाल्ने तथा पगाल्ने मेसिन सहितको प्याक्ट्री के कहाँ रहेको थियो, मलाई केही थाहा छैन। मलाई Alex भन्ने Yao Pucheng ले सुनको बिस्कुट मात्र दिने गरेको

थियो । मैले के कँहा बनाएको भनेर सोध्ने गरेको पनि थिईन । निज शिव कुमार सर्राफ र म बिच प्राय:सधै Whatsapp मा कुराकानी हुने गरेको थियो । मेरो मोबाईल नं. ९८४७२६५३१५ र शिव कुमार सर्राफको मोबाईल नं. ९८४५०३७३५१ बाट हामीले सुन बिक्री गर्ने बिषयमा कुराकानी गरेका हौ । भोला साह सोनार र म बिच प्राय:सधै Whatsapp मा कुराकानी हुने गरेको थियो । मेरो मोबाईल नं. ९८४७२६५३१५ बाट भोला साह सोनारको मोबाईल नं. ९८०७२६६४४० मा मैले सुन बिक्री गर्ने कुरा गर्न फोन गरेको थिए । मैले राकेश सिंहलाई न्युरोडमा पसलमा काम गर्ने सिलसिलामा चिनेको हुँ । निज भारतिय नागरिक हुन् । निजसँग मेरो Whatsapp मा सम्पर्क हुने गरेको छ । निज राकेश सिंहको Whatsapp नं.९८०२९१७९२१ हो । निज राकेश सिंहले ICIC(916203955712) बाट समेत Whatsapp मा मलाई फोन गर्ने गरेका थिए । निज राकेश सिंहले भारतमा कसैलाई भारतिय रुपिया चाहिएमा दिने गरेको थियो । सो बापत सो नेपालमा नेपाली रुपैया लिने गरेका छन् । निज राकेश सिंहलाई मैले भारतमा कसैलाई भारतिय रुपिया दिनु पर्दा निज राकेश सिंहलाई भनी दिने गरेको सो बापतको नेपाली रकम निज राकेश सिंहको मानिसहरुलाई नेपालमा दिने गरेको थिए । मैले निज राकेश सिंहलाई सुनको बिस्कुट बिक्री गरेको छैन तर मैले शिव कुमार सर्राफ र भोला साह सुनारलाई सुनको बिस्कुट बिक्री गरे पश्चात सुन बापतको रकम भुक्तानी गरेको Ali Pay(china) को स्लिपहरुको फोटो निज राकेश सिंहले निजको Whatsapp बाट मेरो Whatsapp मा पठाउने गरेका थिए । सो Ali Pay(china) बाट रकम भुक्तानी गरेको भौचरको फोटो मैले Alex भन्ने Alex भन्ने Yao Pucheng लाई पठाउने गरेको थिए । मेरो IPhone11 मोबाईल र सो मोबाईल फोनमा प्रयोग भएको मोबाईल नं.९८४७२६५३१५ समेत का.जि.टोखा तलको बिष्णुमती खोलामा फुटाई फाल्दिएको हुँ । मैले Alex भन्ने Yao Pucheng सँग सुनको बिस्कुट लिई शिव कुमार सर्राफ र भोला साह सोनारलाई सुन बिक्री गरे बापतको रकम Ali Pay (China) मा चाईनिज रकम (RMB) बाट भुक्तानी गरी सो भुक्तानी भएको माथि उल्लेखित स्लिपहरुको फोटो मेरो Whatsapp मा राकेश सिंहले निजको Whatsapp बाट पठाएको हुन् । सो Ali Pay(China) बाट रकम भुक्तानी भएको फोटो राकेश सिंहले मलाई पठाए पश्चात मैले Alex भन्ने Yao Pucheng लाई पठाउने गरेको थिए । मलाई Alex भन्ने Yao Pucheng ले Digital Bar Code भएको Scanner दिएको, सो Scanner चाईनिज भाषामा भएको कारण मैले भाषा नबुझेको र रकम प्राप्त भएको कुरा Alex भन्ने Yao Pucheng ले एकिन गर्ने भएको हुँदा मलाई सुन बिक्री भए पश्चात चाईनिज रकम (RMB) मा भुक्तानी भएको की अमेरिकी डलरमा भुक्तानी भयो भन्ने कुरा थाहा भएन भन्ने समेत व्यहोराको प्रतिबादी सुमन खरेलको बयान ।

य. **शंकित व्यक्ति भन्सार अधिकृत पुष्पा जोशीको बयान :**

त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयमा भन्सार अधिकृतको रुपमा मिति २०७८ साउन देखि २०८० असार ३२ गते चक्रिय प्रणाली अनुसार यात्रु शाखा अन्तर्गत यात्रु जाँचपास शाखामा ६ (छ) दिन उक्त शाखामा रहि यात्रु जाँचपास हुँदा यात्रुलाई सहजीकरण गर्ने र यात्रुले राजश्व तिर्नुपर्ने मालवस्तु ल्याएमा राजस्व असुल गर्ने गराउने, भन्सार सम्बन्धी जानकारी लिन आउने यात्रुलाई सम्पुर्ण जानकारी दिने, ऐन कानुनले तोकिएको भन्दा बढीको मालवस्तु तथा अवैध मालवस्तु ल्याएमा जफत गरी आवश्यक कारवाही अगाडी बढाउने र मान्छे नै पक्राउ गर्नुपर्ने अवस्थामा पक्राउ गरी मुद्दा शाखामा पठाउने लगायत अन्य प्रशासन कार्य समेत र २ (दुई) दिन कार्गो भवनमा तोकिएको नियमानुसार मालवस्तु जाँचपास गर्ने गरेकोमा हाल मिति २०८०/०४/०१ गते देखि जोखिम नियन्त्रण तथा अनुपालन शाखामा रहि घोषणा अनुसारको मालवस्तुको

दरबन्दी ठिक छ/छैन, भाडा बीमा मूल्याङ्कन कागजात अनुसार राखिएको छ/छैन कुनै मालवस्तुको बिजकमा भएको मूल्य कम छ/छैन । भन्सार मुल्यांङकनसँगको मूल्य अनुसार छ/छैन हेरी नपुगेको भएमा सम्बन्धित अफिसरलाई जानकारी गराउने, दरबन्दी फरक परेमा सच्याउन लगाउने रविभागमा रहेको WAN (Wide Area Network) शाखाबाट निर्देशित भएका विषयहरु सम्बन्धित कर्मचारीहरुलाई जानकारी गराउने लगायत कार्यहरु लगायत मालवस्तु जाँचपासलाई सहजीकरणलाई सहयोग पुर्याउने लगायतको जिम्मेवारी तथा काम हो ।

त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयमा कार्यरत कर्मचारीहरुलाई चार वटा समूहमा विभाजन गरी सिफ्ट अनुसार यात्रु शाखा अन्तर्गत यात्रु जाँचपासमा ६ (छ) दिन र २ (दुई) दिन कार्गो मालवस्तु जाँच पासमा खटाईएको हुन्छ । विदेशबाट कार्गो Air माध्यमबाट आएकोमा सम्बन्धित Airlines कम्पनीहरुले उक्त सामान र कागजपत्र त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा नेपाल पारवाहन तथा गोदाम व्यवस्थापन कं.लि. लाई जिम्मा लगाई उक्त कम्पनीले सम्पूर्ण कार्गोहरूलाई त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालय भित्र रहेको गोदाममा भण्डारण गरी राख्दछ । कार्गो/कुरीयर सेवा प्रदायक संस्थाहरूले Airway Bill को आधारमा Delivery Order जारी गर्छ । उक्त Delivery Order को आधारमा सामान छुटाउन खटिएको भन्सार एजेन्टले सामानको नाम, तौल, संख्या, Plane भाडा तथा लागेका चार्ज लगायतका विवरण खुलाएर सामानअनुसारMaster Airway Bill/House Airway Bill सहित खुलाएर नेपाल पारवाहन तथा गोदाम व्यवस्थापन क.लि. मा कागजात पेश गरेपछी भन्सार एजेन्टले जाँचपास गर्नु पर्ने मालवस्तुको कागजातहरु Online मार्फत आशिकुडा सिष्टममा रजिष्ट्र गरी प्रज्ञापन पत्र नम्बर लिई सोही दिन जाँचपासमा खटिएका कर्मचारीहरुबाट तोक लगाई गोदामबाट सामानहरु निकालेपछि मात्र जाँचपासको प्रक्रिया सुरु हुन्छ । यसरी तोक लागि सकेका प्रज्ञापनपत्रहरुमा LAN(Local Area Network) शाखाबाट दरबन्दी, भाडा बीमा, मूल्य ठिक छ/छैन? हेर्ने काम गरी कुनै कैफियत देखिन आएमा सम्बन्धित कर्मचारीलाई जानकारी गराउने काम हुने गर्दछ । यसरी भन्सार एजेन्टले प्रज्ञापन पत्र दर्ता गर्दा सामानको मूल्य US डलर ५०० भन्दा बढी भए अनिवार्य रुपमा भुक्तानीको Terms/Mode of payment समेत खुलाउँछ । त्यसपछी आशिकुडा सिष्टमले कामको चापको आधारमा १ जना जाँचकी र १ जना भन्सार अधिकृत तोकिदिन्छ ।

जोखिम नियन्त्रण तथा अनुपालन शाखा(LAN): जोखिम व्यवस्थापन शाखा (LAN) भन्सार एजेन्टले प्रज्ञापन पत्र सिष्टममा दर्ता गरे देखी अन्तिम सिष्टममा Green नभएसम्म पेश तथा तयार भएका सम्पूर्ण कागजपत्रहरू अध्ययन गरीरहेको हुन्छ । यदी कुनै पनि चरणमा शंका लागेमा सिष्टममा लक गर्ने वा Query मा राख्न सक्छ । यदी लक गरेमा वा Query मा राखेमा सो गर्ने जोखिम नियन्त्रण तथा अनुपालन शाखा(LAN) का कर्मचारीसँग समन्वय गरी लक वा Query मा राख्नुको कारण सोधी आवश्यक समन्वय गरी सोही अनुसारको आवश्यक प्रकृया वा कागजात पुर्याई अन लक गरिन्छ । कहिले काँही जोखिमनियत्रण तथा अनुपालन शाखा (LAN)ले Green भईसकेको प्रज्ञापन पत्रलाई पनि Re-check गराउन सक्छ । मिति २०८०।०४।०१ गतेबाट जोखिम नियन्त्रण तथा अनुपालन शाखा (LAN) शाखामा अनलाईन मनिटररिङको जिम्मेवारी प्राप्त गरी सोही शाखामा कार्यरत रहेको थिए । दैनिक ४/५ सय प्रज्ञापन पत्र रजिष्ट्रर हुने र यसरी दैनिक ठूलो संख्यामा दर्ता भएका प्रज्ञापनहरु एक/एक गरी हेर्न समेत नभ्याईने एउटा प्रज्ञानपत्र हेर्नको लागि कम्तिमा पनि आधा घण्टा समय लाग्ने भएको र अन्य सम्बन्धित कर्मचारीहरुलाई पनि मालवस्तुमा शंका लागेमा जानकारी गराउने व्यवस्था रहेको तर उक्त दिन सो रेडी ट्रेड प्रा.लि.को नाममा वि.सं. २०८०।०४।०२

गतेको मितिमा जारी भएको प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३बाट SHAVER सेट ८० थान सामानहरू ASYCUDA प्रणालीमा हेर्दा कुनै कैफियत नदेखिएकोले लक तथा Query गरिएन । भन्सार कार्यालयमा दैनिक प्राय: जसो ४/५ सय मालवस्तु जाँचपासको लागि प्रज्ञापन रजिष्ट्रर हुने गरेकोले सिमित कर्मचारीले सबै प्रज्ञापन खोली अनलाईन मनिटरिङ गर्न असम्भव भएको, सो दिन X-Ray शाखाबाट उक्त मालवस्तुमा RC लेखेतापनि सो सम्बन्धमा कुनै जानकारी नगराईएको र सम्बन्धित जाँचकी र तोक लागेको भन्सार अधिकृत समेतले उक्त मालवस्तुमा कुनै कैफियत उल्लेख नगरेको हुँदा मलाई जानकारी भएन।

उल्लेखित मालवस्तुहरू मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान विभाग हरीहरभवन, ललितपुरबाट त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउबाट नियन्त्रणमा लिई सो ब्रेक प्याड आकारको सामान मिति २०८०।०४।०३ गते भन्सार विभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा 99.55%सम्म सुन रहेको देखिन आएको भन्ने सम्बन्धमा मिति २०८०।०४।०३ गते बेलुका सञ्चार माध्यमहरुबाट समाचार पढेपछी थाहा पाएको हुँ । उल्लेखित मालवस्तुबाट सुन पकाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको भन्ने समेत सञ्चार माध्यमबाट नै सुनी हेरी थाहा पाएको हुँ।

सम्बन्धित कर्मचारीहरुले उक्त प्रज्ञापन पत्रमा ऊल्लेखित सामान जाँच पास गर्ने क्रममा कुनै कैफियत आएको थिएन। उल्लेखित BRAKE PADS मा सुन भएको कुरा थाहा नभई BRAKE PADS नै भनि राजस्व असुलि गरी नियमित प्रकृया पुरा गरी मालवस्तु जाँचपास गरेको हो। मैले कोही उल्लेखित प्रतिबादी लगायत अन्य मानिसहरूसँग मिलि संगठित भई अनाधिकृत रुपमा व्यक्तिगत स्वार्थ र फाईदा हुने गरी अवैध सुन पैठारी गर्न परिपञ्च मिलाइएको छैन र होईन । भन्सार ऐन २०६४ को दफा २८ मा जाँचपास गर्ने तरिका, जाँचपास गर्ने जिम्मेवारी उल्लेख गरिएको छ। मालवस्तुको X-Ray स्क्यानिङ गर्दा उक्त मालवस्तुको ईमेज X-ray मा क्लियर नआएमा र मालवस्तु यहीनै हो भनि एकिन गर्न नसकेमा X-Ray मा खटिएको कर्मचारीले RC लेख्ने गर्दछ। प्राय गरी मोटर पार्टस, ब्याट्री भएका मालवस्तु, पानी तान्ने मोटर लगायतका मालवस्तुमा सामान्यतया RC लेख्ने गरेको पाईन्छ। RC लेखेको मालवस्तुमा जाँचकीले भौतिक परीक्षण गर्दा शंका लागेमा उक्त मालवस्तु पुनः X-Ray गर्न सक्छ, सो गर्दा पनि मालवस्तु यही नै हो भनि एकिन हुन नसकेमा आशिकुडा सिस्टममा विवरण खुलाई कैफियत लेख्न सकिने व्यवस्था छ। भन्सार अधिकृतलाई समेत मौखिक रुपमा RC लेखेको जानकारी दिनु पर्छ।

उक्त प्रज्ञापनपत्रको तोक लागेपछि जुन जाँचकीलाई तोक लागेको छ उक्त जाँचकीले उक्त प्रज्ञापनपत्रका मालवस्तु भौतिक परीक्षण गर्ने र उक्त मालवस्तु घोषणा बमोजिम भए नभएको र परिमाण पनि एकिन गर्नुपर्छ। यसरी जाँचपासको क्रममा मालवस्तुमा शंका लागेमा आवश्यकता अनुसार घोषणा भएका मालवस्तुको भौतिक परीक्षण गरि उक्त मालवस्तुको ब्राण्ड, मोडेल, साईज, स्पेसिफिकेसन उक्त मालवस्तु के-बाट बनेको मालवस्तु हो जस्तैः फलाम, रवर, प्लाष्टिक यकिन गर्नलाई मालवस्तुलाई च्याती, घोटी हेर्ने गरिन्छ । त्यसपछि उक्त प्रज्ञापनपत्र मूल्याङ्कन प्रक्रियामा जाने गर्दछ । उक्त मालवस्तुमा RC लेखिएको भन्ने प्रत्यक्ष जाँचपासमा संलग्न कर्मचारीहरुबाट कुनै जानकारी तथा सुचना नदिएकोले उक्त मालवस्तुमा Query र Lock नगरिएको हो यसमा मेरो कुनै संलग्नता रहेको छैन । LAN शाखाको काम र जिम्मेवारी अन्तर्गत मालवस्तु पैठारी गर्ने

कम्पनीले मालवस्तुको घोषणा गरेपश्चात दरबन्दी ठिक छ/छैन, कारोवार मूल्य सही घोषणा गरेको छ/छैन, बिजक अनुसारको मूल्य पुगेको छ/छैन भनि हेर्ने र कैफियत देखिएमा सम्बन्धित जाँचपास अधिकारीलाई जानकारी गराउने रहन्छ । मिति २०८०/०४/०१ गते म र ना.सु. कमल परियारले उक्त शाखाको जिम्मेवारी पाएको हुँदा हामी दुई जनाले मात्र सबै प्रज्ञापन पत्रहरु खोली हेर्न समेत नभ्याईएको र उक्त शाखामा पहिले देखि कार्यरत भन्सार अधिकृत शंकर त्रिपाठीले हामीलाई समन्वय नगरेको हुँदा तत्कालै के कसो गर्ने हो भनि अनभिज्ञ समेत हुन गएको हो।

म जोखिम नियन्त्रण तथा अनुपालन शाखा (LAN) मा भन्सार अधिकृत र ना.सु. मा मसँगै पक्राउ परि आएका कमल परियार गरी दुई जना मिति २०८०/०४/०१ गतेबाट नियुक्ति पाई खटि आएकोले लेटर अफ क्रेडिट (LC) नखोली किन उस्तै प्रकारका मालवस्तु पटक पटक दोहोरिएर आईरहेका छन् र US डलर ५०० (पाँच सय) भन्दा कम गरी पटक पटक एउटै प्रकृतिको सामान आई रहेकोमा सो सम्बन्धमा विस्तृत रुपमा बुझ्न नसकिएको र पुर्व कर्मचारीबाट समेत यस विषयमा कुनै प्रकारको कैफियतको विषयमा जानकारी नगराईएको, कैफियत सम्बन्धमा कुनै प्रकारको जानकारी प्राप्त हुन नसकेकोले सम्बन्धित निकायमा रिपोर्टिङ गर्न सकिएन भन्ने समेत व्यहोराको शंकित व्यक्ति भन्सार अधिकृत पुष्पा जोशीको बयान।

र. **<u>शंकित व्यक्ति नायव सुब्बा कमल परियारको बयान :</u>**

म त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयमा मिति २०७६ साल मंसिर १० गते हाजिर भई यात्रु सहजीकरण समेतका बिभिन्न शाखामा काम गरि मिति २०८०।०४।०१ गते देखी भन्सार कार्यालयको जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखामा कार्यरत छु। त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयको जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखामा सहायक कर्मचारीको रुपमा रही भन्सार जाँचपासको आशिकुडा प्रणाली (अनलाईन सफ्टवेयर) मा कार्गो मार्फत सामान आयात तथा निर्यात गरेका ब्यक्ति तथा कम्पनीले आशिकुडा प्रणाली (अनलाईन सफ्टवेयर) मा प्रविष्ट गरेको प्रज्ञापन पत्र अनलाईन मार्फत सिस्टममा नै हेरी, नियमानुसार पेश संलग्न गरनु पर्ने कागजातहरु पेश भएको छ,छैन, मालवस्तुको भन्सार उप शीर्षक सही घोषणा गरे गरेनन्, तिर्नु पर्ने राजस्व तिरेको छ, छैन भनि आफु भन्दा माथिको सोही शाखाको भन्सार अधिकृतलाई सहयोग गर्ने हो । सो वाहेक शाखाको अन्य प्रशासनिक कामहरु समेत शाखा अधिकृतको निर्देशनमा गर्दै आईरहेको छु। त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा बिदेशबाट कार्गो Air माध्यमबाट आएकोमा सम्बन्धित Airlines कम्पनीहरुले उक्त सामन र कागजपत्र त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थलमा नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन कं.लि. लाई जिम्मा लगाई उक्त कम्पनीले सम्पूर्ण कार्गोहरूलाई त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालय भित्र रहेको गोदाममा भण्डारण गरी राख्दछ । कार्गो/कुरीयर सेवा प्रदायक संस्थाहरूले Airway Bill को आधारमा Delivery Order जारी गर्छ । उक्त Delivery Order को आधारमा सामान छुटाउन खटिएको भन्सार एजेन्टले सामानको नाम, तौल, संख्या, Plane भाडा तथा लागेका चार्ज लगायतका बिबरण खुलाएर सामान अनुसार Master Airway Bill/House Airway Bill सहित खुलाएर नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन क.लि. मा कागजात पेश गरेपछी भन्सार एजेन्टले भन्सार प्रज्ञापन पत्र समेत अनलाईन मार्फत आशिकुडा सिष्टममा दर्ता गर्छ।यसरी भन्सार एजेन्टले प्रज्ञापन पत्र दर्ता गर्दा सामानको मूल्य US डलर ५०० भन्दा बढी भए अनिबार्य रुपमा भुक्तानीको Terms/Mode of payment

समेत खुलाउनु पर्छ। त्यस पछी आशिकुडा सिष्टमले नै स्वचालित प्रणालीमा कामको चापको आधारमा १ जना जाँचकी र १ जना भन्सार अधिकृत तोकिदिन्छ।

जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखा; जोखिम नियन्त्रण तथा अनुपालन (LAN) ले भन्सार एजेन्टले प्रज्ञापन पत्र अनलाईन मार्फत आशिकुडा सिष्टममा दर्ता गरे देखी सिष्टममा Green नभएसम्म पेश तथा तयार भएका सम्पूर्ण कागजपत्रहरू अनलाईन आशिकुडा प्रणालीबाट अध्ययन गरिरहेको हुन्छ। यदी कुनै पनि चरणमा शंका लागेमा सिष्टममा लक गर्ने वा Query मा राख्न सक्छ। यदी लक गरेमा वा Query मा राखेमा सो गर्ने जोखिम नियन्त्रण तथा अनुपालन (LAN) का कर्मचारीसँग समन्वय गरी लक वा Query मा राख्नुको कारण सोधी आवश्यक समन्वय गरी सोही अनुसारको आवश्यक प्रकृया वा कागजात पुर्याई अन लक गरिन्छ। कहिले काँही जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखाले Green भईसकेको प्रज्ञापन पत्रलाई पनि प्रमुख भन्सार प्रशासकको लिखित आदेश भएमा Re-check गराउन सक्छ।

मिति २०८०।०४।०२ गते बिहान १० बजे देखी १७:०० बजे सम्म म त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालय अन्तर्गत कार्गो भवनको जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखामा सहायक कर्मचारीको रुपमा खटिएको थिएँ । मिति २०८०।०४।०२ गते त्रि.वि.भन्सार कार्यालयको जोखिम नियन्त्रण तथा अनुपालन शाखामा सहायक कर्मचारीको रुपमा कार्यरत रही उल्लेखित प्रज्ञापन नम्बरहरु M३५०७९ र M३५१०३ मा पेश गरिएका कागजातहरु अनलाईन मार्फत सबै चेक जाँच गर्दा सबै कागजाहरु ठिक रहेको, वाणिज्य आपुर्ती मन्त्रलयको सूचना अनुसार अमेरिकी डलर ५०० सम्मको मालवस्तु आयात गर्दा पैठारीकर्ताले निकासीकर्तालाई मालवस्तु खरिद गरे वापतको बैंकिङ च्यानल मार्फत रकम भुक्तानी गरेको कागजात आवश्यक नपर्ने भएकोले उल्लेखित मालवस्तुहर अमेरिकी डलर ५०० भन्दा कमको भएको भनि पेश गरेको बिजक तथा प्रज्ञापन पत्रमा देखिएको, भन्सार विभागले जारी गरेको सन्दर्भ मूल्यसुची अनुसार मूल्य पुगेको, भन्सार उप शिर्षक अनुसार नै मालवस्तु वर्गीकरण गरेको पाईएको, मालवस्तुको भौतिक जाँचपास गर्ने कार्यमा खटिएका कर्मचारीहरुले कुनै कैफियत नगरी सिलसिलेवार रुपमा भन्सार जाँचपास गरिरहेको हुँदा जोखिम नियन्त्रण तथा अनुपालन शाखाबाट कुनै कैफियत नगरिएको हो । उल्लेखित मालवस्तुहरू मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभागको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा सो ब्रेक प्याड आकारको सामानबाट सुन निकाली गाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको भनि पत्र पत्रिका तथा टेलिभिजनमा समाचार हेरी/सुनी थाहा पाएको हुँ।

प्रज्ञापन पत्र नं. M३५०७९ बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० थान सामानहरू म जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखाबाट अनलाईन मार्फत चेक गरी सम्पुर्ण कागजातहरु ठिक रहेको देखी सोही जानकारी जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखाका भन्सार अधिकृतलाई गराएको हुँ। सबै कागजात ठिक रहेकोले कुनै कैफियत नगरिएको हो। जोखिम नियन्त्रण तथा अनुपालन शाखालाई मालवस्तुको भौतिक अवस्था थाहा नहुने र भौतिक परीक्षण गर्ने जिम्मेवारीमा रहेका कर्मचारीहरुले मालवस्तुको भौतिक अवस्थाको बारेमा आशिकुडा प्रणालीमा कैफियत नगरेको र जानकारी पनि नगराएको हुँदा उल्लेखित मालवस्तुमा सुन रहेको/नरहेको मलाई कुनै जानकारी छैन्। उक्त दिनमा भौतिक परीक्षण गरी जाँचपास गराउने कार्यमा को-कुन कर्मचारीहरु रहेको भन्ने पनि मलाई एकिन जानकारी छैन्। मैले कोही कसैसंग मिलेमतो गरेको छैन्। जोखिम नियन्त्रण तथा अनुपालन शाकामा कार्यरत रही अनलाईन मार्फत घोषणा भएको मालवस्तुको

कागजातहरु अनलाईन मार्फत नै चेकजाँच गर्ने वाहेक मेरो अन्य संलग्नता छैन् । जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखाले कार्गो मार्फत सामान आयात तथा निर्यात गरेका ब्यक्ति तथा कम्पनीले आशिकुडा प्रणाली (अनलाईन सफ्टवेयर) मा प्रविष्ट गरेको प्रज्ञापन पत्र अनलाईन मार्फत भन्सार जाँचपासको आशिकुडा प्रणाली (अनलाईन सफ्टवेयर) मा अनलाईन मार्फत नै सिस्टममा हेरी प्रज्ञापन पत्रमा उल्लेखित मालवस्तु अनुसार नियमानुसार संलग्न गरी पेश गर्नु पर्ने AIR WAY BILL, INVOICE र मलावस्तुको खरिद मूल्य अमेरिकी डलर ५०० भन्दा बढी भएमा बैंकिङ प्रणाली मार्फत रकम भुक्तानी गरेको कागजातहरु समेत पेश भएको छ,छैन, मालवस्तुको भन्सार उप शिर्षक सही घोषणा गरेको छन, छैनन्, राजस्व वापतको तिर्नु पर्ने रकम तिरेको छ, छैन भनि हेरी कैफियत देखिएमा मूल्यको विषयमा कैफियत देखिएमा मूल्याङ्कन शाखामा जानकारी गराउने र मालवस्तुको भन्सार उप शिर्षक वर्गीकरण र पेश गर्नु पर्ने कागजातहरुमा कैफियत देखिएमा आशिकुडा प्रणालीबाट भौतिक परीक्षणको लागि तोकिएको जाँचकी र भन्सार अधिकृतलाई जानकारी गराउने हो।

म समेतले आशिकुडा सिस्टमा पेश गरिएका कागजातहरु हेर्दा कुनै कैफियत नदेखिएको हुदा शाखाको भन्सार अधिकृतले Query र Lock मा नराख्नु भएको हो । सो मालवस्तुमा कैफियत रहेको भनि भौतिक परीक्षण गर्ने कर्मचारीहरुले आशिकुडा प्रणालीमा उल्लेख नगरेको हुँदा जोखिम नियन्त्रण तथा अनुपालन शाखामा कार्यरत म र भन्सार अधिकृत पुष्पा जोशीले कुनै कैफियत उल्लेख नगरेका हौँ । मैले आफ्नो जिम्मेवारी अनुसार काम गरेको हुँ अपराधिक लाभ लिने उदेश्यले कोही कसैसंग मिलेमतो गरी संगठित अपराध गरेको छैन् । ना.सु.को रुपमा र भन्सार अधिकृत रुपमा पुष्पा जोशी दुई जना मिति २०८०/०४/०१ गतेबाट भन्सार बिभागमा रहने जोखिम व्यवस्थापन (WAN) अन्तर्गत भन्सार कार्यालयमा रहेन जोखिम नियन्त्रण तथा अनुपालन (LAN) शाखामा खटिएको, सो भन्दा अगाडी जाँचपास भएका मालवास्तुको सम्बन्धमा जानकारी नभएको, उक्त शाखाका पुर्व कर्मचारीहरुले जानकारी नगराएको र कार्यालयले समेत कुनै जानकारी नगराएको हुँदा म र भन्सार अधिकृत पुष्पा जोशीले लेटर अफ क्रेडिट (LC) नखोली किन उस्तै प्रकारका मालवस्तु पटक-पटक दोहोरिएर आईरहेका छन् र US डलर ५०० (पाँच सय) भन्दा कम गरी पटक-पटक एउटै प्रकृतिको सामान आईरहेको भन्ने सम्बन्धमा बिश्लेषण तथा अनुसन्धान गर्न नसकिएको हो भन्ने समेत ब्यहोराको शंकित व्यक्ति नायव सुब्बा कमल परियारको बयान।

ल. **<u>प्रतिबादी ना.सु.बिरेन्द्र नेपालीको बयान :</u>**

मिति २०७१।०८।१६ गते नायव सुब्बा भई मिति २०७८।१२।१७ गते देखि त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयको यात्रु जाँचपास शाखा, बैंक ग्यारेन्टी शाखामा र मिति २०८०।०२।०१ गते हाल मूल्याङ्कन शाखामा नायव सुब्बा पदमा कार्यरत छु । त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयमा मूल्याङ्कन शाखाको नायव सुब्बाको रुपमा कार्यरत रहँदा मेरो जिम्मेवारी अन्तर्गत भन्सार अधिकृतलाई प्रज्ञापन पत्रमा उल्लेख भएका मालवस्तुको मूल्य, दरबन्दी वर्गिकरणमा सहयोग गर्ने हो । भन्सार कार्यालयको गोदामबाट आएका मालवस्तुहरु जाँचपासमा खटिएका सम्बन्धित भन्सार जाँचकी र भन्सार अधिकृतले मालवस्तुको भौतिक परीक्षण गरेपश्चात प्रज्ञापन पत्र मूल्याङ्कन शाखामा आउने र सो प्रज्ञापन पत्रमा कैफियत लेखिएको खण्डमा कैफियत लेखिए अनुसार मूल्याङ्कन तथा वर्गिकरण गर्ने कैफियत नलेखिएको अवस्थामा प्रज्ञापन पत्रका आधारमा उक्त मालवस्तुको मूल्याङ्कन तथा वर्गिकरण गर्न मूल्याङ्कन अधिकृत गणेश प्रसाद पौडेललाई सहयोग गर्ने जिम्मेवारी तथा काम मेरो हो । कार्गो/कुरीयर सेवा प्रदायक संस्थाहरूले Airway Bill

को आधारमा Delivery Order जारी गर्दछ। उक्त Delivery Order को आधारमा सामान छुटाउन खटिएको भन्सार एजेन्टले सामानको नाम, तौल, संख्या, Plane भाडा तथा लागेका चार्ज लगायतका विवरण खुलाएर सामान अनुसार Master Airway Bill/House Airway Bill सहित खुलाएर भन्सार एजेन्टले भन्सार प्रज्ञापन पत्र समेत Online भरी आशिकुडा सिष्टम (Asycuda System) मा दर्ता गरी नेपाल पारबाहन तथा गोदाम व्यवस्थापन कं.लि. मा प्रज्ञापन पत्र सहितका कागजात पेश गर्छ। यसरी भन्सार एजेन्टले प्रज्ञापन पत्र दर्ता गर्दा सामानको मूल्य US डलर ५०० भन्दा बढी भए अनिवार्य रुपमा भुक्तानीको Terms/Mode of payment समेत खुलाउँछ। त्यसपछि आशिकुडा सिष्टमले कामको चापको आधारमा १ जना जाँचकी र १ जना भन्सार अधिकृत अटोमेटिक तोकिदिन्छ।

X-ray मा खटिने कर्मचारीले RC लेखेमा र मालवस्तु हेरेर एकिन नभएकोमा सम्बन्धित जाँचपासमा खटिएका जाँचकी कर्मचारी र भन्सार अधिकृतले RC लेख्नुको कारण खोज्नु पर्छ र आवश्यक परेमा पुन: X-Ray गराउन सक्छ, जाँचकीबाट कुनै कमेण्ट उल्लेख नभई मूल्याङ्कन सिट (मूल्याङ्कन पत्र) मा जाँचकीले हस्ताक्षर गरी आएमा नियमित आउने मालवस्तुमा घोषणा तथा कागजातमा उल्लेख गरेका विवरणहरुको आधारमा मूल्याङ्कन गर्ने गर्दछ भने नयाँ नौलो मालवस्तुको हकमा भौतिक रुपमा नमूना निकाली हेरी चेकजाँच गरी मूल्याङ्कन गर्ने गरिन्छ। मूल्याङ्कन शाखाले प्रज्ञापन पत्र र सो साथ संलग्न कागजातहरुको आधारमा मूल्य निर्धारण गर्दा ब्राण्ड, गुणस्तर, साईज, स्पेसिफिकेशन, Country of Origin लगायतका विवरण अनुसार मूल्याङ्कन तथा वर्गीकरण गर्ने, स्वघोषणा बमोजिम भए नभएको हेरी मूल्याङ्कन शाखाका नायव सुब्बाले मूल्याङ्कन पेजमा सबै विवरण लेखी मूल्याङ्कन बढाउनु पर्ने भए थपी बढाई लेखी दस्तखत समेत गर्दछ। त्यसपछि मूल्याङ्कन पेजमा मूल्याङ्कन शाखाको नायव सुब्बा र जाँचकी कर्मचारीले दस्तखत गरी मूल्याङ्कन अधिकृतलाई प्रतिवेदन गर्दछन्।

मिति २०८०।०४।०२ गते प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ कार्टुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान मालवस्तुहरू X-ray भई जाँचपासबाट भौतिक परीक्षण भई मूल्याङ्कन शाखामा प्राप्त भएपछि प्राप्त भएको प्रज्ञापन पत्र समेतका कागजातहरुको आधारमा म र मूल्याङ्कन अधिकृतले मूल्याङ्कन गरी मूल्य सदरको लागि प्रमुख भन्सार अधिकृत (उप सचिव) समक्ष सिफारिस गरेका मालवस्तु हुन्। मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान विभाग हरीहरभवन, ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा प्रतिवादी अशोक लामाले चलाएको बा २ ख २३२४ नं. को ट्याक्सी समेतलाई नियन्त्रणमा लिई सो ब्रेक शु आकारको सामान मिति २०८०।०४।०३ गते भन्सार विभागको प्रयोशालामा उल्लेखित BRAKE PADS को नमूना निकाली परीक्षण गर्दा ९९.५५% सम्म सुन रहेको देखिन आएको भन्ने सम्बन्धमा मिति २०८०।०४।०४ गते बिहान समाचार पढेपछि र कार्यालय पुगेपछि थाहा पाएको हुँ। उल्लेखित मालवस्तु राजस्व अनुसन्धान विभागले बरामद गरी सुन निकाली पगाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको भन्ने कुरा समाचार पढेपछि थाहा पाएको हुँ।

प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान भएको सम्बन्धमा मूल्याङ्कन शाखामा प्राप्त भएपछि उक्त प्रज्ञापन पत्रमा उल्लेखित सामान जाँचपास गर्ने क्रममा X-ray मा खटिएको कर्मचारी सरोज श्रेष्ठ, जाँचकी कर्मचारी खरिदार कुमार ढकाल तथा भन्सार अधिकृत सन्तोष चन्दबाट भौतिक परीक्षण भई

मूल्याङ्कन शाखामा प्रज्ञापन पत्र तथा कागजातहरु पेश भएपछि सो प्रज्ञापन पत्रमा कुनै कैफियत नलेखि आएको हुँदा पेश कागजातहरुको आधारमा मूल्याङ्कन शाखामा कार्यरत म र मूल्याङ्कन अधिकृत गणेश प्रसाद पौडेलले उक्त सामानको मूल्याङ्कन गरेको हो।

प्रज्ञापन नं. M३५०७९ बाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ बाट SHAVER सेट ८० थान भएको मालवस्तुको सम्बन्धमा X-ray र भौतिक परीक्षणबाट कुनै कैफियत उल्लेख नभई जाँचपास भई आएको हुँदा पेश भएको प्रज्ञापन पत्र र कागजातहरुको आधारमा मूल्याङ्कन गरी मूल्याङ्कन सदर गर्न नियमित प्रकृया पुरा गरी मूल्याङ्कन सदरको लागि प्रमुख भन्सार अधिकत (उप सचिव) समक्ष पठाईएको हो।

भन्सार ऐन, २०६४ को दफा २४ मा मालवस्तु भौतिक रुपमा नआईकन उक्त मालवस्तुको कागजातहरुको आधारमा पुर्व मूल्याङ्कन गर्न सकिने भन्ने व्यवस्था उल्लेख भएको हुँदा मालवस्तुको मूल्याङ्कन गर्दा भौतिक रुपमा मालवस्तु हर्नैपर्ने आवश्यकता नभएको र यदि कुनै RC लेखेको मालवस्तु वा कैफियत लेखिएको अवस्थामा मात्र मूल्याङ्कन शाखाले मालवस्तु भौतिक रुपमा हेर्ने भएकोले X-ray अपरेटर सरोज श्रेष्ठले RC लेखेको कुरा जाँचपासका कर्मचारीहरुबाट मूल्याङ्कन शाखामा जानकारी नभएको हुँदा उक्त मालवस्तु भौतिक रुपमा नहेरी मूल्याङ्कन शाखामा पेश भएका प्रज्ञापन पत्र र कागजातहरुको आधारमा मूल्याङ्कन गरिएको हो।

भन्सारमा X-ray अपरेटरले RC लेख्दा सो कुराको जानकारी जाँचपासमा खटिएका कर्मचारी, भन्सार अधिकृत र प्रमुख भन्सार अधिकृतलाई  लिखित वा मौखिक जानकारी गराउनु पर्छ। सो कुरा जाँचपासमा खटिएका कर्मचारीले RC लेखेको सामानमा कुनै कैफियत देखेमा अनलाई सिस्टममा तथा Manually मूल्याङ्कन शाखामा जानकारी गराउन सक्छ। उल्लेखित मालवस्तुहरु जाँचपासबाट कुनै कैफियत नलेखि आएको र मालवस्तुको घोषणा अनुसार सन्दर्भ मूल्य र दरबन्दी ठीक भएको र मूल्याङ्कन गर्दाका बखत मूल्याङ्कन गर्न आएका मालवस्तुहरुको भौतिक निरीक्षण गर्नै पर्छ भन्ने प्रावधान भन्सार ऐनमा नभएको हुँदा मैले उक्त मालवस्तुहरुको भौतिक निरीक्षण नगरी प्रज्ञापन पत्र र कागजातहरुको आधारमा मूल्याङ्कन गरी मूल्याङ्कन सिटमा सहि गरेको हुँ भन्ने समेत ब्यहोराको प्रतिवमदी बिरेन्द्र नेपालीको बयान।

व. **प्रतिवादी शिब कुमार सरार्फको बयानः**

म सुनचाँदी ब्यबसाय गर्ने मानिस हुँ। म सुनचाँदी ब्यबसायी संघको बारा जिल्लाको जिल्ला अध्यक्ष र नेपाल सुनचाँदी ब्यबसायी संघको केन्द्रीय उपाध्यक्ष हुँ। बैठकको सिलसिलामा काठमाडौंमा आएको बेलामा काठमाडौंको नक्सालमा कार्यक्रम हुँदा २०७९ सालको बैशाख महिनामा सुमन खरेलसँग पहिलो पटक भेटभई चिनजान भयो। भेटभई कुराकानी हुँदा फोन नम्बर पनि आदान प्रदान गरेका थियौ। सुमन खरेल पहिलो पटक फोन गरेर सुनचाँदीको भाउ सोध्ने गर्दथे। मैले चलन चल्तीको दर रेट फोनबाट बताउने गरेको थिए। यसै क्रममा फोनमा बारम्वार सम्पर्क भईरहयो। २०८० सालको बैशाख महिनातिर सुमन खरेलले काठमाडौं चावहिलमा म गएको बेलामा फोन सम्पर्क गरी दुवै जना चाबहिलमा भेट भयौ र  कुराकानीको क्रममा सुमन खरेलले सुनचाँदी ब्यबसाय खोल्नु छ कसरी दर्ता गर्ने हो प्रकृया के हो बताई दिनुहोस भनेका थिए। मैले सुनचाँदी ब्यबसाय दर्ता प्रकृया बताई दिए । नेपाल सुनचाँदी ब्यबसायी  महासंघको नियमानुसार सुनचाँदी ब्यबसायी दर्ता गरेपछि मात्र नेपाल राष्ट्र बैंकबाट पसलहरुमा सुन चाँदी खरिद गर्न पाईन्छ  भनेर जानकारी गराएको थिए। सोही बेलामा

सुमन खरेलले सुनचाँदी ब्यबसाय खोल्न सहयोग मागेका थिए । त्यसपछि म बारा जिल्ला फिर्ता भए सुमन खरेल काठमाडौंमा बसें । त्यसपछाडि पनि फोन सम्पर्क गरेर पटक पटक सुन चाँदीको भाउ सोध्ने गरेका थिए । मैले दरभाउ रेट बताई दिने गरेको थिएँ । मेरो नाममा नेपालमा गढीमाई ज्वैलरी उद्योग र शिबमं ज्वैलर्स संचालनमा छ । उक्त कम्पनीहरु सुनचाँदी कारोवार गर्न खोलेको हुँ । म बारा जिल्लाको सुनचाँदी ब्यबसायी संघको अध्यक्ष हुँ । नेपाल सरकारको नियमानुसार जिल्ला अध्यक्षको सिफारिसमा जिल्ला स्थित ब्यबसायीहरुलाई सुन बिक्रि गर्नको लागि फर्मको नामबाट सुन खरिद गरी ब्यबससायीहरुलाई बिक्रि गरिन्छ । मैले संचालन गरेको शिबमं ज्वैलर्सको फर्ममा २० करोडको कारोवार र गढीमाई ज्वैलरी उद्योगको नाममा १२ करोडको कारोवार छ । प्रतिवादी सुमन खरेलले प्रयोग गर्ने ९८४७२६५३१५ नंम्बरको मोवाईलमा मैले प्रयोग गर्ने ९८२८१३९५३१ नंम्बर बाट ६० पटक र मैले प्रयोग गर्ने ९८४५०३७३५१ नम्बरको मोवाईल फोनमा प्रतिवादी सुमन खरेललाई १५४ पटक फोन सम्पर्क गरेको मिसिल संलग्न ALEX @ YAO PUCHENG, SUMAN Karel and Shiva Kumar SaraffCDR Duration Date:2023-04-01 to 2023-07-20 लेखिएको लिङक चार्ट देखाउदा देखि पाएँ । निज प्रतिवादी सुमन खरेल र मेरो सुन खरिद बिक्रि गर्ने सन्दर्भमा कुराकानी गर्दा फोन सम्पर्कभएको ठिक साँचो हो । मैले प्रतिवादी सुमन खरेललाई काठमाडौंको रातो पुल तथा कालो पुल भन्ने स्थानमा भेटी निजबाट ५०० ग्राम सुन खरिद गरी लिएको हुँ । मैले मेरो कम्पनीको नाममा संचालनमा रहेको माछापुछ्रे बैक लि.को खाताबाट २०८० सालको बैशाख र जेष्ठ महिनामा दुई पटक रकम निकाली प्रतिवादी सुमन खरेललाई ५०० ग्राम सुनको नेपाली रु. ४४,००,०००/- रकम नगद रकम दिएको हुँ । प्रतिवादी सुमन खरेलबाट मैले ५०० ग्राम सुनमात्र खरिद गरेको हो । मलाई ७ के.जी. सुन बिक्रि गरी सो को रकम QR CODE मार्फत भुक्तानी गरेको भनी किन खुलाएका हुन यस बिषयमा मलाई थाहा भएन । मैले प्रतिवादी सुमन खरेलबाट मैले ५०० ग्राम मात्र सुन खरिद गरेको छु । निजबाट ७ के.जी. सुन खरिद गरेको छैन । ७ के.जी. सुन बिक्रि गरेको भनी सुमन खरेलले किन भनेका हुन सो कुरा निजैलाई थाहा होला । अबैध सुन खरिद गर्ने काम गर्ने मानिस म होईन । ५०० ग्राम सुन बिक्रि गर्दा पनि विल छ दिन्छु भनी बिक्रि गरेका हुन । सुन खरिद गर्दा बिल दिएका छैनन । प्रतिवादी सुमन खरेलले मलाइ बैकबाट नै सुन खरिद गर्ने ब्यबसायीसंग पैसा लिनु पर्ने छ । मिति २०८० सालको बैशाख / जेष्ठ महिनामा बिल सहितको सुन दिन्छु पैसा मलाइ दिनुहोस भनेर रु. ४४,००,०००/- ( अक्षेरुपी चवालिस लाख ) लिएर गएको हो र सोही दिनको साँझको समयमा अन्दाजी १७:०० बजेको समयमा ५०० ग्राम सुन ल्याएर दिएका हुन । बिल दिन्छु भनेर मेरो स्थायी लेखा नम्बर (PAN) लिएर गएका थिए हाल सम्म सुन खरिद गरेको बिल मलाई दिएका छैनन । मैले खरिद गरेको उक्त सुन अबैध रुपमा चोरी तस्करी गरी बिदेशबाट नेपालमा पैठारी गरेको हाल मात्र थाहा पाएँ । कानून बमोजिम सजाय भोग्न तयार छु । मैले प्रतिवादी सुमन खरेलबाट खरिद गरेको सुन मेरो बारा जिल्लामा रहेको मैले संचालन गरेको गढीमाई ज्वैलर्सशाखाबाट गहना बनाई बिभिन्न ग्राहकहरुलाइ सुनका गहना बनाइ चलनचल्तीको मूल्यमा बिक्रि गरी सकेको छु । प्रतिवादी सुमन खरेलले मलाई DSDT( BITCOIN / CRYPTOCURRENCY को प्रकार )को फोटो र QRCODE, खातामा पठाउने पैसाको भौचर र SCANNERमोवाईलमा पठायो र मेरो मोवाईलमा पनि सोही कोड राख्न मिल्ने भए सुनको कारोवार गर्छु पैसा पठाउन सजिलो हुन्छ भनेको थियो । निजकै सल्लाह अनुसार डिजिटल मुद्राबाट पनि हुण्डी गरेको हो के कति रकम हुण्डिको कारोवार भयो एकिन छैन । कारोवार गरेको बिवरण मेरो मोवाईलमा सुमन खरेलले पठाएको हो । उक्त बिबरण मेरो मोवाईलबाट

डिलिट गरी सकेको थिए। मोवाईलमा भएको कारोवारको फोटो सुमन खरेलले पठाएको हो। मैले प्रयोग गर्ने नं.९८२८१३९५३१ सिम राखिएको IMEIno. 356663763506099 को Samsung, Galaxy S23 UlTRAसेटको DFL(DigitalForensicLab) रिपोर्टमा संलग्न कागजातमादेखिएको नेपाली रु.५को नोट नं.ण ५५०१३९०९ नं. भएको नोट र भारतीय दस रुपये 3OB520308 नं.को नोटको फोटो भारतको मुम्बईको जेम्स एण्ड ज्वैलरी मेलामा म गएको वेलामा मसँग भारतिय पैसा कमि भयो। मुम्बईमा मेलामा खर्च गर्ने पैसा पुगेन त्यो कारणले गर्दा बिहारको रक्सौलमा बस्ने मामालाई फोन गरे मामाले मुम्बईमा बस्ने मानिसलाई पैसा पठाई दिनुभयो उक्त पैसा लिन जाँदा पैसा रिसिभ गर्ने मानिसले चिन्न सहिलो होस भनि उक्त नोटहरु मैले फोटो खिचेर मामालाई पठाए मामाले उक्त नोटको फोटो मलाइ पैसा दिने मानिसलाई पठाई दिनु भयो र मैले मेरो साथमा भएको नोटको फोटो देखाई मामाले पठाएको पैसा लिएको थिए। सोही क्रममा उक्त नोटहरुको फोटो खिचेर मोवाईलमा राखिएको हो। मिति २०७८ सालको पौष महिनामा प्रतिवादी राकेश सिंहसँग र मेरो पर्सा जिल्ला वीरगञ्जमा भेटघाट भई चिनजान भएको हो। उनी भारतीय नागरिक हुन। निजको एकिन ठेगाना थाहा भएन। निजको मोवाईल फोन नं. मसँग छैन। निज मार्फत एक जना नेपाली नागरिकको नाममा मेरो बारा जिल्ला बलिरामपुरमा भएको ९ कठ्ठा जग्गा दृष्टिबन्धक गरी रु. ६०,००,०००/-( अक्षेरुपी साठी लाख ) ब्याजमा रकम लिएको थिए। सो सिलसिलामा पनि भेटघाट कुराकानी भएको थियो। निजसँग Whatsappमा बढी कुराकानी हुन्थ्यो। प्रतिवादी सुमन खरेलबाट मैले माथि उल्लेखित ५०० ग्राम सुन खरिद गरे वापतको नेपाली रु ४४,००,०००/- ( अक्षेरुपी चवालिस लाख ) सुमन खरेललाई नगदै दिएको हुँ। निज सुमन खरेल मार्फत राकेश सिहले उक्त रकम Ali PAY (China) मार्फत चाईनिज रकम RMB मा भुक्तानी गरेको सम्बन्धमा मलाई थाहा हुदैन भन्ने समेत ब्यहोराको बयान।

मेरो Samsung SM-S918B को DFL Report बाट प्राप्त हुन आएका Screenshot हरु देखाउदा हेरे। मेरो मोवाईलको DFL Report बाट प्राप्त हुन आएका Crypto Currency Addresses (डिजिटल वालेट):TEZhJJWkFbrHkDyxvgqUQKUXGK4A6DHyh3,TUcKxXnyY7DKUnbCrwEd1 QJHr9ioi25U24,TH8gqnLhKTsiPAySwzEPXem2RiqAMB94Mn,TT3t2b2rp3Q76SmRs NHfMSBR1ZuNk1Ixg,TC3Co24hPzDPAu6JJ5Tmr2Thd5PiHiyJEo,TRd84WrYASEaz b1E3t17kVhrrfW5gy8Rwv,TN5AVEAuUxVDEGNKwngHgapw3ccrgMZn8A देखाउदा मैले हेरे, यि Crypto Currency Addresses (डिजिटल वालेट) मेरो मोबाईलमा थियो। मलाई उक्त Crypto Currency Addresses (डिजिटल वालेट) हरु पक्राउ प्रतिबादी सुमन खरेलले पठाई दिएको हो। निज सुमन खरेलले Crypto Currency Addresses (डिजिटल वालेट)बाट सुन किन बेच गर्न सजिलो हुन्छ भनि मलाई भनेकोमा म यो काम गर्दिन भनि मेरो WhatsApp मा आएको उक्त स्क्रिन सट तुरुन्त डिलेट गरिदिएको थिएँ। मलाई सवालमा उल्लेखित ७ वटा Crypto Currency Addresses (डिजिटल वालेट)हरु के कसको हो मलाई थाहा छैन। सवालमा उल्लेखित ७ वटा Crypto Currency Addresses (डिजिटल वालेट)पक्राउ प्रतिबादी सुमन खरेलले सुन किन बेचको रकम भुक्तानी गर्न सजिलो हुन्छ भनि मलाई WhatsApp मार्फत पठाएकोमा मैले यस्तो काम गर्दिन भनि मेरो WhatsApp मा आएको उक्त स्क्रिनसट तुरुन्त डिलेट गरिदिएको थिएँ। मैले Crypto Currency Address समेत खोलेको छैन।Crypto Currency Addresses (डिजिटल वालेट) मार्फत भएको भनिएको कारोबार सम्बन्धमा मलाई केही थाहा छैन। सवालमा उल्लेखित Crypto

Currency Addresses (डिजिटल वालेट) मेरो होईन अन्य ब्यक्तिको Crypto Currency Addresses (डिजिटल वालेट) कारोबार सम्बन्धमा मलाई थाहा हुदैन । Crypto Currency Address(डिजिटल वालेट): TUcKxXnyY7DKUnbCrwEd1QJ Hr9ioi25U24 बाट दावा छिरिङ्गको Crypto Currency Address(डिजिटल वालेट): TN5AVEAuUxVDEGNKwng Hgapw3ccrgMZn8A मा 2023/04/18 मा 20,000 र Alex भन्ने Yao Pucheng को Crypto Currency Address(डिजिटल वालेट): TVu4J56Qx3FoVm3eR1ia4anHMoUDeRqgtN मा सन 2023/01/02 मा 31,142 Crypto Currency पठाएको देखिएको स्क्रिनसट मलाई मिति याद भएन पक्राउ प्रतिबादी सुमन खरेलले मलाई पठाएको स्क्रिनसट हो । निज सुमन खरेलले तपाई उल्लेखित Crypto Currency Address(डिजिटल वालेट)मा सुन किनी भुक्तानी गर्न सक्नु हुन्छ भनि सोधेकोमा भाई मलाई यस्तो काम गर्नु छैन भनि मैले निजलाई भनेको हो । उक्त स्क्रिनसटमा उल्लेखित कारोबार सम्बन्धमा मलाई केही थाहा छैन ।मलाई मिति याद भएन सवालमा उल्लेखित स्क्रिनसट पक्राउ प्रतिबादी सुमन खरेलले मलाई पठाएको स्क्रिनसट हो । उक्त स्क्रिनसटमा भएको SS Bhai संग मैले वार्तालाप गरेको छैन र निज SS Bhai भन्ने ब्यक्तिलाई मैले चिनेको छैन ।मैले प्रयोग गर्ने Samsung SM-S918B मोबाईल फोनको DFL Report मा Audio Files रहेको Recording Filename: PTT-20230626-WA0000.opus मा DT सम्बन्धि कुरा गरेको उक्त Audio Files मा भएको स्वर (आवाज) कम्प्यूटरमा राखी सुनाउदा सुनि पाए उक्त Audio Files मा भएको उक्त स्वर (आवाज) मेरो नै हो ।सवालमा उल्लेखित Crypto Currency Address(डिजिटल वालेट) खाता मेरो होईन र निज दावा छिरिङ संग भएको भनिएको कारोबार सम्बन्धमा मलाई केही थाहा छैन । मलाई मिति याद भएन, उक्त स्क्रिनसट पक्राउ प्रतिबादी सुमन खरेलले मलाई पठाएको स्क्रिनसट हो ।सवालहरुमा उल्लेखित कारोबार सम्बन्धमा मलाई केही थाहा छैन ।मैले Crypto Currency Address(डिजिटल वालेट) खाता अहिले सम्म खोलेको छैन र Crypto Currency Address(डिजिटल वालेट) खाता भनेको के हो भन्ने समेत थाहा छैन र सवालमा उल्लेखित दावा छिरिङ्ग र Alex भन्ने Yao Pucheng संग मेरो चिनजान तथा फोन सम्पर्क समेत छैन ।मैले नेपालमा Crypto Currency कारोबार गरेको छैन् उल्लेखित Crypto Currency बिवरण मलाई सुमन खरेलले पठाएका थिएँ । मैले उक्त बिवरण तत्काल डिलिट समेत गरेको थिएँ । मैले Crypto Currency गरेको देखिएमा नेपाल राष्ट्र बैक ऐन अन्तर्गत कानून बमोजिम सजाय भोग्न मञ्जुर छु भन्ने समेत ब्यहोराको **प्रतिवादी शिब कुमार सरार्फको** बयान ।

श. **शंकित प्रमुख भन्सार अधिकृत श्रीधर टण्डनको बयान:**

त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयमा प्रमुख भन्सार अधिकृतको रुपमा कार्य गर्दा शाखागत रुपमा जिम्मेवारी फरक पर्ने गर्दछ । कार्गो जाँचपास शाखाको प्रमुख भन्सार अधिकृतको रुपमा मुख्य जिम्मेवारी मातहत मुल्यांकन शाखाको कर्मचारी ना.सु. तथा मुल्यांकन अधिकृतबाट भएको मालबस्तुको मुल्यांकन रुजु चेकजाँच गरी अन्तिम मुल्यांकन आशिकुडा प्रणाली मार्फत सदर गर्ने हो । यसको अलावा कार्गो जाँचपास शाखाका काम कारबाहीको सुपरीबेक्षण गर्ने, भन्सार एजेण्ट नियुक्ती, EXIM CODE लिने तथा नविकरण गर्न निवेदन प्राप्त भएमा कागजात अध्ययन गरी तोक आदेश गर्ने, बैक जमानत फुकुवा, म्याद थपको लागी कागजात अध्ययन गरी राय प्रमुख भन्सार प्रशासक समक्ष पेश गर्ने, कार्गो शाखामा आएका गुनासोहरुको सम्बोधन गर्ने लगायतका जिम्मेवारी तथा काम हो ।

मैले मुल्यांकन अधिकृतले मुल्यांकन थप गर्न पर्ने भए आशिकुडा सिष्टममा थपी Valuation Control मा Click गरी सम्पूर्ण कागजात सहितको बिबरण प्रमुख भन्सार अधिकृत (उप सचिव) समक्ष पेश गर्दछ। प्रमुख भन्सार अधिकृतले सम्पूर्ण कागजातहरू अध्ययन गरी ठिक भए आशिकुडा सिष्टमबाटै मुल्यांकन सदर गर्ने तथा कुनै संशोधन गर्नु पर्ने भए सो समेत गरी सिष्टममा Click गरी दिने गर्दछन।

मिति २०८०।०४।०२ गते प्रज्ञापन नं. M३५०७९ वाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु र प्रज्ञापन नं. M३५१०३ वाट SHAVER सेट ८० थान मालबस्तुहरू नियमानुसार प्रज्ञापन पत्र दर्ता, एक्सरे, जाँचकीबाट भौतिक चेकजाँच गरी मुल्यांकन शाखाबाट मुल्यांकन समेत गरी प्रज्ञापन पत्रमा सहीछाप तथा आशिकुडा प्रणाली मार्फत म समक्ष मुल्य सदरको लागी पेश भएकोमा मैले आशीकुडा प्रणालीमा मुल्यांकन सदर गरेको हुँ। सो सम्बन्धमा उक्त मालबस्तुहरु शंकास्पद भएको भन्ने सम्बन्धमा मलाई कुनै सूचना तथा मातहत एक्सरे गर्ने, जाँचपास गर्ने जाँचकी, भन्सार अधिकृत र मुल्यांकन शाखाका ना.सु र अधिकृत समेतबाट कुनै लिखित तथा मौखिक जानकारी गराएका थिएनन। मिति २०८०।०४।०२ गते राजस्व अनुसन्धान बिभाग हरीहरभवन, ललितपुरबाट खटिएको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको मुल गेट बाहिर सडक छेउमा ब्रेक प्याडबाट सुन निकाली पगाल्दा ६० किलो ७१६ ग्राम सुन निस्केको भनि मिति २०८०।०४।३० गते बेलुका Online Media बाट समाचार पढेपछी थाहा पाएको हुँ।

मिति २०८०।०४।०१ देखी ऐ. ३ गते सम्म कार्गो जाँचपास शाखामा प्रमुख भन्सार अधिकृतको कार्यरत रहेको थिएँ। मलाई भन्सार प्रशासन सम्बन्धी थप ब्यबहारीक तालिम समेत दिएको थिएन। २०८०।०४।०२ गतेको दिन मेरो कार्गो शाखामा दोश्रो दिन मात्र भएकोले आशिकुडा प्रणाली संचालन लगायतका काम कारबाहीहरु गरी रहेको थिए। कार्गो जाँचपास शाखामा प्रत्येक दिन निकासी र पैठारी गरी औषतमा २५० देखी ३०० सम्म प्रज्ञापन पत्रहरु दर्ता हुने हुँदा सो को मुल्यांकन ५० देखी ७० वटा भन्सार एजेण्ट नियुक्त, आयात निर्यात अनुमती प्रदान/नविकरणको निबेदनमा कागजात अध्ययन गरी तोक आदेश गर्नु पर्ने, गुनासो सुनुवाई लगायतका काम कारबाही प्रमुख भन्सार अधिकृतले गर्नु पर्ने भएकोले प्रमुख भन्सर अधिकृतले सबै प्रज्ञापनका मालबस्तुहरुको भौतिक निरीक्षण तथा चेक जाँच गर्न सम्भब समेत नहुने भएकोले सो कार्यको लागी खटाईएका कर्मचारीहरु लाई बिश्वास गरी कार्य सम्पादन गर्नु पर्ने हुन्छ। राजस्व अनुसन्धान बिभागको पत्र जाहेरीमा उल्लेखित प्रज्ञापन पत्र नं. M३५०७९ वाट BRAKE PADS भएको ८ काटुनमा १६० थान सामानहरू समेत एक्सरे, जाँचकीबाटभौतिक जाँच, मुल्यांकन शाखाबाट मुल्यांकन समेत भई सदरको लागी म समक्ष पेश भएको र सो सम्बन्धमा उक्त मालबस्तुमा सुन राखी अबैध पैठारी भई आएको सम्बन्धमा मलाई कुनै सुचना तथा जानकारी काँही कतैबाट नभएकोले असल नियतले मुल्यांकन सदर गर्ने पदिय जिम्मेवारी मात्र निर्बाह गरेको हुँ। उल्लेखित BRAKE PADS मा सुन भएको कुरा थाहा नभई BRAKE PADS नै भनि मुल्यांकन शाखाबाट मुल्यांकन सदरको लागी आएपछी र सो सम्बन्धमा कुनै कैफियत रहेको जानाकारी नभएकोले मुल्यांकन सदर गरेको हुँ। मैले कोही उल्लेखित प्रतिबादी लगायत अन्य मानिसहरू संग मिलि संगठित भई अनाधिकृत रुपमा ब्यक्तीगत स्वार्थ र फाईदा हुने गरी अबैध सुन पैठारी गर्न परपञ्च मिलाइको छैन र होईन।

भन्सार ऐन, २०६४ बमोजिम मुल्यांकन शाखाबाट मुल्य निर्धारण गरी मुल्याकन सदरका लागी म समक्ष पेश भएको प्रज्ञापन नं. M३५०७९ वाट BRAKE PADS भएको ८ काटुनमा १६० सेटहरु भएको

मालवस्तुका सम्बन्धमा मैले प्रज्ञापन पत्र साथ संलग्न ईनभ्वाईस लगायतका कुराहरु मध्य नजर गर्दा मुल्यांकन शाखाबाट उचित मुल्यांकन भएको देखिए पछी मैले सदर गरेको हुँ। X-ray मेसिनबाट RC लेखिएको भनेको विषय मालबस्तुको X-Ray स्क्यानिङ गर्दा उक्त मालवस्तुको ईमेज X-ray मा क्लियर नआएमा र मालबस्तु यही नै हो भनि एकिन गर्न नसकेमा X-ray मा खटिएको कर्मचारीले RC लेख्ने गर्दछ। यसरी RC लेखेको भनेको चेक जाँचमा खटिएका कर्मचारीहरुलाई राम्रो संग भौतिक रुपमा चेक जाँच गर तथा आबश्यकता अनुसार ल्याबमा परीक्षण समेत गर भनि ध्यानाकर्षण गराएको हो। प्राय गरी शंकास्पद मालवस्तुमा वा राजस्व चुहावट हुन सक्ने ब्यक्तीगत झिटीगुण्टाका सामानहरुमा ब्यापारीक प्रयोजनका सामानहरु पाईएमा वा सामान्यतया RC लेख्ने गरेको पाईन्छ साथै अबैध मालबस्तु छ भन्ने शंका लागेमा त्यस्तो मालबस्तु नियन्त्रणमा लिई सम्बन्धित जाँचकी, भन्सार अधिकृत, मुल्यांकन अधिकृत र प्रमुख भन्सार अधिकृत समेतलाई जानकारी दिनु पर्छ। RC लेखेको मालवस्तुमा जाँचकीले भौतिक परीक्षण गर्दा शंका लागेमा उक्त मालवस्तु पुनः X-Ray गर्न सक्छ, सो गर्दा पनि मालबस्तु यही नै हो भनि एकिन हुन नसकेमा थप बिज्ञ कर्मचारीद्वारा परामर्श लिई आबश्यकता अनुसार ल्यबमा परीक्षण समेत गर्नु पर्दछ। आशिकुडा सिस्टममा समेत बिबरण खुलाई कैफियत लेख्न सकिने व्यवस्था छ। मिति २०८०।०४।०२ गते X-ray मा खटिएका कर्मचारी सरोज श्रेष्ठले उक्त मालबस्तुमा RC लेखेको सम्बन्धमा निज सरोज श्रेष्ठ लगायत जाँचपास मुल्यांकनमा खटिएका कोही कर्मचारीहरुले पनि मलाई लिखित तथा मौखिक कुनै जानकारी नगराएकोले शंका गर्नु पर्ने कुनै कारण समेत नभएकोले मैले नियमानुसार मुल्यांकन सदर गरेको हुँ।

जोखिम व्यवस्थापन शाखा (WAN) को पनि व्यवस्था गरिएको छ। उक्त शाखाले प्रत्येक दिन दर्ता हुने प्रज्ञापनपत्रको जोखिम शूक्ष्म रुपमा बिश्लेषण गरी जोखिम न्यूनीकरण गर्ने कार्य गर्दछ। उक्त शाखामा खटिनुहुने नायव सुब्बा र भन्सार अधिकृतले जोखिम व्यवस्थापन गर्न प्रज्ञापनपत्रको विश्लेषण गरी प्रज्ञापनपत्र लक गर्ने Query मा राख्ने गर्नुहुन्छ। मूल्याङ्कनको सबै काम सकिएपछि भन्सार अधिकृतले सम्पूर्ण कागजात अध्ययन गरी जाँचकीको कमेण्ट वा मौखिक जानकारी, मुल्यांकन शाखाबाट मुल्यांकन सिफारीस भए नभएको, प्रमुख भन्सार अधिकृतले सदर गरे नगरेको हेरी उपलब्ध गराईएका कागजातहरू दर्ता भएको प्रज्ञापन पत्र संग भिडाई CONTROL RESULT गरी सिष्टममा DOCUMENT लाई GREEN गरेपछी भन्सार एजेन्टलाई राजस्व ONLINE PAYMENT गर्न लगाउँछ। त्यसपछी भन्सार एजेण्टले राजस्व भुक्तानीको रसीद जाँचकीकोमा पेश गरी ठिक भए नभएको हेरी जाँचकीले ठिक भए प्रज्ञापन पत्रमा दस्तखत गरी पुन उक्त रसिद सहित भन्सार अधिकृतकोमा आई रसिद हेरी ठिक भए भन्सार अधिकृतले प्रज्ञापन पत्रमा दस्तखत गरेपछी जाँचकीले Exit Note निकाल्छ। अन्तिममा तेही Exit Note सम्बन्धित सामानवालाले सामान बुझी त्रिभुवन अन्तर्राष्ट्रिय बिमानस्थल भन्सार कार्यालयको बाहिर जाने मुल गेटमा उक्त Exit Note देखाई सामान लिएर जान्छ।

प्रज्ञापन पत्र नं. M35079 मिति २०८०/०४/०२ मा म प्रमुख भन्सार अधिकृतको रुपमा खटिएको थिए। मुल्यांकन शाखाबाट भएको सिफारिसका आधारमा मैले उक्त मालबस्तो मुल्यांकन सदर गरेको हुँ। Red Channel बाट आएको मालवस्तुलाई तत् सम्बन्धी कागजात समेत पूर्ण रुपमा जाँच गरी मालबस्तु एकिन नभएमा मालवस्तुको भौतिक निरीक्षण गरी आबश्यकता अनुसार ल्याब परीक्षण समेत गरी मालबस्तुको एकिन गरी उपलब्ध कागजात, बिलबिजक, मालबस्तुको मुल्यको स्व-घोषणा, ब्राण्ड, उत्पती मुलुक, साईज, गुणस्तर

लगायतका बिबरणको आधारमा मालबस्तुको मुल्य निर्धारण गर्ने तथा मुल्यांकन गर्दा मुल्य कम राखी स्व:घोषणा गरेको भए मुल्यांकन थप गरी मुल्य बढाई प्रमुख भन्सार अधिकृत समक्ष अन्तिम रुपमा मूल्याङ्कन सदर गर्न सिफरिस गर्नुपर्ने हो र सोही अनुसार सिफारीस भएको होला भन्ने बिश्वासमा परेको र उक्त मालबस्तु अबैध पैठरी भएको कुनै सुचना तथा जानकारी नभएकोले, X-Ray अपरेटर सरोज श्रेष्ठ ले RC लेखेको कुनै जानकारी नगरएको, जाँचकी कुमार ढकालले समेत केही नभनेको र मुल्यांकन सिटमा जाँचकी कुमार ढकाल र मुल्यांकन शाखाका ना.सु. बिरेन्द्र नेपाली ले समेत कुनै कैफियत नजनाई दस्तखत समेत गरेको र मुल्यांकन अधिकृत गणेश प्रसाद पौडेलले आशिकुडा प्रणालीबाट आफ्नो मुल्यांकन गरी सदरको लागी पेश गरेको साथै जोखिम ब्यबस्थापन शाखाबाट समेत कुनै कैफियत (Lock/Querry) नगरेको हुँदा निजहरुकै बिश्वासमा परेको हुँ। साथै मिति २०८०।०४।०२ गते कार्गो शाखाको प्रमुख भन्सार अधिकृतको रुपमा दोश्रो दिन मात्र कार्यरत रहेकोले जोखिम आंकलन समेत नभएकोले मुल्यांकन सदर गरिएको हो।

Ready Trade Pvt Ltd. दर्ता हुँदाका बखत कम्पनी रजिष्टारको कार्यालयमा संस्था दर्ता गर्दा संस्थाको उद्देश्य के थियो भन्ने सम्बन्धमा प्रमुख भन्सार अधिकृतले कार्गो जाँचपासको समयमा एकिन गर्न सम्भब हुदैन। उल्लेखित बिषय त्रि.बि. भन्सार कार्यालय सुचना प्रबिधी शाखा र जोखिम ब्यबस्थापन शाखा (WAN/LAN) ले हेर्नु पर्ने हो। सामान आयात गर्ने संस्थाको उद्देश्य के हो र मालबस्तु पैठारी गर्ने संस्था PAN वा VAT के मा दर्ता छ भन्ने बिषय प्रज्ञापन पत्र तथा संलग्न कागजातहरुबाट नखुल्ने भएकोले उक्त बिषय प्रमुख भन्सार अधिकृतबाट हेर्न सम्भव हुँदैन भन्ने समेत व्यहोराको **शंकित प्रमुख भन्सार अधिकृत श्रीधर टण्डनको** बयान।

## ६. बुझिएका मानिसहरुले गरेको घटना बिबरण कागज:

### I. उर्किन छिरिङ लामा (ना.प्र.प.नं.२३-०१-७१-००८५० रसुवा) को कागज:

का.जि.का.म.न.वडा नं.४ स्थित चाईनिज नागरिक राहदानी नं. EG3871313 भएकी Dou Chuanjun ले जग्गा भाडामा लिई जस्ताको टहरा बनाई Dongfang International Pvt. Ltd. नामक कम्पनीमा सन् २०२० जनावरी देखी सुरक्षा गार्डको काम गर्दै आईरहेको,सन् २०२२ को सेक्टेम्बर वा अक्टोवर महिना तिर टासी भन्ने थुप्तिन छिरिङआई मसँग रहेको टहराको चाँवि लिई गएको, टासी भन्ने थुप्तिन छिरीङ समेतका चाईनिज नागरिकहरु हप्ताको १ दिन पानी दिनको लागि आउने गरेका, टहरा भित्र सानो टिनले बारेको कोठा बनाए पश्चात हाल पक्राउमा परी आएका SAUTEN भन्ने DING SHENG FA र STEPS भन्ने LI. NENGKAI समेतका चाईनिज नागरिकहरु रातको समयमा डष्टर, ब्रेजा तथा क्रेटा गाडीहरुमा आई फ्याक्ट्री भित्र नै छिराई ३/४ घण्टा बसी ढयाङ ढयाङ हानेको आवाज आउने गरेको, मेरो साहुँ Dou Junxiang (passport No: EF5970642) ग्याल्वो ल्वोसारको अगाडी नेपाल आउने भनि Dou Chuanjun (Passport No: EG3871313) Wechat मा कुराकानी भएकोमा आफुसंग चाँवी नभएको टासी भन्ने थुप्तिन छिरीङले चाँवी लगेको भनि वताएको थिए। टासी भन्ने थुप्तिन छिरीङसंग माग्नु भनि भनेकोमा पछि टासीले मलाई चाँवी दिई कम्पनीको वोस आउने भनेको छ फ्याक्ट्री खोलेर देखाई दिनु भनि चाँवी छाडेर गएका थिए। पछि Dou Junxiang (passport No: EF5970642) आएर फ्याक्ट्री खोली हेर्दा निजहरुले ल्याएका सामान पछि वनाएको कोठामा मिलाएर राखी बाहिरबाट ताल्चा लगाई राखेका थिए। मेरो वोसले यो के हो भनि सोधेकोमा मलाई थाहा छैन टासी भन्ने थुप्तिन छिरीङलाई सोध्नु भनेको थिए। केही दिन पछि मेरो साहु गए पछि

फ्याक्ट्रीमा चाईनिज भन्ने STEPS भन्ने LI. NENGKAI आई मसंग चाँवी मागी लिई गएका थिए , चाइनिज नागरीक फ्याक्ट्रीमा आएको वेला मेसिन चलाउदा पानी नआए पछि मलाई मेसिन बिग्रीएको जस्तो लागि साहुँलाई भनेकोमा टासीलाई सम्पर्क गर्नु भनेकोले टासिलाई सम्पर्क गरेकोमा टासी भन्ने थुप्तिन छिरीङ र SAUTEN भन्ने DING SHENG FA आई फ्याक्ट्री भित्र रहेको पानिको मोटरको on/off Switch समेतको बक्स र मेसिनको तार समेत वाहिर निकाली राखी तिमी बस्ने गरेको ठाँउमानै पानीको मोटरको on/off Switch बनाउनु भनि मलाई रु ६ हजार रुपैया दिएका, तलव र पानी तान्ने मेसिन बनाउन लागेको थप पैसा टासी भन्ने थुप्तिन छिरीङले मेरो SBI बैकमा रहेको खाता डिपोजिट गरी दिएका,टासी भन्ने थुप्तिन छिरीङ ,STEPS भन्ने LI. NENGKAI लाई SAUTEN भन्ने DING ,SHENG FA लाई चिन्दछु भन्ने समेत ब्यहोराको कागज ।

II. **ग्याल्बु लामाले ( ना.प्र.प.नं. ८६/२३३००३/ रसुवा) ले गरेको कागज:**

लेसाङ शेर्पाले मलाई फोन सम्पर्क गरी फर्पिङ घुम्न आएका चाईनिज नागरिक राहदानी नं. EF5970642 Dou Junxiang लाई भेट गराई दिएका हुन । निज संग We Chart मा कुरा हुँदा नेपालमा बाटो बनाउनको लागी केमिकल फ्याक्ट्री खोल्नको लागी मलाई खालि जग्गा चाहेको छ मेरो दाइको छोरा ठमेलमा बस्छ निजलाई भेट्नु भनि We Chart मार्फत भेट गराई दिए । निजसंग We Chart मा कुराकानी भई ठमेलमा भेटघाट भई फ्याक्ट्रीको बारेमा कुराकानी भयो । फ्याक्ट्री खोल्न ४-५ रोपनी खाली जग्गा चाहिन्छ भनि भनेकाले Dou Chuanjun लाई मेरो मोटरसाईकलमा राखी खाली जग्गा खोज्दै जाने क्रममा का.जि.टोखा नगरपालीका वडा नं. २ स्थितमा पुग्दा खालि जग्दा देखि उक्त जग्गा ठिक छ भनि भनेकाले वरीपरीका मानिसहरुलाई सोधपुछ गर्दा जग्गा धनिको छोरा जय कुमार श्रेष्ठसंग भेट गराई दिए । त्यस पछी निज संग सम्पुर्ण कुरा बताए पछि निजले बुबालाई सोध्नु पर्छ भनि सम्पर्क नं. एक आपसमा आदन प्रदान गरी फर्कियौ । निजले २ दिन पछाडी मलाई सम्पर्क गरी बोलाई का.जि.टोखा नगरपालिका वडा नं.२स्थित छलिमाया श्रेष्ठ र लक्ष्मी श्रेष्ठको सयुक्त नाममा रहेको जग्गा कि.नं. ७६८ र कि.नं. ७६७ भित्र पर्ने जग्गा मध्येबाट ४-०-०-० ( चार रोपनी) बाटो तर्फको जग्गा रोपनिको ६० हजार बार्षिक भाडा बुझाउने गरी ४ रोपनिको वार्षिक दुई लाख चालिस हजार भाडा दिने सर्तमा मिति २०७६/०५/२२गते म समेत साक्षी रोहवरमा बसी चाईनिज नागरीक Dou Junxiang (Passport No: EF5970642) नाममा करार सम्झौताको कागज बनाई जग्गा भाडामा लिएका भन्ने समेत ब्यहोराको कागज ।

III. **सामाखुसीमा रहेको सटर धनी चन्द्र प्रसाद उपाध्याय (ना.प्र.प.नं. १२१६७ काठमाडौं) को कागज:**

काठमाडौं जिल्ला का.म.न.पा. वडा नं. ०३ सामाखुशी जलधारा मार्गमा स्थित रहेको १ आना २ पैसा जग्गामा बनेको जस्ता पाताको छानो लगाएको टहरा(घर)मा ३ (तिन) वटा सटरहरु भाडामा लगाउदै आईरहेकोमा मिति २०७९ सालको भदौ महिनाको पहिलो हप्तामा मलाई हर्कराज राईले मलाई ९८६६२९६९७८नं.बाट फोन गरी बिद्युतिय ईलेक्ट्रोनिक सामानहरुको गोदाम राख्ने हो भनी भनेपछी मैले उक्त सटर एक महिनाको रु २५,०००।- (पच्चिस हजार) मा भाडामा लगाएको, हर्कराज राईले ९८६६२९६९७८ नम्बरबाट मलाई फोन गरी भेटेर नै भाडा रकम दिने गरेका, ब्यूरोबाट खानतलासी गरी सामानहरु बरामद गरेको र बरामद गरेको समयमा गोदाम भनि मेरो टहरा(घर)को सटरमा राखिएका विभिन्न ईलेक्ट्रोनिक उपकरणहरु खोलिएको अवस्थामा रहेको र उक्त बरामद भएका ईलेक्ट्रोनिक उपकरणहरुमा भन्सार कार्यालयको कोड तथा स्टिकर समेत नभएको, अधिकांश समानहरू बिग्रिएको नचल्ने अबस्थामा रहेका, बिजुली जोडी चेक गर्दा नचलेको तथा मेसीनहरुले काम नगरेको

पाईएको हुँदा बरामद भएका ईलोक्ट्रोनिक समानहरू प्रयोग गरी अबैध सुन पैठारी गर्न प्रयोग हुन सक्ने देखिन्छ। निज हर्कराज राई समेतले अवैध सुन पैठारी गरी संगठित अपराध कसुर गरेकोमा मलाई बिश्वास लाग्यो भन्ने समेत ब्यहोराको कागज।

IV. **<u>अशोक क्षेत्रीले गरि दिएको कागज:</u>**

का.जि.का.म.न.पा.वडा नं.२६ ठमेल स्थित रहेको वाल्डो क्यासिनोको पार्किङ अगाडी रहेको Washers Nepal नामको Car Wash मिति २०८९ साल को माघ देखि काम गर्दै आएकोमा मोवाइल नं. ९८११८२२२५५ मैले प्रयोग गर्दै आएको नम्बर हो । सम्पर्क नं. ९८१३५०७७५४, ९८१३६३०२८३,९८५११२७५९०, ९८१२३८६७५८ र ९८६१९९९९९ मोवाइल नम्बरहरु Car Wash गर्ने आएका व्यक्तीहरुको सम्पर्क नंम्बरहरु हो, Car Wash गर्न आए पश्चात Car Wash गरि सके पछि निजहरुलाई Car लिन आउनको लागि लिएको सम्पर्क नम्बरहरु हो, वाल्डो क्यासिनोको पार्किङ रहेकोले चाइनिज नागरीकहरु ALISH समेत ९३०० नं.को Crete सेतो रंगको र १७७१ नं. Brezza खरानी रंग गाडी समेत Car Wash गर्न आउने गरेका थिए भनी फोटोहरु समेत खनाखत गरि दिएको भन्ने समेत ब्यहोराको कागज।

V. **<u>जय कुमार श्रेष्ठ (ना.प्र.प.नं. १३२५२ काठमाडौं) ले गरेको कागज:</u>**

का.जि.चण्डेश्वरी गा.वि.स.वडा नं.८ को कि.नं. ७६८ को क्षेत्रफल ३-११-३-० र कि.नं. ७६७ को क्षेत्रफल ३-११-३-० भएका जग्गा बाटोको छेउमा परी खालि रहेकोले जग्गा भाडामा खोज्दै आएका रसुवा जिल्ला, साबिक लाङटाङ गा.बि.स. वडा नं. ७ बस्ने बर्ष ३१ को ग्याल्बु लामा (ना.प्र.प.नं. ८६/२३३००३) मार्फत चाईनिज नागरिक Dou Chuanjun (Passport No: EG3871313 )लाई कारखाना खोल्नको लागी कि.नं. ७६८ र कि.नं. ७६७ भित्र पर्ने जग्गा मध्येबाट ४-०-०-० (चार रोपनी) बाटो तर्फको जग्गा रोपनिको ६० हजार बार्षिक भाडा बुझाउने गरी ४ रोपनिको वार्षिक दुई लाख चालिस हजार भाडा दिने सर्तमा मिति २०७६/०५/२२ गते भाडामा दिएकोमा हामीले देख्दा सधै बन्द गरी ताला लगाई राखिने हुँदा टहरा भित्र के कस्तो कारखाना खोलेका थिए मैले देखिन टहर निर्माण गर्दा मुल सडक बाट अ. ७ फुट जग्गा छोडी मानिस बस्ने गरी घरको ढोका, झ्याल समेत पछाडी परी कतैबाट त्यहाँको गतिबिधी नदेखिने गरी निर्माण गरेको र मानिस बस्ने घरबाट अ. २०/२२ फिट पश्चिम बाटो समेत आफैले ढलान गरी जग्गाको दक्षिण पश्चिम हुने गरी ढोका राखी एउटा मात्र कोठा भएको कारखानाको लागी टहरा बनाई उक्त टहरा भएको ठाउँमा निज चाईनिजहरु बाहेक अरु कोही गएको मैले देखिन भन्ने समेत ब्यहोराको कागज।

VI. **<u>जय गुरुङ (ना.प्र.प.नं. २७१०६०/२२९३०/१८४८, काठमाडौं) ले गरेको कागज:</u>**

काठमाडौं जिल्ला का.म.न.पा. वडा नं.०३ महाराजगंज सल्लाघारी स्थित रहेको घरको भुई तलामा रहेको ६ (छ) वटा सटरहरु मध्ये मिति २०८० सालको असार महिनामा जिल्ला भोजपुर साविक चरम्बी गा.वि.स. वडा नं. ३ घर भएका पदम बहादुर राईको छोरा हर्कराज राई नाम गरेका ब्यक्तिले सम्पर्क नं. ९७६५८२१५८१ बाट फोन गरी ईलेक्ट्रोनिक बत्तिको पार्टपुर्जाहरुको सामान राख्ने गोदाम राख्ने भनी एक महिनाको रु.२०,०००।– (बिस हजार) लिने गरी हर्कराज राईलाई भाडामा मिति २०८०।०३।०६ देखी लगाएको थिएँ हर्कराज राईले मिति२०८०।०३।०७ गते सटरमा सामान ल्याएको सटर भाडामा लिएपछी सटरमा नआई सटर प्राय: बन्द नै राखी रहने गरेको, एक महिना पहिले भन्सार कार्यालयको गाडी जस्तो देखिने गाडी लिएर आई छोटो समयमा नै गाडीबाट सामान निकाली गोदाम (सटर) मा राखेर गएका रहेछन् ब्यूरोबाट खानतलासी गरी सामानहरु बरामद

गरेको र बरामद गरेको समयमा गोदाम भनि मेरो घरको सटरमा राखिएका विभिन्न ईलेक्ट्रोनिक उपकरणहरु सिल खोलिएको अवस्थामा रहेको र उक्त अधिकांस ईलेक्ट्रोनिक सामानहरूमा बिजुलि बत्ती जोडी हेर्दा काम समेत नगर्ने अन समेत नहुने, बरामदी भएका ईलेक्ट्रोनिक उपकरणहरुमा भन्सार कार्यालयको स्टिकर तथा कोड समेत उक्काईएको देखिएको हुँदा निज हर्कराज राई समेतका प्रतिवादीहरूले अवैध सुन पैठारी लगायतको अवैध कारोवार तथा संगठित अपराध गरेको हुन सक्छ भन्ने समेत ब्यहोराको कागज।

VII. **<u>प्रकाश महर्जनले (न.प्र.प.नं. ६०४४/ काठमाडौं) ले गरेको कागज:</u>**

काठमाडौं जिल्ला, का.म.न.पा.वडा नं.१६ नयाँबजार स्थितमा रहेको खाली जग्गामा जस्ताको छानो भएको ६ वटा सटर रहेकोमा सो मध्ये ट वटा सटर सम्पर्क नं. ९८०३८८२२०० भएको बिष्णु गौतम मार्फत ZHONG JIANHUA बताउने (चाइनिज पासपोर्ट नं. EJ5053290 ) भएको व्यक्तिले चाईनिज नागरीकले आफनो मोबाईल फोनको स्क्रिनमा प्रिन्टर मेसिन जस्तो देखिने मेशिनको फोटो देखाई उक्त सामान गोदाम गर्ने तथा बिक्री समेत गर्ने भनि बताएपछी मासिक भाडा रु.५०,०००।–(पचास हजार) को दरले मिति २०८० श्रावण १ गते देखी सटरकोठा प्रयोग गर्न दिने सहमती भई सटर भाडामा लगाएको ,सम्झौता गर्न आउनु भनी WE CHAT मा कुराकानी गर्दा हाल दुवईमा रहेकोमा भनी खुलाएको, मिति २०८०।०४।१०गते सो सटरवाट ६६ थान ब्रेक प्याड फेला पारी वरामद भएको हो भनी ZHONG JIANHUAको राहदानी समेत पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

VIII. **<u>बिपना लामा (ना.प्र.प.नं. २७-०१-७९-०२४७४) ले गरेको कागज तथा सनाखत कागज:</u>**

का.जि.का.म.न.पा.वडा नं.२६ ठमेल स्थित रहेको वाल्डो क्यासिनोमा GRA डिपार्टमेण्टमा कार्यरत रहेकोमा क्यासीनोमा आएका चाइनिज नागरीक DING सँग चिनजान भई का.जि.का.म.न.पा वडा नं. ४ चपल कारखाना भन्दा पछाडी रहेको निजको कोठामा जाने गरेकोमा सो कोठामा DING र YAO बस्ने चाईनिज नागरिक वस्ने गरेको, June महिनामा निज DING ले धापासीको हस्पिटल नजिक घर किनेको छु भनी वताएकोमा अफिस छुट्टि भएको वेलामा उक्त घरमा DING संगै बस्ने गरेको, पटक-पटक सोध्दा ललितपुरमा कम्पनी रहेको छ भनी भनेको निजको वासस्तविक नाम DING SHENG FA रहेछ, निजको तिनजना साथीहरु रहेको निजको नाम YAO, LI र STEPS रहेको निजहरु सेतो गाडी र खरानी रंग दुईवटा गरी जम्मा ३ वटा प्रयोग गर्ने गरेका थिए , निज DINGले ९८२०२९३२५२ र ९८२०२२०८४१ सिम प्रयोग गरी दुईवटा मोवाईल चालउने गरेको,DING SHENG FA संग साथमा हिड्ने YAO, LI, STEPS र टासी भन्ने थुप्तिन छिरिङको फोटो समेत देखाउदा देखी चिने, YAOले क्यासिनोको म्यानेजरसंग गफ गर्ने र LI ले धेरै पैसा बोकी क्यासिनोको काउण्टरमा जम्मा गर्थे,YAOको क्यासिनो आई डि नम्बरमा रु.१५,००,०००।–(पन्ध्र लाख) जम्मा गरी सोही रकमबाट क्यासिनो खेल्न प्रयोग हुने चिप्स (Chips) ल्याईदिएको थिए, निजहरुले क्यासिनो खेली पैसा हार्ने गरेका थिए भनी खुलाई ALEX भन्ने YAO PUCHENG, STEPS भन्ने LI. NENGKAI, ALI OR LIभन्ने LI, WEN –T SUNG र SAUTEN भन्ने DING SHENGNFA लाई समेत सनाखत गरि दिएको छु भन्ने समेत ब्यहोराको कागज ।

IX. **<u>बिष्णु गौतम (ना.प्र.प.नं. २७ १०६०/६१६२६, काठमाडौं)ले गरेको कागज:</u>**

चाईनिज भाषाको दोभाषे (Translate) गर्ने,दावा छिरीङको ठमेल स्थित Vienna Hotel भएकोले निजलाई चिन्दछु। नरेश तामाङ र म ५/६ वर्ष पहिला चाईनिज भाषा संगै पढेकोले निज संग मेरो चिनजान छ अन्यलाई म

चिन्दिन । मेरो ZHONG JIANHUA संग ५/६ महिना अगाडी ठमेल रेष्टुरेन्ट तिर भेट भई We-Chat मा Add गरेकोमा सोही भेट भएको केही दिन पछाडि निजले मलाई सटर भाडामा खोजि दिनु भनि भनेकाले कृष्ण गौली मार्फत निज चाईनिज नागरिक ZHONG JIANHUA लाई का.जि,का.म.न.पा.वडा नं.१६ नयाँबजार स्थित सटर भाडामा खोजि दिएकोमा श्रावण १ गते महिनाको ५० हजारको दरले ६ महिनाको तिन लाख रुपैयाँ भाडा प्रकाश महर्जनलाई दिएको, श्रावण १० गते राजस्व अनुसन्धान विभागबाट कर्मचारी खटीई आई उक्त सटरकोठाको खानतलासी खानतलासी गर्दा ६६ कार्टुन ब्रेक प्याड समेतका सामाहरु फेला पारी अनुसन्धानको लागी लिई गरेको भनी खुलाई दिएको भन्ने समेत व्यहोराको कागज ।

x. **मदन महासेठ ना.प्र.प.नं. ३६९२१४०११, महोतरी)ले गरेको कागज:-**

म घर, फ्ल्याट, जग्गाजमिन भाडामा वा किन बेचमा बिचौलियाको काम गर्दै आई रहेकोमा Easy home solution (Real state) को संचालक भुवन झा मार्फत चिनजान भएको टासी भन्ने थुप्तिन छिरीङ फोन नं.९८२३५३५३९६ लाई केशव श्रेष्ठको सम्पर्क नं. ९८४१२०७५५७ दिएको,पछि म, टासी भन्ने थुप्तिन छिरिङ्ग र हर्कराज राई केशव श्रेष्ठको बालुवाटारमा रहेको निजको अफिसमा भेटेर गाडि भाडामा लिने कुरा गर्यो । चाइनिज नागरिकलाई गाडी भाडामा दिन मिल्दैन भने पछि टासि भन्ने थुप्तिन छिरिङ्गले हर्कराज राई मेरो कम्पनीको साहु हो, उसैसंग सम्झौता गरी गाडी दिनु होला भने टासि भन्ने थुप्तिन छिरिङ्गले एउटा ईलेक्ट्रिक सप्लायसको कम्पनी, हाइड्रोपावर कम्पनी र गिटी वालुवाको डिपो छ भनी उल्लेख गरी सन् २०२२ डिसेम्बरमा एउटा डस्टर गाडी मासिक एक लाख रुपैयाँ भाडा लिने गरी १ बर्षको लागि केशव श्रेष्ठ र हर्कराज राईसंग सम्झौता गरी टासिले गाडि लगेका, राम थापा (९८४३४९१०१९)ले बसुन्धरा निशान हस्पिटल टासी भन्ने थुप्तिन छिरिङ्गले छ लाख रुपैया बुझाई हर्क राईले आफ्नो नाममा भाडामा लिई चाईनिज नागरिकलाई बस्न दिएको थिए भन्ने समेत ब्यहोराका कागज ।

XI. **विदित सिंहले ( ना.प्र.प.नं. १६-०१-७०-०८३५४, सप्तरी)को कागज:**

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं.२३धापाखेलमा रहेको डाउनटाउन अपाटमेण्ट बल्क B को ९ तलामा रहेको फ्ल्याट नं. B309 खाली रहेकोमा सन् ७ अगस्ट २०२३मा १२ देखी २२ अगस्ट सम्मको लागि चाईनिज नागरिक MI TIANले १० दिनको लागी Air bnb App मार्फत Online Book गरेकोमा १० दिन नभई एक महिनाको लागी भनि पुन: १० अगस्ट २०२३ मा १२ अगस्ट देखी ११ सेप्टेम्बर २०२३ सम्म बस्ने गरी MI TIANले Air bnb App मार्फतOnline Bookगरेकी, फ्याटको चाँवी दिने बेला निज महिलासँग कुरा गर्दा निज महिलाले दुईजना श्रीमान श्रीमती बस्ने हामी थान्का सम्बन्धी काम गर्छौ भनी उल्लेख गरेको, फ्ल्याट MI TIAN ले बुक गरी चाँबी लिएता पनि आफु नबसी चाईनिज नागरीकहरु हाल नाम थाहा भएको SAUTEN भन्ने DING SHENG FA, Roger or Steps भन्ने LI. Nengkai लाई बस्न दिइ आफु अर्को फ्ल्याट बुक गरी बसेका रहेछन् भन्ने कुरा मिति २०८०।०४।३०गते निजहरु अबैध सुन पैठारी गरेको भन्ने केशमा पक्राउ परे पश्चात थाहा पाएको, फ्ल्याटमा वस्ने क्रममा दिएको MI TIAN को नाममा जारी भएको राहदानी नं EF4184484 र राहदानी नं. EG 8841143उल्लेख भएको LI JIAN CHINA HENAN राहदानीहरुको प्रतिलिपी समेत पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज ।

XII. **शंकर वीर श्रेष्ठले (ना.प्र.प.नं.२७-०१-७९-१२८६२ काठमाडौं) को कागजः**

मिति २०७९/०८/१२ गतेबाट ५ वर्षको लागि श्रीकृष्ण गौलिलाई घरको सम्पुर्ण जिम्मेवारी दिई मासिक रु.८०,०००।– (असी हजार) बुझाउने गरी करारनामाको कागज गरि घर भाडामा दिएको उक्त गरमा चाईनिज नागरिकहरु बस्ने गरेका रहेछन भन्ने कुरा थाहा पाएको हुँ। मिति २०८०।०५।०५ गते सिलबन्दी खोली हेर्दा यस ब्यूरोवाट खानतलासी गर्दा पक्राउ प्रतिवादी CHINE GUANGDONG राहदानी नं. E94446558 बाहक LIN ZEQING र CHINE GUANGDONG राहदानी नं. EJ5053290 बाहक ZHONG JIANHUA, CHINE GUANGDONG राहदानी नं. EJ5053396 बाहक ZHONG JINGCHUAN बस्ने गरेकोमा खुल्न आएकोमा घर खानतलासी गर्दा सुन गाल्ने क्रममा प्रयोग हुने चिम्टाहरु,सुन राख्न प्रयोग गरीएको सेफ,MR1007-1336M1007 MTMC3800-212052 लेखिएको अवस्थामा रहेको ब्रेक प्याडको सानो भागको किल्पहरु, प्रतिवादी LIN ZEQING को CHINE SOUTHERN को टिकट थान १, सुन पगाली SIZE & SHAPE दिनको लागी प्रयोग हुने फलामको साँचोहरु,inc-co लेखिएको TOOL BOX, सुन गाल्नको लागी प्रयोग गरिएको तारसमेत वरामद भएको, कालो लागेको अवस्थामा रहेको पन्जाहरु,सेतो रङको विचमा प्वाल भएको किटको प्लेटहरु बरामद भएको, घरको पहिलो तलामा तीनवटा बेडरुम रहेको,दोस्रोतलामा रहेको कोठामा तारहरु रहेकोमा सो कोठासगै रहेको बाथरुममा सुन पगाने क्रममा धुवाले कालो भएको र भुईमा समेत कालो लेदो फालेको अवस्थामा देखिएकोले निज प्रतिवादीहरु मेरो रेखदेखमा रहेको घर प्रयोग गरी अवैध सुन गाली बेचबिखन गरेको एकिन भएको भन्ने समेत ब्यहोराको कागज।

XIII. **श्रीकृष्ण गौलीले (ना.प्र.प.नं. ४३१०१८/११२५२१ तनहुँ) को घटना विवरण कागजः**:

मैले चाईनिज नागरीकहरु, ZHONG JIANHUA (passport No:EJ5053290) का.जि.का.म.न.पा.वडा नं. २ लाजिम्पाट स्थित रहेको विजय राज झाको साडे दुई तलाको घर मिति २०७९/०८/१२ गतेबाट ५ वर्षको लागि करारनामाको कागज गरि लिईराखेकोमा उक्त घरमा सटर नभएकोले निज चाईनिजनागरीकलाई सटर समेत चाहिएको भनेको हुँदा मैले करार गरि लिई राखेको घरको अगाडी रहेको सुरेन्द्र डंगोलको घरको सटर १ वर्षको लागी मिति २०७९/०८/२० गते करारनामाको कागज बनाई मैले लिई चाईनज नागरीक ZHONG JIANHUA (PASSPORT No:EJ5053290) लाई घरको भाडा मासिक एक लाख र सटरको भाडा मासिक २५ हजार तिर्ने सर्तमा १ वर्षको लागि करारनामको कागज गरी अग्रिम ३ महिनाको तिन लाख पचहत्तर हजार रुपाँया भाडा लिई मिति २०७९/०८/३० गते घरको र मिति २०७९/०८/२५ गते सटरको करारनामको कागज बनाई निजलाई उक्त घर र सटरको साँचो हस्तान्तरण गरेको थिए। बत्ति, पानी र फोरहको समस्या भएको बेला बोलाउने गरेकाले म जाने गर्थे। घरमा म गएको बेला शंकास्पद सामानहरु केही देखिदैन थियो। सटर धैरै जसो बन्दनै हुने गर्थ्यो। सटरमा घडी र मोवाईलको पसल राख्ने भन्ने कुरा गरेका थिए टासी भन्ने थुप्तिन छिरीङको सम्पर्क न. ९८२८८२३९०९ र नरेश लामासँग सम्पर्क नं.९८०८९७६९५९ मा सम्पर्क गरी भारतीय नागरिकहरुलाई फ्याट खोजि दिएको भनी खुलाई चाईनिज नागरीक ZHONG JIANHUA को राहदानीको प्रतिलिपी र करारनामाको प्रतिलिपीहरु समेत पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

XIV. **HEBEI PROVIENCE TANGSHANG CHINA बस्ने LAND AND OCEAN INTERNATIONAL LOGISTICES PVT LTD –KTM -3 का संचालक राहदानी नं.EH4390872 बाहक LIU,FUYAN को कागजः**

मेरो नाम LIU,FUYAN हो । मेरो  जन्म मिति 15 Feb 1958 रहेको छ । मेरो श्रीमानको नाम : LI XVA-QING हो । मेरो स्थायी ठेगाना  HEBEI PROVIENCE TANGSHANG CHINA रहेको छ,राहदानी नं. EH 872140 का LI JIALIN बाहक मेरो छोरा हुन,मेरो छोरा सहित म 20/12/2022 मा ९० दिनको Tourist Visa लिई नेपालमा आएको थिए नेपाल आउनुको प्रमुख उदेश्य नेपालमा घुम्नु नै थियो । नेपाल आए पश्चात पोखरामा मासिक रुपमा ५ हजार रकम तिर्ने गरी होटलमा कोठा लिई ४।५ महिना जति समय पोखरामा नै रहेका थियौ । नेपालमा रहदा VISA बढाउनको लागी  राहदानी नं.EE7775433 बाहक CHEN CHUN SHANको मोवाईल नं.९८१०१७७५७७मा फोनमा कुरागरी पोखरावाट राहदानी काठमाडौंमा कुरियर गरि पठाई VISAको म्याद थपेको थिए। VISA को लागि आमा छोराको १५०००RMB दिएको थिए। मैले मेरो नाममा कुनै कम्पनी खोलिएको छैन् । नेपालमा मेरो कुनै व्ययवसाय छैन्  । नेपालमा रहदा वस्दा हुने खर्च चाईनामा रहेको बैंकिङ एप प्रयोग गरी खर्च चलाउने  गरेको थिए। पोखरामा बस्ने क्रममा मेरो छोराको बिबाह अन्जना गुरुङसँग भएकोमा चाईना जानको लागी राहदानी नं.EE7775433 बाहक CHEN JHUN SHAN लाई प्रतिव्यक्ति ३६००RMB दिएकोमा 9Aug 2023 मा टिकट लिई  मिति २०८०।०४।२६गते H9665 FLIGHT नं.वाट चाईना जानको लागेको अवस्थामा एयरपोर्टले यस व्यूरोमा  उपस्थित गराएको हो । हाल आएर सोधपुधको क्रममा मेरो समेत नाममा कम्पनी खोलेको निवेदनमा सही छाप समेत गरेको रहेछ । फाईलमा मेरो नामको रादहानी समेत रहेछ,उल्लेखित कम्पनी LAND AND OCEAN INTERNATIONAL LOGISTICES PVT LTD –KTM -3 मैले दर्ता गरेको होईन मेरो राहदानी प्रयोग गरी राहदानी नं.EE7775433 किन मेरो समेत नाममा कम्पनी दर्ता गरे CHEN CHUN SHAN मोवाईल नं.९८१०१७७५७७ थाहा होला । राहदानी नं. E 94446558 बाहक LIN ZEQIANG समेतलाई मैले चिनेको छैन् भन्ने समेत व्यहोराको कागज ।

xv. **<u>जे.एस. थोत्याले (भारतीय आधार कार्ड नं. २६०५ ३५०७ ३७०६) को कागज:</u>**

प्रथम पटक नेपालमा मिति २०७९ भाद्र १७ गते नेपाल आई एक महिना नेपाल बसि पुन: भारत फर्किएको र २०७९ चैत्र ३ मा एयर ईन्डिया विमान वाट दोस्रो पटक नेपाल आएकी हुँ , चाईनिज नागरिक ALEX लाई चिन्दछु निजको सक्कल नाम YAO PUCHENG हो , ALEX ले whats app मा मेसेज गरी नेपाल मा आइ ktv मा काम गर्ने केटीहरुलाई व्यवस्थापनको काम गरेको, ktv मा वेटरको साथसाथै गेष्टहरुसँगै बसेर खानपिन गर्ने काम गर्दै आइरेको र काम गरे वापत मासिक भारतीय पचास हजार रकम लिने गरेकी थिए। ktv को संचालक Yang Wen लाई ALEX मार्फत करिव ४ महिना अघि चिनेकी, ALI भन्ने LI WEN-TSUNG लाई ktv मा आउदा चिनेको थिएँ ।  SAUTEN भन्ने DING SHENG FA लाई  होटल सिचुवनमासंगै बसेको समयमा देखी चिनेको, Roger/Steps भन्ने Li Nengkai  लाई   LI WEN-TSUNG को जन्मदिनको सेलिब्रेशनमा ktv मा आएको समयमा चिनेको, ALEX, उसको साथि SAUTEN भन्ने DING SHENG FA र निजको केटी साथी समेत गरि जम्मा ४ जना बौद्द स्थित होटल सिचुवन गई २ वटा कोठामा बस्यौं, ALEX भारतमा रहदा निजले साथिको कम्पनीलाई सहयोग गर्दा आफुलाई समस्या उत्पन्न भएको, ग्राहकले धोका दिएको कारण २१ दिन भारतिय जेलमा बसेको, निजले WE CHAT मा DRI को बारेमा बताएको र DRI के हो भनि प्रश्न गर्दा DRI भारतको शक्तिशाली सरकारको अधिकृत भएको भनि बताएको, मेरो भारतिय आधारकार्ड, मतदाता परिचय पत्र, प्यान कार्डको प्रतिलिपी, घरधनी संग गरिएको घर

भाडा सम्झौता, गाडी भाडा सम्झौता, ALEX WORMEI भारतिय आधारकार्ड नम्बर उल्लेख भइको कागज, HDFC को पासबुक र चेकबुक समेतका कागजातहरु समेत यसै कागज मार्फत पेश गरेको भन्ने समेत व्यहोराको कागज।

XVI. **कान्छा लामाको घटना विवरण कागज :**

मेरो दावा छिरिङको चिनजानका साथी तिब्वतियन नागरिक टाँसी शेर्पासंग करिब ११ महिना पहिले लाजिम्पाटमा रहेको ईलि रेष्टुरेन्टमा खाजा खान गएको समयमा पेम्बा शेर्पाले चिनजान गराएका थिए। निज टाँसी शेर्पाले यार्सागुम्बाको काम पनि गर्छ भनि पेम्बा शेर्पाले मेरो नम्बर निज टाँसी शेर्पालाई दिएकोले सो पश्चात निजले मलाई पटक-पटक फोन गरी यार्सागुम्बा खरिद गर्ने भनि कुराकानी गर्ने गरेको थिए। करिब ४ महिना पहिले निज तिब्बतियन नागरिक टाँसी शेर्पाले मलाई फेसबुक मेसेन्जरमा १ के.जी. सुनको फोटो पठाई सुनको ब्यवसाय गर्नको लागी अनुरोध गरेका थिएँ। तर मैले निजलाई सुनको व्यवसाय नगर्ने भनि भनेपछी निजले सो विषयमा कुराकानी गरेका थिएनन् दावा छिरिङले बिभिन्न चाईनिज नागरिकहरुसंग मिलेमतो गरि अवैध सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँदा प्रस्तुत कसूरमा संलग्न ब्यक्तिहरुलाई कानून बमोजिम सजाय हुनुपर्छ भन्ने समेत व्यहोराको कान्छा लामाको घटना विवरण कागज।

XVII. **छेन जुन ताङको घटना विवरण कागज:**

अमेरिकन राजदुतावस नजिकै चुनदेवी स्थित रहेको घरमा मासिक ६० हजार भाडा तिरी बस्दै आएको छु। करिब १ बर्ष अगाडी म र मेरो दाई CHEN JING SHAN ले महराजगंजमा NAN TUO नाम गरेको कार्गो कम्पनी दर्ता गरी बसेको छु तर हाल सम्म उक्त कम्पनीबाट काम गरेको छैन्। उक्त कम्पनी संचालन गर्न मेरो बुबा CHEN QIU ले चिनबाट पटक-पटक गरी अमेरिकिन डलर ५० हजार रकम चक्रपथमा रहेको एन एम बि बैंक मार्फत पठाउनु भएको थियो। नेपालमा नै व्यवसाय गर्ने गरी कम्पनी दर्ता गरेको र कम्पनी दर्ता पश्चात व्यवसाय भिषा पाउन सहज हुन्छ भनि कम्पनी दर्ता गरेका थियौँ। काठमाडौं लाजिम्पाटमा बस्ने चाईनिज नागरिकहरु Sam भन्ने ZHONG JIANHUA, ZHONG JINGCHUAN, PENG LINGFENG लाई चिन्दिन। लाजिम्पाटमा बस्ने चाईनिज नागरिक LIN ZE QIANG लाई अर्को एक जना चाईनिज नागरिक मार्फत सिमकार्ड लिईदिनको लागी अनुरोध गरेकोमा सिमकार्ड लिन आएको समयमा देखी चिनेको हुँ। सन् २०२२ मा काठमाडौं ठमेल स्थित रहेको पसलबाट मैले पाँचवटा एनसेल कम्पनीको सिमकार्ड खरिद गरेकोमा एउटा आफैले प्रयोग गरी चारवटा सिमकार्ड घर/कोठामा राखेकोमा दुईवटा फेला पारी ठमेलमा निज चाईनिज नागरिक नआई हाल पक्राउ परी आएका चाईनिज नागरिक LIN ZE QIANG लाई सिमकार्ड दिनुनभनि WE CHAT मा फोन गरी गरी सिमकार्ड लिने आउने ब्यक्तिको हुँलिया बताएको हुँदा मैले उक्त दुइवटा सिमकार्ड हुँलिया अनुरुपको निज चाईनिज नागरिक LIN ZE QIANG लाई ठमेलको बाटोमा भेटी दिएको थिएँ भन्ने व्यहोराको छेन जुन ताङको घटना विवरण कागज।

XVIII. **पूर्ण सिद्धि शाक्य(५११०४.नं.प्र.ना)को घटना विवरण कागज:**

चाईनिज नागरिक King भन्नेले सन् २०२३ अप्रिल ६ तारिकमा चिनबाट Mark name:-QX22B100031 उल्लेख गरी काठको बाकसमा पठाएको सुन गाल्ने मेसिन मेरो काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ६ लोट्रे मार्ट नजिक रहेको गोदामबाट मनिष पौडेलले हर्क राज राईलाई बोलाई हर्कराज राईले बुझि लगेको कुरा हाल यस ब्यूरोमा आए पश्चा त सोधपुछ गर्ने क्रममा थाहा पाएँको हुँ। सो गोदामको चाबी निज

तासीले झिकी लगी सामानहरु मगाई  गोदाम गरी राखेको हुनु पर्छ । निज तासी बिगत २/३ दिन अगाडी देखी पसल बन्द गरी सम्पर्क बिहिन भएका छन् भन्ने समेत व्यहोराको कागज ।

XIX. **पेम्बा दोर्जे शेर्पाको घटना विवरण कागजः**

का.जि.का.म.पा. वडा नं. ३ मा लप्सी ट्रि गार्डेन रेष्टुरेन्ट र कम्पनी रजिष्टारको कार्यालयमा प्रिन्सु बिजनेश ईन्टरप्राईजेज दर्ता गरि सोही कम्पनीबाट बिभिन्न ब्यक्ति तथा कम्पनीहरुले आयात र निर्यात गर्ने सामानको (भन्सार जाँचपास) गरिदिने काम गर्दै आईरहेको छु । मेरो मुख्या पेशा (भन्सार जाँचपास) नै हो । मैले काका भन्ने गरेका किशोर बस्नेतले करिब १ बर्ष पहिले काठमाडौं लाजिम्पाटमा ओस्कर रेष्टुरेन्टमा कफी खाने क्रममा बेल्जियम नागरिक दावा छिरिङसंग भेटाई चिनजान गराएका थिएँ । दावा छिरिङ भियना होटल संचालक हुन् । सो पश्चात दावा छिरिङ र म विचमा नम्बर साटफेर भई एकआपशमा कुराकानी गर्ने गरेका थियौँ । निज र म बिचमा दाजु भाईको सम्बन्ध रहेको छ। निजले मलाई लाजिम्पाटमा रहेको एम्बासडर होटल, निजले नै संचालन गरेको भियना होटल र ओस्कर रेष्टुरेन्ट लाजिम्पाटमा बोलाई भेट गरी मेरो कम्पनीमा काम गर्ने चाईनिज नागरिक श्याम हेनरी भन्ने ज्याकी च्यान र एकिन नाम थाहा नभएको निजको साथी चाईनिज नागरिकलाई बस्नको लागी घर खोज्नु पर्यो भनेकोले म, दावा छिरिङ र दावाको मोटरसाईकल चलाउने बिक्रम चन्द भन्ने ब्यक्तिहरु मिली काठमाडौंको चुनदेवी, वालुवाटार, नक्साल लगायतका स्थानहरुमा गई घर खोजेकोमा नक्साल र चुनदेवीमा घर पाईएको तर सो घरको घरभाडा सम्झौता मसंग गर्नु पर्ने भनि भनेकोले मैले नमानेपछी घरभाडामा लिइएको थिएन । त्यसपछी करिब दुइ महिना पछी निज दावाले छिरिङ पानिपोखरी स्थित रहेको मैले संचालन गरेको लप्सि ट्री गार्डेन रेष्टुरेन्टमा मलाई भेट्न आई मोबाईलमा सुनको फोटो देखाई सुन खरिद गर्ने मान्छे कोही छ भने खोज्नु पर्यो भनि मलाई भनेकोमा मैले सुन खरिद गर्ने ब्यक्तिहरु खोज्न सक्दैन भनि निजलाई फिर्ता पठाएको थिएँ । मिति २०८० सालको बैशाख १ गते नयाँबर्ष मनाउने भनि निज दावा छिरिङले संचालन गरेको ठमेल स्थित रहेको होटल भियनामा मेरो छोरा/छोरी, श्रीमती, भाई, बहिनी समेतलाई खाना खानको लागी लिएर गएकोमा खाना खाई फर्कने क्रममा होटलको कम्पाउण्डमा चाईनिज नागरिक श्याम हेनरी भन्ने ज्याकि च्यान र अर्को चाईनिज नागरिक(नाम थाहा नभएको) भेट भई मेरो छोराछोरीहरुलाई क्यासिनोबाट जितेर आएको भनि छोरा र छोरीलाई रु पन्ध्र- पन्ध्र हजारको दरले रकम दिएका थिएँ । करिब दुइ महिना पहिले दावा छिरिङ दाजुले मलाई चाईनिज आरएमबि चाहिएको छ भनि भनेकोले मैले करिब नेपाली रु ३० लाख रकमको आरएमबि मैले कमिसन लिई (सटही भन्दा बढी रकम मागी) सटही गरी दिएको थिएँ । सो वापत दावा छिरिङले मलाई दिनुपर्ने रकम जिवन चलाउने(९८५११२७५९०) ले दिन्छ भनि सम्पर्क नम्बर दिएकोमा निज जिवन चलाउनेको ब्राजिल राजदुतावासको नजिक रहेको अफिसमा गई कुराकानी गर्दा निजले आफ्नो भाई जगत चलाउने (९८६०८८३००७) को नामबाट मेरो श्रीमती निमा लामाको नबिल बैंकमा रहेको खातामा Connect IPS र बैंक मार्फत रु ७ लाख र ४ लाख रकम जम्मा गरिदिएका थिएँ । अन्य रु २१ लाख रकम मैले निजै दावा छिरिङसंग नगदै लिएको थिए ।  मलाई दावा छिरिङसंग चिनजान गराएका किशोर बस्नेत(९८४०००६१७१)ले मलाई भेटी निज दावा छिरिङले सुन गाल्ने केमिकल खोजिदिनको लागी भनेको थियो मैले केमिकल खोजिदिए वापत मलाई रु १ लाख २० हजार दिएको छ भनि मलाई भनेका थिए । दावा छिरिङले चाईनिज नागरिक श्याम हेनरी भन्ने ज्याकी च्यान समेतसंग भेट गर्ने गरेका थिएँ । दावा छिरिङ समेतले नेपालमा अवैध रुपमा सुन पैठारी गर्ने कार्यमा को-कुन ब्यक्तिसंग के-कस्तो मिलेमतो गरेको भन्ने मलाई एकिन जानकारी छैन् । निज दावा

छिरिङले मलाई सुन खरिद गर्ने ब्यक्ति खोज्न भनेको, चाईनिज नागरिकहरुलाई बस्नको लागी घर खोज्नको लागी गएको, नेपाली रु ३० लाख रकमको चाईनिज आरएमबि सटही गर्न लगाई चाईनिज आरएमबी लिएको र किशोर बस्नेतलाई सुन गाल्ने केमिकल खोज्न लगाई केमिकल लिएको समेतबाट निजले बिभिन्न चाइनिज नागरिकहरुसंगको मिलेमतोमा नेपालमा अवैध सुन पैठारी गर्ने गरेको थाहा पाएको भन्नौ समेत व्यहोराको कागज।

xx. **बिक्रम चन्द (दैलेख ,२३५/१०२१ .नं.प्र.ना) को कागज :**

दावा छिरिङको का.जि.सोह्रखुट्टे स्थित भियना होटल संचालन गरेका थिए। निज दावा छिरिङ्गको श्रीमती अमला रोका मगर पनि सो होटेलको संचालक भएकोले सामान्य चिनजान थियो। निजहरु होटल संचालन गरी बस्ने गरेकोले चिनेको हुँ। सो पश्चात हालसम्म पनि निज दावा छिरिङसँग मेरो कहिले काँही फोन (९८४०३००००० र ९८१८३७७१७७) मा सम्पर्क गर्ने भेटघाट गर्ने गरेको थिए। दावा छिरिङसँग सम्पर्कमा रहेका किशोर बस्नेतसँग निजै दावा छिरिङ्ग मार्फत चिनजान भएको हो। निज किशोर बस्नेतले चिनबाट मास्क ल्याई ब्यापार गर्छु भनी बताउने गरेका थिए। दावा छिरिङ्ग र किशोर बस्नेतले आफूहरु दाजुभाई भन्थे तर निजहरु बिचको कारोवार सम्बन्ध के थियो मलाई थाहा भएन। निज किशोर बस्नेत समय समयमा ब्यापारको सिलसिलामा चिनमा गई फर्किने गरेका थिए। निजसंग पनि मेरो समय समयमा फोन (९८४०००६१७१) सम्पर्क तथा भटेघाट हुने गरेको थियो। राजस्व अनुसन्धान विभागबाट एअरपोटमा सुन सहित मानिस पक्राउ भए पछी मैले चिनेका बेल्जियम नागरिक भियना होटेलका संचालक दावा छिरिङ्ग पनि पक्राउ परेका थिए। निज पक्राउ परेको भोलि हो या पर्सि पल्ट किशोर बस्नेतले मलाई फोन गरी एक पटक भेटौ न भनेकाले म निज बसेको लाजिम्पाटको रेडिसन होटेल पछाडि भएको नरचोक होटेलमा निज किशोर बस्नेतलाई भेट्न गएको थिए। उनी सो होटेलको १०२ कोठामा बसेका थिए। भेटघाटको क्रममा निज किशोर बस्नेतले दावा छिरिङले कार्पेट वास गर्नको लागी एउटा मेसिन चाहियो भनेकाले मैले मगाई निज दावालाई बिक्री गरेको थिए। मैले ल्याई दिएको उक्त मेशिन सुन गाल्ने मेशिन रहेछ अफ्ठ्यारो पर्ने भयो भनेको साथै निज दावा छिरिङ्गले ४ जना चाईनिजहरु छन तिनीहरुलाई भारत पास गराउन पर्ने छ सो को लागि के कति खर्च लाग्छ बुझिदेउ भनेकोले चाईनिज नागरिकलाई भारत पठाउनको लागि बुझ्दा प्रति ब्यक्ति रु.८,००,०००।– लाग्ने रहेछ र सो रकम दिने भए मैले चाईनिज नागरिकलाई भारत पठाई दिन सक्छु भनेको थिए भनी निज किशोर बस्नेतले मलाई भनेका थिए। म निजसंग करिव ४०/४५ मिनेटसंगै बसेको थिए। सो समयमा निजले छोरालाई बोलाई एउटा कालो प्लाष्टिकको झोलामा यार्सागुम्बा दिई पठाएका समेत थिए। मैले टोखामा सुन गाल्ने ठाउ नै रहेछ नि भनेर सोध्दा निजले मैले खोजि दिएको हो यस्तो होला भन्ने थाहा नै थिएन समेत भनेका थिए। किशोर बस्नेतले ४ जना चाईनिजहरुलाई भारत पठाए पठाएनन् मलाई थाहा भएन। हाल बुझ्दा उनले भारत पठाउने भनेका चाईनिज नागरिकहरु सिआईबिले पक्राउ गरि सकेको भन्ने थाहा हुन आयो। उनीहरु माथी अवैध सुन पैठारीमा मुद्दा चलेको रहेछ। सो दिन पश्चानत किशोर बस्नेतसंग मेरो कुनै सम्पर्क भेटघाट भएको छैन। उनी पनि मोवाईल स्वीच अफ गरी सम्पर्क विहिन भएको थाहा पाए। दावा छिरिङले अवैध रुपमा सुन पैठारी गर्ने गरेको सम्वन्धमा दावा छिरिङ पक्राउ परे पश्चात मात्र थाहा पाएको हुँ। अवैध रुपमा सुन पैठारी गर्ने कार्यमा संलग्न ब्यक्तिहरुलाई कानुन बमोजिम कारबाही गरि पाँउ भन्ने व्यहोराको कागज।

XXI. **विजय श्रेष्ठ(ना.प्र.प.नं.२५-०१-७०-१००६९ नुवाकोट) को कागज:**

का.जि.का.म.न.पा.वडा नं.२६ ज्याठा स्थित रहेको होटल भियानामा म होटल स्थापना काल देखिनै काम गर्दै आईरहेको छु । उक्त होटलमा क्यासियर साथै चाईनिज भाषाको दोभाषेको रुपमा काम गर्दै आई रहेको छु । होटल भियानाको संचालक दावा छिरिङ,दावा छिरिङको श्रीमति अमला रोका र मंजिल श्रेष्ठ हुन । उक्त होटल पहिला चेङफेङ्ग नामबाट स्थापना भई हाल उक्त नामलाई परिवर्तन गरी होटल भियानाको नामबाट संचालन हुँदै आएको छ । होटल संचालक दावा छिरिङ र अमला रोका गोगंबुमा बस्ने गर्दछन् । दावा छिरिङ र अमला रोकाले भियना मल्टिपर्पोज नाम गरेको कम्पनी स्थापना गरेको र उक्त कम्पनीले नेपालको विभिन्न जिल्लाहरुमा गई सुन उत्खनन् गर्न को लागि ग्लोवल टेन्डर गरी लाइसन्स प्राप्त गरेका छन् । होटलका संचालकहरु माटोको नमुना चाईना पठाउने प्रयोजनको लागी खानि तथा भुगर्व विभाग गएको र राम्रो माटोमा परिमाण भेटिएमा खन्ने र चिन लाने भन्ने कुरा सुनेको थिए । माटोको नमुना पठाउनको लागि कागजपत्र तयार गरेकोमा उक्त कागज पत्र राजस्व अनुसन्धान विभागले होटल भियानामा छापामार्ने क्रममा उक्त कागजपत्रहरु फेला पारी लिई गएका थिए। उक्त होटलको माछापुच्छे बैंक, ठमेल शाखामा खाता नं. १६७००९७५४१४०००११ बाट खाता संचालनमा रहेको छ । उक्त खातामा म स्वयम होटलको पैसा जम्मा गर्न जाने गरेको छु । खातामा रकम जम्मा गर्न जाँदा मासिक १२ देखी २० लाख सम्म जम्मा गर्ने गरेको थिए । अन्य के कुन बैंकहरुमा खाता संचालनमा रहेको छ मलाई जानकारी छैन् । हाम्रो होटलमा सागर नाम गरेको व्यक्ति आई बसी चाईनिजहरुको भिषा सम्वन्धि काम गर्ने गर्दथे । होटलमा आउने चाईनिज ग्रुपहरुको BUSINESS VISA समेतका भिषाहरुको काम निजले गराउने गरेका थिए । एक जनाको भिषा सम्बन्धी कागजात तयार गर्न निजले नेपाली दुई हजार लिने गरेका थिए । निजले We chat मा म्यासेज गरी चाइनिजहरुलाई होटलको लबिमा बोलाई भिषा सम्बन्धी कुरा गर्ने गर्दथे । निजको एकिन नामथर, वतन र सम्पर्क नं. समेत मलाई थाहा छैन । राहदानीको विषयमा मलाई जानकारी छैन । मैले काम गर्ने होटलमा चिनिया नागरिकहरु धैरै आउने गर्दथे । होटेल भियाना संगै रहेको KTV (चाईनिज गित गाउने रेष्टुरेन्ट) को संचालन गर्ने चिनिया नागरिक Yang Wen लाई चिन्दछु । करिव ६/७ महिना देखी KTV संचालन गर्दै आईरहेका छन् । उक्त व्यक्ति होटलमा आउने गर्दथे । होटेल भियाना संगै रहेको KTV संचालनको लागी दावा छिरिङले मासिक रु दुई लाख पचास हजार देखी तिन लाख बुझाउने गरी Yang Wen लाई भाडामा दिएका हुन भन्ने कुरा सुनेको हुँ । होटल भियनामा गेष्टहरु बस्नको लागी ५० वटा कोठाहरु छन् । चाईनिज नागरिक ALEX भन्ने YAO PUCHENG KTV मा प्राय आई रहन्थो । होटल भियानामा कहिले साथीहरुसंग कहिले एक्लै आउने गरेका थिए । निजले साथमा सधै Hand Bag बोकी आउने गर्दथे । करिव दुई महिना अगाडी Roger/Steps भन्ने Li Nengkai KTV मा आफ्नो घडी हरायो भनि होटलको CCTV हेर्न आएका थिए । SAUTEN भन्ने DING SHENG FA, ALI भन्ने LI WEN-TSUNG चिनेको र देखेको छैन । YANG WEN ले भारतीय महिला TAMMILA ZINGKHAI लाई साथमा लिई आई ALEX भन्ने YAO PUCHENG र ALI or LIभन्ने Li WEN TSUNG सन् २०२३ जुलाई १०( मिति २०८०।०४।०४ गते) देखी होटल भियनामा कोठा नं. ३१५ र २०४मा वसेको र निजहरु होटलमा बस्ने क्रममा २-३ दिनको अन्तरालमा कोठा परिवर्तन गरी करिव ७ दिन सम्म वसेको थिए । भनी होटलको अभिलेख समेत पेश गरेको , राजस्व अनुसन्धान विभागले छापा मारेको ६/७ दिन पछि Yang Wen ले होटलमा के छ स्थिती कसैले सोधेमा म र MI TAN सँगै भएको र चाइना गएको भनि वताउनु भनि मेरो We chat मा म्यासेज

पठाएका थिए। होटल भियानामा करिव २ वर्ष अगाडी Chang shu होटलका संचालक LAO YOU ले Yang Wen लाई लिई होटल भियानमा रहेको रेष्टुरेन्ट संचालनको लागि दावा छिरिङलाई भेट्न आएका थिए। KTV को संचालक Yang Wen र दावा छिरिङको चिनजान भएको थियो भन्ने समेत व्यहोराको घटना विवरण कागज ।

**XXII. मनिष पौडेल ( ना.प्र.प.नं.१९-०२-७३-००२२९ सर्लाही) को कागज :**

म litmus Industres Ltd मा बिक्री प्रवन्धकको काम गर्छु। मेरो मुख्य काम मार्केटिङ् हेर्ने रहेको छ। सो बाहेक King भन्ने चाईनिज नागरिकसँग करिब ५ बर्ष अगाडी का.जि. ठमेलमा भेटघाट भई चिनजान भए पश्चात मलाई चाईनिज नागरिक King ले म चाईनाबाट सामान भन्सार हुदै सडक माध्यमबाट काठमाडौं पठाउछु सो सामानहरु तिमीले मैले भनेको ब्यक्तिहरुलाई दिनुपर्छ सो बापत मासिक नेपाली रु.१९,०००।–दिन्छु भने पश्चात सो समय देखी मैले निज King भन्ने ब्यक्तिले चाईनाबाट रसुवा तथा तातोपानी भन्सार कार्यालय हुँदै काठमाडौं पठाएको सामानहरु निज King ले Wechat मा Mark Name, Pcs, Weight, सामान बुझाउनु पर्ने ब्यक्तिको मोबाईल नं., Ware House (गोदाम)को मानिसको मोबाईल नं र WareHouse(गोदाम) को ठेगाना पठाउने गरेका छन् र मैले सोही अनुसार King ले भने अनुसारका सम्वन्धित ब्यक्तिहरु समक्ष सामान पुर्याईदिने काम गरिदिने र सो बापत मलाई निज King ले मासिक नेपाली रु.१९,०००।– दिने गरेका छन् । सामान ल्याउँदाको प्रज्ञापन पत्र समेतका कागजातहरुको बारेमा मलाई जानकारी हुदैन । मैले सामान बुझ्न जाँदा कुनै रकम तिर्ने गरेको समेत छैन । निज King भन्ने चाईनिज नागरिकले सन् २०२३ अप्रिल ६ तारिकमा Wechat मा मलाई Ware House(गोदाम)को ठेगाना भनी का.जि. बौद्ध, सो स्थानको लोकेशन म्याप, गोदामको मानिसको फोन नं.९८४३२५९९९९, सामान प्राप्त गर्ने ब्यक्तिको Mark name:-RT1180NBE , 2pcs, 180 Kg र सामान दिनु पर्ने ब्यक्तिको मोबाईल नं. ९८१८४५७८५५ हो भनी विवरण पठाईदिए सो बिबरण साथ अन्य दुईवटा सामानहरुको विवरण पनि पठाएका थिए। सो पश्चात म सोहि दिन सन् २०२३/०४/०६ मा मैले गोदामका ब्यक्ति भनी नम्बर दिईएको चाईनिज नागरिकको मोबाईल नं. ९८४३२५९९९९ मा फोन गरी का.जि बौद्द लोट्रे मार्ट नजिक रहेको गोदाममा गई हेर्दा सो चाईनिज नागरिक King ले पठाएको Mark name:-RT1180NBE नमिले पश्चात मैले सोही स्थानबाट King लाई Wechat मा म्यासेज गरी Mark name नमिलेको भनी जानकारी गराउँदा निज King le सो दुई पिस सामानको फोटो मलाई पठाईदिए पश्चात मैले सामान एकिन गरी हाल नाम थाहा भएका हर्क राज राईलाई फोन गरी तपाईको सामान चाईनाबाट आएको छ के कुन स्थानमा सामान ल्याई दिउ भन्दा हाल नाम थाहा भएका हर्क राज राईले म सोही स्थानमा सामान लिन आउछु भनी बताई निज हर्क राज राई सोही गोदाममा सामान लिन भनी आई निज हर्क राज राईले सो Mark name:-QX22B100031 , 2pcs सामान लिएर गएका हुन्। सो सामान बाहिरबाट काठको बाकसमा बन्द अवस्थामा रहेको थियो। सो सामान सुरुमा के थियो भन्ने मलाई थाहा थिएन। हाल यस ब्यूरोबाट फोन गरी बोलाई जानकारी गराएपश्चात King भन्ने चाईनिज नागरिकले २०२३/०४/०६ मा नेपाल पठाएको Mark name:-QX22B100031 , 2pcs सामान सुन गाल्ने मेसिन रहेछ। सो सामान सुन गाल्ने मेसिन भएको कुरा हाल आएर मात्र मैले थाहा पाएको हुँ। हाल पक्राउ परेका प्रतिवादीहरु मध्ये सो चाइनिज नागरिक King ले पठाएको Mark name:-QX22B100031, 2pcs सुन गाल्ने मेसिन लिएर जाने लाई मात्र चिन्दछु। अन्य ब्यक्तिहरुलाई म चिन्दिन। निज King भन्ने ब्यक्ति

अं.३४/३५ वर्षको चाईनिज नागरिक हो ।निजको Facebook प्रोफाईल नाम king china हो । निज King ५ वर्षको अन्तरालमा ३ पटक नेपाल आएका छन् । निज King सँग मेरो अन्तिम पटक २०२३/०५/१३ मा का.जि.ठमेलमा भेट भएको थियो । निज King ले नेपाली फोन नं. ९८२३३०८५३३ प्रयोग गर्छन् । निज हर्क राज राई समेतले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई थाहा थिएन । मलाई निज King ले मासिक रु.१९,०००।– पारिश्रमिक दिने भएको कारण निजले भनेको सामान सम्वन्धित ब्यक्ति समक्ष पुर्याईदिने काम मात्र गरेको हुँ। सो भित्र के सामान हुन्छ मलाई केही थाहा हुदैन । यसरी अवैध रुपमा सुन पैठारी गर्ने कार्यमा संलग्न ब्यक्तिहरुलाई कानुन बमोजिम कारबाही गरि पाँउ । मैले निज King भन्नेको फोटो, निज king ले मलाई Wechat मा सामानको विवरण पठाएको म्यासेज, सामानको बौद्दको गोदाममा खिचेको फोटो, गोदाममा काम गर्ने चाईनिज नागरिकको मसँग सेल्फी खिचेको फोटो र गोदाम धनीको फोटो समेत पेश गरी घटना विवरण कागज ।

xxiii. **सबिन श्रेष्ठ ( ना.प्र.न.२४-०१-७५-०६२५१) को कागज:**

काठमाडौं जिल्ला बौद्ध, जोरपाटी घर भएका प्रकाश लामाले संचालन गरेको तामाङ प्रनुज ट्रेडर्स प्रा.लि. को गोदाम सुभरभाईजर पदमा काम गर्छु । मेरो मासिक तलब रु.२५,०००।– रहेको छ । तामाङ प्रनुज ट्रेडर्स प्रा.लि.ले चिनको रसुवा नाकाबाट सामानहरु आयात गर्ने काम गर्छ । चिनबाट सामान आयात गरी भण्डार गर्न काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ३२ मा गोदाम रहेको छ । मेरो काम सो गोदाममा आएका सामानहरु बुझी गोदामबाट सम्बन्धीत ब्यक्तिहरुलाई सामान बुझाउने रहेको छ । मलाई गोदामका संचालक प्रकाश लामाले फोन गरी भन्सार गरी आएका सामानहरु लिएर आएको गाडी नंम्बर मलाई टिपाउछन् । सो पश्चात मैले निज प्रकाश लामाले भने बमोजिमका सामानहरु गोदाममा अनलोड गरी राख्ने गरेको छु । सो अनलोड गरी राखेको सामानहरु प्रकाश लामाले भने बोजिमको ब्यक्तिहरुलाई गोदामबाट बुझाउने गरेकको छु । सन् २०२३ जुन ८ मा रसुवा भन्सारबाट भन्सार जाँच पास भई गाडीमा म काम गर्ने गोदाममा अन्य सामानहरु सहित Gold MELT MACHINE(2 SET) एउटै काठको बाकसमा प्याक गरी आएको थियो । सो Gold MELT MACHINE(2 SET) सहितको सामानहरु आएको गाडीको सबै सामानहरु गोदाममा राख्नु भनी संचालक प्रकाश लामाले फोन गरी भनी सम्बन्धित सामान धनीहरुको फोन नंम्बर समेत दिई सो सामानहरु जिम्मा लगाउनु भन्नु भएको थियो । सो Gold MELT MACHINE(2 SET) को Billty मा नेपालमा बुझ्ने ब्यक्तिको नाम HARKA RAJ RAJ, फोन नं.9818457855 थियो । सो Billty XIAO DING TRANSPORTATION बाट संचालक प्रकाश लामालाई प्राप्त भएको थियो । सो Gold MELT MACHINE(2 SET) गोदाममा ईन्ट्री भएको चार/पाँच दिन पश्चात मैले मिति २०८०/०३/०१ गते सम्बन्धीत ब्यक्ति हर्क राज राईलाई फोन गरी गोदाममा बोलाई सो Gold MELT MACHINE(2 SET) जिम्मा लगाईदिएको हुँ । सो Gold MELT MACHINE(2 SET) भन्सारबाट छुटाउनको लागी म काम गर्ने तामाङ प्रनुज ट्रेडर्स प्रा.लि.ले भन्सार मुल्य तिरेको हो । सो Gold MELT MACHINE(2 SET)को भन्सार मुल्य कम्पनीका संचालकले बुझाएको हुँदा सो रकम के कती बुझाएको हो, मलाई थाहा छैन । सो Gold MELT MACHINE(2 SET) जिम्मा लिन आउने हर्क राज राईले सामान भन्सारबाट कटाई नेपाल भित्राए बापतको रकम रु. ९८,०९४।– बुझाई सो Gold MELT MACHINE(2 SET) लिएर गएका हुन । सामान ल्याउँदाको प्रज्ञापन पत्र समेतका कागजातहरु सामानहरु आउँदा सँगै आउने गर्दछ । प्रज्ञापन पत्र समेतका कागजातहरु

हामीले कार्यालयमा राख्ने गरेका छौं। सो Gold MELT MACHINE(2 SET) के कुन प्रयोजनको लागी ल्याईएको थियो, मलाई केही थाहा छैन, तत्काल सो मेसिन कसले पठाएको भन्ने थाहा थिएन। हाल सो मेसिन को कसले पठाएका भनी बुझ्दा Sautain भन्ने चिनिया नागरिकले पठाएको भन्ने थाहा पाएको हुँ। उक्त Gold MELT MACHINE(2 SET) अवैध रुपमा सुन पैठारी गरी सुन गाल्न लिएर आएको कुरा हाल आएर मात्र मलाई थाहा भयो । हाल पक्राउमा परेका प्रतिवादीहरु मध्ये हर्क राज राईलाई मात्र चिन्दछु । निजलाई Gold MELT MACHINE(2 SET) बुझ्न आउने क्रममा देखी चिनेको हुँ । निज हर्क राज राई समेतले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई थाहा थिएन । सो Gold MELT MACHINE(2 SET) को प्रज्ञापन पत्र, हर्कराज राईसँग भन्सार चार्ज लिई सामान बुझाएको बिल, ट्रान्सपोर्टबाट आएको समेतका कागजातहरु समेत यसै कागजसाथ पेश गरी कागज गरेको देखिन आएको भन्ने समेत ब्यहोराको कागज।

xxiv. **दिपेश कुमार पुनको कागजः-**

मैले पक्राउ परेका दावा छिरिङ्गलाई चिन्दछु । कहिलेकाही फोन सम्पर्क हुने गरेको थियो । हामी बिचमा केही कारोवार छैन, अमला रोका मेरो गाउको भएको, निज शहिद परिवारको भएको साथै माओवादी पार्टीको रोल्पा काठमाडौं सम्पर्क मञ्चको उपाध्यक्ष भएकोले निजसंग सम्पर्क भेटघाट चिनजान भएको हो , दावा छिरिङ्गसंग सामाजिक सञ्जालमा आए अनुसारको मेरो कुनै प्रकारको कारोवार छैन र निजले गरेका कुनै पनि अपराधिक काम कारवाहीमा मेरो संलग्नता छैन, अनुसन्धानको लागी मोवाईल परीक्षणको लागी पेश गरेको छु भन्ने व्यहोराको कागज रहेको ।

xxv. **कृष्ण बहादुर गुरुङ (ना.प्र.प.नं. ६२५६/९०४९ सुनसरी) को कागज :**

सन् २०२२ को जुलाई १० मा चिनीया नागरिक नेपाली बोल्ने मिष्टर वाङ ( WANG DAOJIN) र उनको सहयोगी चाईजिन ईन्टरप्रेटर नरेश लामाले मलाइ भेटी हामी हाईड्रोमा काम गर्ने मानिस हो । जति पनि सामान चिनबाट ल्याएर नेपाल र भारतमा सामान बितरण गर्ने काम हो । चीनिया नागरिकले नेपालमा बसेको १० बर्ष भयो भनी बिश्वास दिलाए । नेपाली रु. १,८०,०००/- ( एक लाख असी हजार ) मासिक भाडा तय सन् २०२२ को जुलाई १० देखि बस्छु भनी घर जिम्मा लिएको हो । ६ महिनाको भाडा रु.१०,८०,०००/- (दश लाख असी हजार) दिएको थियो । घरकोठाको भाडा दिने जिम्मा चिनिया नागरिक YONGXIN PENG ले लिएका थिए । घर भाडा लिने क्रममा बढीमा ४ जना मानिस हुन्छ भनेका थिए घरमा बस्न शुरु गरेको २/३ दिन पछि ३ जना भारतीय नागरिक र १ जना भारतीय केटी पनि ल्याएर आए सो बेलामा मैले मिष्टर वाङ ( WANG DAOJIN) लाई फोन गरेर ४ जना मानिस राख्छु भनेको किन थप मानिस लिएर आएको भनी सोध्दा २/४ दिन हो यीनिहरु बस्दैनन गैहाल्छन भनेका थिए । मेरो बिचारमा ८/९ दिन बसेर भारतीय हरु गए । फेरी आएनन । ६ (छ) महिनाको लागि भाडा दिई गएकोमा जनवरी २०२३ मा चाईनिजहरु नयाबर्ष मनाउन चीन तर्फ गए सो बेलामा घरको ढोकाको ताला लगाएर चाबी आफै लिएर गए । जनवरीमा भाडा माग्दा जाँदा मिस्टर वाङलाई फोन गर्दा मलाई भेट्न आउनु म सितापाईला बस्छु भन्यो । म खोज्दै उसको घरमा पुग्दा चिनिया नागरिक YONGXIN PENG दुबई तिर गएका छन उनी आएपछी घरको भाडा दिन्छन भन्यो । यसै क्रममा चिनिया नागरिक YONGXIN PENG काठमाडौं आयो । घरमा चोरी भएछ मैले बूलानिलकण्ठ प्रहरीमा खवर गरें २ जना प्रहरी आई चेकजाँच गरी गयो । सो बेलामा जुत्ता लगाएतका सामान्य चिजबस्तुहरु मात्र हराएको हुँदा प्रहरीमा रिपोर्ट नगर्ने कुरा गर्यो । त्यसपछि सन् २०२३ को अप्रिल महिनामा चिनिया नागरिक YONGXIN PENG

चाईना जान्छु भनी गयो। सो बेलामा कोठा छोड्ने भए अरु मानिस खोज्छु भन्दा म चाईनाबाट फर्केपछि मेरो सामान लैजान्छु अनि कोठा खालि गरौला भन्यो। सन् २०२३ को जुन महिनाको १२ तारेखमा चिनिया नागरिक YONGXIN PENG आएर सामान लिई गयो र घर खालि गर्यो। घरको स्टोरमा रहेको ब्रेक प्याड भएको कार्टुन मध्ये ठूलो कार्टुनमा १८ वटा सानो प्याकेट रहेको, सो मध्ये ९ वडा प्याकेटमा प्रति प्याकेट ४ वटा ठूलो साईजको ब्रेक प्याड रहेको जसमा ३६ वटा ठूलो साईजको ब्रेक प्याड रहेको सोही कार्टुनमा सानो साईजका ब्रेक प्याड रहेको ब्रेक प्याड रहेको ६ वटा प्याकेट रहेको जसमा ४० थान ब्रेक प्याड रहेको, ब्रेक प्याड भएको कार्टुन मध्ये सानो कार्टुनमा सानो प्याकेट ३ वटा रहेकोमा सो प्याकेटहरु भित्र सानो ब्रेक प्याड २८ वटा रहेको सो कार्टुनमा रहेको ७ वटा सानो प्याकेटमा ठूलो ससाईजको ब्रेक प्याड ४० वटा रहेको, फलामका मेशीनरी पार्टजस्तो देखिने थान ५ सहितका पार्टपुर्जाहरु समेतका सम्पूर्ण सामान प्रहरीले बरामद गरी ल्याई सकेको छ,चाईनिज नागरिकले मेरो घर छोडेको करिब १ महिना पछाडि ब्रेक शु ( Brake shoes ) मा लुकाई ल्याएको सुन राजश्व अनुसन्धान बिभागबाट बरामद भई टक्सार बिभागले सुन गाल्ने बेलामा देखाएको ब्रेक शु र मेरो घर कोठामा चाईनिजहरुले छोडि गएको ब्रेक शु पनि एकै देखियो भन्ने समेत व्यहोराको घटना विवरण कागज।

xxvi. **<u>अरूण पोखरेलको घटना विवरण कागज</u>** :

भन्सारमा पैठारी भई नेपाल पारबाहन तथा गोदाम ब्यबस्थापन कम्पनी लि.मा रहेको मालबस्तु निकाल्न भन्सार एजेन्टले कागजात पेश गरी प्रज्ञापन पत्र आशिकुडा सिष्टममा गर्ता गरेपछी सिष्टमवाट स्वचालित रुपमा जाँचकि अधिकृत १ जना र ना.सु. १ जना तोकिन्छ, दैनिक रुपमा बिहान १०:०० बजे अगाबै सूचना निकालि X-ray मा कर्मचारी खटाईन्छ, गोदाममा रहेको मालवस्तु निकालि X-ray गरिन्छ,खटिएको कर्मचारीले मालवस्तु X-ray गर्दा शंका लागेमा RC ( RE- Check) लेखि सम्वन्धित चेकजाँचमा खटिएको जाँचकी वा भन्सार अधिकृतलाई रिपोर्ट गर्नु पर्छ, रिपोर्ट गरेपश्चात सम्वन्धित जाँचकीवाट सो मालवस्तुको सख्या, लेबल, ब्राण्ड, रुप रंग, उत्पती मुलुक तथा स्थान, साईज,गुणस्तर तथा घोषणा गरेको मालवस्तु नै हो वा होईन फरक मालवस्तु रहेको छ वा छैन् एकिन गरी भन्सार अधिकृतलाई देखाई प्रतिवेदन गर्छ। यदी उल्लेखित बिबरणमा कैफियत वा गलत बिबरण प्रबिष्ट गरेको भेटिए आशिकुडा सिष्टममा सोही बिबरण समेत जनाउनु पर्छ, सो पश्चात मुल्यांकनको लागी खटिएका १ जना भन्सार अधिकृत र १ जना नायब सुब्बाले राजस्व निर्धारण गर्ने, भौतिक रुप, ब्राण्ड, गुणस्तर, साईज, स्पेसिफिकेशन, Country of Orgine लगायतका बिबरण अनुसार मुल्यांकन गर्ने काम गर्दछ, व्यपारिक उदेश्यले खोलिएका कम्पनी/फर्मले पटक पटक ५००USD भन्दा कम मूल्य रहेको मालवस्तु ल्याएको छ वा छैन सो समेत हेरी मुल्याङन गरी सोको विवरण प्रमुख भन्सार अधिकृत समक्ष पेश गर्दछ, खटिएका प्रमुख भन्सार अधिकृतले सिष्टममा रहेको विवरण हेरी वा शंका लागेमा मालवस्तु समेत हेरी एकिन गरी आशिकुडा सिष्टमबाटै मुल्यांकन सदर गर्दछ । प्रमुख भन्सार अधिकृतले मूल्याङकन सदर गरेपश्चात भन्सार अधिकृतले सम्पूर्ण कागजात अध्ययन गरी जाँचकीको कमेण्ट वा मौखिक जानकारी, मुल्यांकन शाखाबाट मुल्यांकन सदर भए नभएको, प्रमुख भन्सार अधिकृतले सदर गरे नगरेको हेरी उपलब्ध गराईएका कागजातहरू दर्ता भएको प्रज्ञापन पत्र संग भिडाई Control Result गरी सिष्टममा Document लाई Green गरेपछी भन्सार एजेन्टलाई राजस्व Online payment गर्न लगाई भन्सार अधिकृतले प्रज्ञापन पत्रमा दस्तखत गरेपछी जाँचकी ना.सु.ले Exit Note निकाल्छ। सो सम्पुर्ण प्रकृया जोखिम ब्यबस्थापन शाखाले एजेन्टले प्रज्ञापन पत्र सिष्टममा दर्ता गरे देखी अन्तिम सिष्टममा Green नभएसम्म पेश तथा तयार भएका सम्पूर्ण

कागजपत्रहरू अध्ययन गरीरहेको हुन्छ । यदी कुनै पनि चरणमा शंका लागेमा सिष्टममा लक गर्ने वा Query मा राख्न सक्छ । यदी लक गरेमा वा Query मा राखेमा सो गर्ने जोखिम ब्यबस्थापन शाखाका कर्मचारी संग समन्बय गरी लक वा Query मा राख्नुको कारण सोधी आबश्यक समन्बय गरी सोही अनुसारको आबश्यक प्रकृया वा कागजात पुर्याई अन लक गरिन्छ । कहिले काँही जोखिम ब्यबस्थापन शाखा ले Green भईसकेको प्रज्ञापन पत्रलाई पनि re-check गराउन सक्छ, व्यपारिक उदेश्यले खोलिएका कम्पनी/फर्मले पटक पटक ५०० USD भन्दा कम मूल्य रहेको मालवस्तु ल्याएको छ वा छैन सो समेत हेर्नु पर्ने प्रमुख जिम्मेवारी जोखिम ब्यबस्थापन शाखाका कर्मचारीको रहन्छ । RED CHANNEL बाट आएको मालवस्तुको छुट्टा छुट्टै विवरणहरु एकिन गरी हेर्नु पर्छ भन्ने व्यहोराको कागज ।

XXVII. **श्रृजेश कार्कीले गरेको घटना विवरण कागज** :

मैले लाष्ट फ्राईडे (Last Friday) रेष्टुरेन्ट ब्यवसाय गर्दै आईरहेको छु । स्नातक तह अध्ययन गर्ने बिधार्थी पनि हुँ । चाईनिज नागरिक LIN ZE QIANG (PP No. E94446558) लाई चिन्दछु । निज चाईनिज नागरिक LIN ZE QIANG मैले संचालन गरेको लाष्ट फ्राईडे (Last Friday) मा करिब ३-४ महिना देखी नियमित आउने भएकोले चिन्दछु । निज रेष्टुरेन्टमा आउदा साथमा सामान सहितको झोला बोकी निजको चाईनिज साथीहरुसंग आउने गरेका थिए । निज ब्यक्ति कहिले २-३ जना र कहिले ६-७ जनाको समूहमा आउने गरेका थिए । निजसंग आउने ब्यक्तिहरुको हुँलिया बर्ण गोरो, गोलो अनुहार, उचाई अन्दाजी ५ फिट ७ ईन्च रहेको थियो समूहका केही ब्यक्तिको उचाई अन्दाजी ५ फिट १० ईन्चको पनि रहेको थियो । निज चाईनिज नागरिक LIN ZE QIANG समेतले रेष्टुरेन्टमा बसी खानपिन गर्ने, साथीहरुसंग समूहमा छलफल गर्ने गरेका थिए । निज LIN ZE QIANG को समूहका ब्यक्तिहरुलाई रेष्टुरेन्टमा देखेको मात्र छु निजहरुसंग मेरो ब्यक्तिगत चिनजान छैन् । निजहरु रेष्टुरेन्टमा आई अन्य मानिसहरु नभएको स्थानमा मात्र बस्ने गरेका थिए । निजहरु रेष्टुरेन्टमा आईसकेपछी करिब २-३ घण्टा बस्ने गरेका थिएँ । निज चाईनिज नागरिक LIN ZE QIANG (PP No. E94446558) लाई मैले हेरी चिनि सनाखत समेत गरिदिए । हाल सोधपुछको क्रममा निज समेतले अवैध रुपमा सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँदा निज समेतलाई कानुन बमोजिम गरि पाँउ भन्ने समेत व्यहोराको घटना विवरण कागज ।

XXVIII. **सुमन थापाले गरेको कागज :**

मैले लाजिम्पाट स्थित CAFE DE TUKCHE रेष्टुरेन्टमा करिब ८ महिना अगाडिबाट वेटरको काम गर्दै आईरहेको छु । चाईनिज नागरिक SAM भन्ने ZHONG JING CHUAN, PENG LING FENG, WANG DAOJIN, LIN ZE QIANG साथै बेल्जियम नागरिक DAWA TSERING लाई करिब २-३ महिना अगाडि CAFE DE TUKCHE रेष्टुरेन्टमा आउदा देखेको छु । निज चाईनिज नागरिक LIN ZE QIANG बेल्जियम नागरिक DAWA TSERING लाई मैले हेरी चिनि सनाखत समेत गरिदिए । चाईनिज नागरिक SAM भन्ने ZHONG JING CHUAN, PENG LING FENG, WANG DAOJIN लाई मैले फाटो हेरी चिनि सनाखत गरिदिए । चाईनिज नागरिक SAM भन्ने ZHONG JING CHUAN, PENG LING FENG रेष्टुरेन्टमा २-३ दिनको अन्तरालमा आउने गरेका थिए । निजहरु विहान ११ बजेतिर आउँदा कफि र बेलकी ४ बजेतिर आउदा प्राय चिकेन झोल मःम,थुक्पा खाने गरेका थिए । निजहरु दुईजनाले कहिलेकाही साथमा नेपाली महिला लिई रेष्टुरेन्टमा आउने गरेका थिए । करिब ३ महिना अगाडि चाईनिज

नागरिक SAM भन्ने ZHONG JING CHUAN को मोबाईलमा फोन आएको र निज बाहिर पार्किङमा निसक्दा बेल्जियम नागरिक DAWA TSERING सँग भेट गरि अ. ५ मिनेट कुराकानी गरेको देखेको थिए। करिब २-३ महिना अगाडि चाईनिज नागरिक SAM भन्ने ZHONG JING CHUAN, PENG LING FENG, WANG DAOJIN, LIN ZE QIANG रेष्टुरेन्टमा सँगै आएको र समूहमा खाजा खाएको भन्ने समेत व्यहोराको कागज।

xxix. **नविन पाण्डेको कागज :**

मैले विगत ५ महिना देखी बंगलादेशी कम्पनी ESKAYEF को नेपाली आयातकर्ता कम्पनी JUPITER PHARMACUTICIAL COMPANY LTD को Medical Representative(MR) को रुपमा काम गर्दै आईरहेको छु। दोलखा ईलेक्ट्रोनिक सप्लायर्समा काम गर्ने क्रममा चाईनिज नागरिकहरु ZHONG JING CHUAN र LIN ZE QIANG लाई चिनेको हुँ, मेरो श्रीमतीलाई मैले महाराजगंज (अमेरिकन राजदुतावास अगाडी ) मा रहेको दोलखा ईलेक्ट्रोनिक्सको अफिसमा करिब ९ महिना अगाडी लगी चाईनिज नागरिक HENERRY भन्ने ZHONG JING CHUAN (सम्पर्क नम्बर ९८१३६४८७२६) र नेपाली भाषा बोल्ने चाईनिज नागरिकलाई भेटी कुरा गरेकोमा निजहरुले अर्न्तवार्ता लिई निजहरुको अफिसमा मासिक रु १५ हजार तलब लिने गरी सरसफाईको काम गर्ने नोकरी शुरु गरेकी थिईन। काम शुरु गरेको करिब १ महिना पछी HENERRY भन्ने ZHONG JING CHUAN ले दुबईमा ईलेक्ट्रोनिक्स सामानहरु नेपालमा रहेको कम्पनीमा मगाउनु छ र नेपालको कम्पनी निजको भाई CALVIN भन्ने LIN ZE QIANG ( सम्पर्क नम्बर ९८२३५८७१६९) ले हेर्ने भनि मेरो श्रीमतीलाई बताएको थियो। दोलखा ईलेक्ट्रोनिक सप्लायर्सले ट्रान्स ग्लोबल सर्भिस प्रा.लि. मार्फत सामान ल्याउने भनेकोमा केही दिनमा नै अनिस कुमार श्रेष्ठले दोलखा ईलेक्ट्रोनिक सप्लायर्सले हङकङबाट आयात गरेको ईलेक्ट्रोनिक्स सामान आएको छ भनि मेरो श्रीमतीलाई फोन गरी सामान पठाएको जानकारी गराएकोले मेरो श्रीमतीले महाराजगंजको दोलखा ईलेक्ट्रोनिक्सको अफिसमा गई सामान रिसिभ गरी निज चाईनिज नागरिक LIN ZE QIANG लाई जानकारी गराएकोमा निजले बुढानिलकण्ठ स्थित रहेको गोदाम घरमा सामान लैजान भनेकोले बुढानिलकण्ठ न.पा. वडा नं.७ स्थितमा रहेको विश्व निरौला निरौलाको घरमा रहेको गोदाममा उक्त सामानहरु लिई जाँदा दुई जना चाईनिज नागरिकहरु आई आफैले सामान निकाली राख्ने गरेका भनि मलाई भनेकी थिईन ट्रान्स ग्लोबल सर्भिस प्रा.लि. का अनिस कुमार श्रेष्ठले सोही नम्बरमा फोन गरी दोलखा ईलेक्ट्रोनिक सप्लायर्सको हङकङबाट ईलेक्ट्रोनिक्स सामान आएको छ भनि सामान पठाएको जानकारी गराएकोले मैले दोलखा ईलेक्ट्रोनिक्सको अफिसमा आएको सामानको बारेमा निज चाईनिज नागरिक गई सामान रिसिभ गरी निज चाईनिज नागरिक LIN ZE QIANG लाई जानकारी गराएकोमा निजले बुढानिलकण्ठ स्थित रहेको गोदाम घरमा सामान लैजान भनेकोले उक्त सामानहरु बुढानिलकण्ठ न.पा. वडा नं.७ स्थितमा रहेको गोदाम घरमा उक्त सामानहरु लिई जाँदा PENG LING FENG समेत दुई जना चाईनिज नागरिकहरु आई आफैले सामान निकाली राख्न लागेकोमा मैले पनि सामान निकाली राख्छु भन्दा निज चाईनिज नागरिकहरुले आफैले सामान राख्ने भनि मलाई पनि सामान राख्न दिएका थिएनन्चाईनिज नागरिक LIN ZE QIANG चढेको उक्त स्कुटर शुरुमा HENERRY भन्ने ZHONG JING CHUAN ले मेरो श्रीमतीको नामबाट निकाल्न खोजेकोमा मैले हुदैन भनेपछी को-कसको नाममा निकाले भन्ने मलाई थाहा भएन तर निज करन गुरुङसंग निकटता भएकोले करन गुरुङको नाममा निकालेको हुन

सक्छ । निज चाईनिज नागरिक HENERRY भन्ने ZHONG JING, CHUAN LIN ZE QIANG, PENG LING FENG लगायत ५ जना चाईनिज नागरिकहरु लाजिम्पाट स्थित रहेको हिमालयन होटल पछाडी बस्ने गरेका थिएँ । HENERRY भन्ने ZHONG JING CHUAN दुबई गएको करिब एक महिना पश्चात निजलाई महराजगंज अफिसमा देखेको थिएँ तर निज गोदाममा जाने गरेका थिएनन् । म र मेरो श्रीमतीको CALVIN भन्ने LIN ZE QIANG (सम्पर्क नम्बर ९८२३५८७१६९) संग मात्र WE CHAT र WHATS APP मा कुरा गर्ने गरेको थियौँ चाईनिज नागरिक LIN ZE QIANG (PP No. E94446558) लाई मैले हेरी चिनि सनाखत समेत गरिदिए । निज समेतले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई जानकारी थिएन । चाईनिज नागरिक LIN ZE QIANG ले दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नाममा सामान आईसकेपछी भन्सार प्रकृया पुरा गर्न लाग्ने रकम अनिस कुमार श्रेष्ठको नाममा पठाईदिनु भनि रकम दिए अनुसार म र मेरो श्रीमती शारदा सेजवालको नामबाट निज अनिस कुमार श्रेष्ठको नाममा एन आई सि एशिया बैंकमा रहेको खातामा रकम जम्मा गरेको भौचर थान- १६ र सामानको बिवरण समेत भएको ट्रान्स ग्लोबल सर्भिस प्रा.लि. को TAX INVOICE समेतका कागजात, प्रज्ञापन पत्र समेतका कागजातहरु पाना-१० यसै कागज मार्फत पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज ।

xxx. **<u>बिक्रम पराजुली (नागरिकता नं. ४६१००७/३८७ बाहक) को कागज</u>** :

मैले प्रयोग गर्ने ९८५१२२०७३० नं.को मोवाईल मेरो नाममा नै रजिष्टर रहेको छ । पक्राउ परी हाल हिरासतमा रहेका प्रतिवादी ALEX भन्ने YAO PUCHENG समेतलाई चिनेको छैन् । म भारतमा रहदा वस्दा चिनजान भएको गौरव भन्ने मोवाईल नं. +917085717439, +919582799061 प्रयोग गर्ने मानिसबाट भारतमा अडिट फर्म संचालन गर्नको लागी नेपाली रु.५,००,०००।-(पाँच लाख) लिएको थिए । सोही रकम फिर्ता गर्नको लागी निजले मलाई एउटा नेपाली WHATS APP फोन नम्वर दिएको थिए । निजले दिएको फोन नम्वरमा I got msg for 15 lakh , But I am in hospital because of some medical emergency you got 5 Their at aloft , Because of holiday its get late to collect so I will deliver you in the morning, Arranging for more, Whole money, wait 5 min, confirm , U उल्लेख गरी कुराकानी गरेको हो, सो व्यक्तिसँग मेरो भेटघाट भएको छैन्, निज व्यक्तिलाई दिनु पर्ने रकम रु. ५,००,०००। (पाँच लाख) मेरो भाई पर्ने सुनिल लामिछाने ( हाल जापान रहेको) ले ठमेलमा भेटी दिएका हुन । सो रकम दिए पश्चात गौरव भन्ने मोवाईल नं. +917085717439, +919582799061 लाई सम्पर्क गर्न खोज्दा सम्पर्क समेत भएको छैन् भन्ने समेत ब्यहोराको कागज ।

xxxi. **<u>बाल कृष्ण पोखरेल (ना.प्र.प.नं. ४४५०४) को कागज :</u>**

म ठमेल छाया सेन्टरमा रहेको CASINO WALDO DYNASTY मा विगत १८ महिनादेखि CAGE INCHARGE को रुपमा काम गर्दै आईरहेको छु । मैले वाल्डो क्यासिनोमा ग्राहकहरु आउदा उनिहरुले ल्याएको नगद स्वीकार गरि नगद भित्र रही ग्राहकले चाहे अनुसारको चिप्स सेल गर्ने, नगद अनुसारको सबै चिप्स ग्राहकले नलेगेमा ग्राहकको उपस्थितिमा निजको ईच्छा अनुसार Surveillance लाई जानकारी गराई Customer Saving Card विवरण खुलाई रेकर्ड राख्ने गरेको छु । सोको जानकारी तत्काल Surveillance लाई र प्रत्येक ४ घण्टामा मेनेजमेन्ट हेडलाई जानकारी गराउने गरिएको छ । मेनेजमेन्ट हेडलाई जानकारी गराउँदा क्यास काउण्टर अपरेशनको सम्पुर्ण भौतिक विवरण उल्लेख गरिएको हुन्छ । सो बाहेक प्रत्येक महिना Cage

Staff को ड्युटी रुटिन बनाई HR, Transport, Management समेतलाई जानकारी गराउँदछु । ग्राहकको अभिलेख रिसेप्सन बाट नै राख्ने गरिएको छ । रिसेपस्न बाट आएको Customer ID Number को आधारमा सम्बन्धित ग्राहकसँग Cage Counter मा हुने कारोबार गर्ने गरिएको छ । क्यासिनोमा ग्राहकको रकम गेम खेल्ने प्रयोजनको लागि Deposit गर्ने गरिएको छ । ग्राहकले जुवा खेल्नको लागि ल्याउने रकमको स्रोत अहिले सम्म सोध्ने गरिएको छैन । चिनिया नागरिक Alex भन्ने Yao Puchengलाई वाल्डो क्यासिनोमा (ID : 15425) जुवा खेल्न आएको समयमा देखेको थिए । निजले मुख्य गरी Baccarat खेल्ने गरेको र कहिलेकाही Poker को टेबलमा पनि देखेको छु । वाल्डो क्यासिनोमा निज व्यक्ति पटक पटक आउने र ठुलो परिणाममा खेल्ने भएकोले निजलाई VIP ग्राहकको रुपमा चिन्दछु । Alex भन्ने Yao Puchengप्राय ग्रुपमा आउने गरेको र कहिले काही एक्लै पनि आउने गरेका थिए तर ग्रुपमा आएको समयमा पनि Cage Counter मा भने प्राय एक्लै आउने गरेका थिए । चिनिया नागरिक Wen Yang वाल्डो क्यासिनो (ID : 10619) मा गेम खेल्न आउदा देखेको छु । निज व्यक्ति कहिले काही मात्र आउने गरेका थिए । चिनिया नागरिक Wang Young Jiang लाई चिन्दछु । म शुरुमा कम्पनीमा जागरि शुरु गर्दा निज व्यक्तिलाई वाल्डो क्यासिनो (ID : 13108) संचालक को रुपमा चिनेको र सो पदमा करिब ४ महिना रहेको जस्तो लाग्दछ । वाल्डो क्यासिनोको संचालक रहदा निजले जुवा खेलेको नदेखेको तर सो पद छोडेपछि जुवा खेल्न कहिले काही आउने गरेका थिए । चिनिया नागरिक Ali भन्ने Li Wen Tsung ,Roger भन्ने Li Nangkai, Sautanभन्ने Ding Shengfaर Mi Tain लाई चिनेको छैन । वाल्डो क्यासिनोको Customer Saving रेकर्डमा ID:15425 बाट सन् २०२३ फेब्रुअरी २७ तारेख २१:४० बजेको समयमा ID: 13108 मा ८० लाख transfer भएको तर ID:13108 र ID:15425 दुबैको Official Statement मा २०२३ फेब्रुअरी २६ तारेख पश्चात निजहरुको कुनै पनि कारोबार भएको देखिन्न र सिधै सन् २०२३ मार्च महिनाको Statement शुरु भएको देखिएको सन्दर्भमा यसो हुनुमा निजहरुको ID मा रहेको रकम गेम नखेली नगद नै लगेको हुनुपर्दछ । निजहरुले आफ्नो व्यक्तिगत कारोवार के कसरी गर्छन भन्ने विषयमा जानकारी हुदैन । निजहरुको आन्तरिक विषयमा हामिले सोध्ने गरेको छैन । निजहरुको आन्तरिक कारोबार भएको खण्डमा चिप्स नकिनी सो रकम आफुखुशी व्यक्तिगत लेनदेन गर्ने गरेका छन् । ग्राहकहरुले क्यासिनोमा गेम खेल्न मन नलागेको खण्डमा गेम नखेली आफ्नोCustomer Saving Record मा भएको बाकी रकम नगद नै लैजाने गरेका छन् । वाल्डो क्यासिनोको आन्तिरक रेकर्ड (Customer Saving Record ) र Official Record हरु के कुन Auditor सँग Audit हुन्छ, सो विषयमा मलाई जानकारी छैन । सो विषयमा Account Section र Management लाई थाहा हुन्छ भन्ने समेत ब्यहोराको कागज ।

XXXII. **झलक प्रसाद अधिकारीको कागज:**

दावा छिरिङ्गलाई सार्वजनिक वित्त व्यवस्थापन तालिम केन्द्रमा कार्यरत रहँदाको अवस्थामा केही राजस्व चुहावट सम्बन्धि सूचना छ भनी भेट्न आएकोले देखे चिनेको हो, मेरो र निज दावा छिरिङ्ग विचमा सन 21-Jun-2021 देखि WeChat मा सम्पर्क भएको हो । निजले WeChat मा पनि केही चिनिया नागरिकहरुले Online जुवा खेलाई राजस्व चुहावट गरेको सम्बन्धि सूचना दिन्छु भनेका थिए, सोही सन्दर्भमा WeChat मा कुराकानी भएको थियो । दावा छिरिङ्ग संग कुराकानी भएको समयमा चिनिया नागरिकले गरेको काम कारवाही सम्बन्धि केही काम हुदैनथ्यो तर म कर प्रशासनमा २०७३ देखि काम गर्दै आएको र राजस्व चुहावट सम्बन्धि आधिकारीक सूचनाहरु प्राप्त हुँदा सम्बन्धित निकायमा जानकारी गराउने मेरो पेशागत कर्तब्य भएकोले सोही

सन्दर्भमा मात्रै कुराकानी भएको हुनु पर्छ ।WeChat ID: jhalak ram adhikari बाट दावा छिरिङ्गले प्रयोग गर्ने WeChat ID: wixd_tccqmxrvhfpw12 James मा सन 21-Jun-2021 देखि सम्पर्क भएको र कुराकानीको बिचमा तपाईले पानी तान्ने जस्ता मेसिनको फोटोहरु पठाएको र दावाले तपाईलाई I have a good business for u साथै very big amount cash, I know very well. भन्ने संवाद मेरो र दावा छिरिङ्गको विचमा WeChat कुराकानी भएको हो । दावा छिरिङ्गले Online जुवा सम्बन्धी कुरा भएको कारण सोही बिजिनेशका बारेमा WeChat म्यासेजमा लेखेका थिए तर सो विषयमा थप कुनै कुराकानी भएन । राजस्व चुहावटको सूचना दिनेलाई चुहावट भनी ठहर भएको रकमको १०% पुरस्कार दिने व्यवस्था भएकोले त्यस्ता सूचना राजस्व अनुसन्धान विभागलाई दिन भनेकोले जुवा सम्बन्धि विषय भएकोले Big amount भनी लेखिएको हुन सक्छ ।पानी तान्ने मेशिनको सन्दर्भमा कर प्रशासनमा मूल्य सम्बन्धि जानकारीको लागि नेपाली मूल्य आवश्यक पर्ने भएकोले फोटो निज दावा छिरिङ्गलाई पठाएको हुन सक्छ । तत पश्चात यस सम्बन्धमा कुनै सम्वाद भएको छैन । निज दावा छिरिङ्गले Business, Big amount cash भनेको जुवा सम्बन्धि कुराकानी कै सन्दर्भ भएको होला, मिति२०७९।०२। २८गते मेरो राजस्व अनुसन्धान विभागमा सरुवा भए पछी निजले मलाई Congratulation भनी लेखि मलाई पठाएको हुन सक्छ भन्ने समेत व्यहोराको घटना विवरण कागज ।

xxxiii. **रमन कार्कीको कागज**:

का.जि.का.म.न.पा.वडा नं. ३३ क्षेत्रपाटी स्थितमा ट्रेकीङ अफिस संचालन गर्दै आएको थिए । पसल बन्द गरेको ६/७ महिना भयो । हाल मेरो पेशा व्यवसाय केही छैन । पसल संचालन गर्दा मैले नेपाल टेलिकम र एनसेलको डिलरहरुबाट सिम कार्डहरु ल्याई घुम्न आएका टुरिस्टहरुलाई उपलब्ध गराउने गरेको थिए।अनुसन्धानको क्रममा खुल्न आएको सिम नं. ९७६८४४६६६६,९८६६६६६६६८र९८६६६६६६६९मेरा नामका सीमहरु हुन । नेपालमा आएका टुरिष्टलाई सहयोग गर्ने हिसावले टुरिष्ट गाईड भएको नाताले दिएको हो, पक्राउ परी आएका चाइनिज नागरिकहरु ALEX भन्ने YAO PUCHENG र SAUTEN भन्ने DING SHENG FA समेतका व्यक्तिहरुलाई मैले चिनेको छैन भन्ने समेत ब्यहोराको कागज ।

xxxiv. **अधिवक्ता कृष्ण भण्डारीको कागज:**

चाइनिज नागरिकहरु Zhong Jing chuan,, Lin ZeQiang, Li Jialin, Liu Fuyan र Tang Xiaoxue सँग मेरो व्यक्तिगत चिनाजानी छैन । Junshan Chen र Juntan Chen नाम गरेका चाइनिज नागरिकहरुले Zhong Jingchuan,, Lin ZeQiang, Li Jialin, Liu Fuyan र Tang Xiaoxue गरी पाँच जना चाईनिज नागरिकहरु नेपालमा व्यबसाय गर्ने मनसायले नेपालमा आएको र व्यबसाय दर्ता गरिदिनु पर्यो भन्दै मेरो सम्पर्कमा ल्याएका थिए र निज चाइनिज नागरिकहरुलाई नेपाली तथा अङ्गेजी भाषा बोल्न नआउने भएकाले निजहरु Junshan Chen र Juntan Chen ले नै समन्वय गरेका थिए । विदेशी नागरिकले नेपालमा व्यवसाय गर्दा सर्वप्रथम उघोग विभागमा विदेशी लगानी कर्ताले लगानीको स्वीकृतीका लागी चाहिने Project Proposal तयार गरी उघोग विभागमा पेश गर्नु पर्ने प्रावधान रहेकोले उक्त Project Proposal तयार गरिएको हो । Project Proposal मा नै उघोग विभागमा व्यवसायको प्रस्तावित नाम पेश गर्नुपर्ने हुँदा सोही बमोजिम Land and Ocean International Logistics Pvt.Ltd. प्रस्तावित नाम राखि आवश्यक कागजपत्र तयार गरि दिएको हो, कम्पनी दर्ता भईसकेको छैन । उघोग विभागको मिति २०८०।०२।२५ वा २६ को निर्णयबाट

उक्त Land and Ocean International Logistics Pvt.Ltd. को Project Proposal पास भएको थियो। भिषा सिफारिस हुँदाको समयमा स्वयम् व्यक्ति नै विभागमा उपस्थित हुनु पर्ने नियम भएकोले निजहरु स्वयम उपस्थित भएका हुन्। सोही बमोजिम मिति २०८०।०१।२६ मा व्यवसायिक भिषाको लागी निज ५ मध्येका २ जना Zhong Jingchuan, Lin ZeQiang, लाई Juntan Chaen ले उघोग विभागमा सनाखतका लागी लिएर आएका थिए। उघोग विभागको कर्मचारीले निज २ जनालाई सनाखत गर्नुभयो र कानून बमोजिम प्राप्त हुने ३ महिनाको भिषाको सिफारिस उघोग विभागबाट प्राप्त भयो। बाँकी ३ जना Li Jialin, Liu Fuyan र Tang Xiaoxue लाई पनि निज Juntan Chaen ले मिति २०८०।०२।०२ मा उद्योग विभागमा लिएर आएका थिए र निजहरुको पनि विभागका कर्मचारीबाट सनाखत भए पश्चात ३ महिनाको भिषा सिफारिस भएको थियो। यस बारेमा उद्योग विभागको विदेशी लगानी शाखाका कर्मचारी (यादव बस्याल लगायत विदेशी लगानी शाखाका अधिकृत तथा निर्देशक समेत) सँग बुझ्दा सम्पूर्ण कुरा थाहा हुन्छ। उद्योग विभागको भिषा सिफारिस पश्चात अध्यागमन विभागबाट निजहरुले भिषा प्राप्त गरेका हुन्। राजश्व अनुसन्धान विभागबाट समेत यस अघि नै निज चाईनिज नागरिहरुको विवरण र जानकारी माग भएकोमा मैले आफुलाई थाहा भए सम्मको जानकारी र निज Junsham Chen र Juntan Chen को विवरणहरु दिएको थिएँ। मेरो तर्फबाट मैले व्यवसायिक कार्य गरेको हुँ , निजहरुको बारे अन्य कुनै जानकारी छैन। Land and Ocean International Logistics Pvt.Ltd. कम्पनीको प्रस्तावित नाम मात्र हो। हालसम्म उक्त कम्पनी, कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता नै भएको छैन भन्ने व्यहोराको घटना विवरण कागज।

xxxv. **राकेश कुमार भण्डारी (ना.प्र.प.नं. २४ १०११/१६१) को कागज:**

मैले करिब १४ बर्ष देखी भन्सार एजेन्ट नम्बर ४७७ का शैलेन्द्र पुरी (सम्राट कार्गो) र भन्सार एजेन्ट नम्बर ३७१ का प्रकाश शर्मा( बज्र बाराही ट्रेडर्स) को सहयोगीको रुपमा काम गर्दै आईरहेको छु। मलाई हर्कराज राईले भेटी दोलखा इलेक्ट्रिक सप्लायर्सले आयात गरेको स्मार्ट वाच र ह्वादा इलेक्ट्रिक सप्लायर्सले आयात गरेको रेगुलेटर, ब्याट्री चार्जर, स्पेयर मेसिन (कन्सर्टमा धुवाँ फाल्ने मेसिन), वेल्डिङ टुल बक्स आयात गरेको एयर बिल समेतको कागजपत्र दिई भन्सार जाचपासको लागि दिएकोमा निजले दिएको कागजातहरुको आधारमा भन्सार एजेन्ट शैलेन्द्र पुरी, प्रकाश शर्मा र म समेतले प्रज्ञापन पत्र बनाई भन्सार कार्यालयमा पेश गरि जाँचपास गराएका थियौँ। म समेतले हर्कराज राईले उपलब्ध गराएको कागजपत्र अनुसार नै भन्सार जाँचपास गराएका हौ उल्लेखित मालवस्तुहरुमा सुन रहेको/नरहेको सम्बन्धमा कुनै जानकारी छैन्। भन्सार जाँचपास गराउदा सुन देखिएको थिएन। उल्लेखित मालवस्तुको भन्सार जाँचपास गराई मलाई हर्कराज राईले भने अनुसार गाडी खोजी निजको फोन नम्बर समेत ड्राईभरलाई दिई काठमाडौं सामाखुशीमा सामानहरु पठाईदिएका थियौँ। हर्कराज राईले भने अनुसार दोलखा इलेक्ट्रिक सप्लायर्सको करिब ७ वटा प्रज्ञापन पत्र र ह्वादा इलेक्ट्रिक सप्लायर्सको करिब ३१ वटा प्रज्ञापन पत्रको काम गरेकोमा प्रज्ञापन पत्रमा उल्लेखित मालवस्तु जाँचपास गराई गाडीमा राखी पठाईदिए वापत प्रति प्रज्ञापन पत्र रु.७,०००।– (सात हजार) रकम लिने गरेको भन्ने समेत ब्यहोराको कागज ।

xxxvi. **TERENCE TSE को कागज :**

नेपालमा पहिलो पटक सन् २०२२ मार्च २५ मा पर्यटक भिषामा नेपाल आई करिब ६ महिना नेपालमा बसि फर्किएको थिएँ। दोस्रो पटक व्यवसाय भिषामा सन् २०२२ को नोभेम्बर महिनामा नेपाल आई पुन: करिब ५

महिना बसी सन् २०२३ को फेब्रुअरी महिनामा हङकङ गई एक हप्ता(करिब ७ दिन बसी) तेस्रो पटक सन् २०२३ को फेब्रुअरी महिनामा नेपाल आई करिब दुई महिना नेपलामा बसि अप्रिल महिनामा फिर्ता गएको हुँ। चौथो पटक ब्यवसाय भिषामा सन् २०२३ को अप्रिल महिनामा नेपालमा आई हाल सम्म नेपालमा नै काठमाडौं ठमेल स्थित रहेको छाँया सेन्टर भवनमा रहेको हङकङका नागरिक LAI WA WAH ले संचालन गरेको वाल्डो क्यासिनोमा Account हर्ने गरी जिम्मा लिई, शुरुमा नेपाल आए देखी नै China Environment Resources Group Ltd. (हङकङको शेयर मार्केटमा दर्ता रहेको) ले संचालन गरेको होटल वाल्डोको डाईरेक्टरको रुपमा रही व्यवसाय भिषा प्राप्त गरी हाल सम्म नेपालमा दुबै वाल्डो होटल र क्यासिनोमा आवद्ध रहेको छु। मेरो मुख्य भुमिका Account Department मा रहेको छ। वाल्डो होटल र क्यासिनोको सम्पूर्ण आय र व्ययको काम हेर्ने गरेको छु। वाल्डो क्यासिनोमा रहेको Gaming Department अन्तर्गतको Cage Department बाट दैनिक हार र जितको रकम प्राप्त गर्नुको साथै दैनिक खर्चको भुक्तानी स्वीकृत गर्ने काम गर्दै आइरेको छु। Head of Department र Chairman को विचमा कुनै प्रश्न वा उत्तर गर्नुपर्ने स्थितिमा चाईनिज र अंग्रेजी भाषाको अनुवादकको रुपमा पनि काम गर्दै आईरेहेको छु। वाल्डो क्यासिनोमा आउने चाइनिज ग्राहकको कुनै पनितर्क/जिज्ञाशा छ भने Head of Department लाई अनुवाद गर्ने गरेको छु। Casino Waldo Dynasty मा रहेको CMS SYSTEM बाट क्यासिनोमा आउने ग्राहकहरुको कम्प्यूटर अभिलेख राख्ने गरिन्छ। नेपाल सरकारलाई बुझाउनु पर्ने कर वापतको रकम मैले बुझाउदै आईरहेको छु। म उक्त क्यासिनोमा आवद्द भए पश्चात हाल सम्म लाईसेन्स र कर समेत विभिन्न शिर्षकमा लाग्ने कर वापत लाग्ने रकम गरि हाल सम्म करिब ६ करोड २५ लाख रकम नेपाल सरकारलाई बुझाएको छु। वाल्डो क्यासिनोमा ग्राहकहरु जुवा खेल्न आउदा अधिकांश ब्यक्तिहरुले नेपाली मुद्राको प्रयोग गर्ने गरेका छन भने केही ब्यक्तिहरुले भारतिय रुपैयाँ, हङकङ डलर, अमेरिकन डलर, मलेसियन रिङगेट प्रयोग गर्न गरेका छन्। वाल्डो क्यासिनोमा ग्राहकले ल्याएको विभिन्न मुद्रा सटहीको लागी सटही काउण्टर समेत रहेकोले सोही सटहि काउण्टरबाट मुद्रा सटही गर्ने गर्दछन। ग्राहकहरुले क्यासिनोमा आई जुवा खेल्नको लागि शुरुमा क्यासिनोको नगद काउण्टरमा गइ रकम जम्मा गर्नु पर्दछ, सो विषय Cage Department ले हर्ने गरेको छ। रकम जम्मा गरिसकेपछी निजले लिन चाहेको नगद क्यासिनो चिप्सहरु खरिद गर्नु पर्छ। वाल्डो क्यासिनोमा नगद क्यासिनो चिप्स नेपाली रु ५ देखी १ करोड सम्मको रहेको छ। जुवा खेली हारेमा नगद काउण्टरमा थप रकम जम्मा गर्ने र जितेमा जितेको नगद चिप्सलाई काउण्टरमा गई सटही गरी रकम लिने/दिने गरिन्छ। सोको अभिलेख ग्राहकलाई प्रदान गरिएको ग्राहकको आई.डि. नम्बरबाट नगद काउण्टरमा कम्प्यूटरमा उल्लेख गरी राख्ने गरिन्छ। क्यासिनोमा ग्राहकले रकम Deposit गरी राख्नु पर्दैन तर नगद चिप्स लिनको लागी नगद चिप्सको मुल्य बराबरकोरकम Deposit गरेर मात्र चिप्स खरिद गर्नु पर्दछ। वाल्डो क्यासिनोमा आउने ग्राहकले जुवा खेल्न नेपाली रु ५ लाख सम्मको रकम लिई आउदा स्रोत नखोजेको तर रु ५ लाख भन्दा बढि रकम भएमा स्रोत के हो भनि मौखिक सोध्ने गरिएको छ। स्रोत उल्लेख नगरेको अवस्थामा खेल्न नदिएमा ग्राहक अन्य क्यसिनोमा जाने हुँदा ग्राहकलाई स्रोत बिना नै जुवा खेल्न दिदै आईरहेका छौं। आउने दिनमा स्रोतको रकम लिखित रुपमा उल्लेख गर्नुपर्ने विषयमा सोच बनाएको छु। मैले पक्राउ परेको प्रतिवादी चिनिया नागरिक Alex भन्ने Yao Pucheng लाईअ. ९ महिनाअगाडिवाट वाल्डो क्यासिनोमा (ID : 15425) जुवा खेल्न आएको समयमा देखी सनाखत गर्दछु। निजले मुख्य गरी Poker र Baccarat साथै कहिलेकाही Nu Nu र Blackjack खेल खेल्ने गरेको थियो।

वाल्डो क्यासिनोमा Coco(ID : 10189), Wang Young Jiang(ID : 13108) ले Poker खेल अपरेट गर्ने गरेका थिए र उक्त खेलको लागी न्युनतम नेपाली रु २०० देखि २००० सम्म को पोकेर चिप्स रहेको छ भने Baccarat को लागि नेपाली रु ५०० देखि १० लाख लाख सम्म, Nu Nu को लागि नेपाली रु १००० देखि १० हजार सम्म र Blackjack को लागि लागि नेपाली रु ५०० देखि १० हजार सम्मको क्यास चिप्स रहेको छ ।चिनिया नागरिक Wen Yangलाईktv को संचालकको रुपमा चिनी सनाखत गर्दछु । निज व्यक्ति वाल्डो क्यासिनो (ID : 10619)आउदा Poker र Baccarat खेलेको देखेको छु ।चिनिया नागरिक Ali भन्ने Li Wen Tsung अ. ४ महिना अगाडि वाल्डो क्यासिनोको Poker टेबलमा खेल खेलेको देखी सनाखत गर्दछु । पक्राउ परेको प्रतिवादीहरुले जुवा खेल्नु पुर्व रकम Deposit गरी राख्नु पर्दैन तरनिज प्रतिवादीहरुले Deposit को प्रस्तावगर्न ल्याउदा Deposit स्वीकार नगरेमा अन्य क्यसिनोमा जाने भएकोले उक्त Deposit लिने गरेका छौ । Deposit गर्न जति नै रकमको ल्याउदा पनि हामिले स्वीकार गरेको छौ । निज प्रतिवादीहरुले के कति Deposit गरे नगरेको बारे मलाई जानकारी छैन । चिनिया नागरिक Alex भन्ने Yao Pucheng कोवाल्डो क्यासिनोमा भएको Deposit अभिलेख को सम्बन्धमा मलाई जानकारी छैन । निजले कारोबार गरेको विषयमा मलाई केहि थाहा छैन र स्रोत पनि मागेको छैन । निजले जम्मा गर्ने झिक्ने गरेको सम्बन्धमा मलाई जानकारी नभएकोले मैले कुनै सरकारी निकायमा सूचना गराएको छैन । चिनिया नागरिक E07182743 नं. को राहदानी वाहक Wang Young Jiang को राहदानि प्रतिलिपि हेरे, निजसँग शुरुमा म नेपाल आउदा वाल्डो क्यासिनोमा भेट भएको थियो । निजले वाल्डो क्यासिनोमा (ID : 13108) मुख्य गरी Poker र Baccarat खेल खेल्ने गरेको थियो । वाल्डो क्यासिनोमा दैनिक धैरैजसो व्यक्तिहरु आउने भएकोले निज व्यक्तिको सम्पूर्ण विवरण क्यासिनोमा भए नभएको वारेमा मलाई जानकारी छैन । निजको वाल्डो क्यासिनोमा भएको Deposit र Withdrawlको विवरण रेकर्डमा रहेको छ, तर के कति छ भनि मलाई जानकारी छैन । निजलाई वाल्डो क्यासिनोमा मैले अन्तिम पटक अ. १ महिना अगाडि देखेको थिए । एक हप्ता अघि निज व्यक्तिले We Chat मा खानाको तस्वीर पोष्ट गरेको र उक्त पोष्टको स्थान चिनमा रहेको हुनाले निज व्यक्ति हाल चिनमा रहेको जस्तो लाग्दछ । क्यासिनोमा आएको ग्राहकहरुले एक आपसमा नगद लेनदेन गर्न सक्दछ तर Wang Young Jiang ले प्रतिवादी Yao Pucheng बाट रु.१,००,००,०००।- नगद बुझि लिएको सम्बन्धमा मलाई केहि पनि जानकारी छैन । चिनिया नागरिक Wen Yang को क्यासिनोमा भएको कारोवारको विषयमा मलाई केहि जानकारी छैन । निजको नाममा रु.१,२५,००,०००।- Deposit के कसरी भएको हो सो सम्बन्धमा मलाई केहि थाहा छैन । Yao Pucheng ले ९/१० महिनाको अवधिमा करिब रु.१३,००,००,०००।- Cash in/out गरेको सम्बन्धमा मलाई केहि पनि जानकारी छैन । निज व्यक्तिले को कहाबाट कसरी पैसा लिई आएको सम्बन्धमा मलाई केहि थाहा छैन । वाल्डो क्यासिनोमा आउदा Yao Pucheng ले नयाँ ktvसचालन गर्नको लागि समन्वय गरौं भनी बताएको थियो । निजले चाईना सेन्टरको संचालकसँग चिनजान भएको र प्रति स्क्वायर फिट नेपाली रु १७८ मासिक भाडामा पहिलो तल्लामा ktvसंचालनको लागि समन्वय गर्न प्रस्ताव ल्याएको विषयमा निजसँग मेरो कुराकानी भएको थियो । जबाफमा मैले मेरो वाल्डा क्यासिनोको वोससँग सोध्नुपर्छ भनि बताएको थिए । सोही बोलिरहेको CCTV Footage मा देखिन आएको हो । यहि विषयमा मेरो निजसँग कुराकानी हुने गरेको थियो । यो भन्दा बाहेक मैले निजसँग कुराकानि गरेको छैन ।वाल्डो क्यासिनोको आन्तिरक रेकर्ड(Saving Record)मा ID:15425 बाट सन् २०२३ अप्रिल २ तारेख १४:२९ बजेको समयमा ID:

13108 मा ३ लाख ८८ हजार transfer भएको र क्यासिनोको ID:13108को Official Statement मा सन् २०२३ अप्रिल २ तारेख १८:४४ बजेको समयमा १८ लाख Cash out भएको रेकर्ड मात्र देखिएको सन्दर्भमा मलाई केहि जानकारी छैन। सो को अभिलेख Cage Department ले राख्ने गरेको छ। वाल्डो क्यासिनोको आन्तिरक रेकर्ड (Saving Record) र Official Record मध्ये Auditor लेहर्न चाहेमा Official Record हेर्न सक्ने तर दुबै रेकर्ड Auditor लाई आवश्यक नभएको हुदाँ सो विवरणहरु Audit गर्ने गरिएको छैन।वाल्डो क्यासिनोको आन्तिरक रेकर्ड (Saving Record) मा ID:15425 बाट सन् २०२३ फेब्रुअरी २७ तारेख २१:४० बजेको समयमा ID: 13108 मा ८० लाख transfer भएको र क्यासिनोको ID:13108 र ID:15425 दुबैको Official Statement मा २०२३ फेब्रुअरी २६ तारेख पश्चात निजहरुको कुनै पनि कारोबार भएको देखिन्न र सिधै सन् २०२३ मार्च महिनाको Statement शुरु भएको देखिएको सन्दर्भमा निज ID बाहकहरुले एक अर्काले व्यक्तिगत रुपमा लेनदेन गरेको हुनपर्दछ। निजहरुको Saving Record हेर्दा दुवै ID बाहकको सहीछाए समेत भएकोले एकअर्कामा व्यक्तिगत रुपमा transfer गरेको हुनुपर्दछ । Saving Records माक्यासिनो भित्रको रकम transfer को विवरण हुन्छ र Official Statement मा Cash Chips र Rolling Chips को अभिलेख हुने हुदा निजहरु दुबै जनाले सो Chips हरु खरिद नगरेको र व्यक्तिगत रुपमा मात्र लेनदेन गरेको हुदा निजहरुकोविवरण Official Statement मा नभएको हो। वाल्डो क्यासिनोमा Chips हरु खरिद नगरेपनि व्यक्तिगत रुपमा एकअर्कामा लेनदेन हुने गरेको छ। वाल्डो क्यासिनोमा Cash Deposit गरेपछि सो वरावरको चिप्स वा अन्त्यमा चिप्स बराबरको हिसाब मिलान हुनु पर्नेमा सिधै एक व्यक्तिले अर्को व्यक्तिलाई रकम transfer गरी सो बराबरको चिप्स नदेखिनु र Cash In र Cash out कसरी सम्भव भन्ने सन्दर्भमा क्यासिनो भित्र ग्राहकहरु एक अर्का विच उधारो वा नगदको लेनदेन गर्ने सक्छन जसमा क्यासिनोको केहि भुमिका हुदैन। वाल्डो क्यासिनोमा ID बाहकको उपस्थितमा सहीछाए गरेपछि मात्र निजले चाहेको ID मा रकम transfer गरिने र सो व्यक्तिगत लेनदेन समेत हुने गरिएको छ तर व्यक्तिगत लेनदेन Official Statement मा उल्लेख गरिएको हुदैन।वाल्डो क्यासिनोको ID:13108को Official Statement सन् २०२३ फेब्रुअरी २७ तारेख २१:४० बजेको समयमा र सन् २०२३ अप्रिल २ तारेख १४:२९ समयमा Deposit नै नगरिको अन्य खाताबाट कसरी Cash In र Cash out भएको सन्दर्भमा मलाई सो विषयको जानकारी छैन, मैले Casino Waldo Dynasty को आय व्यय को काम समेत आफ्नो जिम्मेवारीमा रहेको बताएको हो, मैले हेर्ने Account Department ले कम्पनीको नाफा र नोक्सानको क्षेत्र हेर्ने गर्दछ। Cash Transfer क्यासिनोले गर्ने सामान्य विषय हो । तर Cash Transfer, Cage Department ले हेर्ने गरेको र सो सम्बन्धमा Management मा रिपोर्ट गरिरहनु नपर्ने हुदा सो विषयमा मलाई जानकारी छैन।वाल्डो क्यासिनोको उद्देश्य र जिम्मेवारि विचमा बसी नगदको लेनदेन गर्ने होइन र ग्राहक विचको लेनदेन हामिले हर्ने गरेका छैनौं। ग्राहकहरु क्यासिनोमा खेल्न आउदा Chips किनि Cash Transaction गरेको अवस्थामा मात्र Official Statement मा अभिलेख राख्ने गर्दछौं। Cash मात्र Deposit हुदा Saving Record मा अभिलेख राख्ने गरेका छौं। नेपालमा भएको सबै क्यासिनोहरु जसरी Operate हुन्छन्, त्यसरी नै हामी पनि २४ सैं घण्टा Cash In र Cash Out को Service उपलब्ध गराउदै आएका छौं। वाल्डो क्यासिनो Bank जस्तो काम नगरेको र हामो सेवा ७ दिन २४ घण्टा ग्राहकहरुलाई जुवा खेल्न आउन सजिलो गरेको मात्रै हो। क्यासिनो Bank जस्तो नभएको र यहाँ आउने ग्राहकरुको उपस्थितमा निजहरुको सहीछाप गरेर मात्रै Cash Transfer गर्छौं। यो हामिले दिने सेवा

हो जहाँ अरुले गलत मनसाय बोकी रकम लिई आएमा, एकआपसमा लेनदेन गरेमा हामीलाई थाहा हुदैन । क्यासिनोमा आउने सबैजना हाम्रो ग्राहक हुन्, हामी सबैलाई गएर चेक गर्दैनौ र सो विषयमा क्यासिनोमा सो Policy नभएको ले हामिले ध्यान दिएका रहेनछौ । वाल्डो क्यासिनोमा प्रतिवादी Yao Pucheng मात्र नभई अरु जो कोही ग्राहक आईरकम Deposit गर्न चाहेमा निजहरुले Deposit गर्न सक्दछन र ५ लाख भन्दा माथिको रकमको स्रोत मौखि रुपमा सोध्ने गरेका सोध्ने गरेका छै तर रेकर्ड सोधिएको रेकर्ड राख्ने गरेका छेनौं । प्रतिवादी Yao Pucheng क्यासिनोमा गेम खेल्न आएको वखत देखि चिनेको र निज व्यक्ति सँग हाम्रो सम्ब न्ध एउटा ग्राहकको रुपमा मात्र रहेको छ । सो भन्दा बाहेक प्रतिवादी Yao Pucheng सँग मेरो कुनै पनि व्यक्तिगत सम्बन्ध छैन ।क्यासिनोमा निजहरुले आफ्नो व्यक्तिगत कारोवार के कसरी गर्छन भन्ने विषयमा जानकारी हुदैन । निजहरुको आन्तरिक विषयमा हामिले सोध्ने गरेको छैन । निजहरुको आन्तरिक कारोबार भएको खण्डमा चिप्स नकिनी सो रकम आफुखुशी व्यक्तिगत लेनदेन गर्ने गरेका छन् ।ग्राहकहरुले क्यासिनोमा गेम खेल्न मन नलागेको खण्डमा गेम नखेली आफ्नो Customer Saving Record मा भएको बाकी रकम नगद नैलैजान सक्ने र व्यक्तिगत रुपमा पनि लेनदेन गर्न सक्दछन् ।Yao Pucheng को समूह सँग मेरो कुनै सम्बन्ध छैन साथै सुन तस्करीमा सन्दर्भमा मेरो कुनैपनि व्यक्त र समूहसँग मिलेमतो र लगानी छैन । सामन्यतया सबैजसो क्यासिनोमा ग्राहक आउदा ल्याएको रकमको स्रोत नखोजि निजहरुले Deposit गर्न चाहेमा गर्ने गरिएको भन्ने समेत व्यहोराको कागज ।

xxxvii. **<u>COCO भन्ने HAO SHUIHONG ( राहदानी नं.EC0799489) को कागज:</u>**

पहिलो पटक सन् २०१७ जुन २८ तारेखमा Tourist Visa मा नेपाल आएकी थिए । नेपाल आएको १ हप्ता पछि पुन: चाईना फर्किएको र सन् २०१८ फेबुअरी १४ तारेखमा दोस्रो पटक Tourist Visa मा आई नेपाल बसेको दौरानमा Business Visa बनाई करिव ६ महिना पछि चाईना फर्किएकी थिए । तेस्रो पटक सन् २०१८ अक्टोवर २५ तारेखमा Business Visa मा नेपाल आएपछि Working Visa बनाई करिव ४ महिना बसेकी थिँए । म सन् २०१९ मार्च ५ तारेखमा Working Visa मा चौथो पटक नेपाल आई यहाँ बसेको दौरानमा Business Visa बनाई म र मेरो Boyfriend चिनिया नागरिक YONG YANG ठमेल अपार्टमेन्टमा सँगै बस्दै आइरहेकी छु । नेपालमा १ वर्ष अगाडि बाट काठमाडौको ठमेल स्थित छाया सेन्टरमा रेहको CASINO WALDO DYNASTY मा POKER टेबुल चलाउदै आईरहेकी छु । क्यासिनोमा मरो ID Number 10189 हो । क्यासिनोमा आउने ग्राहकहरुले Cash Counter मा नेपाली पैसा दिई सो बराबरको Coin लिई POKER खेल्न मन लागेमा टेवलमा आइ गेम खेल्ने गरेका छन् । POKER टेबुलमा कम्तिमा चार जनाको संख्या नहुदा सम्म खेल शुरु हुदैन । टेवलमा गेम सुरु भएपछि जित्ने व्यक्तिले टेवलमा वसेको वापत जितेको ५% कमिशन बुझाउनु पर्ने, सो Coin नजिकै रहेको Box मा जम्मा गरी दिनभर जम्मा भएको कुल Coin मध्ये ६०% क्यासिनोमा र बाँकी ४०% आफुले लिने गरेकी छु । POKER टेवलमा धेरैजसो चाईनिज नागरिक आउने गरेका छन् । सो भन्दा बाहेक भारतिय, अमेरिकन, युरोपियन नागरिक समेत खेल खेल्न आउने गरेका छन् । चिनिया नागरिक ALEX भन्ने YAO PUCHENG लाई चिन्दछु । करिव ५/६ महिना अगाडि क्यासिनोमा POKER गेम खेल्न आउन थालेदेखि निजलाई याद गरेकी थिए । YAO PUCHENG कहिले समूहमा र कहिले एक्लै क्यासिनोमा आएको देखेकी छु । निज व्यक्ति प्राय ALI भन्ने LI WEN TSUNG सँग पटक पटक क्यासिनोमा गेम खेल्न आएको देखेकी छु । निजले प्राय: मुख्य गरी POKER र BACCARAT खेल्ने

गरेको छ । YAO PUCHENG को ग्रुपको साथिहरुले ठुलो रकमको खेल खेल्दा निजले पनि ठुलो खेल्ने गरेको र सानो रकमको खेल खेल्दा निजले सानै रकमको खेल खेल्ने गरेका थिए । निजले बढिमा नेपाली रकम ५/६ लाख जितेको र हार्दा पनि सोही बराबरको रकम हार्ने गरेको देखेकी थिए । ALEX भन्ने YAO PUCHENG नेपालमा को-कुन ब्यक्तिहरुसंग मिलेमतो गरी कुन स्थानमा के-कस्तो कार्य गरेको छ, सो विषयमा मलाई जानकारी छैन । निज क्यासिनोको ग्राहक मात्र भएको सो बाहेक निजको अन्य बाहिरी कुरा मलाई केहि पनि थाहा छैन । क्यासिनोमा ग्राहकहरु धैरै हुने भएकोले ग्राहकरुको गेम भन्दा बाहेक अन्य विषयमा मलाई जानकारी छैन । वाल्डो क्यासिनोको आन्तिरक रेकर्ड (Saving Record) मा ID:15425 बाट तपाईको ID: 10189 मा सन् २०२३ मार्च २४ तारेख १६:५७ बजेको समयमा ४ लाख, सन् २०२३ मार्च २ तारेख १६:५७ बजेको समयमा ७ लाख transfer भएको देखिएको र क्यासिनोको ID: 10189 को Official Statement मा सन् २०२३ मार्च २ र २४ तारेख मा सो रकम बराबरको Deposit भएको नदेखिएको भन्ने सन्दर्भमा POKER को छुट्टै coin हुने, YAO PUCHENG ले निजको साथिहरुसँग POKER खेल्दा ती व्यक्तिहरु हार जित जे भएपनि Alex जिम्मेवार व्यक्ति भऐकोले निजले नै मलाई पैसा दिनुपर्ने हुदा मैले सो रकम Alex सँग नै माग्ने गरेको हुँ । POKER खेल्ने क्रममा YAO PUCHENG र उसको समूहको साथिहरुले गेम हारेको समयमा म सँग पटक पटक गरी Coin सापटी लिने, जितेको वेलामा Coin फिर्ता गर्ने र सोही अनुरुप मलाई दिनुपर्ने ४ लाख र ७ लाख विभिन्न समयमा एकमुष्ठ दिएको थियो । पैसा दिएको विषय Saving Record मा उल्लेख हुन्छ । POKER मा छुट्टै चिप्स हुने भएकोले सोको रेकर्ड Official Statement मा राखिदैन । वाल्डो क्यासिनोको Saving Record मा ID:15425 बाट तपाईको ID: 10189 मा सन् २०२३ अप्रिल ३ तारेख ६:२८ बजेको समयमा ४० लाख Deposit भएको र सोहि समयमा CashWithdrawl गरेको देखिएको सन्दर्भमा क्यासिनोको ग्राहक LAO YE ले म सँग गेम खेल्ने क्रममा ४ लाख ९० हजार Coin सापट लिएको थियो । LAO YE ले मेरो ID मा ४४ लाख ९० हजार Coin Chips पठाएको र निजले ALEX भन्ने YAO PUCHENG सँग ४० लाख सापट लिएको र सापटी लिएको ४० लाख रकम ALEX लाई पठाइदिनु भनी बताएको थियो । ४४ लाख ९० हजार Coin Chips मैले मेरो ID मा राखि ALEX भन्ने YAO PUCHENG लाई सोही समयमा निजको ID 15425 मा ४० लाख रकम पठाएको थिएँ । YAO PUCHENG लाई रकम दिदा पुष्टि हुदैन भनेर आफ्नै ID बाट निजको ID मा Transfer गरेकी हुँ । उक्त लेनदेन व्यक्तिगत हुने भऐकोले Official Statement को अभिलेखमा देखिदैन । चाईनिज नागरिक ALI भन्ने LI WEN TSUNG क्यासिनोमा YAO PUCHENG सँग गेम खेल्न आएको बेलामा देखेको हुदा निजलाई हेरी चिनी सनाखत गर्दछु । चाईनिज नागरिक WEN YANG, SAUTEN भन्ने DING SHENG FA, क्यासिनोमा गेम खेल्न आएको बेलामा देखेको छु । WEN YANG सँग MI TIAN क्यासिनोमा आउदा देखेको छु । क्यासिनोमा बारविक्यु चाहिदा MI TIAN लाई फोन गरेकी थिए । उनले क्यासिनोमा बारविक्यु लिएर आउने गरेकी थिई । क्यासिनोमा ग्राहकहरु धैरै आउने भएकोले चाईनिज नागरिक ROGER/STEPS भन्ने LI NENGKAI लाई देखेको छैन । हाल सोधपुछको क्रममा ALEX भन्ने YAO PUCHENG समेतले अवैध रुपमा सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँदा अवैध सुन पैठारीमा संलग्न निज ALEX समेतलाई कानुन बमोजिम गरि पाँउ भन्ने समेत व्यहोराको कागज ।

XXXVIII. **श्याम सुन्दर शाह (ना.प्र.प.नं. ९८३०, कैलाली) को कागज :**

नेपाल उत्पादन भएको फ्रुटी, चाउचाउ, सिन्के धुप समेतका अन्य अडर अनुसारको सामानहरु सम्राज्ञी इन्टर कन्टिनेन्टल प्रा.लि मार्फत केरुङको बाटो हुदै तिब्बतमा पठाउने काम गर्दै आएको छु।काम गर्ने क्रममा २०७६ सालको माघ महिनातिर म काठमाडौंको ज्याठा ठमेलमा जादा ठमेलमा नै कस्मेटिक सामानहरु भएको पसल संचालन गरि आएका DAOJIN WANG भन्ने नेपाली बोल्ने चिनिया नागरिकसँग भेट भई निज DAOJIN WANG ले चिनबाट चिकेन, अचार, चाउमिनमा लगाउने सोयासस, चाईनिज चाउचाउहरु समेतका सामानहरु नेपालमा ल्याउने गरेको छु भनेको र मेरो पनि त्यस विषयमा चासो भएकोले DAOJIN WANG (सम्पर्क नं. ९८०१०९९९९८) सँग मेरो चिनजान भई निज र मेरो फोन नं. समेत आदान प्रदान भई कुराकानी समेत भई आएको थियो। पछिल्लो समयमा निजले उक्त कस्मेटिक पसल छोडी काठमाडौं सितापाईला स्थितमा घर भाडा लिई बसी आएका थिए। एक वर्ष अघिरसुवा जिल्लामा रहेको सिनो अन्तर्गतको हाइड्रोमा DAOJIN WANG मार्फत मैले सिमेन्ट सप्लाई को काम पनि गरेको थिए। यसरी नै मिति २०७९।०९।११ गते बिहान निज DAOJIN WANG ले मेरो मोबाईल नं. ९८५१००८१७१ मा कल गरी निज बस्ने सितापाईला स्थित घरमा बोलाई मेरो साथीले हाइड्रोपावरमा कामगर्ने चिनियाहरुको लागि लिएर आएको ईलेक्ट्रिक सिगरेट (Vapes) त्रिभुवन बिमानस्थल एयरपोर्टमा रोकेको छ, के कति कारणले रोकेको हो, मिलाएर भन्सार तिरेर लिएर आउनु भने पछि सोही दिनको ११:०० बजेतिर म एयरपोर्टमा पुगेको थिए। एयरपोर्ट गए पछि एयरपोर्टको पार्किङमा DAOJIN WANG, निजको ड्राईभर लोकेन्द्र पौडेल र हाल थाहा भएको LI HANSONG समेत ३ जना बा.१७ च. ७५१८ नं.को Duster  गाडीमा आई मलाई भेटी मिति २०७९।०९।१० गते जफत भएको ईलेक्ट्रिक सिगरेट (Vapes) को भर्पाईरसिद मलाई दिएको थिए। उक्त रसिद लिएर म प्रमुख भन्सार अधिकृत मुक्ती प्रसाद श्रेष्ठलाई भेट गरी जफत भएको ईलेक्ट्रिक सिगरेट (Vapes) नियमानुसार भन्सार तिरेर दिन मिल्ने भए दिनु पर्यो,हाईड्रोपावरमा काम गर्ने चिनियाहरुको प्रयोगको लागि लिएर आएको हो भनि अनुरोध गर्दा निज मुक्ती प्रसाद श्रेष्ठले उक्त ईलेक्ट्रिक सिगरेट (Vapes) जफत भई सकेको छ, भन्सार तिरेर वा अन्य कुनै तरिकाबाट पनि दिन मिल्दैन बरु चिनिया नागरिकLI HANSONG को पासपोर्ट छ लगि दिनुहोस् भनेकोले मैले उक्त पासपोर्ट लिईम फर्केर पार्कीङमा गई मुक्ति प्रसाद श्रेष्ठले सामान छोड्न मिल्दैन भनेको भनि निजहरुलाई जस्ताको तस्तै भनि मलाई दिएको भर्पाई रसिद र LI HANSONG को पासपोर्ट DAOJIN WANG लाई फिर्ता दिएको थिए। मिति २०७९।०९।१० गते जफत भएको ईलेक्ट्रिक सिगरेट (Vapes) को बारेमा बुझि दिनु भनि DAOJIN WANG ले मलाई पटक पटक अनुरोध गर्दा पनि मैले सो कुरामा चासो दिईन। निजले उक्त सामान ईलेक्ट्रिक सिगरेट (Vapes) भएको कुरा मलाई जानकारी गराएको थियो, अन्य के थियो सो समयमा मलाई थाहा थिएन। पछि मात्रै उक्त ईलेक्ट्रिक सिगरेट (Vapes) मा अवैध सुन लुकाई छिपाई नेपाल ल्याएको भन्ने कुरा मलाई थाहा हुन आएको हो। निज DAOJIN WANG ले मलाई बिगत एक बर्ष अगाडी देखि ईलेक्ट्रिक सिगरेट (Vapes), गाडीको ब्रेक सु, स्मार्ट घडी, हाईड्रोमा प्रयोग हुने भनेको मेसिन समेतका सामानहरु हङकङबाट आउछ, आए पछि तपाईलाई एयरपोर्ट अगाडी रहेको Mount Everest Traders बाट कल गर्छ, कल गरे पछि उक्त सामानहरु Receive गरी म कहाँ ल्याई दिनु भनेकोले सोही बमोजिम हङकङबाट माथि उल्लेखित सामानहरु Mount Everest Traders को नाममा आए पछिMount Everest Traders ले भन्सारको सम्पुर्ण प्रकृया मिलाई सकेर मलाई सम्पर्क गर्ने गरी ड्राईभरलाई मेरो मोबाईल नं. दिएर पठाए पछि

उक्त गाडीको ड्राईभरले मलाई सम्पर्क गरी के कहाँ ल्याई दिनु भनि फोन गरे पछि मैले DAOJIN WANG बस्ने घर सितापाईलामा पुर्याई दिनु भनि लोकेसन दिने गरेको र म आफैले पनि दुई/तीन पटक निज DAOJIN WANG बस्ने घरमा पुर्याई दिएको छु ।उक्त सामानहरु आयात गरे वापतको भन्सारमा लाग्ने शुल्क रकम कैले मैले, कहिले DAOJIN WANG समेतले Mount Everest Traders लाई पुर्याई दिने गरेको हो । यसरी नै माथि उल्लेखित सामानहरु निज DAOJIN WANG २३ पटक आयात गरेको थाहा पाएको छु ।चिनिया नागरिक ALEX भन्ने YAO PUCHENG, ALI भन्ने LI WEN TSUNG, ROGER भन्ने LI NANGKAI, SAUTAN भन्ने DING SHENGFA, WEN YANG, MI TAIN लाई देखे चिनेको छैन । निजहरुले बिभिन्न सामानहरुमा सुन लुकाई छिपाई नेपाल ल्याउने गरेको कुरा हाल मलाई थाहा भयो भन्ने समेत व्यहोराको कागज ।

xxxix. **जे.एस. वरमेई (भारतीय आधार कार्ड नं.४४८९ ७११४ ५८०० ) को कागज:**

मैले भारतमा स्नातक तह अध्ययरत बिधार्थी हुँ । म पहिलो पटक मेरो दिदी JS THOTYA र निजको एक जना साथी सहित ३ जना मिति २०७९ सालको चैत्र ३ गते एयर ईन्डिया विमानवाट नेपाल आई करिब १५ दिन बसी भारत फर्किएकी हुँ । दोस्रो पटक मिति २०८० साल असार २ गते INDIGO AIRLINES को विमानबाट मेरो दिदी JS THOTYA र K RINGYA संग नेपालमा आएकी हुँ । नेपालमा आई का.जि.का.म.न.पा.वडा नं ४. वाँसवारी चप्पल कारखाना स्थित काठमाडौं मेरिडियन स्कुल नजिकैमा बस्दै आइरहेका छौं । मेरो दिदी JS THOTYA ले सम्झौता गरी रमा कँडेलको घरमा भाडा तिरी बस्दै आएका छौं । करिब ४ महिना पछि दोस्रो पटक नेपालमा आई काठमाडौंको ठमेल स्थित KTV मा मेरो दिदीसंगै काम गर्दै आइरहेको छु । म दोस्रो पटक नेपाल आएको करिब २-३ दिन पछाडी मेरो दिदी JS THOTYA ले काठमाडौं ठमेलमा रहेको रेष्टुरेन्टमा डिनर गर्न गएको समयमा चाईनिज नागरिक ALEX लाई पनि बोलाएको हुँदा सोही समयमा देखी चिनेको हुँ । त्यसपछी मैले मेरो दिदीलाई निज ALEX को हुन भनि सोधपुछ गर्दा मैले काम गर्ने गरेको KTV रेष्टुरेन्टको ग्राहक हुन निजले विभिन्न सामानहरु आयात र निर्यात गर्ने व्यवसाय गर्ने गर्दछन भनेकी थिईन । मलाई एकिन याद भएन तर निजै चाईनिज नागरिक ALEX ले म समेत नेपाल आउदा एयरपोर्टमा कार लिई लिन आएको बेलामा पहिलो पटक देखेको जस्तो लाग्छ । मलाई निज चाईनिज नागरिक ALEX को सक्कल नाम YAO PUCHENG हो भन्ने थाहा थिएन हाल सोधपुछको क्रममा मात्र थाहा पाएकी हुँ । मेरो दिदीले KTV रेष्टुरेन्टमा काम गर्दछिन म चाही काठमाडौका केही ठाँउमा घुमफिर गरी कोठामा नै वस्दै आईरहेकी छु नेपालमा कुनै पेशा गरेको छैन् । .एस. थोट्या र टमी ktv जाने समयमा कहिलेकाही ALEX ले हामी बस्ने गरेको कोठासम्म कार मा लिन आएको देखेको छु । निजसँग म कहिले पनि बोलेको छैन । एकपटक ktv जादा चाईनिज नागरिक Yang Wen आफ्नो बोस भनी दिदी जे.एस. थोट्याले देखाएको थियो । मैले चिनिया नागिक ALI भन्ने LI WEN-TSUNG, SAUTEN भन्ने DING SHENG FA, Roger/Steps भन्ने Li Nengkai, LIN ZE QING कसैलाई पनि चिनेको छैन । निजहरुले के कामगर्छन र कहाँ बस्ने गरेका छन भन्ने मलाई थाहा छैन । निजहरुले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई जानकारी छैन । हाल सोधपुछको क्रममा निज ALEX समेतले अवैध रुपमा सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँदा अवैध सुन पैठारीमा संलग्न निज ALEX समेतलाई कानुन बमोजिम गरि पाँउ । मलाई अङग्रेजी भाषामा सोधपुछ गरी

मैले अङग्रेजी भाषामा दिएको जवाफलाई नेपाली भाषामा लेखी मतलब समेत बुझाई कागज गरिएको ठिक साँचो हो भन्ने समेत ब्यहोराको कागज ।

XL. **के. रिङ्ग्या ( भारतीय आधार कार्ड नं. ९२०९ ९८९७ ६९७१) को कागज:**

मैले भारतमा स्नातक तह अध्ययन गरिरहेको बिधार्थी हुँ। मिति २०८० असार २ गते एयर ईन्डिगो विमान वाट नेपाल आएकी हुँ। म, मेरो साथी जे.एस. वरमेई, उनकी दिदी जे.एस. थोट्या र उनकी साथी टमी गरी जम्मा ४ जना नेपाल आएकी हुँ। का.जि.का.म.न.पा.वडा नं ४. वाँसवारी चप्पल कारखाना स्थित काठमाडौं मेरिडियन स्कुल नजिकैमा बस्दै आइरहेका छौं । हाल म लगायत ३ जना साथिहरु घरधनि रमा कँडेलको घरमा बस्दै आएका छौं । नेपालमा म घुम्नको लागि आएको हुँ। मैले चाईनिज नागरिक ALEX लाई व्यक्तिगत रुपमा चिन्दिन तर नेपाल आउदा एयरपोर्टमा हामि ४ जनालाई कार लिई लिन आएको बेलामा देखेको छु। जे.एस. थोट्यासँगै ठमेल स्थित रेष्टुरेन्टमा खानाको लागि गएको बेलामा ALEX पनि सँगै थियो। जे.एस. थोट्या र टमी ktv जाने समयमा कहिलेकाही ALEX ले हामी बस्ने गरेको कोठासम्म कार मा लिन आएको देखेको छु। ALEX सँग म कहिले पनि बोलेको छैन। निजले के – कस्तो कार्य गर्छ मलाई उक्त विषयमा जानकारी छैन तर जे.एस. थोट्याले ALEX ले आयात निर्यातको काम गर्छ भन्ने कुरा बताएको थियो । एकपटक ktv जादा Yang Wen आफ्नो बोस भनी जे.एस. थोट्याले देखाएको थियो । मैले चिनिया नागिक ALI भन्ने LI WEN-TSUNG, SAUTEN भन्ने DING SHENG FA, Roger/Steps भन्ने Li Nengkai, LIN ZE QING कसैलाई पनि चिनेको छैन निजहरुले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई जानकारी थिएन। हाल सोधपुछको क्रममा निज समेतले अवैध रुपमा सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँदा निज समेतलाई कानुन बमोजिम गरि पाँउ । मलाई अङग्रेजी भाषामा सोधपुछ गरी मैले अङग्रेजी भाषामा दिएको जवाफलाई नेपाली भाषामा लेखी मतलब समेत बुझाई कागज गरिएको ठिक साँचो हो भन्ने समेत ब्यहारको कागज।

XLI. **अनिष कुमार श्रेष्ठ (ना.प्र.प.नं.०९१०३७/३०, भोजपुर) को कागज:**

जिल्ला काठमाडौ तिनकुने स्थित रहेको Trans Global services Pvt. Ltd. मा काम गर्ने गर्दछु। मिति २०७२ सालको अन्तिम तिर मैले मेरो काका कृष्ण श्रेष्ठ मार्फत Trans Global services Pvt. Ltd. तिनकुनेमा विदेशबाट पैठारी (Import) हुने सामानहरुको कागजपत्रहरु (Documents) को काम गर्न शुरु गरेको थिए। मेरो काका कृष्ण श्रेष्ठ पहिला देखिनै उक्त कम्पनीमा काम गर्ने गर्नु हुन्थ्यो। विदेशबाट मालवस्तु मगाउने ग्राहकले सामान मगाउदा आवश्यक पर्ने Document हरु दिने गर्थे सो कागजपत्रहरु हेरी थप कागजपत्रहरु मिलाउने काम गर्दथे । हाम्रो Company मार्फत जापान, Thailand, Dubai, Malaysia, China र हङकङ लगायतका देशहरुबाट सामान ल्याउने कार्गोको काम हुने गर्दछ। विषेश गरी हङकङबाट इलेक्ट्रिक आइटमहरु जस्तै Smart Watch, Laptop, Desktop, Wrapping Machine, Shaver, Auto Parts जस्ता सामानहरु आउने गर्दछ। मिति २०७९ फागुन तिर शुरुमा दोलखा इलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नाममा Shenzhen Feitong International Trade Co. Ltd ले Karry on Global Logistic Honk Kong मार्फत Smart Watch Trans Global services Pvt. Ltd. मा पठाएका थिए। सो सामानको Delivery Order (DO) लिन कोही पनि सम्पर्कमा नआएकोले मैले करिव एक-डेढ् महिना पछि उक्त सामानको विलमा रहेको सम्पर्क नं. ९८१०९०६००८ मा फोन सम्पर्क गर्दा नाम थाहा नभएको व्यक्तिले अंग्रेजी भाषा बोलेकोले मैले नबुझे पछि निजले नेपाली भाषा बोल्ने महिलालाई फोनमा कुरा गर्न दिएको, निज नेपाली

भाषा बोल्नेको नाम शारदा भनि बताएका थिईन । सो फोन सम्पर्क पश्चात उक्त सामानको DO लिन शारदा आफै आएको र भन्सार Clear गर्ने मान्छे कोही भए सम्पर्क गराई दिनु भनेकाले मैले भन्सार एजेन्ट बिकाश कार्कीलाई खवर गरेकोमा निजले हुन्छ भनि उक्त समानको भन्सार Clear गरि दिएका थिए। मिति २०८० साल जेष्ठ महिना तिर दोलखा इलेक्ट्रि कै नाममा Wrapping Machine काठको बाकसमा आएको र सो सामानको DO लिन शारदा आफै आएकी थिईन। त्यसपछि सोही सामान करिव १९/२० पटक आएकोमा ५/७ पटक शारदा आफै आएको र मालवस्तुको DO म आफैले बनाई भन्सार Clear गर्नको लागि भन्सार एजेन्ट विकाश कार्कीलाई दिने गरेको थिए। यसरी आएको सामानको प्रति पिस नेपाली पचास हजार रुपैया शारदाले मेरो NIC Asia बैंकको खाता नं. ३२८७००७३५१३५२४०१ मा जम्मा गरि दिने गर्दथिन । सो पैसाबाट मैले रु. २५,०००।- विकाश कार्कीलाई र DO Charge रु.२,८००।- अफिसमा दिने गरेको थिए । वाँकी पैसा म आफैले राख्ने गरेको थिए । यसरी दोलखा इलेक्ट्रिक कम्पनीको करिव ३५/४० पटक विभिन्न सामानहरु आएकोमा १९/२० पटक Wrapping Machine, १५/२० पटक Smart Watch, एक पटक Shaver र एक पटक जेनेरेटर आएको थियो । पछिलो पटक करिव एक-डेढ महिना अगाडी देखि शारदाको श्रीमान नविन पाण्डेले DO लिन र सामान बुझ्न आउने गर्दथे। एक पटक Smart Watch को DO लिन पारश भन्ने व्यक्ति पनि आएका थिए। निज पारशको सम्पर्क नं. ९८०८८९१७९४ हो। मिति २०८० सालको बैशाख जेष्ठ तिर रेडि ट्रेड कम्पनीको नाममा Jiangmen Fengtong Transportation कम्पनीले Karry on Global Logistic Honk Kong मार्फत Trans Global services Pvt. Ltd. मा Shaver, Auto Parts पठाएका थिए। सो सामानको Do लिन राजेन्द्र कुमार राई आउने गरेका थिए निजले के कसरी भन्सार Clear गरी सामान लैजाने गरेका थिए मलाई थाहा छैन । रेडि ट्रेड कम्पनीको नाममा करिव १५/२० पटक सामानहरु आएको थियो । Airways Bill मा उल्लेख भए बमोजिमको सामानहरु आएकोमा मैले सोही अनुसार DO बनाइ दिने गरेको थिए। उक्त माल बस्तुहरुमा अबैध सुन छिपाई ल्याएको सम्बन्धमा मलाई थाहा जानकारी छैन। नविन पाण्डेले गरेको घट्ना विवरण कागजमा तपाईको सामान प्रहरीले बाटोमा जफत गर्न सक्छ भनि खुलाई लेखाई दिएको सम्बन्धमा मैले त्यसो नभनि राजस्वले वेला वेलामा सामानहरु चेकजाँच गर्न सक्छ भनेको हो, सामान जफत गर्न सक्छ भनेको छैन। भन्सार कार्यालयको गेट वाहिर कहिले काही राजस्व अनुसन्धान विभागले चेकजाँच गर्ने भएकोले सो कुरा भनि दिएको हो। मैले DO दिएका सामानमा अवैध चिज छ भनी जानेर भनेको हैन। निज नविन पाण्डेलाई सामान पाए नपाएको भनि फोन सम्पर्क गर्ने गरेको थिए । पक्राउ परी आएका प्रतिवादीहरु मध्ये राजेन्द्र कुमार राईसंग रेडि ट्रेड प्रा.लि.को सामानको DO लिन आउने क्रममा चिनजान भएको हो, सो भन्दा अगाडी निजसंग चिनजान थिएन। रेडि ट्रेडको DO लिन राजेन्द्र कुमार राई नआएको वेलामा निजले राजेश चौधरीलाई पनि पठाउने गरेका थिए निजको सम्पर्क नं. ९८४३६२७५७० हो। निज हर्कराज राईले के के काम गर्ने गरेका थिए मलाई थाहा जानकारी छैन।अन्य पक्राउ परेका कोही कसैसंग चिनजान सम्पर्क छैन। अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा कानुन बमोजिम गरि पाँउ भन्ने समेत ब्यहोराको कागज ।

XLII. **सशस्त्र प्रहरी सहायक निरीक्षक प्रदिप नाथ योगी ( ना.प्र.न.६४-०१-७३-०२९०९) को कागज :-**

म हाल सशस्त्र प्रहरी बल, नेपाल राजस्व प्रहरी एकाई, हरिहरभवनमा कार्यरत रहेको छु। मिति २०८०/०४/०२ गते अं. १३:०० बजे तिर मलाई सशस्त्र प्रहरी बल, नेपाल राजस्व प्रहरी एकाई, हरिहरभवनका प्रमुख सशस्त्र प्रहरी नायव उपरीक्षक प्रदिप राईले फोन गरी प्रज्ञापन पत्र नं.टिपाई सो प्रज्ञापन पत्र नं. भएको सामान कसैले लिई

आएमा चेकजाँच गरी नियन्त्रणमा लिई खबर गर्नु भने पश्चात मेरो कमाण्डमा ७ जनाको टोली त्रिभुवन अन्तराष्ट्रिय विमानस्थलको मुख्य प्रवेशद्धार अगाडी चेक जाँचमा खटिई सामन लिएर आउने गाडीहरु चेक जाँच गर्ने क्रममा अं.१७:०० बजेको समयमा बा २ ख २३२४ नं.को ट्याक्सी पछि नाम थर खुलेका अशोक लामाले चलाई, पछाडी पट्टी  सिटमा कार्टुन भित्र सामान राखी  पछि नाम थर थाहा भएका हर्कराज राई चढी आएकोमा उक्त ट्याक्सी रोकी चेकजाँच गर्दा कार्यालय प्रमुख  प्रहरी नायव उपरीक्षक प्रदिप राईले फोन गरी टिपाएको प्रज्ञापन पत्र नं.सँग मिल्न गएकाले तत्काल  सो ट्याक्सी र सो ट्याक्सिमा रहेको सामानहरु  भएको कार्टुन नियन्त्रणमा लिई कार्यालय प्रमुख प्रहरी नायव उपरीक्षक प्रदिप राईलाई फोन गरी जानकारी गराए पश्चात राजस्व अनुसन्धान विभागको टोली समेत सो स्थानमा आई सामान चेक गर्दा  ब्रेक प्याड देखिएकोले शंका लागी सो ब्रेक प्याड भएको कार्टुनहरु सहित राजस्व अनुसन्धान विभागमा लगिएको थियो । उल्लेखित ब्रेक प्याडहरु सो दिन सुरक्षित साथ राजस्व अनुसन्धान विभागमा राखी भोलिपल्ट सो बरामद भएको ब्रेक प्याडहरु चेक गर्दा सो ब्रेक प्याड भित्र  सुन भेटिएको हो ।  सो पश्चात सुनको परिमाण चेकजाँच गर्न उक्त बरामद भएको ब्रेक प्याडहरु  नेपाल राष्ट्र बैंकमा पठाईएको हो । प्रतिवादी हर्कराज राई समेतले यसरी ब्रेक प्याडमा  अवैध रुपमा सुन पैठारी गरेका हुन् यसरी अबैध सुन पैठ गर्ने कार्यमा संलग्न ब्यक्तिहरुलाई कानुन बमोजिम कारबाही गरि पाँउ भन्ने समेत ब्यहोराको कागज ।

XLIII. **घरवेटी विश्व निरौला (ना.प्र.प.नं.८६ मोरङ) को कागज:**

जिल्ला ललितपुर धापाखेल स्थित रहेको कान्तीपुर इन्जिनियरीङ कलेजमा प्रशासन स्टोर र विद्यार्थीहरुलाई सर्वे ल्याव सम्बन्धी जानकारी गराउने काम गर्दछू । जिल्ला काठमाडौं बुढानिलकण्ठ नगरपालिका वडा नं. ७ हात्तिगौडा स्थितमा मेरो तिन तलाको पक्की घर छ । मैले मेरो घरको सटर खालि छ भनि अनलाईनमा सम्पर्क नं. सहित राखेकोमा उक्त अनलाईन मार्फत शारदा पाण्डे र निजको श्रीमान नविन पाण्डे सहित मेरो घरमा सटर कोठा हेर्न आएका थिए । मिति २०७९ फागुन महिनामा निजले हाम्रो एक जना मान्छेलाई सटर कोठा चाहिएको छ हेर्नलाई लिई आउछु भनि गएकोमा निजले मैले हाल सम्म नचिनेका चाईनिज नागरिकललाई लिई आई सटर कोठा देखाए पश्चात निज चाइनिज नागरिकले हुन्छ भनि सटरको ताला चाँवी जिम्मा लगाए । सटर कोठाको चावी दिए पछि शारदा पाण्डेलाई फोन सम्पर्क गरी विदेशी नागरीक रहेछन् पछि हामीलाई अफ्ठेरोमा पार्लान निजसंग घरभाडा सम्झौताको पत्र बनाउनु पर्योत भनि भने पछि सटर कोठाको चाँवी लिएको दुई हप्ता पछाडि शारदा पाण्डे आई  चाइनिज नागरिक LINGFENG PENG र म विच महिनाको १२,०००।– (बाह्रा हजार) दिने सर्तमा घरबहाल सम्झौता कागज वनाई दुई महिनाको अग्रीम घरभाडा रु २४,०००।– (चौबिस हजार) लिई शारदा पाण्डेले उक्त कागज पत्र लिई गई चाइनिज नागरिक LINGFENG PENG (पासपोर्ट नं. EJ6632698) लाई  उक्त कागजातमा हस्ताक्षर गराई मलाई ल्याई दिएका हुन । शारदा पाण्डेको सम्पर्क नं. ९८६७५३१५८८ हो र निजको श्रीमान नविन पाण्डेको सम्पर्क नं. ९८४९९१०८४५ हो । निज चाईनिज नागरिकले सटर कोठाको चावी लिएको डेड् महिना पछाडी देखी सामान राख्न थालेका हुन । सामान ल्याउदा बेलुका ४/५ बजे तिर ल्याउने गरेका थिए । सामान ल्यादा २ जना मैले नचिनेका चाईनिज नागरिकहरु आउने गरेका थिए । काठको बाक्सा कार्टुन भित्र उक्त सामानहरु ल्याउने गरेक थिए । मैले एक पटक के सामान हो भनि सोधखोज गर्दा निजले उक्त कार्टुन खोलि देखाउदा इलेक्ट्रोनिक सामानहरु देखाएका थिए । कहिले हप्तामा र कहिले महिना दिन मा सामान ल्याउने गरेका थिए । काहिले काही सामान आएको वेला निज शारदा पाण्डे

सामान लिई आउने गाडीलाई सटर कोठा देखाउन आउने समेत गरेकी थिईन। सामान राख्नको लागि सधै फरक फरक अनुहारको दुईजना चाइनिज नागरिकहरु आउने गरेका थिए। म अफिस जाने भएकोले निजहरुले सामन के कति समयमा ल्याउने र लाने गरेका थिए सो सम्बन्धमा मलाई जानकारी छैन । सटर कोठाको भाडा मेरो NIMB बैंकमा रहेको खातामा शारदा पाण्डेले असोज महिना सम्मको भाडा जम्मा गरि दिएका छिन्। चाइनिज नागरिकहरु सामान राख्न नआएको दुई महिना जति भएको थियो । मिति २०८०/०५/१४ गते प्रहरी कर्मचारीहरुले मैले सटर कोठा भाडामा दिएको कोठाको चावि लिई आई उक्त सटर खोली हेर्दा इलेक्ट्रोनिक मेसिनहरु जस्ता सामानहरु रहेछन्। सामान राख्न आउने चाईनिज नागरिकहरुलाई चिन्दीन सामान राख्न आउदा फरक फरक व्यक्तिहरु आउने गरेका थिए । अवैध सुन पैठारी तथा संगठित अपराधमा पक्राउ परेका व्यक्तिहरुलाई म चिन्दीन। अबैध सुन पैठारी कार्य गर्ने व्यक्तिहरुलाई कानून बमोजिम होस। चाइनिज नागरिक LINGFENG PENG (पासपोर्ट नं. EJ6632698) भएको निज शारदा पाण्डेले पहिलेनै सटर कोठा भाडा सम्झौता पत्रमा के कस्को हस्ताक्षर समेत गराई मलाई दिएको भाडा सम्झौता पत्र र सम्झौता पत्र संगै मलाई दिएक नागरिक LINGFENG PENG पासपोर्टको प्रतिलिपी समेत पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

XLIV. **कम्पनी दर्ता गरिदिने भिम बहादुर मगरको कागज :**

म २०७७/०७८ सालदेखी का.जि. त्रिपुरेश्वर स्थित कम्पनी रजिष्ट्रारको कार्यालय अगाडी लेखापढी कार्य गर्दै आईरहेको छु । हाल पक्राउमा परेका मध्ये हर्क राज राई मार्फत दिलिप भुजेल,राम बहादुर भुजेल, बिकुन्द्र भुजेल, कुमार बहादुर भुजेललाई चिन्दछु । सन् 2022 July 17 मा हर्कराज राई सँग कम्पनी रजिष्ट्रारको कार्यालय अगाडी भेट भएको थियो । हर्कराज राईले मलाई कम्पनी दर्ताको लागी काम गर्नु हुन्छ, हुदैन भनी सोधेकोमा मैले कम्पनी दर्ता गर्ने काम गर्ने गरेको छु भनी बताए पश्चात निज हर्कराज राईले भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि.को नाम, ठेगाना र संचालकको नाम, नागरिकता प्रमाणपत्रको प्रतिलिपी मेरो मोबाईलको whatsapp मा हालिदिएको हो। मैले कम्पनी दर्ताको लागी सबै कागजातहरु मिलाईदिने, तयार गरिदिने कार्य गरी सहिछाप गर्न हर्कराज राईले राम बहादुर भुजेललाई लिई आएको र राम कुमार भुजेलको सही गराएको हो। भुजेल ईलेक्ट्रिकल सप्लायर्स प्रा.लि.को ठेगाना का.जि.बुढानिलकण्ठ नगरपालिका वडा नं.४ मा राखी कम्पनी दर्ता गरेको हो । सो कम्पनी दर्ता गर्नको लागी सहयोग गरे बापत मलाई हर्कराज राईले रु.५,०००।– दिएका थिए। कुनै पनि कम्पनी दर्ता गर्नको लागी कम्पनी बिधान(प्रवन्धपत्र नियमावली), निवेदन, Online form भर्ने, कम्पनी रजिष्ट्रारको कार्यालयमा राजस्व(दर्ता शुल्क) तिर्ने कार्य गर्नु पर्छ। सो सबै कार्य मैले गरिदिएको हो। सो पश्चात प्रमाणपत्र लिने, प्यान दर्ता गर्नु पर्ने, वडा (स्थानीय तह) मा ब्यवसाय दर्ता गर्नु पर्ने, वाणिज्य दर्ता गर्ने, भन्सार विभागबाट Exim Code लिनु पर्ने हुन्छ। मैले रामकुमार भुजेल समेतको नाममा कम्पनी दर्ता गर्न र Exim Code लिने कार्यमा सहयोग गरेको हुँ । मैले भुजेल इलेक्ट्रिक सप्लायर्स प्रा.लि.बुढानिलकण्ठ, Hwada(ह्वाडा)ईलेक्ट्रिकल्स सप्लायर्स प्रा.लि. बुढानिलकण्ठ, दोलखा इलेक्ट्रिक सप्लायर्स प्रा.लि, पवटी सप्लायर्स प्रा.लि., Ready Trade Pvt Ltd नामको कम्पनी समेत गरी ५ वटा कम्पनीहरु दर्ता गर्नको लागी मैले अनलाईनबाट नाम बुक गरी सो कम्पनीहरुको प्रवन्धपत्र,नियमावली र निवेदन तयार गरी सम्वन्धित संचालकहरुलाई प्रवन्धपत्र, नियमावली र निवेदन/अख्तियारीमा कम्पनीका सम्वन्धित संचालकहरुलाई सहि छाप गराई मस्यौदाकारमा मेरो नाम र दस्तखत गरी कम्पनी रजिष्ट्रारको कार्यालयमा सम्पूर्ण कागजातलाई

अनलाईन अपलोड गरी  कम्पनी रजिष्ट्रारको कार्यालयमा पेश गरी तोकिएको राजस्व तिरी कम्पनी दर्ता गरिदिएको हुँ। कम्पनीहरुको उदेश्य सम्बन्धित संचालकले भने बमोजिम लेखिदिएको हुँ। Ready Trade Pvt Ltd समेतको कम्पनीहरुको Exim Code वारेसनामा मार्फत लिने प्रकृया भनेको कम्पनीको संचालक स्वंयम उपस्थित हुन नसकेको खण्डमा कानून अनुसार वारेशनामा लिई अख्तियारी मार्फत कम्पनीहरुको Exim Code वारेसनामा  मार्फत लिन सकिन्छ । मलाई हर्कराज राईले समुन्द्रपारको देशबाट सामान आयात निर्यात गर्नको लागी  Exim Code आवश्यक परेको भनी सम्वन्धित ब्यक्तिबाट निवेदन र अख्तियारीनामा सहि छाप गरी ल्याई दिई, निवेदन तथा अख्तियारीसँग कम्पनी दर्ता प्रमाण पत्र, प्यान दर्ताको प्रमाण पत्र, बाणिज्य दर्ताको प्रमाणपत्र, बैक ग्यारेन्टी, शेयर लगत ल्याई मलाई दिए पश्चात मैले अनलाईन फर्म भरी भन्सार बिभागबाट Exim Code लिई दिएको हुँ । Exim Code लिनको लागी कम्पनी भ्याटमा दर्ता हुनु  पर्छ । उल्लेखित Ready Trade Pvt Ltd ले  Exim Code लिनु पूर्व सो कम्पनी भ्याटमा दर्ता भएको थिएन । मैले Exim Code लिनको लागी अनलाईन फर्म भरी भन्सार विभागमा पेश गरिदिएको हुँ । सो कार्यालयबाट  भ्याट सम्वन्धमा कुनै सोधपुछ भएन। Ready Trade Pvt Ltd को Exim Code को  लागी पेश गरेको निवेदन देखाउँदा देखी पाएँ सो निवेदमा रहेको हस्तलिपी  मेरो आफ्नो हो भने सो निवेदनमा भएको  दस्तखत मेरो होईन । निज हर्कराज राईलाई कम्पनीको सम्वन्धित संचालकको दस्तखत गरेर ल्याउनु भनी मैले पठाएको थिए । प्रतिवादी हर्कराज राईसँग मिलेमतो गरी दिलिप भुजेलको दस्तखत गरी Exim Code  मैले लिएको होईन। उक्त दिलिप भुजेलको दस्तखत मैले गरेको भनी हर्कराज राईले अधिकार प्राप्त अधिकारी समक्षको बयानमा खुलाएको कुरा गलत हो । किन निजले गलत कुरा खुलाए मलाई थाहा छैन ।अनुसन्धानको क्रममा मेरो हस्तलिपी र दस्तखत नमूना  दिन तयार छु। मेरो  हस्तलिपी र दस्तखत नमूना  पाना- १० र मेरो सामसुङ M12 मोबाईल र सो मोबाईलमा प्रयोग भएको ९८६५५९७४३२ नं.को सिमकार्ड समेत यसै कागज साथ पेश गरेको छु । निज हर्कराज राई समेतका अवैध रुपमा सुन पैठारी गर्ने कार्यमा संलग्न ब्यक्तिहरुलाई कानुन बमोजिम कारबाही गरि पाँउ भन्ने समेत ब्यहोराको कागज।

XLV. **<u>मनिष पौडेल (ना.प्र.प.नं.१९-०२-७३-००२२९ सर्लाही) को कागज:</u>**

म litmus Industres Ltd  मा  बिक्री प्रवन्धकको काम गर्छु। मेरो मुख्य काम मार्केटिङ् हेर्ने रहेको छ। सो बाहेक  King  भन्ने चाईनिज नागरिकसँग करिब ५ बर्ष अगाडी  का.जि. ठमेलमा भेटघाट भई चिनजान भए पश्चात मलाई चाईनिज नागरिक  King  ले  म चाईनाबाट सामान भन्सार हुदै सडक माध्यमबाट काठमाडौं पठाउछु सो सामानहरु तिमीले मैले भनेको ब्यक्तिहरुलाई दिनुपर्छ सो बापत मासिक नेपाली रु.१९,०००।–दिन्छु भने पश्चात सो समय देखी मैले निज  King  भन्ने ब्यक्तिले  चाईनाबाट  रसुवा तथा तातोपानी  भन्सार कार्यालय हुँदै काठमाडौं पठाएको सामानहरु निज  King ले  Wechat  मा Mark Name, Pcs, Weight, सामान बुझाउनु पर्ने ब्यक्तिको मोबाईल नं., Ware House(गोदाम)को मानिसको मोबाईल नं र WareHouse(गोदाम) को ठेगाना पठाउने गरेका छन् र मैले सोही अनुसार  King ले भने अनुसारका सम्वन्धित ब्यक्तिहरु समक्ष सामान पुर्याईदिने काम गरिदिने र सो बापत मलाई निज King ले मासिक नेपाली रु.१९,०००।– दिने गरेका छन् । सामान ल्याउँदाको प्रज्ञापन पत्र समेतका कागजातहरुको बारेमा मलाई जानकारी हुदैन । मैले सामान बुझ्न जाँदा कुनै रकम तिर्ने गरेको समेत छैन ।  निज King भन्ने चाईनिज नागरिकले सन् २०२३ अप्रिल ६ तारिकमा Wechat  मा मलाई  Ware House(गोदाम)को ठेगाना भनी

का.जि. बौद्ध, सो स्थानको लोकेशन म्याप, गोदामको मानिसको फोन नं.९८४३२५९९९९, सामान प्राप्त गर्ने ब्यक्तिको Mark name:-RT1180NBE , 2pcs, 180 Kg र सामान दिनु पर्ने ब्यक्तिको मोबाईल नं. ९८१८४५७८५५ हो भनी विवरण पठाईदिए सो बिबरण साथ अन्य दुईवटा सामानहरुको विवरण पनि पठाएका थिए। सो पश्चात म सोहि दिन सन् २०२३/०४/०६ मा मैले गोदामका ब्यक्ति भनी नम्बर दिईएको चाईनिज नागरिकको मोबाईल नं. ९८४३२५९९९९ मा फोन गरी का.जि बौद्द लोट्रे मार्ट नजिक रहेको गोदाममा गई हेर्दा सो चाईनिज नागरिक King ले पठाएको Mark name:-RT1180NBE नमिले पश्चात मैले सोही स्थानबाट King लाई Wechat मा म्यासेज गरी Mark name नमिलेको भनी जानकारी गराउँदा निज King le सो दुई पिस सामानको फोटो मलाई पठाईदिए पश्चात मैले सामान एकिन गरी हाल नाम थाहा भएका हर्क राज राईलाई फोन गरी तपाईको सामान चाईनाबाट आएको छ के कुन स्थानमा सामान ल्याई दिउ भन्दा हाल नाम थाहा भएका हर्क राज राईले म सोही स्थानमा सामान लिन आउछु भनी बताई निज हर्क राज राई सोही गोदाममा सामान लिन भनी आई निज हर्क राज राईले सो Mark name:-QX22B100031 , 2pcs सामान लिएर गएका हुन् । सो सामान बाहिरबाट काठको बाकसमा बन्द अवस्थामा रहेको थियो । सो सामान सुरुमा के थियो भन्ने मलाई थाहा थिएन । हाल यस ब्यूरोबाट फोन गरी बोलाई जानकारी गराएपश्चात King भन्ने चाईनिज नागरिकले २०२३/०४/०६ मा नेपाल पठाएको Mark name:-QX22B100031 , 2pcs सामान सुन गाल्ने मेसिन रहेछ । सो सामान सुन गाल्ने मेसिन भएको कुरा हाल आएर मात्र मैले थाहा पाएको हुँ । हाल पक्राउ परेका प्रतिवादीहरु मध्ये सो चाइनिज नागरिक King ले पठाएको Mark name:-QX22B100031, 2pcs सुन गाल्ने मेसिन लिएर जाने लाई मात्र चिन्दछु । अन्य ब्यक्तिहरुलाई म चिन्दिन । निज King भन्ने ब्यक्ति अं.३४/३५ वर्षको चाईनिज नागरिक हो ।निजको Facebook प्रोफाईल नाम king china हो । निज King ५ वर्षको अन्तरालमा ३ पटक नेपाल आएका छन् । निज King सँग मेरो अन्तिम पटक २०२३/०५/१३ मा का.जि.ठमेलमा भेट भएको थियो । निज King ले नेपाली फोन नं. ९८२३३०८५३३ प्रयोग गर्छन् । निज हर्क राज राई समेतले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई थाहा थिएन । मलाई निज King ले मासिक रु.१९,०००।– पारिश्रमिक दिने भएको कारण निजले भनेको सामान सम्वन्धित ब्यक्ति समक्ष पुर्याईदिने काम मात्र गरेको हुँ। सो भित्र के सामान हुन्छ मलाई केही थाहा हुदैन । यसरी अवैध रुपमा सुन पैठारी गर्ने कार्यमा संलग्न ब्यक्तिहरुलाई कानुन बमोजिम कारबाही गरि पाँउ । मैले निज King भन्नेको फोटो, निज king ले मलाई Wechat मा सामानको विवरण पठाएको म्यासेज, सामानको बौद्दको गोदाममा खिचेको फोटो, गोदाममा काम गर्ने चाईनिज नागरिकको मसँग सेल्फी खिचेको फोटो र गोदाम धनीको फोटो समेत यसै कागजसाथ पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

XLVI. **घरवेटी रमा कडेल (न.प्र.प.नं.२६७५-०४४चितवन) को कागज:**

मेरो पेशा व्यवसाय गृहणी हो, का.जि.का.म.न.पा.वडा नं. ४ सिन्धु मार्ग सलोहसाल टोलमा मेरो साडे दुई तलाको घर छ । सो घर भाडामा लगाउने गरेको थिए । २५ सेक्टेम्बर २०१९ देखी Yan Qiang (passport No EB6692122) नाम गरेका चाईनिज नागरीक बस्ने गरेका थिए । उनिहरु निस्किए पछि मेरो घर खालि थियो । मेरो सम्पर्क नं, पत्ता लगाई श्रीकृष्ण गौलिले मलाई सम्पर्क गरी तपाईको घर खालि रहेछ । भाडामा लगाउने हो भनेकाले घर भाडामा दिने हुँदा हुन्छ भनि श्रीकृष्ण गौलीले घर देखाउन आएको बेला भारतिय नागरीक Mrs THYOTYA, टाँसी भन्ने थुप्तिन लामा समेत आएका थिए , निजहरुलाई मेरो घर मन परेकोले

भारतिय नागरी Mrs THYOTYA संग मासिक १,२०,०००।– (एक लाख बिस हजार) घर भाडा बुझाउने गरी सन १३ सेक्टेम्बर २०२२ मा दुई वर्षको काररनामा कागज गरी Mrs THYOTYA लाई घर भाडामा दिएको हो । श्रीकृष्ण गौलीलाई मैले निजहरुले के काम गर्छन भनि सोध्दा फास्ट ट्र्याक सामान सप्लाई गर्ने काम गर्दछन भनि बताएका थिए । ४ महिनाको अग्रिम भाडा रु ४,८०,०००।– ( चार लाख असी हजार) भएकोमा श्रीकृष्ण गौली मलाई ३,६०,०००।– दिएका थिए । त्यस पश्चात घरको भाडा श्रीकृष्ण गौलिले मलाई दिने गरेका थिए । जुन र जुलाई माहिनाको भाडा Mrs THOTYA ले बुझाएका थिए । घर भाडामा दिए पछि म उक्त घरमा गएको थिईन । ३/४ दिन अगाडी मलाई Mrs THOTYA ले मेसेज गरी तपाईसंग कुरा गर्नु छ भनि बोलाए पश्चात म उक्त घरमा गई निज Mrs THOTYA संग कुरा गर्दा हामी यहाँबाट जादै छौ सेक्टेम्वरबाट घर खाली गरिदिन्छौ करारनामाको कागज रद्द गरि दिनु पर्‍यो भने कुराकानी भएको थिए । को को बस्ने गर्थे । घरमा के कस्तो मानिसहरु आवत जावत गर्ने गरेका थिए मलाई केही जानकारी छैन । प्रतिवादीहरु हर्कराज राई, अशोक लामा, दिलिप भुजेल, राम कुमार भुजेल, संतोष चन्द, सरोज श्रेष्ठ, नरेश तामाङ, कृष्ण कुमार श्रेष्ठ, राजन कुमार श्रेष्ठ, पुष्कर राज भट्ट, Lin Ze Qiang, कुमार ढकाल, राजेन्द्र कुमार राई, यादव पराजुली, सुदर्शन गौतम र दावा छिरिङ म चिन्दीन टाँसी भन्ने थुप्तिन छिरिङको मलाई कृष्ण गौलीले मलाई ९८२८८२३९०९ तिव्वतियन मेन बोस हो भनि सम्पर्क नं. पठाए पछि घरको भाडाको लागी निज संग कुराकानी गर्ने गरेको थिए । सो वाहेक मलाई अन्य केही थाहा छैन । निज भारतिय नागरीक Mrs THOTYA संग गरेको घर भाडा सम्झौता करारनामा कागज र निजहरुको परिचय पत्रको प्रतिलिपी समेत पेश गरेको भन्ने समेत ब्यहोराको कागज ।

XLVII. **लेसाङ शेर्पाले (ना.प्र.प.नं. ७२९०३/२०८०, इलाम) को कागजः-**

मेरो पेशा जिल्ला काठमाडौं दक्षिणकाली नगरपालिका वडा ५ स्थित रहेको मञ्जुश्री अध्ययन केन्द्रमा रहेका लामा विद्यार्थी वच्चाहरुलाई पढाउने र वच्चाहरुको हेरचाह गर्ने गर्दछु । चाइनिज नागरिक passport No: EF5970642 वहाक Dou Junxiang लाई मेरो साथी चुण्ढु भन्ने पासङ तामाङले ९८६११७४०१६ बाट मलाई मेरो सम्पर्क नं. ९८६०४३४७३२ मा सम्पर्क गरी चाइनिज महिला फर्पीङ स्थित रहेका बौद्ध तीर्थ स्थलहरुमा घुम्न आउने भनेको छ तपाईले निजलाई तीर्थ घुमाई दिनु भनि भनेकाले मेरो सम्पर्कमा आएका निज चाइनिज महिला Dou Junxiang संग तीर्थ घुमाउने क्रममा चिनजान भएको हो । निजलाई उक्त स्थानहरुमा मैले घुमाई दिएको हो । सम्पूर्ण ठाँउमा घुमिसके पछि निज फिर्ता गएका थिए । घुम्दै जाने क्रममा मलाई निज चाइनिज महिलाले फ्याक्ट्रि खोल्नको लागि जग्गा चाहिएको छ भनेकाले मेरो चिनजानको साथी ग्याल्बो लामाको सम्पर्क नं. दिएर पठाईदिएको थिए । निजले के कुन ठाउँमा को कस्को जग्गा के कुन सर्तमा जग्गा भाडामा लिए मलाई थाहा भएन । के कुन फ्याक्ट्रि खोल्ने कुरा थियो सो पनि मलाई थाहा भएन । प्रतिवादीहरु हर्कराज राई, अशोक लामा, दिलिप भुजेल, राम कुमार भुजेल, संतोष चन्द, सरोज श्रेष्ठ, नरेश तामाङ, कृष्ण कुमार श्रेष्ठ, राजन कुमार श्रेष्ठ, पुष्कर राज भट्ट, Lin Ze Qiang, कुमार ढकाल, थुप्तिन छिरिङ, राजेन्द्र कुमार राई, यादव पराजुली, सुदर्शन गौतम र दावा छिरिङ लगाएतका प्रतिवादीहरुलाई म चिन्दीन भन्ने समेत ब्यहोराको कागज ।

XLVIII. **सागर सिंह पालीले ( ना.प्र.प.नं. ७५१००१/८०३८ कन्चनपुर) को कागजः-**

मेरो पेशा व्यबसाय विदेशी नागरिकहरुलाई विदेशी लगानी स्वीकृती गर्ने कार्यमा सहयोग गर्ने ,कम्पनी खोल्न, प्यान दर्ता उद्योग दर्ता र राष्ट्र बैंक देखि विदेशी गलानी स्वीकृती लिने कार्यमा सहयोग गर्ने, होटल खोल्न,

विजनेस भिषा लिने प्रकृयामा सहयोग गर्ने, अमेरीकन द्वारा संचालित The White Yak प्राईभेट लि. , बसन्तपुर स्थित रहेको चाईनिज Heping Hotel and Restaurant र ललितपुर स्थित बकुन्डोल स्थित रहेको चाइनिज Hong Fu Pastry Restaurant र पुतलिसडक स्थित रहेको American General Education Center मा लेखा सम्वन्धीको काम गर्ने गर्दछु। विदेशी नागरिकहरु सम्पर्कमा आई विदेशी लगानी स्वीकृती गर्ने कार्य, ,कम्पनी खोल्न, प्यान दर्ता उद्योग दर्ता र राष्ट्र बैंक देखि विदेशी गलानी स्वीकृती लिने कार्यमा, होटल खोल्न, विजनेस भिषा लिने प्रकृयामा सहयोग मागेमा निजहरुलाई सम्बन्धित निकायहरुमा लगि कानून वमोजिम कागजातहरु तयार गर्ने कार्यमा सहयोग गर्ने गर्दछु चाइनिज नागरीकहरु पनि मेरो सम्पर्कमा आएमा निजहरुलाई पनि माथी उल्लेखित कार्यमा सहयोग गर्ने काम गर्दछु । यसै क्रममा हाल पक्राउमा परी आएका वेल्जियम नागरीक दावा छिरिङलाई मन्जिल श्रेष्ठ द्वारा चिनजान भएको हो। का.जि.का.म.न.पा.वडा नं. २६ ठमेल स्थित होटल छङफङ नामको होटल दर्ता गर्न आबश्यक कागजातहरु कानुन बमोजिम तयार गरी होटल खोल्ने कार्यमा चिनजान भएको हो । हाल छङफङ नामलाई परिवर्तित गरेर Hotel Vieena नामले संचालन छ । मेरो सम्पर्कमा आएका विदेशी नागरीकहरुलाई कम्पनी खोल्ने कार्यमा सम्बन्धित कार्यालयमा गई कागजातहरु तयार गरी सहयोग गरेको हो। निजहरुले कम्पनी खोले के कस्तो कार्यहरु गरेका छन् मलाई जानकारी छैन। १० वर्ष देखी मैले उक्त कार्य गर्दै आएको हुँदा के कति विदेशी नागरिकहरुले के कस्तो कम्पनी खोलेका छन मलाई जानकारी छैन । निज चाइनिज नागरीकहरुले कम्पनी खोली अबैध सुन पैठारी तथा संगठित अपराध गरेको सम्बन्धमा मलाई कुनै जानकारी छैन। पक्राउ परी आएका प्रतिवादीहरु हर्क राई, अशोक लामा, दिलिप भुजेल, राम कुमार भुजेल, संतोष चन्द, सरोज श्रेष्ठ, नरेश तामाङ, कृष्ण कुमार श्रेष्ठ, राजन कुमार श्रेष्ठ, पुष्कर राज भट्ट, Lin Ze Qiang, कुमार ढकाल, राजेन्द्र कुमार राई, यादव पराजुली, सुदर्शन गौतम, , चाईनिज नागरिक चाइनिज SAUTEN भन्ने DING, SHENG FA, Roger, Steps भन्ने LI. Nengkai, ALI भन्ने LI WEN-TSUNG र ALEX भन्ने YAO PUCHENG समेतलाई चिन्दीन। दावा छिरिङलाई निजको होटेल खोल्ने क्रममा र नरेस तामाङलाई जिउ दिङ होटेलमा काम गर्ने क्रममा चिनजान भएको हो भन्ने समेत ब्यहोराको कागज ।

XLIX. **<u>सुरेन्द्र डंगोल (ना.प्र.प.नं. १९८१३ काठमाडौं) को कागज:-</u>**

जिल्ला काठमाडौं का.म.न.पा.वडा नं. २ नर्सरीमार्ग लाजिम्पाट स्थितमा मेरो तिन तलाको पक्की घर छ उक्त घर नजिक जस्ताको छाना लगाएको एउटा मात्र कोठा भएको सटर छ। उक्त सटर खालि थियो। कृष्ण गौली नामका व्यक्ति सटर भाडामा खोज्दै आएका थिए। निजले तपाईको सटर खाली छ भनि सोधखोज गरे पछि सटर खालि भएकोले खालि छ चाईनिज नागरिकहरुलाई हो भने म दिन्न भन्दा निजले कृष्ण गौलीले सटरको भाडा सम्झौता म गरि दिन्छु हजुरलाई कुनै समस्या हुँदैन भनि मिति २०७९/०८/२० गते मासिक रु २०,०००।– (बिस हजार) भाडा बुझाउने गरी कृष्ण गौलीले ३ महिनाको अग्रिम भाडा रु ६०,०००।– (साठी हजार) दिई एक वर्षको सटर भाडा सम्झौता कराराकामाको कागज गरि निजलाई सटर भाडामा दिएको हुँ। सटर भाडामा लिएको २/३ माहिना सम्म एक दुई कार्टुन सामान सटरको झ्यालको सिसाबाट देखेको थिए। नाम थाहा नभएको चाईनिज नागरिकले आफु बस्ने गरेको कोठा तिर कार्टुनमा सामान लागेको देखेको थिए । मैले भाडामा दिएको सटरमा सामान ल्याएको देखेको थिईन। कृष्ण गौलीलाई तपाईले सटर भाडामा लिनु भएको छ सामन केही राख्नु भएको छैन भनि सोधदा निजले अहिले मन्दी लागेको छ त्यसैले हो भनि बताएका थिए। पछि सटरको झ्यालको सिसा

समेतमा कर्पेटले बन्द गरेका थिए। त्यस पश्चात उक्त सटरमा के के सामान ल्याएका थिए नदेखिने भएकोले थाहा पाएको थिइन । राजस्व अनुसन्धान विभागको कर्मचारीहरु आई उक्त सटर खोलि हेर्दा सेभर मेसिन, स्मार्ट घडी तथा काठको बाकस कार्टुन भित्र मेसिनहरु देखेको हुँ। उक्त सामानहरु के कुन व्यक्तिहरुले के कुन समयमा ल्याई राख्ने गरेका थिए मलाई कुनै जानकारी छै। मैले चाइनिज नागरिकहरुलाई देखेको चिनेको छैन। अवैध सुन पैठारी तथा संगठित अपराधमा पक्राउ परेका व्यक्तिहरुलाई म चिन्दीन। अबैध सुन पैठारी कार्य गर्ने व्यक्तिहरुलाई कानून बमोजिम होस। कृष्ण गौली र म विचमा भएको सटर भाडा सम्झौता करारनामाको कागज पत्र पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

L. **लेउ लि.शान (राहदानी नं. EE 0946281) को कागजः-**

म प्रथम पटक मिति २०७९ असोज ३, दोस्रो पटक २०७९ चैत्र १ गते नेपालमा आई करिब ३ महिना नेपाल बसी पुनः मिति २०८० श्रावण ७ गते दुबईबाट नेपाल एयरलाइन्सको विमानमा तेस्रो पटक नेपाल आएको हुँ। चिनमा जुत्ताको व्यवसाय गरेको हुनाले नेपालमा के कस्तो बजारको अवस्था छ भनि वुझ्नको लागि नेपाल आई नेपालको स्वयम्भु, पशुपति, पाटन, भक्तपुर, दरबारमार्ग लगायतको ठाँउ घुमेको छु। नेपालमा आई Honda कम्पनीको निलो रङको स्कुटर we chat को माध्यमवाट नामथर, वतन, सम्पर्क नं. थाहा नभएको पातलो अग्लो शरीर भएको नेपाली व्यक्तिसँग एक लाख पचास हजारमा भाडामा किनेको हुँ तर उक्त स्कुटर निज व्यक्ति कै नाममा छ। भाटभटेनि सुपरमार्केट, नजिकैको बजार आउन जान र दैनिक उपभोग्य सामानको किनमेल गर्ने प्रयोजनको लागि स्कुटर किनेको हुँ। प्रथम पटक नेपाल आउदा ठमेल बस्ने गरेकोमा दोस्रो पटक नेपाल आए देखि XIAO CHEN नाम गरेको चिनिया नागरिक सँग चिनजान भएको र निज व्यक्ति सँग महाराजगञ्जको सामबाला होटलको पछाडिको अपार्टमेन्टमा बस्दै आएकोमा म तेसो पटक नेपाल आउदा निज व्यक्तिले उक्त अपार्टमेन्ट छोडेर गईसकेको थियो। उक्त अपार्टमेन्ट अन्य कोही पनि बस्ने गरेका थिएनन्। निज चिनियाँ नागरिकलाई भेट्न मलाई स्कुटर भाडामा दिएको ब्यक्ति भेट्न आउने गरेका थिए। निज चिनिया नागरिक दोसो तल्ला र म पहिलो तल्लामा बस्दै आएकोमा निजले उक्त अपार्टमेन्ट छोडिसकेपछि मेरो निज व्यक्तिसँग सम्पर्क भएको छैन। निज व्यक्तिले के कस्तो काम गर्छ मलाई थाहा छैन। मलाई स्कुटर दिन सहयोग गर्ने व्यक्तिले निज चिनिया नागरिकलाई अपार्टमेन्ट खोजिदिएको हो। उक्त अपार्टमेन्टमा हामी फरक-फरक कोठामा बस्ने भएको भाडा वापतको रकम रु ६०-६० हजारको दरले तिर्ने गरेका थियौँ। भाडा वापत तिरेको उक्त रकम मैले दुबईमा जुत्ताको ब्यवसाय गरी आर्जन गरेको रकम हो। म नेपालमा बस्ने क्रममा भिषामा म्याद सकिए पछि म्याद थप गरि बसेको थिए। घुम्न र बजारको विश्लेषण गर्नको लागि मैल म्याद थप गरी नेपाल बस्दै आइरहेको छु। भिषाको म्याद मिति २०८० भाद्रको २४ गते सकिएपश्चात नेपालवाट दुबई गई फेरि केहि समयपश्चात नेपाल पुनःआउने सोचेको छु। चिनिया नागरिकहरु ALEX भन्ने YAO PUCHENG, SAUTEN भन्ने DING SHENG FA, Roger/Steps भन्ने Li Nengkai, ALI भन्ने LI WEN-TSUNG, YANG WEN, MI TIAN, LIN ZE QUING लाई चिनेको छैन। निजहरुले अवैध रुपमा सुन पैठारी गरेको सम्बन्धमा मलाई जानकारी छैन। हाल सोधपुछको क्रममा निज समेतले अवैध रुपमा सुन पैठारी गरेको भन्ने थाहा पाएको हुँ। मलाई चिनिया भाषा अनुवादको सहयोगमा चिनिया भाषामा सोधपुछ गरी मैले चिनिया भाषामा दिएको जवाफलाई भाषा अनुवादकले नेपाली भाषामा अनुवाद गरी, लेखी मतलब समेत बुझाई कागज गरिएको ठिक साँचो हो भन्ने समेत ब्यहोराको कागज।

LI. **बाबु राजा महर्जन डगोल (ना.प्र.प.नं. ४६६८ काठमाडौं) को कागज:**

म NEW ERA भन्ने संस्थामा काम गर्दै आएको छु। मेरो नाममा काठमाडौं जिल्ला का.म.न.पा. वडा नं. ०४ वालुवाटारमा स्थित रहेको १९२ वर्ग मिटर जग्गामा चार तलाको घर रहेकोको सो घरमा दुईवटा सटर रहेको छ। उक्त सटरहरु मध्ये एउटा सटरमा तरकारी पसल रहेको छ। अर्को सटर खाली रहेकोमा सटरमा To-LET भनी उल्लेख गरी टाँसिएकोमा 25thMARCH 2023 मा नरेश तामाङ (फोन नं. ९८०८९७६९५९) नाम भएको व्यक्तिले फोन गरी भाडामा लिने कुरा गरी निजको साथमा राहदानी नं. E94446558 बाहक Lin Ze Qiang नाम गरेको चाईनिज नागरिक समेत आई ईलेक्ट्रिक सामानहरु राख्ने भनी कुराकानी गरी मासिक रु.१५,०००।-(पन्ध्र हजार) लिने दिने कुराकानी भएकोमा निज राहदानी नं. E94446558 बाहक Lin Ze Qiang को राहदानीको प्रतिलिपी राखी तीन महिनाको अग्रीम भाडा लिई सटर भाडामा दिएको थिए। सटर भाडामा दिने समयमा सम्झौता गर्नुपर्छ भनेकोमा हुन्छ सम्झौता गर्ने भनी निज चाईनिज नागरिकसँग आएका चाईनिज भाषा समेत बोल्ने नरेश तामाङले भनेको थिए भाडामा दिए पश्चात निज नरेश तामाङ नआएको र चाईनिज भाषा मलाई नआउने भएकोले सटर भाडा सम्झौता हुन पाएको थिएन्। सटर भाडा लिए पश्चात दिनमा र साँझमा चाईनिज नागरिक र नेपाली नागरिकहरु समेत आई सामानहरु राख्ने र लैजाने गर्ने गरेका थिए। निहरुले काटुन काटुन ल्याई राख्ने गरेका थिए के कुन सामानहरु राख्ने गरेका थिए एकिन थाहा हुदैनथ्यो । मिति २०८०।०४।०४ गते रातको समयमा राजस्व अनुसन्धान विभागवाट खटिएको टोलीले मेरो घरमा आई उल्लेखित सटरमा चेकचाँज गरी शिलवन्धी गरी गएकोमा सोही क्रममा उल्लेखित सामानहरुमा सुन लुकाई छिपाई ल्याउने गरेको र सोही प्रयोजनको लागी सटर भाडामा लिएको भन्ने थाहा हुन आएको हो। हाल पक्राउ परी आएका मानिसहरु मध्ये नरेश तामाङ र Lin Ze Qiang लाई सटर भाडामा दिने क्रममा चिनजान भएको हो ,सो बाहेक अन्य प्रतिवादीहरुसँग मेरो चिनजान छैन्। मिति २०८०।०५।०१३ गते यस व्यूरोवाट खटिएको टोलीले शिलवन्धी खोली खानतलासी गर्दा मेरो सटरमा रहेको अवस्था सेभर, सुन गाल्न प्रयोग हुने भनिएको मेशिनहरु समेतका सामानहरु वरामद भएको, सटरमा रहेको सामानहरु रहेको काटुनहरु खोलिएका सोमा रहेका विभिन्न ईलेक्ट्रोनिक उपकरणहरु खोलिएको अवस्थामा रहेको र उक्त बरामद भएका ईलेक्ट्रोनिक उपकरणहरुमा भन्सार कार्यालयको कोड तथा स्टिकर समेत नभएको, अधिकांश समानहरू बिग्रिएको नचल्ने अबस्थामा रहेका देखिन आएकोमा सुन पैठारी गर्ने कार्यमा संलग्न रहेका नरेश तामाङ र Lin Ze Qiang समेतका मानिसहरुलाई कानून बमोजिम हदैसम्मको कारबाही हुन भाडामा सटर लिने क्रममा दिएको Lin Ze Qiang को राहदानी नं. E94446558को प्रतिलिपी पाना १(एक) समेत यसै साथ पेश गरेको छु भन्ने समेत ब्यहोराको कागज।

LII. **भिमकान्त भण्डारीको कागज:**

मिति २०७५ सालको मँसिर/पौष महिनातिर म उर्जा मन्त्रालयमा मन्त्री बर्षमान पुनको निजी सचिवालयमा ना.सु. पदमा कार्यरत रहंदाको अवस्थामा चाईनिज नागरिकहरु हाइड्रोको बिषय लिएर उर्जा मन्त्रालयमा आएको समयमा सो मध्ये दावा छिरिङ्गसंग चिनजान भई मोबाईल फोन नम्बर पनि आदान प्रदान भएको हो। त्यस पश्चात निज दावा छिरिङ्गसंग विभिन्न व्यवसायसंग सम्बन्धित कुराहरु फोन र Wechat मा हुने गरेको हो। मैले २०७६ साल चैत्र महिनामा नोकरीबाट राजिनामा दिई निस्केपछि निज दावा छिरिङ्गसंग व्यवसायिक कुरा हुने गरेको हो। यसरी कुरा हुंदै जाने क्रममा निज दावा छिरिङ्गलाई मैले नागढुङ्गा- नौबिसे सडक बिस्तारको

ठेक्का र सो ठेक्कामा ठेकेदार कम्पनी खोज्न भनेकोमा निजले Henan Engineering China संग सम्पर्क गराईदिएको हो र सो पश्चात उक्त कम्पनीको CEO भन्ने चाईनिज XIAMEI LEAH संग WE CHAT Group तथा Mail मा कुरा हुने गरेको हो र सो ठेक्का हाले पनि उक्त कम्पनीलाई ठेक्का नपरेको हो र निजले कोभिडको समयमा भ्याक्सिन उत्पादक कम्पनी SINOVAC संग सम्पर्क गराईदिएको थियो, सो कारण उक्त भ्याक्सिनको नेपालको औषधी व्यवस्था विभागबाट अनुमती समेत लिएको थियो, पछि सरकारले सिधैं चाईनिज सरकारसंग खरिद गरेपश्चात उक्त अनुमती काम लागेन । SINOVAC संग सम्पर्क गराई भ्याक्सिन आयात गर्दा निज दावालाई सो बापत कमिसन दिने कुरा थियो, एडभान्स स्वरुप निजले करीब रु १० लाख रुपैया काम नभए पश्चात फिर्ता गरेन सो पैसा फिर्ता गर्न मैले तारम्तार निज दावासंग सम्पर्क गरें पछि निजले चाईनिज गाडीको डिष्ट्रिब्युटर मिलाई दिन्छु भनेको थियो सो काम समेत निजले नगरेर मलाई सामाजिक सञ्जाल लगायत सबै स्थानबाट ब्लक गरेको कारण निजसंग सम्पर्क हुन नसकेको र निजले हालसम्म पनि मेरो उक्त पैसा नदिएको । दावा छिरिङ्गसंग सम्बन्धित अमला रोक्का मगर निज दावाको श्रीमति हो भनेर ३ बर्ष अगाडीदेखि चिनेको हो तर बिगत २ बर्ष देखि निज अमला रोक्का संग सम्पर्क सम्बन्ध छैन । तीन बर्ष अघि गाडीको ब्यापार गर्ने कुरा भएको थियो तर ब्यापार पनि भएन र ब्यवसायिक सहकार्य पनि भएन । गोम्बो छिरिङ्ग चिन्दिन । मञ्जिल श्रेष्ठ संग कोभिडको समयमा करिव पाँच सय जना भन्दा वढी चिनिया नागरिकहरुको कोभोड टेष्ट गर्दा चिनजान भएको हो । निज मञ्जिलले मसंग कोभिड टेष्टको कमिसन माग्नको लागी धैरै पटक फोन सम्पर्क गरेको थियो तर मैले कमिसन दिईन र पछि निजसंग सम्पर्क पनि भएन । निज दावाले मलाई उक्त प्रस्ताव Wechat मार्फत गरेको सो मा मैले करीब ३ महिना सम्म रेस्पोन्स नै नगरेको, मेरो Singapore मा कुनै बैंक खाता नरहेको । निजले प्रस्ताव गरेकोमा बेवास्ता गरी सो काम नगरेको । उक्त प्रस्तावमा उल्लेख गरेको one million USD को सम्बन्धमा निजले मलाई के-कसरी कुन प्रयोजनको लागि राखिदिन खोजेको हो सो विषयमा मलाई जानकारी भएन, सो च्याट हुनु भन्दा पहिला सिंगापुरमा Trading कम्पनी खोलौ भन्ने प्रस्ताव गरेको थियो, सो कुरा मैले ईन्कार गरेको थिएँ । नागढुङ्गा मुग्लिन सडकको ठेक्काको सम्बन्धमा उक्त कुराकानी भएको हो । ठेक्का हाल्ने चाईनिज कम्पनीको नाम टेण्डर डकुमेन्टमा खाली ठाँउमा कम्पनीको नाम राख्नु भनेको हो, सो टेण्डर डकुमेन्ट सम्बन्धमा निजले मैले बुझे भनेको हो । नागढुङ्गा मुग्लिन सडकको ठेक्काको अन्तिम समय छिटो गर ठक्का हाल्ने समय १० दिन बाँकी छ भनेको हो । नागढुङ्गा मुग्लिन सडकको ठेक्काको Prequalification को फाईल जानकारी गराएको हो । नारायण सापकोटा सह-सचिव हुँदा म अर्थ मन्त्रालयमा जागिर गर्दथें, निजसंग भन्सार विभागको प्रमुख हुँदा मैले आयात गरेको युरिया मल तातोपानी नाकामा करीब ५ महिना अड्किएको थियो, सो को लागि सहजिकरण गरिदिन निजको फोन नम्बर ९८६००३६९३५ मा सम्पर्क गरेको थिए, पछि निज राजश्व अनुसन्धान विभागको प्रमुख हुँदा मैले आयात गरी ल्याएको जनक शिक्षा सामाग्री केन्द्र सानोठिमि भक्तपुरको कागज प्रहरीले ओभरलोड भयो भनि नागढुङ्गाको उकालोमा रोकेको रहेछ मेरो स्टाफले राजश्व अनुसन्धान विभागले समातेको भनेकोले निजसंग सम्पर्क भएको हो । पछिल्लो पटक राजश्व अनुसन्धान विभागको DG बाट निजको सरुवा भई सम्पत्ति शुद्दिकरण विभागको DG हुने हल्ला सुनेर मैले फोन सम्पर्क गरी बधाई दिएको हो । राहुल महरासंग मेरो अर्थ मन्त्रालयमा संगै काम गर्दा चिनजान भएको हो, पछि पनि निजसंग फेसबुक तथा निजको मोबाइल नम्बर ९८५११११८८८ मा सम्पर्क भईरहन्थ्यो, कहिले काही राजनैतिक भेटघाटको लागि समय माग, ठेक्का हालेको ठाँउमा

सहजिकरणको लागि अनुरोध गर्दथें । करीब ४ महिना पहिला निजले मलाई साईलेज घाँसमा साझेदारी र बैंकबाट लोनको सहजिकरणको लागि मेरो अफिसमा आउने गर्दथें तर मसंग रकम नभएको हुनाले कुनै साझेदारी भएन । त्यसैगरी ओनसरी घर्तीमगर संग म उर्जा मन्त्रालयमा काम गर्दा चिनजान भएको हो, पछि पनि राजनैतिक तथा बर्षमान पुनको स्वास्थ्य अवस्थाको विषयमा निजले प्रयोग गर्ने मोबाईल नम्बर ९८५११०२४८२ मा कुराकानी भईरहन्छ । निजसंग कुनै व्यापारिक साझेदार छैन । निज रमेश शेर्पाको कम्पनी Silk मार्केट प्रा.लि. समेत रहने गरी कृषी सामाग्री कम्पनी लिमिटेडको युरिया सप्लाई ठक्का हालेका थियौं । सो ठेक्काको फाईदा बापत निजको भागमा पर्ने रु १० करोडको चेक  सम्झौता गरि दिएको हो । पछि उक्त चेक साटिएन, हाल तातोपानी नाकामा मल आएको भएर उक्त चेक फिर्ता गरी संयुक्त रुपमा काम गर्ने सहमती भएको छ । म चाईनाबाट सामान आयात गरी नेपालमा बेचबिखन गर्ने काम गर्दछु । जस अन्तर्गत मैले युरिया, CCTV, कागज, अक्सिजन प्लान्ट, अक्सिजन सिलिण्डर, हस्पिटलमा प्रयोग हुने सामानहरु आयात गरी नेपालमा बेच्ने गर्दछु । करीब ४ वर्षसम्म उक्त कामको लागि चाईना तर्फ CANXU भन्ने चाईनिज केटीले कमिसन लिई सहयोग गरेकी थिईन । मिति २०८० बैशाख देखी निजले कमिसन बढी खाएको थाहा पाएर सिधैं उत्पादक कम्पनीसंग हाल काम गरिरहेको छु । हाल उनीसंग कारोबार हुदैन । अन्य कुनै विदेशीसंग कुनै लेनदेन, व्यापार व्यवसाय छैन । नेपालमा व्यापार व्यवसाय गर्न मेडिकलसंग सम्बन्धित मेरो एकल स्वामित्वमा BIDH ल्याब छ तथा आयात तथा ठक्कापट्टाको लागी BIDH Management छ । अन्य कुनै कम्पनीको हालसम्म कुनै एक रुपैयाको पनि कारोबार भएको छैन । अन्य साझेदारीमा सरकारी ठेक्का हाल्दा BIDH Management ले Joint Venture मा ठेक्का हाल्ने गरेको छ । हालसम्म करिब ३०/३२ वटा सरकारी ठक्का हालेको छ । सुजिन्द्र महर्जन किर्तिपुर नगरपालिकाको अधिकृत तथा माओवादी निकट कर्मचारी संगठनको अध्यक्ष हुन । उनी मेरा साथि पनि हुन । राजनैतिक कुरा गर्न राहुल महराका बुबा कृष्ण बहादुर महरासंग भेट्न खोजेकोले मैले भेटाई दिनु भनेको हो । कबिन्द्र पोखरेल मेरो कम्पनीको स्टाफ हो, निजले अन्तराष्ट्रिय कम्पनी HP, RICHO, DELL जस्ता ईलेक्ट्रोनिक कम्पनीहरु संग सम्पर्क गर्ने गर्दछन र व्यापार ल्याउने गर्दछन, मेरो सोही विषयमा कुरा भएको हो । CANXU मेरो चाईनामा कमिसन लिई काम गर्ने व्यवसायिक पार्टनर हो । निजले चाईनामा कम्पनी खोज्ने, सामान खोज्ने, बैंकिङ च्यानलबाट नेपालबाट चाईना गएको पैसा  उत्पादक कम्पनीमा लैजाने र सानोतिनो खरिदको लागि निजको नाममा रहेको ZHENGZHOU कम्पनीले तिरेको पैसाको बिल प्रमाण मलाई पठाउने गरेको थिईन जसले गर्दा निजले कती कमिसन खायो भन्ने कुरा पत्ता लगाउन सकिन्थ्यो, सो बापत दैनिक निजसंग धेरै Wechat मा कुरा हुने गर्दथ्यो । Jasper ZQ Huwai नेपालको Huwai को स्टाफ हो । Huwai संग NCELL Tower management को काम मेरो कम्पनीले २ महिना गरेको हो, सो समयको भुक्तानि आयो की आएन भनि निजसंग कुरा भएको हो । रोहित अग्रवाल दुर्गा पेपर मिल, बिरगंजका मालिक हुन, उक्त कम्पनीसंग मेरो कम्पनीले पेपर खरिद गरेको थियो, निजसंग सोही विषयमा कुरा भएको हो । ९८५१०२९६७१ नम्बरको मोबाईल फोन मेरो अफिसको साथि शिवहरी आचार्य हुन । निजसंग दैनिक अफिसकै कामको विषयम कुराकानी भईरहन्छ । रमेश मल्लसंग करीब ५ वर्ष अगाडी देखिको चिनजान हो । निजसंग कहिले काही व्यापारिक रुपमा मैले गरेको कामको बारेमा सहजिकरण माग्ने गरेको छु । निजसंग भएको कुरा जनक शिक्षा सामाग्री केन्द्रको पेपर सप्लाईको विषयमा कुरा भएको हो । Diamond सहकारी संस्थाको नाममा सुरुमा मलाई ९८०२६१३६०० नम्बरको Whatsapp बाट हाम्रो सहकारी डुब्न लाग्यो मलाई लोकेन्द्र

भन्नेले तपाईको नम्बर दिनु भएको हो म रु ५ करोडको कृषि बिकास बैंकको चेक दिन्छु १ महिनाको लागि मलाई १ करोड रुपैया सापटी दिनुहोस भनेकोमा मलाई निजको कुरामा शंका लागि अर्को दिन मेरो अफिसमा बोलाएको र मैले उक्त चेकको फोटो खिचे र तुरुन्तै कृषि बिकास बैंकको कर्मचारी भुवन ज्ञावलीलाई जानकारी गराए, हाल उक्त चेकको विषयमा छानबिन भईरहेको कृषि बिकास बैंकले मलाई जानकारी गराएको छ । मसंग उक्त चेकको खिचेको फोटो मात्र हो, सक्कल चेक स्वयम व्यक्तिले लिएर गएको हो । NMB बैंकका दिएका चेकहरु मेरो अफिसले भुक्तानि गर्नु पर्ने र लिएका चेकहरु मेरो अफिसले पाउनु पर्ने बिल बमोजिमका व्यापारिक कारोबारका चेकहरु हुन् । नबिल बैकको स्टेटमेन्टको सम्बन्धमा हामीले आयात गरेको युरियाको आयात अनुमतीको लागि नबिल बैंकले राष्ट्र बैंकलाई लेखेको पत्र हो । प्रल्हाद भाई मोदी भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीका भाई हुन् भने सोना बेलन मोदी नरेन्द्र मोदीका भतिजी हुन । निजहरु १२ मे २०२३ देखी १६ मे २०२३ सम्म काठमाण्डौं पशुपती दर्शन गर्न आउदा चिनजानको हिसाबले निजहरुसंग मसंगै थिए । उक्त आधारकार्ड होटल बुकिङ गर्दा तथा विमानस्थलमा VIP Lounge को लागि मैले फोटो खिचि मोबाईलमा राखेको हो । सोही फोटो एयरलाईन्समा प्रयोग हुने यात्रा अनलाईनमा समेत प्रयोग भएको थियो । मेरो व्यहोरा यति नै हो फरक छैन मैले भने बमोजिम लेखिएको ठिक साँचो छ भनी सहिछाप गरि दिए भन्ने समेत ब्यहोराको कागज ।

**७. त्रि.वि.भन्सार कार्यालयमा खटिएका कर्मचारी विवरणहरु र भन्सार एजेन्ट सम्वन्धी**

**क. त्रि.वि.भन्सार कार्यालयको जोखिम व्यवस्थापन शाखा (WAN) मा विभिन्न मितिमा ड्यूटिमा खठाईएका कर्मचारीहरुको विवरण निम्न अनुसार रहेको :-**

| नाम थर | पद | स्थायी ठेगाना | सम्पर्क नं. | डयूटीमा तोकिएको समय |
|---|---|---|---|---|
| श्री शंकरनाथ त्रिपाठी | भन्सार अधिकृत | पाँचखाल -१३ काभ्पलान्चोक | ९८५१२४२२४२ | २०७८ मंसिर देखी २०८०।०३।३१गते |
| श्री पुष्पा जोशी | भन्सार अधिकृत | धनगढी -५ कैलाली | ९८४८५८१९४५ | २०८०।०४।०१ देखी हालसम्म |
| श्री कमल परियार | ना.सु. | चापाकोट -१० स्याङ्गजा | ९८५१२७९४८६ | २०८०।०४।०१ देखी हालसम्म |

**BREAK PADS आयात गरेको Consognment हरुको जाँचपास गर्दा संलग्न रहेका कर्मचारीहरुको विवरण**

| सि .नं. | प्र .द.नं. | मिति | मालवस्तु को नाम | X-ray | जाँचकी | जाँचपास अधिकृत | मूल्यांक न ना.सु. | मूल्यांकन अधिकृत | मुल्यांकन प्र.भ.अ. |
|---|---|---|---|---|---|---|---|---|---|
| 1 | 24888 | 20230524 | BREAK PADS 40SET | Bhagirath i thapa | Bhagirath i Thapa | Ishwor Kumar Humagai | Birendr a Nepali | Ganesh Prasad Paudel | Bishnu Prasad paudel |
| 2 | 25317 | 20230528 | BRAKE PADS 40SET | Megh Bahadur Thapa | Megh Bahadur Thapa | Ramesh Kumar Khatiwada | Birendr a Nepali | Ganesh Prasad Paudel | Mukti Prasad Shrestha |
| 3 | 26024 | 20230531 | BRAKE PADS 40SET | Saroj Shrestha | Kumar Dhakal | Sarita Dhakal | Birendr a Nepali | Ganesh Prasad Paudel | Bishnu Prasad paudel |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| 4 | 27032 | 20230606 | BRAKE PADS 60SETS | Subarna Prabha K.C. | Megh Bahadur Thapa | Subendra Shrestha | Birendra Nepali | Ramesh Kumar Khatiwada | Narad Gautam |
| 5 | 27386 | 20230607 | BRAKE PADS 40sets | Saroj Shrestha | Laxmi Narayan Neopane | Chakra Dev Bhatt | Birendra Nepali | Ishwar Thapa Magar | Narad Gautam |
| 6 | 28148 | 20230612 | BRAKE PADS 40SET | Rajaram Sukaju | Khim Prasad KC | Deependra Chaurasiya | Birendra Nepali | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 7 | 28856 | 20230614 | BRAKE PADS 80SETS | Sunil Devkota | Sunil Devkota | Ramesh Kumar Khatiwada | Birendra Nepali | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 8 | 29514 | 20230619 | BRAKE PADS 40SETS | Yadav Raj Pahadi | Girendra Prasad Yadav | Arjun Ghimire | Birendra Nepali | Ganesh Prasad Paudel | Yamraj Pandey |
| 9 | 30492 | 20230623 | BRAKE PADS 60SETS | Saroj Shrestha | Sunil GC | Chakra Dev Bhatt | Birendra Nepali | Ganesh Prasad Paudel | Mukti Prasad Shrestha |
| 10 | 30833 | 20230626 | BRAKE PADS 20SETS | Januka Tiwari Adhikari | Kamal Subedi | Santosh Chand | Birendra Nepali | Ganesh Prasad Paudel | Narad Gautam |
| 11 | 31425 | 20230628 | BRAKE PADS 80SETS | Saroj Kumar Bhattarai | Deepak Raj Bhandari | Deependra Chaurasiya | Birendra Nepali | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 12 | 32156 | 20230703 | BREAK PADS 120SETS | Lekhnath Pokharel | Subarna Paudel | Biru Maskey | Birendra Nepali | Ganesh Prasad Paudel | Yamraj Pandey |
| 13 | 32852 | 20230706 | BREAK PADS 80SETS | Govinda Babu Tiwari | Girendra Prasad Yadav | Ishwar Thapa Magar | Birendra Nepali | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 14 | 33295 | 20230709 | BREAK PADS 120SETS | Saroj Shrestha | Binaya Raj Joshi | Chakra Dev Bhatt | Birendra Nepali | Ganesh Prasad Paudel | Yamraj Pandey |
| 15 | 34021 | 20230712 | BREAK PADS 160SETS | MO.Ismail Ali | Tapta Kumar Sahi | Santosh Chand | Birendra Nepali | Ganesh Prasad Paudel | Mukti Prasad Shrestha |
| 16 | 35079 | 20230718 | BREAK PADS 160SETS | Saroj Shrestha | Kumar Dhakal | Santosh Chand | Birendra Nepali | Ganesh Prasad Paudel | Shreedhar Tandan |

**ख.** **भन्सार ऐेजन्ट नियुक्तिको अनुमती सम्वन्धमा** :

जिल्ला चितवन रत्न नगर -९ वस्ने नागरिकता नं.८३२३ का सुदर्शन गौतमलाई गौतम हार्डवयरका संचालक जिल्ला चितवन रत्ननगर नगरपालिका वडा नं.०९ बस्ने (फोन नं.९८४५०८९०४९) का गोविन्द गौतम एजेन्ट दर्ता नं.४४६/२०५७/ ०५ /२१ ले भन्सार एजेन्टलाई मिति २०७९।०४।१३ प्रतिनिधि नियुक्त गरिएको र मखमली CLEARING HOUSE को संचालक झापा गौरादह -१ वस्ने रुकमिना सुव्वा एजेन्ट नं.१०३१/२०७९/०४/०४ जारी भएको देखिन आएको।

**ग.** **त्रिभुवन विमानस्थल भन्सार** कार्यालयको पत्र:-

मिति २०८०।०४।०५गतेको पत्रसाथ CCTV फुटेज र X-RAY IMAGES हरु प्राप्त हुन आएकोमा सो CCTV फुटेजमा X-RAY मा डियुटीमा रहेको सरोज श्रेष्ठले प्रज्ञापन नं. ३५०९ बाट आएको ब्रेक प्याडहरु रहेको कार्टुनहरुमा RC लगाएको देखिन आएको, भन्सार अधिकृत सन्तोष चन्द X-RAY पश्चात भन्सार एजेन्टका प्रतिनिधी रहेको भनिएको सुदर्शन गौतम, राजेन्द्र राई समेतका चार जना व्यक्तिहरुसँग कुराकानी गरेको देखिन आएको।

**८. रेडी ट्रेडर्स प्रा.लि. ले विदेशबाट सामान ल्याए सुन एयरलाइन्स सम्वन्धी र सो प्रा ली सँग सम्वन्धित अन्य जानकारी**

**क.** रेडी ट्रेडर्स प्रा.लि.ले ब्रेक सुमा लुकाई छिपाई सुन पठाउने कम्पनीहरु सुन ल्याउन प्रयोग भएको आएको एअरलाईन्स विवरण निम्न अनुसार देखिन आएको **:**

| SN | Exporter | Country of Origin | Custom Reference No. | Transfer Document Date | Discription of Goods(Said to be) | Airlines |
|---|---|---|---|---|---|---|
| 1. | **DONGGUAN** SUTA TRANSPORTATION CO.LTD | **CHINA** | **M 33295** | **70/07/2023** | **BREAK PADS ( 120 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 2. | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 26024** | **30/05/2023** | **BREAK PADS (40 Setss)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 3. | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 32156** | **28/06/2023** | **BREAK PADS (120 Setss)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 4. | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 28856** | **13/06/2023** | **BREAK PADS (80 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 5. | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 27032** | **02/06/2023** | **BREAK PADS (60 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 6. | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 25317** | **23/03/2023** | **BREAK PADS (40 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| 7. | **JIANMEN FENGTONG** | **CHINA** | **M 31425** | **23/06/2023** | **BREAK** | CATHA |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | TRANSPORTATION **SERVICE CO.LTD** | | | | **PADS (80 Setss )** | PACIFIC AIRWAYS LIMITED |
| **8.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 28148** | **09/06/2023** | **BREAK PADS (40 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **9.** | **JIANMEN FENGTONG** TRANSPORTATION**SERVICE CO.LTD** | **CHINA** | **M 34021** | **11/07/2023** | **BREAK PADS (160 Setss )** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **10.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 30492** | **21/06/2023** | **BREAK PADS (60 Sets)** | **Malaysian Airlines System** |
| **11.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 29514** | **16/06/2023** | **BREAK PADS (40 Setss)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **12.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 27386** | **27/06/2023** | **BREAK PADS (40 Sets)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **13.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 24888** | **23/05/2023** | **BREAK PADS (40 Sets)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **14.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M30833** | **26/06/2023** | **BREAK PADS (20 Sets)** | **Malaysian Airlines System** |
| **15.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 32852** | **04/07/2023** | **BREAK PADS (80 Sets)** | CATHA PACIFIC AIRWAYS LIMITED |
| **16.** | **JIANMEN FENGTONG** TRANSPORTATION **SERVICE CO.LTD** | **CHINA** | **M 35079** | **14/07/2023** | **BREAK PADS (160 Sets)** | CATHA PACIFIC AIRWAYS LIMITED |

**ख.** रेडी ट्रेड्स प्रा.लि.को नाममा जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.०४ बालुवाटार स्थितमा गोदाम रहेको सो गोदाम प्रतिवादी नरेश तामाङले रु.७५,००।- कमिशन लिई , स्टकुर समेत दैनिक रु.५००।- (पाँच सय) पाउने गरी भाडामा दिएकोमा चाइनिज पासपोर्ट नम्बर:E94446558 बाहक Lin Zeqiang चाइनिज नागरिकले भाडामा लिएको देखिन आएको ।

**ग.** रेडी ट्रेड्स प्रा.लि.ले भाडामा लिएको जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.०४बालुवाटार गोदाममा खानतलासी गर्दाHarka Raj Rai लेखिएको काठका बक्साहरुसमेत रहेकोमा सुन गाल्न प्रयोग हुने जस्तो देखिन कपहरु थान ३५,सुन गाल्न प्रयोग हुने चिम्टा थान २,सुन गाल्न प्रयोग भएको विचमा खाडल भएको भाडाहरु थान ५, मेल्टिङ मेशिन थान २(दुई), सेभर सेटहरु र कालो रङ भएको सेभर स्टेन्ड समेत थान ४५८,

रेजर मात्र थान ३९,मोटर थान १(एक),SHRINK PACKING MACHINE थान १४ समेत वरामद भएको ।

**घ.** जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.१६मा JHONG JIANUAले सटर भाडामा लिई रेडी ट्रेड्स प्रा.लि.को गोदाम राखेकोमा सो गोदाम खानतलासी गर्दा सो गोदाममा ब्रेक प्याड ६६ कार्टुन,हिटर मेशिन( सुन गाल्न प्रयोग हुने)-२(दुई) थान, हिटिङवायर जस्तो देखिने वस्तु १ (एक)कार्टुन, तौल गर्ने मेसिन ४(चार) थान, विभिन्न सामानहरु ६ (छ)झोला बरामद भएकोमा देखिन आएको ।

**९. Chhunguk Electric Suppliers Pvt. Ltd Kathmandu सम्वन्धमा:-**

- जिल्ला काठमाडौं बुढानिलकण्ठ नगरपालिका वडा नं.०६मा कार्यालय रहेन गरी मिति २०७८।१०।१२ गते कम्पनी रजिष्ट्रार कार्यालयमा दर्ता नं. २८३२०/०७८ /०७९ मा जित बहादुर दर्जीको छोरा जिल्ला झापा दमक न.पा. वडा नं.१८ हलाको दमक १० मा वस्ने ना.प्र.न.०४-०२-७२-०३३७५झापा बाहक लेखनाथ कार्की डोलीको नाममा दर्ता रहेको देखिन आएको ।
- कम्पनी रजिष्ट्रार कार्यालय त्रिपुरेश्वरमा छुन्गुक ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. दर्ता गर्ने क्रममा कम्पनीको उदेश्यमा ईलेक्ट्रिक तथा विजुली बत्तिका सामानहरु एंव ईलेक्ट्रोनिक्स सामानहरु टि.भि.,भिडियो क्यामरा, वासिङ मेसिन, भ्याकुम, मिक्स्चर, कम्प्यूटर,प्रिन्टर्स,फोटोकपी मेशिन र सोका पाट पुर्जाहरु विदेशवाट आयात गर्ने उदेश्य रहेको उल्लेख गरेको देखिन आएको ।
- CHHUNGAK ELECTRIC SUPPLIERS को नाममा EXIM CODE:610199700119NP जारी भएको देखिन आएकोमा सो ELECTRIC SUPPLIERS ले ५० वटा प्रज्ञापन पत्रबाट सन् २०२२-०७-१९गते देखी सन् २०२३-०५-३१ सम्म ईलेक्ट्रीक सामानहरु पैठारी गरेको देखिनआएको हाल SUSPENDED रहेको देखिन आएको ।
- **CHHUNGAK ELECTRIC SUPPLIERS ले निम्न मालवस्तु पैठारी गरेको देखिन आएको :**

| Chhunguk Electric Suppliers Pvt. LtKathmandu, Budhanilkantha | | | | |
|---|---|---|---|---|
| प्र.न. | मिति | मालवस्तुको नाम | इकाइ | परिमाण |
| 10851 | 20230307 | ELECTROPLATING MACHINE (SLD-1502D+) 24 PCS | UNT | 24 |
| 11716 | 20230312 | DIGITAL POWER SUPPLY MACHINE | UNT | 30 |
| 1335 | 20230106 | ELECTROPLATING MACHINE (SLD-1502D+) 16 PCS | UNT | 16 |
| 15681 | 20230402 | SMD REWORK STAION MACHINE 24 PCS | UNT | 24 |
| 16751 | 20230407 | SMD REWORK STAION MACHINE 24 PCS | UNT | 24 |
| 19229 | 20230421 | SMD REWORK STAION MACHINE 30 PCS | UNT | 30 |
| 20146 | 20230426 | GRINDING & CARVING MACHINE 30 PCS | UNT | 30 |
| 21558 | 20230507 | ELECTROPLATING MACHINE (APS-1502) 24 PCS | UNT | 24 |
| 2206 | 20230112 | GRINDING & CARVING MACHINE 20 PCS | UNT | 20 |
| 22891 | 20230514 | SMD REWORK STAION MACHINE 24 PCS | UNT | 24 |
| 23496 | 20230517 | SCREEN SEPARATOR MACHINE 24PCS | UNT | 24 |

| | | | | |
|---|---|---|---|---|
| 25980 | 20230531 | SMD REWORK STAION MACHINE 24 PCS | UNT | 24 |
| 36588 | 20220719 | GRINDING & CARVING MACHINE 10 PCS | UNT | 10 |
| 36596 | 20220719 | PROFESSIONAL FOG MACHINE 4 PCS | UNT | 4 |
| 36939 | 20220721 | MINI AIR COMPRESOR (AS18C) 4 PCS | UNT | 4 |
| 37405 | 20220724 | SMD REWORK STAION MACHINE 10 PCS | UNT | 10 |
| 38329 | 20220728 | AUTOMATIC PHOTOSENSITIVE SEAL MACHINE (JL-G4000) | UNT | 2 |
| 3903 | 20230123 | SCREEN SEPARATOR MACHINE 20PCS | UNT | 20 |
| 39703 | 20220804 | AUTOMATIC PHOTOSENSITIVE SEAL MACHINE (JL-G4000) | UNT | 8 |
| 41228 | 20220814 | SCREEN SEPARATOR MACHINE (948D) 20 PCS | UNT | 20 |
| 44352 | 20220829 | ELECTROPLATING MACHINE (APS-1502) 24 PCS | UNT | 24 |
| 45226 | 20220904 | GRINDING & CARVING MACHINE (STRONG 204) 20 PCS | UNT | 20 |
| 46382 | 20220911 | SMD REWORK STAION MACHINE 8 PCS | UNT | 8 |
| 46385 | 20220911 | SMD REWORK STAION MACHINE 30 PCS | UNT | 30 |
| 48102 | 20220920 | ELECTROPLATING MACHINE (YG-1502DD) 24 PCS | UNT | 24 |
| 50756 | 20220930 | DIGITAL POWER SUPPLY MACHINE 18 PCS | UNT | 18 |
| 51021 | 20221010 | SCREEN SEPARATOR MACHINE 16PCS | UNT | 16 |
| 53187 | 20221020 | GRINDING & CARVING MACHINE (STRONG 204) 20 PCS | UNT | 20 |
| 53714 | 20221023 | SMD REWORK STAION MACHINE 12 PCS | UNT | 12 |
| 55475 | 20221106 | SMD REWORK STAION MACHINE 15 PCS | UNT | 15 |
| 56382 | 20221110 | ELECTROPLATING MACHINE (SLD-1502D+) 16 PCS | UNT | 16 |
| 58388 | 20221124 | DIGITAL POWER SUPPLY MACHINE (1501T) 24 PCS | UNT | 24 |
| 59883 | 20221201 | ELECTROPLATING MACHINE (APS-1502) 18 PCS | UNT | 18 |
| 6052 | 20230205 | GRINDING & CARVING MACHINE 20 PCS | UNT | 20 |
| 61105 | 20221209 | SMD REWORK STAION MACHINE 21 PCS | UNT | 21 |
| 62446 | 20221215 | REWORK STAION MACHINE 20 PCS | UNT | 20 |
| 6688 | 20230208 | ELECTROPLATING MACHINE (APS-1502) 24 PCS | UNT | 24 |
| 8425 | 20230220 | SCREEN SEPARATOR MACHINE 24PCS | UNT | 24 |
| 9169 | 20230224 | GRINDING & CARVING MACHINE 20 PCS | UNT | 20 |

- CHHUNGAK ELECTRIC SUPPLIERS र पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि.समेतले भाडामा लिएको जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.०३ मा रहेको जय गुरुङको घरमा भाडामा लिएको सरटमा Aerylic

Flame Polisher मेशिनहरु, MINI AIR COMPRESOR, SMD REWORK STAION MACHINE समेतका मालवस्तुहरु वरामद भएको देखिन आएको,

- CHHUNGAK ELECTRIC SUPPLIERSPVT LTDALI भन्ने LI Wen Tsungको योजना र लगानीमा प्रतिवादीहरु, हर्कराज राई र थुप्तिन छिरिङ समेतलाई परिचालन गरी लेखनाथ कार्की डोली (दमाई)लाई रु.१,५०,०००।-(एक लाख पचास हजार) दिई कम्पनी खडा गरेको देखिन आएको।
- CHHUNGAK ELECTRIC SUPPLIERSPVT LTD ले पैठारी गरी ल्याएका मालवस्तु भन्सार पास गर्ने कार्यमा संलग्न रहेका भन्सार ऐजेन्ट र कर्मचारीहरुको विवरण निम्न अनुसार देखिन आएको,

| प्र.नं.द. | एजेण्ट प्रतिनिधिको/ नाम | मालवस्तुको नाम | परिमाण | X-ray कर्मचारीको नाम थर | जाँचकीको नाम थर | जाँचपासअधिकृत | मूल्यांकन अधिकृत | प्रमुख भन्सार अधिकृत |
|---|---|---|---|---|---|---|---|---|
| 10851 | Khadag Bahadur Karki (9851045 | ELECTROPLATING MACHINE (SLD-1502D+) 24 PCS | 24 | Govind Kandel, Saroj krbhattarai | Gobinda Kadel | Arjun Ghimire | Ishwar Thapa Magar | Bishnu Prasad Paudel |
| 11716 | Khadag Bahadur Karki (9851045 | DIGITAL POWER SUPPLY MACHINE | 30 | Saroj Shrestha, harimaya Dahal | Harimaya Dahal | Sarita Dhakal | Ishwar Thapa Magar | Narad Gautam |
| 1335 | Khadag Bahadur Karki (9851045 | ELECTROPLATING MACHINE (SLD-1502D+) 16 PCS | 16 | Saroj Shrestha, Yadab Raj Pahadi | Sundar Raj Subedi | Deependra Chaurasiya | Ishwar Thapa Magar | Narad Gautam |
| 15681 | Khadag Bahadur Karki (9851045 | SMD REWORK STAION MACHINE 24 PCS | 24 | Bhuwan raj ghimire, Roshan Pradhan | Subarna Prabha KC | Tanka Ramtel | Ishwar Thapa Magar | Mukti Prasad Shrestha |
| 16751 | Khadag Bahadur Karki (9851045 | SMD REWORK STAION MACHINE 24 PCS | 24 | Bhikhalalchaudhary, Taptakr shahi | Buddhiman Rai | Ramesh Kunwar | Ishwar Thapa Magar | Bishnu Prasad Paudel |
| 19229 | Khadag Bahadur Karki (9851045 | SMD REWORK STAION MACHINE 30 PCS | 30 | sarojshrestha, sundar raj subedi | Deepak Prasad Kafle | Sarita Dhakal | Ishwar Thapa Magar | Bishnu Prasad Paudel |

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| 201 46 | Khadag Bahadur Karki (9851045 | GRINDING & CARVING MACHINE 30 PCS | 30 | Sunil devkota, Dharmaraj shahi | Umesh Prasad Koirala | Subendra Shrestha | Ishwar Thapa Magar | Ambika Prasad Khanal |
| 215 58 | Khadag Bahadur Karki (9851045 | ELECTROPLAT ING MACHINE (APS-1502) 24 PCS | 24 | Saroj shrestha, Nanuka Pokhrel | Kumar Dhakal | Sarita Dhakal | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 220 6 | Khadag Bahadur Karki (9851045 | GRINDING & CARVING MACHINE 20 PCS | 20 | Suhubarnaprab ha kc, Umesh Koirala | rupakman dal | Tanka Ramtel | Ishwar Thapa Magar | Ambika Prasad Khanal |
| 228 91 | Khadag Bahadur Karki (9851045 | SMD REWORK STAION MACHINE 24 PCS | 24 | Saroj shrestha, Tulashi Acharya | Kumar Dhakal | Prakash Niroula | Ganesh Prasad Paudel | Bishnu Prasad Paudel |
| 234 96 | Khadag Bahadur Karki (9851045 | SCREEN SEPARATOR MACHINE 24PCS | 24 | Bhikhalalchaud hary, Taptakr shahi | Tej Singh Bhandari | Santosh Chand | Ganesh Prasad Paudel | Ambika Prasad Khanal |
| 259 80 | ARJUN ARYAL | SMD REWORK STAION MACHINE 24 PCS | 24 | sarojshrestha, sundar raj subedi | Mahesh Karki | Sarita Dhakal | Ganesh Prasad Paudel | Bishnu Prasad Paudel |
| 365 88 | Kumari Cargo Clearing Sewa | GRINDING & CARVING MACHINE 10 PCS | 10 | Amber br Rai, Januka Tiwari | Ambar Bahadur Rai | Santosh Chand | Amrit Sigdel | Yamraj Pandey |
| 365 96 | Kumari Cargo Clearing Sewa | PROFESSION AL FOG MACHINE 4 PCS | 4 | Amber br Rai, Januka Tiwari | Bhagirathi Thapa | Biru Maskey | Amrit Sigdel | Yamraj Pandey |

(Sauten), Ali भन्ने Wen Tsung Li Stefs भन्ने Nengkai Li र बेल्जियम नागरिक Dawa Tsering समेतलाई नेपाली नागरिकता र राहदानी बनाउन सहयोग गरेको समेत देखिन आएको, यसरी यी प्रतिवादीहरु ALI भन्ने LI WenTsung, प्रतिवादी ROGER भन्ने LI NENGKAI र प्रतिवादी SAUTEN भन्ने DING SHENG FA समेत संगठित समूहमा आवद्ध रही प्राप्त निर्देशन अनुसार परिचालित भई फरक फरक भूमिका निर्बाह गरी अन्य सदस्यहरुलाई समेत परिचालन गरी **प्रतिवादीहरु ALI भन्ने LI WenTsung, STEPS/ROGER भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA ले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

३) **प्रतिवादी LIN ZEQIANG को हकमा** :

नेपालमा संगठित रुपमा अबैध सुनको कारोवार गर्नको लागी कहिले Hennry, कहिले Jackie Chan, कहिले Asam भन्ने नाम उल्लेख गर्ने राहदानी नं. EJ5053396 बाहक Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) को योजना अनुसार निज प्रतिवादी LIN ZEQIANG नेपालमा आई संगठित समूहमा आवद्ध भई अबैध सुनको कारोवारमा संलग्न रहेको, निज नेपाल आए पश्चात रेडी ट्रेड प्रा.लि.को नाममा जिल्ला काठमाडौं का.म.न.पा. वडा नं. ४ मा रहेको सटर भाडामा लिएको, सो सटर भाडामा लिएको कुरा घरधनीले कागजसाथ खुलाई लेखाई दिएको साथै सोही कागज साथ निज प्रतिवादी LIN ZEQIANG को राहदानी नं E94446558 को प्रतिलिपी समेत पेश भएबाट सो कुराको पुष्टी भएको, पक्राउ प्रतिवादी नरेश तामाङले उल्लेखित सटर निज Passport no. E94446558 बाहक LIN ZEQIANG को लागी खोजि दिएको भनी बयानमा खुलाई लेखाई दिएको, निज प्रतिवादी LIN ZEQIANG ले प्रयोग गर्ने मोवाईल फोनको परीक्षण गर्ने क्रममा RC लेखिएको दुईवटा कार्टुन लिई आएको देखिन आएको, यी प्रतिवादीले अनुसन्धानको क्रममा भन्सारवाट सुन लुकाई ल्याएको ब्रेक प्याड छुटाई लिई आउने क्रममा सो भिडियो रेकर्ड गरेको भनी खुलाई सनाखत गरिदिएको, मिति २०८०।०४।०२ गते रेडी ट्रेड प्रा.लि.को नाममा आएको १६० सेट ब्रेक प्याडमा रहेको ६०.७१६ के.जि.सुन निज प्रतिवादी LIN ZEQIANG ले भाडामा लिएको का.जि.का.म.पा ४ बालुवाटार स्थितमा रहेको सोही सटरमा ल्याउदै गर्दा वरामद भएको भन्ने हर्क राज राई समेतको वयानबाट खुली आएको, यी प्रतिवादी LIN ZEQIANG ले समेत सो दिन राती १० बजे सम्म गोदाम सटरमा मालवस्तु लिनको लागी सटरमा कुरी वसेकोमा अबैध सुन लुकाई ल्याएको ब्रेक प्याड नियन्त्रणमा लिए पश्चात फिर्ता आउनु भनी खवर आई लाजिम्पाट गएको भनी बयानमा खुलाई लेखाई दिएको, उल्लेखित सटर खानतलासी गर्दा सुन गाल्ने मेशिन थान २ समेतका ईलेक्ट्रिक मालवस्तु वरामद भएको देखिन आएवाट निज LIN ZEQIANG ले संगठित रुपमा योजनाबद्द तरिकाले अबैध सुन पैठारी गर्ने कार्यमा संलग्नता पुष्टि हुन आएको, चाईनिज नागरीक Zhong Jing Chuan (चोङ चिङ छह्वाङ) सँग WatsApp बाट निर्देशन प्राप्त गरी निजको निर्देशनमा का.जि. बालुवाटारवाट ल्याईएको सुन सहितको मालवस्तु का.जि.लाजिम्पाट लैजाने कार्यमा संलग्न रहेको, निज LIN ZEQIANG ले लाजिम्पाटमा अबैध सुन सहितको मालवस्तु ल्याए पश्चात सुन निकाली गाल्ने गरेको सो कुरा निज वस्ने गरेको जिल्ला काठमाडौं का.म.न.पा. वडा नं.२ मा रहेको घरवाट सुन गाल्न प्रयोग भएको साँचो चिम्टा, पन्जा र ब्रेक प्याडमा रहेको सुन गाली सेके पश्चात फालिएको अवस्थामा ब्रेक प्याडका किल्पहरु समेत वरामद भएको, सोही घरमा सुन गाली वाथरुममा कालो लेदो फालेको देखिन

आएकोबाट निज LIN ZEQIANG को अबैध सुन गाल्ने समेतको कार्यमा संलग्नता पुष्टि भएको, यसरी निज प्रतिवादी LIN ZEQIANG संगठित समूहका चाईनिज नागरीक Zhong Jing Chuan को निर्देशनमा अबैध सुन पगाली बनाईएका सुनका बिष्कुटहरुलाई वेचबिखन गर्ने कार्य संलग्न रही संगठित रुपमा आपराधिक समूहमा आवद्ध भई अन्य समूहका सदस्यहरुलाई प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा सम्पर्क गरी संगठित रुपमा आपराधिक लाभको लागी अबैध सुन पैठारी गर्ने र सो सुनलाई गाली बेच बिखन गर्ने संगठित समूहमा आवद्ध रही प्राप्त निर्देशन अनुसार परिचालित भई फरक फरक भूमिका निर्बाह गरी **प्रतिवादी LIN ZEQIANG ले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

४) **प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङको हकमा** :

प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङले संगठित रुपमा अबैध सुनको कारोबार गर्नको लागी चाईनिज नागरिक प्रतिवादीहरु ALEX भन्ने YAO PUCHENG, SAUTEN भन्ने DING SHENG FA, ALI OR LI भन्ने LI, WEN –T SUNGSTEPS भन्ने LI. NENGKAI नेपालमा अबैध रुपमा प्रवेश गरेका बखत देखीनै निजहरुलाई बस्नको लागी घर/होटल समेतको व्यवस्थापन गरेको, संगठित रुपमा अवैध सुन पैठारी गर्नको लागी ALEX भन्ने YAO PUCHENG समेतको मिलेमतोमा ईलेक्ट्रिक मालबस्तु पैठारी गर्ने भनी रेडी ट्रेड प्रा.लि. समेतका कम्पनीहरु खडा गर्नको लागी प्रतिवादी हर्कराज राई, प्रतिवादी राम कुमार भुजेल समेतलाई परिचालन गरी ईलेक्ट्रिक मालवस्तु पैठारी गर्नको लागी भनी देहायको कम्पनीहरु खडा गरेको देखिएको :

| कम्पनी | संचालक | EXIM CODE: | कम्पनी खोल्न लगाउने प्रतिवादी | खोल्ने कार्यमा संलग्न रहेका |
|---|---|---|---|---|
| रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | 6104779730113NP | **ALEXभन्ने**Yao Pucheng | राम कुमार भुजेल, हर्कराज राई थुप्तिन छिरिङ |
| दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | बिकुन्द्र भुजेल | 6103977670145NP | ALEX भन्नेYao Pucheng | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| सरिता सप्लायर्स | सरिता तामाङ | 6199527490162NP | ALEX भन्नेYao Pucheng | **हर्क राज राई, थुप्तिन छिरिङ** |
| HWADA ELECTRICSU PPLIERS PVT LTD | कुमार भुजेल | 6103250430127NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. | राम बहादुर भुजेल | 6103614740154NP | **STEPS भन्ने LI. NENGKAI&**SAUTEN भन्ने DINGSHENG FA | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |
| CHHUNGAK ELECTRICSUP PLIERS BUDANILKAN | लेखनाथ कार्की डोली (दमाई) | 6101997700119NP | ALI भन्ने LI Wen Tsung | **हर्क राज राई, थुप्तिन छिरिङ** |

| | | | | |
|---|---|---|---|---|
| THA -6 KATHMANDU | | | | |
| भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | 6103185440103NP | STEPS भन्ने LI. NENGKAI | राम कुमार भुजेल, हर्कराज राई र थुप्तिन छिरिङ |

अबैध सुनरहेको मालवस्तु र सुन वेचबिखन गर्नको लागी ALEX भन्ने Yao Pucheng को निर्देशनमा हर्कराज राईलाई परिचालन गरी तीनवाट सवारी साधनहरु भाडामा लिन लगाई उल्लेखित गाडीहरु ALEX भन्ने Yao Pucheng समेतलाई दिने कार्यमा संलग्न रहेको, सो गाडीहरु निज टांसी भन्ने थुप्तिन छिरिङ बस्ने गरेको का.जि. पानिपोखरी स्थित रहेको कम्फोर्ट अपाटमेन्टमा समेत रोकिएको अवस्थामा GPS वाट देखिन आएको, अबैध रुपमा पैठारी भएको सुन गाल्नको लागी ल्याईको GOLD MELTING MECHINE आएको भन्ने सुचना SAUTEN भन्ने DINGSHENG FA समेतवाट प्राप्त गरी सो मेशिन लिनको लागी प्रतिवादी हर्कराज राईलाई परिचालन गरी ल्याई का.जि.टोखा, लाजिम्पाट समेतका गोदामहरुमा राख्ने गरेको, निज ALEX भन्ने Yao Pucheng र STEPS भन्ने LI. NENGKAI ले WHATSAPP मा पठाएको AIR BILL समेतको आधारमा प्रतिवादी हर्कराज राईलाई परिचालन गरी अबैध सुन रहेको मालवस्तु भन्सारवाट छुट्टाउने र सो मालवस्तु गोदाम सम्म लैजानको लागी परिचालन गर्ने गरेको, तोङ फाई ईन्टरनेशनल प्रा.लि.को नाममा भाडामा लिएको टहरा रु. ३०,०००।- (तीस हजार) लिने गरी अबैध सुन गाल्ने अपराधिक कार्यको लागी प्रतिवादी ALEX भन्ने Yao Pucheng लाई उपलव्ध गराएको, सुन गाल्ने स्थानमा सुरक्षा गार्डमा कार्यरत रहेका उर्केन छिरिङलाई मासिक तलव समेत दिने गरेको, सुन ल्याउन प्रयोग भएका गोदाम /सटरहरु भाडामा लिई सो सटरमा सामानहरु ल्याउने क्रममा र झिक्ने क्रममा हर्कराज राईलाई परिचाल गर्ने गरेको, प्रतिवादीहरु ALEX भन्ने YAO PUCHENGSAUTEN भन्ने DING SHENG FA, प्रतिवादी ALI OR LI भन्ने LI WEN –T SUNG, प्रतिवादी STEPS भन्ने LI. NENGKAI समेतलाई नेपाल रहन वस्नको लागी घरभाडामा लिनको लागी ब्यवस्थापन गरेको, भारतबाट अबैध रुपमा नेपाल प्रवेश गरेका ALI OR LI भन्ने LI WEN –T SUNG को कीर्ते नेपाली नागरिकता बनाई सोही नागरिकताको आधारमा राहदानी समेत बनाई अबैध सुन पैठारी गर्ने समूहका सदस्यलाई संरक्षण दिई सोही नेपाली राहदानीको आधारमा अबैध सुनको कारोबारको लागी बिदेश पठाउने ब्यवस्था मिलाएको कुराको पुष्टी निजको घर कोठा खानतलासी गर्दा छिरिङ लामाको नाममा रहेको देखिने LI भन्ने LI, WEN –T SUNG को किर्ते नागरिकतावाट वरामद हुन आएबाट स्पष्ट हुन आएको र प्रस्तुत मुद्दाका प्रतिवादीहरु मध्ये ALI OR LI भन्ने LI WEN –T SUNG समेतलाई नेपालमा बस्नको लागी BUSINESS VISA समेत लिनको लागी बिदेशी लगानी भित्राउने भनी झुठा कागजातहरु तयार गरी सोही कागजातहरुको आधारमा नेपालमा रहन बस्नको लागी ब्यवस्था मिलाएको, मिति २०८०।०४।०२ गते प्रतिवादी हर्कराज राई र राजेन्द्र राईलाई समेत परिचालन गरी १६० थान ब्रेक प्याडमा लुकाई छिपाई ल्याएको अबैध सुन ६०.६१७ के.जि. सुन छुटाउने कार्यमा संलग्न रहेको, प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङ मिति २०६७।०९।१९ गते वन्यजन्तु गैडाको खाग ओसार प्रसार तथा खरीद बिक्री कुसरमा पक्राउ परी मिति २०७९।०५।२१ गते फैसला हुदा १०(दश) वर्ष कैद र रु.१,००,०००।- (एक लाख) जरिवानाको फैसला भएकोमा पुनरावेदन अदालतबाट शुरु फैसला सदर भएकोमा मिति

२०७४।०१।१४ गते सर्वोच्च अदालतवाट फैसला हुदा ५ वर्ष कैद र रु.१,००,०००।- (एक लाख) जरिवाना कायम हुने गरी फैसला भएको देखिन आएको आए समेतबाटवाट निज **प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

५) **प्रतिवादी हर्कराज राईको हकमा :**

प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङको निर्देशनमा सुन पैठारी गर्नको लागी प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङले चिनाई दिएको राम बहादुर भुजेल मार्फत निम्न कम्पनी खोल्ने कार्यमा संलग्न रहेको :

| कम्पनी | संचालक | EXIM CODE: | खोल्न आदेश र रकम दिने व्यक्ति | खोल्ने कार्यमा संलग्न रहेका |
|---|---|---|---|---|
| रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | EXIM CODE: 6104779730113NP | टाँसी भन्ने थुप्तिन छिरिङ | राम कुमार भुजेल, हर्कराज राई |
| दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | बिकुन्द्र भुजेल | EXIM CODE: 6103977670145NP | टाँसी भन्ने थुप्तिन छिरिङ | राम कुमार भुजेल, हर्कराज राई र |
| सरिता सप्लायर्स | सरिता तामाङ | EXIM CODE: 6199527490162NP | टाँसी भन्ने थुप्तिन छिरिङ | हर्क राज राई, |
| HWADA ELECTRICSUPPLIERS PVT LTD | कुमार भुजेल | 6103250430127NP | टाँसी भन्ने थुप्तिन छिरिङ | राम कुमार भुजेल, हर्कराज राई र |
| पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि. | राम बहादुर भुजेल | EXIM CODE: 6103614740154NP | टाँसी भन्ने थुप्तिन छिरिङ | राम कुमार भुजेल, हर्कराज राई र |
| CHHUNGAK ELECTRICSUPPLIERS BUDANILKANTHA -6 KATHMANDU | लेखनाथ कार्की डोली (दमाई) | EXIM CODE: 6101997700119NP | टाँसी भन्ने थुप्तिन छिरिङ | हर्क राज राई, |
| भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | EXIM CODE: 6103185440103NP | टाँसी भन्ने थुप्तिन छिरिङ | राम कुमार भुजेल, हर्कराज राई र |

प्रतिवादी टांसी भन्ने थुप्तिन छिरिङको निर्देशनमा HWADA ELECTRICSUPPLIERS PVT LTD संचालक भन्ने उल्लेख गरी अवैध सुन रहेको मालवस्तु ओसार पसार गर्न र अबैध रुपमा पैठारी भएको सुन व्यवस्थापन गर्नको लागि बा.१६ च ९३००, बा.१६ च १७७१ नम्वर र BAB 5989 नं. को सवारी साधनहरु प्रयोग गर्न भाडामा लिई ALEX भन्ने YAO PUCHENG लाई उपलव्ध गराउने कार्यमा संलग्न रहेको, रेडी

ट्रेड प्रा.लि.कम्पनीको कार्यालय ठेगाना जिल्ला काठमाडौं बुढानिलकण्ठ नगरपालिका वडा नं.४ उल्लेख गरि घर धनी रत्न कुमारी भण्डारी (भाउजु नाता पर्ने) संग कार्यालय रहने भनी झुटो सम्झौता वनाई सोही कागजातहरु पेश गरी मूल्य अभिबुद्धि कर (VAT) मा दर्ता नगरी EXIM CODE लिने कार्यमा संलग्न रहेको, अबैध सुन पगाल्न प्रयोग भएका र प्रयोग गर्नको लागी ल्याईएका Gold Melting Mechine समेत लिई टाँसी भन्ने थुप्तिन छिरिङ मार्फत ALEX भन्ने YAO PUCHENG लाई दिने कार्यमा संलग्न रहेको, अवैध रुपमा ल्याईका मालवस्तुहरुलाई राख्नको लागी गोदामहरु खोज्ने कार्यमा संलग्न रहेको, त्रि.वि.भन्सारमा मालवस्तु आएको म्यासेज टाँसी भन्ने थुप्तिन छिरिङ मार्फत प्राप्त भए पश्चात राजेन्द्र राई मार्फत मालवस्तु छुटाउनको लागी भन्सार एजेन्टहरु सुदर्शन गौतम, रुकमिना सुव्वा, यादव पराजुली समेतलाई परिचालन गरी भन्सारवाट भन्सारका कर्मचारीसँग मालवस्तु छुटाउन संलग्न रहेको, मिति २०८०।०४।०२ गते १६० ब्रेक प्याडमा रहेको सुन ६०.६१७ के.जि. सुन छुटाउने कार्यमा संलग्न रही संगठित रुपमा आपराधिक समूहमा आवद्ध भई अन्य समूहका सदस्यहरुलाई प्रत्यक्ष रुपमा सम्पर्क गरी संगठित रुपमा आपराधिक लाभको लागी समूहको निर्देशनमा अबैध सुन पैठारी गर्ने र सो सुनलाई गाली बेच बिखन गर्ने संगठित समूहमा आवद्ध रही प्राप्त निर्देशन अनुसार परिचालित भई फरक- फरक भूमिका निर्बाह गरी **प्रतिवादी हर्कराज राईले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

६) **प्रतिवादी राजेन्द्र कुमार राईको हकमा:**

प्रतिवादी राजेन्द्र कुमार राईले Ready Trade Pvt. Ltd ले हङकङबाट अबैध रुपमा सुन लुकाई पैठारी गरेका ब्रेक प्याड, सेभर, स्मार्ट वाच (घडी) लगायतको सामानहरु त्रि.वि. भन्सार कार्यालयबाट छुटाउनको लागी मालबस्तुको Air Bill समेतका कागजताहरु प्रतिवादी हर्क राज राई मार्फत प्राप्त गर्ने गरेको, सो कागजातहरु प्राप्त गरी प्रतिवादी हर्कराज राईको निर्देशनमा Trans Global Logistics Ltd. Nepal को समन्वयमा Delivery Order जारी गर्न लगाउने, उल्लेखित Delivery Order को आधारमा भन्सारको आशिकुन्डा सिष्टममा अन्य प्रतिवादीहरु सुदर्शन गौतम, रुकमिना सुव्वा, यादव पराजुली समेतलाई परिचालन गरी अबैध रुपमा लुकाई ल्याएको सुन भन्सार जाँच पास गराउने कार्यमा संलग्न रहेको, निज प्रतिवादी राजेन्द्र कुमार राई त्रि.वि.भन्सार कार्यालयमा प्रवेश गर्नको लागी प्रवेश पास अनुमती आवश्यक पर्नेमा प्रवेश पास विना त्रि.वि.भन्सार कार्यालयमा प्रवेश गरी मिति २०८०।०४।०२ गते १६० ब्रेक प्याडमा अबैध रुपमा लुकाई छिपाई ल्याएको ६०.६१७ के.जि. सुन छुटाउनको लागी गएको, भन्सारका कर्मचारीहरुले X-ray गर्ने, चेकजाँच गर्ने मुल्याङ्कन गर्ने क्रममा भन्सारका कर्मचारीहरुलाई RC लेखिएको मालवस्तु ब्रेक प्याड नै रहेको भनी प्रभावमा पारी भन्सार अधिकृत सन्तोष चन्द समेतसँग कुराकानी गरी भन्सार पास गराउने कार्यमा संलग्न रहेको अनुसन्धानको क्रममा संकलन भएको CCTV फुटेजवाट समेत देखिन आएको, निज प्रतिवादी राजेन्द्र कुमार राईको घर कोठा खानतलासी गर्दा रेडी ट्रेड प्रा.लि.को नामको लेटर प्याड, चेक बुक, कम्पनी दर्ता प्रमाण पत्र र सुन गाल्न प्रयोग हुने GOLD MELTING MACHINE समेत पैठारी गरेको देखिने कागजातहरु समेत वरामद भएवाट निज प्रतिवादी राजेन्द्र कुमार राई संगठित रुपमा अबैध सुन पैठारी गर्ने समूहबाट परिचालित भई संगठित रुपमा आपराधिक समूहमा आवद्ध भई सुन छुटाउने कार्यमा संलग्न रही अन्य समूहका सदस्यहरुलाई प्रत्यक्ष रुपमा सम्पर्क गरी संगठित रुपमा आपराधिक लाभको लागी समूहको निर्देशनमा अबैध सुन पैठारी गर्ने

भूमिका निर्बाह गरी विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि **प्रतिवादी राजेन्द्र कुमार राईले** संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

७) **प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ र पुष्कर राज भट्ट (जना दुई) का हकमा:**

हंङकङमा रहेको Karry on Global logistics Ltd. बाट प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ र प्रतिवादी पुष्कर राज भट्टले संचालन गरेको Trans Global Services Pvt Ltd ले Ready Trade Pvt Ltd. संग कुनै लिखित सम्झौता समेत नगरी Ready Trade Pvt Ltd. समेतका कम्पनीहरुको अबैध सुन रहेका मालवस्तुहरु हङकङवाट नेपालमा ल्याउने कार्यमा संलग्न रहेका, Trans Global Services Pvt Ltd को कार्यालय खानतलासी गर्ने क्रममा Ready Trade Pvt Ltd नाममा आएका ३५ वटा नै consignment, Air bill & Delivery Order रहेको फाईलहरु वरामद भएवाट प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ र प्रतिवादी पुष्कर राज भट्ट समेतको अबैध सुन रहेका मालबस्तुहरु पैठारी गर्ने कार्यमा संलग्नता रहेको स्पष्ट हुन आएको, मालवस्तु आएको जानकारी कम्पनी वा कम्पनी संचालकलाई दिनु पर्नेमा प्रतिवादी राजेन्द्र राईसँग मिलोमतो गरी निजलाई दिने गरेको भन्ने Trans Global Services Pvt Ltd मा कार्यरत रहेका कर्मचारीवाट खुल्न आएको, Ready Trade Pvt Ltd ले ११८० ब्रेक प्याड भित्र लुकाई छिपाई ल्याएको सुन पैठारी गर्ने कार्यमा संलग्न रहेकोमा मिति २०८०।०४।०२ गते भन्सार एजेन्ट यादव पराजुलीको तर्फबाट राजेन्द्र कुमार राईलाई Airway bill को आधारमा कागजपत्र चेक जाँच गरी Delivery Order दिई पठाएको देखिन आएको उल्लेखित ब्रेक प्याडमा ६०.७१६ के.जि. सुन वरामद भएवाट निज कृष्ण कुमार श्रेष्ठ र प्रतिवादी पुष्कर राज भट्ट संगठित रुपमा अबैध सुन पैठारी गर्ने समूहबाट परिचालित भई कम्पनी संचालकलाई कुनै जानकारी/सूचना नदिई आपराधिक समूहमा आवद्ध रहेका आपराधिक समूहका सदस्यसँग मिलेमतो गरी संगठित समूहमा आवद्ध रही विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि **प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ र पुष्कर राज भट्टले** संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

८) **प्रतिवादीहरु सुदर्शन गौतम र यादव पराजुली र रुकमिना सुव्वा (जना तिन) का हकमा :**

Ready Trade Pvt. Ltd. ले हङकङबाट पैठारी गरेका अबैध सुन लुकाई ल्याएको ब्रेक प्याड समेतका मालवस्तुहरु भन्सार एजेन्टका प्रतिनिधीहरु प्रतिवादी सुदर्शन गौतम, प्रतिवादी राजेन्द्र कुमार राई र प्रतिवादी रुकमिना सुव्वा भन्सार कार्यालयमा उपस्थित भई प्रज्ञापन पत्रमा उल्लेखित मालवस्तुहरु प्रतिवादी रुकमिना सुव्वाको User ID प्रयोग गरी दस्तखत समेतको प्रयोग गरी निजहरुले नै अवैध सुन छुटाउने कार्य वाँडफाँड गरी छुटाउने कार्यमा प्रतिवादी सुदर्शन गौतम, प्रतिवादी यादव पराजुली र रुकमिना सुव्वा समेत संलग्न रहेको, Trans Global Services PVT LTD बाट Consignees : Ready Trade Pvt. Ltd. Kathmandu Nepal भई Delivery Order Issue भएका सुन रहेका मालवस्तुहरुलाई ब्रेक प्याड नै हो भनी मालवस्तुको प्रकृती र गुण फरक पारी घोषणा गरी, ब्रेक प्याड रहेको भनी मुल्य स्व:घोषणा गरी सिष्टममा प्रज्ञापन पत्र दर्ता गरी भन्सार प्रकृयाको लागी पेश गर्ने कार्यमा संलग्न रहेका, x-ray मा खटिएको कर्मचारी सरोज श्रेष्ठले RC (Re-cheeck) लगाए पश्चात पटक पटक ५००USD डलरको मालवस्तु आएकोमा भन्सारमा कार्यरत रहेका प्रतिवादी सन्तोष चन्दलाई पहिले पनि आएको मालवस्तु हो भनी कुराकानी गरी प्रभावमा पारी मिलेमतो गरी भन्सार जाँच पास गरेको सो कुरा प्रतिवादी सन्तोष चन्दले पहिले पनि आएको मालबस्तु भनी भौतिक रुपमा चेक जाँच नगरी जाँच पास गरेको भनी बयानमा समेत खुलाएको साथै अनुसन्धानको क्रममा संकलन भएको

CCTV फुटेजवाट यी प्रतिवादीहरु एक्सरे पश्चात कुराकानी गरेको देखिएबाट सो कुरालाई पुष्टी गरेको देखिन्छ। मिति २०८०।०४।०२ गते प्रज्ञापन नं. M ३५०७९ बाट ८ काटुनमा १६० BRAKE PADS हरु भन्सार जाँचपास प्रकृया गराई उल्लेखित मालबस्तु छुटाएकोमा सोही मालवस्तुहरुमा ६०.७१६ के.जी सुन वरामद भएकोमा रेडि ट्रेड प्रा.लि.को नामबाट पैठारी भई आएको ११८० सेट ब्रेक प्याडहरु मध्ये प्रतिवादी सुदर्शन गौतमले ८० सेट र प्रतिवादी सुदर्शन गौतमले गोबिन्द गौतमको युजर आईडी प्रयोग गरी ७०० सेट ब्रेक प्याडहरु र यादव पराजुली ले १६० सेट ब्रेक प्याडहरु भन्सार जाँचपास गरेको र रुकमिना सुव्वाले समेत आप्नो भन्सार एजेन्ट नं. प्रयोग गरी हस्ताक्षर गरी सामान छुटाएको देखिन आएबाट निज प्रतिवादीहरुले एकै किसिमका मालबस्तुहरु ५०० USD भन्दा कम मुल्य राखी पेश गरी भन्सार जाँच पास गराएबाट संगठित समूहबाट परिचालित भई सोही समूहको लाभको लागी आर्थिक लाभ लिई परिचालित भई मिलेमतो गरी संगठित समूहमा आवद्ध रही विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि **प्रतिवादीहरु सुदर्शन गौतम, यादव पराजुली र रुकमिना सुव्वाले** संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

९) **प्रतिवादीहरु MI TIAN र YANG WEN (जना दुई) का हकमा :**

प्रतिवादीहरु MI TIAN र YANG WEN को KTV रेष्टुरेन्टमा आउने क्रममा प्रतिवादीहरु STEPS भन्ने LI NENGKAI र SAUTEN भन्ने DING SHENG FA सँग चिनजान भएको र प्रतिवादी YAO PUCHENG सँग वाल्डो क्यासिनोमा भेट भई चिनजान भई लेनदेन समेत रहेको, प्रतिवादीहरु MI TIAN र YANG WEN ले ब्रेक प्याडमा अबैध रुपमा सुन लुकाई पैठारी गरी ल्याएको अवस्थामा मिति २०८०/०४/०२ गते अबैध सुन बरामद भई प्रतिवादीहरु मध्येका दावा छिरिङ पक्राउ परे पश्चात प्रतिवादी Roger भन्ने Li Nengkai र प्रतिवादी Sauten भन्ने Ding Shengfa समेतलाई साथमा लिई पाटनको होटलमा लुकाई छिपाई राखी संरक्षण दिएको, प्रतिवादी Roger भन्ने Li Nengkai र प्रतिवादी Sautenभन्ने Ding Shengfa संग Whatsapp मार्फत कुराकानी गरी प्रतिवादी Mi Tian ले Down Town अपार्टमेन्टमा पहिचान लुकाई चाईनिज नागरिक LI JIAN को नामवटा अपार्टमेन्ट बुक गरेको, प्रतिवादी YANG WEN ले Steps/Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Shengfa लाई पाटनमा भएको लाबिम महलमा लिन गई Down Town को अपार्टमेन्ट ल्याई संरक्षण दिई राखको, प्रतिवादी YANG WEN र प्रतिवादी MI TIAN ले प्रतिवादीहरि Roger भन्ने Li Nengkai र Sauten भन्ने Ding Shengfa समेतलाई भाग्न उम्कन मदत गर्ने कार्यमा संलग्न रहेको, प्रतिवादी प्रतिवादी YANG WEN ले वाल्डो क्यासिनोमा नेपाली रु १,००,००,०००।– (एक करोड) को जुवा खेलेको देखिन आएबाट निजको अबैध सुन कारोवार संलग्न रहेको पुष्टी हुन आएको, होटल भियनामा फोन गरी प्रहरी आए नआएको सूचना संकलन गरेको भन्ने भियना होटलमा कार्यरत रहेका कर्मचारीको कागजवाट समेत पुष्टि हुन आएको, भियना होटलमा प्रतिवादी YAO PUCHENG समेतलाई भारतिय नागरिकको आधार कार्ड राखी होटल बुक गराई कोठा परिवर्तन गरी लुकाउने कार्यमा संलग्न रहेको देखिन आएबाट निज **प्रतिवादीहरु MI TIAN र YANG WEN** ले आपराधिक समूहसँग प्रत्यक्ष रुपमा संलग्न रही सोही समूहबाट आपराधिक लाभ लिई समूहका सदस्यहरुलाई संरक्षण समेत दिई संगठित समूहबाट परिचालित सदस्यहरुको लाभको लागी संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१०) **प्रतिवादी किशोर बस्नेतको हकमा :**

प्रतिवादी किशोर बस्नेतले प्रतिवादी दावा छिरीङको निर्देशन अनुसार का.जि.ठमेल संचयकोष अगाडी हिमालयन जाभा अगाडीबाट प्रतिवादी दावा छिरिङको होटल भियना सम्म रु.२०,०००।– (बीस हजार) लिई डिटरजेन्ट पाउडर भनी सुन पगाल्न प्रयोग हुने केमिकल पुर्याई दिएको, प्रतिवादी दावा छिरिङसँग मिली चाईनिज नागरिकहरुलाई भारत सम्म पुर्याउनको लागी कुराकानी गरेको, दावा छिरिङले सुनको बिस्कुट भएको फोटो देखाई सुन बिक्री गरे बापत प्रति के.जी. सुनको बिस हजार (२०,०००।-) कमिशन दिने भनी दाबा छिरिङको निर्देशनमा सुन खरिद गर्ने ब्यक्तिहरु खोजी गर्नको लागी परिचालन भएको, प्रतिवादी किशोर बस्नेतको IMEI नं. 354850095851192 भएको IPhone 10 मोबाईलको परीक्षण प्रतिवेदनमा RelatedApplication:WeChat, Filename:224.pic.jpg, 284.pic.jpg, 273.pic.jpg, 2565.pic_thum.jpg, 51.pic.jpg, 144.pic.jpg समेतमा विभिन्न आकारका सुनको बिस्कुटहरुको फोटोहरु राखेको, I send to person found the gold" भनी हुवाई माईन्स कम्पनीका Chen लाई फोटो पठाएको, Gold business person he is Nepal", every day he trade 50 kilo gold" भनी चाईनिज महिला Lie लाई पठाएको,दैनिक ५० किलो सुनको कारोबार गर्ने ब्यक्ति Hissan भन्ने ब्यक्तिसँग कुरा गरेको, "Gold का बात आप भैया से बात किजिएगा, मे आपने जो Account दिया हे, यो एक कराहा हुँ आप Gold के बारेमा एक बार भैया से बात किजियगा, किशोर मैया से बात किजियगा" भनी बर्माको राजु भन्ने ब्यक्ति र भारतका हरिश राणा बिच कुराकानी गरेको र अ दाई एकजनाको मोटो सामान आईपुगेको रहेछ,५ के.जी आएको छ भनी कुराकानी गरेको देखिन आएवाट प्रतिवादी दावा छिरिङको निर्देशनमा परिचालित भई संगठित समूहबाट परिचालित सदस्यहरुको लाभको लागी समूहमा आवद्द भई **निज प्रतिवबादी किशोर बस्नेतले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

११) **प्रतिवादी दावा छिरिङको हकमा :**

प्रतिवादी दावा छिरिङले चाईनिज नागरिकहरू प्रतिवादी MI TIAN, YANG WEN, YAO PUCHENG लाई आफुले संचालन गरेको होटल भियनामा संरक्षण दिई दैनिक जस्तो होटलको कोठाहरु परिवर्तन गराई होटलमा लुकाई राखी संरक्षण गरेको, प्रतिवादी किशोर बस्नेतलाई चाईनिज नागरिकहरुलाई भारत सम्म लैजाने ब्यवस्थापन गर्न निर्देशन दिएको, चाईनिज नागरिक गोम्बो (Gamboo) सँग मिली सुन गाल्ने केमिकल (डिटरजेन्ट पाउडर) मगाई प्रतिवादी किशोर बस्नेतलाई का.जि. संचयकोष भवन नजिकबाट निजको का.जि.ठमेल स्थित होटल भियना सम्म ल्याउन लगाई सो बापत किशोर बस्नेतलाई रु.२०,०००।- दिएको, प्रतिवादी किशोर बस्नेत र घटना विवरण कागज गर्ने पेम्बा दोर्जे शेर्पालाई सुनको बिस्कुट भएको फोटो देखाई सुन खरिद गर्ने मानिस खोज्नु भनी निर्देशन दिई सो बापत प्रति के.जी. रु.२०,०००।- कमिशन दिने भनी प्रतिवादी किशोर वस्नेत र घटना विवरण कागज गर्ने पेम्बा दोर्जे शेर्पालाई परिचालन गरेको, प्रतिबादी दावा छिरिङको मोबाईल परीक्षण गर्ने क्रममा निजको मोबाईलको Google Browre मा 'gold rate today''gold price in Nepal today', one kg gold price in india' मुल्य सर्च गरेको, File Name:IMG_6225.JPG को Image File को Image मा YUEXIN GOLD 1 KILO लेखिएको

सुनको फोटो File name:10542.video_thum.hd को Image File  मा बाक्सामा सुन भएको फोटो चाईनिज नागरिक आगो भन्ने WENG  JINGUO (चाईनिज राहदानी नं. EJ7786920) ले पठाएको, "I have buyers for gold, gold ? you mean Gold jewelry or Gold bars?" राखेको भाई सुनन् रेट के हो ? यो २/३ दिनमा सामान कति किलो ७ किलो जति दिएछ  ५ किलो दिएको छ । पार्टीले किनिराछ । हिजो/अस्ती कति किलो किनेको छ भने ६५ किनेको छ भनी कुराकानी गरेको,  20 July  मा हङकङबाट नेपाल Kerry On ले नेपाल Deliver गर्न लागेको वा पछि cancel गरेको बिषयका विवरण राखेको,अनुसन्धान भएको विमानस्थलबाट Electric Cigarate Vep मा सुन लुकाई छिपाई ल्याएको सुटकेश त्रिभुबन अन्तराष्ट्रिय बिमानस्थल अध्यागमन कार्यालयले नियन्त्रणमा लिए पश्चात चाईनिज नागरिक LIFUNCHENG ले सो Electric Cigarate Vep को फोटो पठाई सो Electric Cigarate Vep को विवरण राखेको,Wechat User wxid_4isl6idnacu322 good@faith2  चाईनिज नागरिक ZHU सँग USDT को बारेमा कुराकानी हुने गरेको, USDT को Address: TN5AVEAuUxVDEGNKwngHgapw3ccrgMZn8A चाईनिज नागरिक ZHU लाई पठाएको र निजको मोवाईलमा USDT को IN: 1171663.771 OUT: 2148648  समेत देखिएबाट निज प्रतिवादी दावा छिरिङ अबैध सुन कारोबारमा संलग्न रही सो बापत प्राप्त गरेको रकम लुकाउन छिपाउनको लागी अबैध रुपमा क्रिप्टोमा लगानी गरेको समेत पुष्टी भएको, अबैध सुनको कारोबारको क्रममा संगठित समूहका सदस्यहरु मध्ये प्रतिवादी Steps or Roger  भन्ने  Li Nengkai र प्रतिवादी शिव कुमार सर्राफ बिच क्रिप्टोको कारोबार भएको समेत देखिन आएबाट अबैध सुन कारोबारको ब्यवस्थापकको भुमिका निभाए बापत USDT मार्फत रकम प्राप्त गर्ने गरेको पुष्टी भएको, प्रतिवादी दावा छिरिङले झुठो ब्यहोराको कागजहरु बनाई जिल्ला प्रशासन कार्यालय, काभ्रेपलान्चोकबाट निमा तामाङको नामबाट नेपाली नागरिकताको प्रमाण पत्र समेत लिएबाट निज दावा छिरिङले  नेपालमा बसी अबैध कारोबार गर्नको लागी संजाल बिस्तार गर्नको लागी नेपाली नागरिकता बनाएको पुष्टी भएको यसरी प्रतिवादी दावा छिरिङले होटल संचालन गरी सो होटलको नामबाट प्रतिवादी YAO PUCHENG समेतलाई भारतिय नागरिकको आधार कार्ड राखी होटल बुक गराई  दैनिक जस्तो कोठा परिवर्तन गराई लुकाई संरक्षण गरेको, आपराधिक समूहसँग प्रत्यक्ष रुपमा संलग्न रही सोही समूहबाट आपराधिक लाभ लिई समूहका सदस्यहरुलाई परिचालित गरी संरक्षण समेत दिई **प्रतिवादी दावा छिरिङले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१२) **प्रतिवादी सरोज श्रेष्ठको हकमा :**

प्रतिवादी सरोज श्रेष्ठ त्रि.वि. भन्सार कार्यालयमा कम्प्यूटर अपरेटर पदमा कार्यरत रही निजको जिम्मेवारीमा पैठारी भएका मालबस्तुहरुको एक्सरे मार्फत एकिन गरी अबैध माल बस्तु पैठारी भए नभएको एकिन गरी सोको विबरण चेकजाँच, मुल्याङ्कन, जोखिम समेतमा खटिएका कर्मचारीहरुलाई रिपोर्टिङ गर्ने समेत रहेकोमा निज सरोज श्रेष्ठले प्रज्ञापन पत्र नं. M३५०७९ वाट पैठारी भई आएका मालबस्तुहरुलाई एक्सरे मार्फत चेक जाँच गर्ने क्रममा आकृतीलाई  Zoom गरी हेर्दा मालबस्तुको चारै तिर निलो रंग र बिचको भागमा कालो देखिएकोमा उक्त आकृतीलाई Full Zoom गरी हेर्दा कुनै भागमा Ray pass भएको र कुनै भागमा Ray pass नभएको हुँदा खोलेर चेक जाँच गर्नु पर्छ भनि ८ काटुनहरु मध्ये ४ काटुनहरुमा मात्र RC लेखेको भनी बयानमा खुलाएको, CCTV फुटेजमा समेत RC लगाएको देखिन आएको, RC लेखिएको सम्वन्धमा जाँचकी, भन्सार अधिकृत

समेतका कर्मचारीहरुलाई मौखिक तथा लिखित रिर्पोट नगरेको, भौतिक रुपमा रुपमा जाँचकी कुमार ढकाल र जाँचपास अधिकृत सन्तोष चन्द समेतले RC लेखेपछी मालबस्तुको प्रत्येक कार्टुन खोली भौतिक रुपमा चेक जाँच गरी प्रत्येक सामान एक/एक गरी हेरी आबश्यक परेमा कोतरी, च्याती एकिन हुन नसकेमा नमुना छानी सामान फोडी वा खोली समेत हेर्नु पर्ने कर्तब्य निर्वाह नगरेको र मुल्यांकन शाखाका नायब सुब्बा बिरेन्द्र नेपाली र अधिकृत गणेश पौडेलले पनि मुल्यांकनको क्रममा कागजात र मालबस्तु चेकजाँच नगरी कार्टुनमा प्रष्टसंग RC लेखेकोमा पुन : X-Ray समेत नगरी RC लेखेको बेवास्ता गरी अन्य म कर्मचारीहरु समेतलाई समन्बय नगरी मुल्यांकन गरेको भनी बयानमा समेत खुलाएको देखिन आएबाट निज प्रतिवादी सरोज श्रेष्ठले एक्सरे गर्ने क्रममा अबैध सुन पैठारी भएको जानकारी एक्सरे मार्फत प्राप्त भए पश्चात पदिय जिम्मेवारी अनुसार काम नगरी मालबस्तु जाँचपास गराउन रेडि ट्रेड प्रा.लि.बाट खटिएका प्रतिवादी सुदर्शन गौतम, प्रतिवादी राजेन्द्र राई, प्रतिवादी यादव पराजुली समेतसँग मिलेमतो गरी ८ वटै कार्टुनहरुमा RC लेखी सोको जानकारी जाँचपासमा खटिएका कर्मचारी र प्रमुख भन्सार अधिकृत समेतलाई नगराई १६० सेट ब्रेक प्याडमा रहेको ६०.७१६ के.जी. सुन पास गराउने कार्यमा संलग्न रहेको, निजले रेडी ट्रेड प्रा.लि.ले पटक पटक सोही प्रकृतिका मालबस्तु पैठारी गरेकोमा निज प्रतिवादी सरोज श्रेष्ठले ५२० सेट अबैध सुन रहेको मालवस्तु पास गरेको देखिन आएको सोही प्रकृतिको मालबस्तु चेक जाँच गर्ने क्रममा RC लेखिएको तर सो मालबस्तुहरु जफत नभएको प्रतिवादी LIN ZE QIANG ले RC लेखिएको कार्टुनहरु ट्याक्सिमा राखी लिई आएको भिडियोमा देखिन आएको र प्रतिवादी LIN ZE QIANG ले बयानको क्रममा उल्लेखित कार्टुनमा सुन रहेको भनी खुलाई दिएबाट यस भन्दा पहिले पनि अबैध सुन पास भएको भन्ने स्पष्ट हुन आएको देखिए समेतबाट **प्रतिवादी सरोज श्रेष्ठलेले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१३) **प्रतिवादीहरु कुमार ढकाल र सन्तोष चन्द (जना दुई) का हकमा** :

प्रतिवादी कुमार ढकाल र प्रतिवादी सन्तोष चन्द त्रि.वि. अन्तराष्ट्रिय बिमानस्थल, भन्सार कार्यालयमा पैठारी भएका मालबस्तुहरुको भौतिक परीक्षण गरी जाँच पास गर्ने जिम्मेवारीमा जाँचकीको रुपमा खटिएकोमा निज प्रतिवादीहरुले मालवस्तुको मूल्य जाँचपास गर्दा x-ray मा खटिएका प्रतिवादी सरोज श्रेष्ठले ४ वटा काटुनहरुमा RC लेखिएकोमा पुन: X-ray गर्ने तथा एक/एक गरी चेक गर्नु पर्नेमा एक एक गरी चेक नगरेको, भौतिक रुपमा मालबस्तु परीक्षण गर्दा मालबस्तुको शंका लागेमा च्यातेर, खोलेर, काटेर, घोटेर, कोतरेर र फोडेर समेत हेर्न सकिने, त्यती गर्दा पनि मालबस्तु यही नै हो भनि एकिन हुन नसकेमा प्रमुख भन्सार अधिकृतलाई प्रतिबेदन गरी बोलाई अधिकृतकै रोहबरमा पुन: एक्सरे समेत गरी हेर्न सकिने त्यती गर्दा पनी एकिन हुन नसकेमा भन्सार बिभागको प्रयोगशालामा परीक्षण गर्न सकिने अवस्था रहेकोमा सो नगरी मालवस्तुहरुको विल विजकहरु मात्र हेरी पहिले पनि यस्तै प्रकारका मालवस्तु आएको भनी सामानको भन्सार जाँचपास गरेको,उस्तै प्रकारका मालबस्तु US डलर ५०० (पाँच सय) भन्दा कम गरी पटक पटक एउटै प्रकृतिको सामान आईरहेकोमा सो किन र कसरी आईरहेको छ भनि हेर्नु पर्ने जिम्मेवारी समेत निर्वाह नगरी, X-ray मा खटिएको कर्मचारी सरोज श्रेष्ठले जानकारी नगरेको भनी आफ्नो पदिय जिम्मेवारी पुरा नगरी मालबस्तु जाँचपास गराउन रेडि ट्रेड प्रा.लि.बाट खटिएका प्रतिवादी सुदर्शन गौतम, प्रतिवादी राजेन्द्र राई, प्रतिवादी यादव पराजुली समेतसँग मिलेमतो गरी जाँचपास गरेको, निज प्रतिवादीहरुले सोही प्रकृतिको मालबस्तु भौतिक परीक्षण गरी जाँच पास गर्ने क्रममा RC

लेखिएको तर सो मालबस्तुहरु जफत नभएको प्रतिवादी LIN ZE QIANG ले RC लेखिएको कार्टुनहरु ट्याक्सिमा राखी लिई आएको भिडियोमा देखिन आएको र प्रतिवादी LIN ZE QIANG ले बयानको क्रममा उल्लेखित कार्टुनमा सुन रहेको भनी खुलाई दिएबाट यस भन्दा पहिले पनि अबैध सुन पास भएको भन्ने स्पष्ट हुन आएको देखिन्छ, रेडी ट्रेड प्रा.लि.को नाममा आएका मालवस्तुहरु मध्ये कुमार ढकालले २०० सेट र सन्तोष चन्दले ३४० सेट अवैध सुन रहेको ब्रेक प्याडहरु जाँचपास गरी सोमा रहेको अबैध सुन पैठारी गर्ने कार्यमाआपराधिक समूहका ब्यक्तिहरुसँग मिली **प्रतिवादीहरु कुमार ढकाल र सन्तोष चन्दले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१४) **<u>प्रतिवादीहरु गणेश प्रसाद पौडेल र बिरेन्द्र नेपाली (जना दुई) का हकमा :</u>**

त्रि.वि.अन्तराष्ट्रिय बिमानस्थल, भन्सार कार्यालयमा प्रतिवादी गणेश प्रसाद पौडेल र प्रतिवादी बिरेन्द्र नेपाली पैठारी भएका मालबस्तुहरुको मुल्याकंन गर्ने जिम्मेवारीका साथ खटिएको, प्रतिवादी सरोज श्रेष्ठले x-ray गर्दा Rc लगाएको मालबस्तुहरुलाई प्रतिवादी गणेश प्रसाद पौडेल र प्रतिवादी बिरेन्द्र नेपालीले बिल बिजक मात्र भिडाई, पुन: जाँच पासको लागी आदेश दिनु पर्नेमा सो नगरी सुन रहेका ब्रेक प्याडहरुलाई ब्रेक प्याड मात्र भनी मुल्यांकन गरी सो मुल्याकन सदरको लागि सिफारिस गरेको, भौतिक रुपमा मालबस्तुको ब्राण्ड, मोडेल, क्षमता, आकार,उत्पती मुलक, गुणस्तर, रुप रंग, भौतिक बनावट समेत नहेरी मालवस्तु मुल्याङकन गरेको, एउटै प्रकृतिको मालवस्तु ५००USD भन्दा कम मूल्य बनाई पटक -पटक पैठारी गरेकोमा मुल्यांकनको आधारमा मुल्य निर्धारण गर्ने,भौतिक रुप, ब्राण्ड, गुणस्तर, साईज, स्पेसिफिकेशन,Country of Orgine, रुप रंग लगायतका बिबरण अनुसार मुल्यांकन गर्ने, स्वघोषणा बमोजिम भए नभएको हेरी मुल्यांकन गर्नु पर्नेमा उल्लेखित कार्य गरेको नपाईएको, Ready Trade Pvt Ltd. दर्ता हुँदाका बखत कम्पनी रजिष्टारको कार्यालयमा संस्था दर्ता गर्दा संस्थाको उद्देश्यमा ईलेक्ट्रोनिक्स सामान, धारा, बेसिन, फ्लस नट, बल्टु, आल्मुनियमका झ्याल ढोका, लत्ता कपडा, खाद्यान्न, कस्मेटिक, स्टेशनरी, टि.भि., भिडियो क्यामेरा, वासिङ मेसिन, भ्याकुम, मिक्चर,कम्प्युटर, प्रिन्टर्स, फोटोकपी लगायतको आयात गरी बिक्री बितरण गर्ने भनि लेखिएकोमा सो उदेश्य विपरीत ब्रेक प्याडहरु ल्याएकोमा सो समेत नहेरी मालबस्तुको मुल्याकंन नगरी अवैध सुन छुटाएको, कम्पनी भ्याटमा दर्ता भई पैठारी गर्नु पर्नेमा भ्याटमा दर्ता नभई पैठारी गरेकोमा सो समेत हेरेको नपाईएको, प्रकृयामा रहेका अन्य कर्मचारीहरुले कैफियत नजनाएको भनी मुल्य स्व:घोषणा गरी दर्ता गरेको प्रज्ञापन पत्र, बिलबिजक लगायतका पेश गरेका कागजातको आधारमा मालबस्तु एकिन गरी मुल्यको हिसाबले मुल्यांकन गरी मुल्य कायम गरी मुल्यांकन सदर गरेको भनी बयानमा खुलाएका, मिति २०८०।०४।०२ गते प्रज्ञापन पत्र नं. M३५०७९ वाट पैठारी भई आएका ८ काटुनमा रहेको १६० ब्रेक प्याडमा लुकाई छिपाई ल्याएको अबैध सुन ६०.७१६ के.जि. लाई ब्रेक प्याड नै हो भनी मुल्याङन गरेको, प्रतिवादी मध्येका बिरेन्द्र नेपालीले अबैध सुन लुकाई छिपाई ल्याएको ११८० सेट ब्रेक प्याडहरुको मूल्याडकन गरेको र प्रतिवादी गणेश प्रसाद पौडेलले अबैध सुन लुकाई छिपाई ल्याएको १०८० सेट ब्रेक प्याडहरुको मूल्याडकन गरेको देखिएबाट निज प्रतिवादीहरुले सोही प्रकृतिको मालबस्तु मुल्याकंन गर्ने क्रममा RC लेखिएका मालबस्तुहरु जफत नगरेको, प्रतिवादी LIN ZE QIANG ले RC लेखिएको कार्टुनहरु ट्याक्सिमा राखी लिई आएको भिडियोमा देखिन आएको र प्रतिवादी LIN ZE QIANG ले बयानको क्रममा उल्लेखित कार्टुनमा सुन रहेको

भनी खुलाई दिएबाट यस भन्दा पहिले पनि अबैध सुनलाई ब्रेक प्याड मात्र भनी मुल्याकंन गरी पास भएको भन्ने स्पष्ट हुन आएको देखिएबाट **प्रतिवादीहरु गणेश प्रसाद पौडेल र बिरेन्द्र नेपालीले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१५) **प्रतिवादी राम कुमार भुजेलको हकमा:**

प्रतिबादी राम कुमार भुजेलले प्रतिवादी मध्येका थुप्तिन छिरिङ र हर्कराज राईसमेत सँग मिली आफ्नो नाममा र आफ्नो नातेदार समेतको नाममा कम्पनी खडा गरेको, प्रत्येक कम्पनी खडा गर्नको लागी रु. एक लाख पचास हजार देखी दुई लाख सम्म रकम लिई कम्पनीहरु खोली सोको कागजातहरु प्रतिवादी हर्कराज राईलाई दिएको, सो कम्पनीहरु मध्ये निज प्रतिवादी रामकुमार भुजेलले प्रतिवादी दिलिप भुजेलको नाममा खडा गरेको रेडी ट्रेड प्रा.लि.को नाममा ११८० सेट ब्रेक प्याडमा अबैध रुपमा लुकाई छिपाई ल्याएको सुन पैठारी गर्ने कार्यमा संगठित रुपमा आपराधिक समूहमा आवद्ध भई अन्य समूहका सदस्यहरुलाई परिचालन गरी प्रत्यक्ष रुपमा सम्पर्क गरी संगठित रुपमा आपराधिक लाभको लागी समूहको निर्देशनमा अबैध सुन पैठारी गर्नको लागी कम्पनीहरु खडा गर्ने र अन्य कम्पनीहरु समेत खडा गर्नको लागी आफ्नो नजिकको मानिसहरुलाई परिचालन गरी संगठित समूहमा आवद्ध रही प्राप्त निर्देशन अनुसार परिचालित भई कम्पनी खोल्ने भूमिका निर्बाह गरी अबैध रुपमा सुनको कारोबार गर्ने संगठित अपराधमा संलग्न रहेको निज प्रतिवादीले खडा गरेको रेडी ट्रेड प्रा.लि. बाट ११८० सेट ब्रेक प्याडमा अबैध सुन पैठारी गर्ने क्रममा मिति २०८०/०४/०२ गते १६० सेट ब्रेक प्याडमा लुकाई छिपाई ल्याएको अवस्थामा ६०.७१६ के.जी सुन बरामद देखिएबाट **प्रतिवादी रामकुमार भुजेलले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि कम्पनी आफ्नो मानिस कुमार भुजेलको तथा अन्य नाताका मानिसको नाममा खोली अवैध सुन भित्राउन उक्त कम्पनी प्रयोग गरी गर्न दिई संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

| सि.न. | कम्पनी | संचालक | नाता /सम्वन्ध |
|---|---|---|---|
| 1. | HWADA ELECTRIC SUPPLIERS PVT LTD | कुमार भुजेल | दाजु |
| 2. | रेडी ट्रेड प्रा.लि. | दिलिप भुजेल | भान्जा |
| 3. | दोलखा ईलेक्ट्रिक सप्लायर्स प्रा.लि | बिकुन्द्र भुजेल | भान्जा दिलिप भुजेलको काका |
| 4. | पवटी ईलेक्ट्रीक सप्लायर्स प्रा.लि | राम बहादुर भुजेल | भिनाजु (दिलिप भुजेलको बाबु) |
| 5. | भुजेल ईलेक्ट्रिक सप्लायर्स प्रा.लि. | राम कुमार भुजेल | मेरो नाममा |

१६) **प्रतिवादी दिलिप भुजेलको हकमा:**

प्रतिवादी दिलिप भुजेलले संगठित समूहका सदस्य रामकुमार भुजेलसँग मिलेमतो गरी रेडी ट्रेड प्रा.लि. नामको कम्पनी खडा गरेको, सो कम्पनी खडा गर्नको लागी रू.१,५०,०००।– (एक लाख पचास हजार) रकम लिएको, कम्पनीको नाममा Exim Code लिएको, आफ्नो नाममा खोलिएको रेडी ट्रेड प्रा.लि. को नामको कम्पनी दर्ता प्रमाण पत्र, चेक बुक समेत प्रतिवादी राजेन्द्र राईको घरबाट बरामद भएको देखिदा निज प्रतिवादी दिलिप भुजेलले अबैध सुन पैठारी गर्नको लागी संगठित समूहका आपराधिक लाभको लागी कम्पनी खोली दिई सोही कम्पनीबाट ११८० सेट ब्रेक प्याड भित्र अबैध रुपमा लुकाई छिपाई सुन पैठारी भएको देखिन आएबाट यी प्रतिवादी दिलिप भुजलले संगठित समूहको लाभको लागी सोही समूहका सदस्य प्रतिवादी रामकुमार भुजलेको निर्देशनमा संगठित समूहमा आवद्ध रही प्राप्त निर्देशन अनुसार परिचालित भई कम्पनी खोल्ने र उक्त कम्पनी अवैध सुन भित्राउन प्रयोग गर्न दिने सम्मको भूमिका निर्बाह गरी आपराधिक लाभ लिएको र मिति २०८०/०४/०२ गते निज प्रतिवादी दिलिप भुजेल संचालक रहेको रेडी ट्रेड प्रा.लि.बाट अबैध रुपमा पैठारी भएको ब्रेकप्याडमा लुकाई ल्याएको अवस्थामा सुन बरामद भएबाट प्रस्तुत वारदातमा निज **प्रतिवादी दिलिप भुजेलले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१७) **प्रतिवादी सुमन खरेलको हकमा:**

प्रतिवादी सुमन खरेलले भारतिय नागरिक राजु मारवाडीको निर्देशनमा निज चाईनिज नागरिक Alex भन्ने Yao Pucheng लाई सुनको अबैध कारोबारको लागी रु.८,००,०००।– (आठ लाख) दिई सम्पर्क स्थापित गरेको, प्रतिवादी Alex भन्ने Yao Pucheng बाट अबैध रुपमा ब्रेक प्याड समेतका माल बस्तु भित्र लुकाई छिपाई ल्याएको सुनलाई विभिन्न आकार तथा प्रकारमा बदली फरक फरक परिमाणमा बनाईएका सुनका बिस्कुटहरु पटक पटक गरी २९ के.जी लिई गई प्रतिवादी शिव कुमार सर्राफलाई ७ के.जी, भोला साह सोनारलाई २ के.जी, भारतिय नागरिक सन्दिपलाई १० के.जी र भारतिय नागरिक बम्बईयालाई १० के.जी बिक्री गरेको भनी खुलाएको देखिन आएको, प्रतिवादी Alex भन्ने Yao Pucheng ले पटक पटक गरी विभिन्न परिमाणका सुनका बिस्कुटहरु गरी जम्मा ३० के.जी सुनका बिस्कुटहरु प्रतिवादी सुमन खरेललाई बिक्री गरेको भनी खुलाएको, प्रतिवादी Alex भन्ने Yao Pucheng ले उपलब्ध गराएको QR CODE सहितको BAR SCANER बाट प्रतिवादी सुमन खरेलले सुन बापतको भुक्तानी लिने गरेको, सो रकम भुक्तानी भए नभएको Alex भन्ने Yao Pucheng ले एकिन गरे पश्चात सुन हस्तान्तरण गर्ने गरेको सो बापत निज सुमन खरेलले प्रति के.जी.अमेरिकन डलर २०० लिने गरेको। निज प्रतिवादी सुमन खरेलले उक्त अबैध सुन काठमाडौका विभिन्न स्थानहरुबाट लिई काठमाडौंका विभिन्न स्थानहरुमा लगी दिने गरेको। निज प्रतिवादीको मोबाईल परीक्षण गर्ने क्रममा सुन बापतको रकम भुक्तानी Ali Pay(china) मार्फत भएको स्लिपहरुको स्किन सर्ट देखिएबाट सुन बिक्री गरेको रकम डिजिटल माध्यमबाट भुक्तानी हुने गरेको पुष्टी हुन आएको साथै Ali Pay (china) मार्फत भुक्तानी भएको स्किन सर्ट निज सुमन खरेललाई भारतिय नागरिक राकेश सिंहले पठाउने गरेको जसबाट निज सुमन खरेल भारतिय नागरिक राजु मारवाडी र राकेश सिंह समेतसँग मिलेमतो गरी अबैध रुपमा पैठारी भएको सुन बिक्री बितरणमा संलग्न भएको देखिएको र निज प्रतिवादी सुमन खरेलले अबैध रुपमा भित्रिएको सुनहरु मध्ये हालसम्म ३० के.जी अबैध सुन बिक्री गरेको पुष्टी हुन आएबाट यी प्रतिवादी सुमन खरेल संगठित समूहको

सदस्य भई सोही समूहको निर्देशनमा आपाराधिक लाभको लागी परिचालित भई अबैध रुपमा पैठारी भएको सुन बिक्री गरी भुक्तानी बापतको रकम डिजिटल माध्यमबाट भुक्तानी लिने ब्यवस्था मिलाई आपाराधिक समूहको कारोबारको विवरण लुकाई कारोवारमा संलग्न रही निज **प्रतिवादी सुमन खरेलले** विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१८) **प्रतिवादी शिव कुमार सर्राफको हकमा:**

प्रतिवादी शिव कुमार सर्राफ सुनचाँदी ब्यबसायी संघको बारा जिल्लाको जिल्ला अध्यक्ष तथा नेपाल सुनचाँदी ब्यबसायी संघको केन्द्रीय उपाध्यक्ष जस्तो जिम्मेवार पदमा रही सुनको कारोबार बैकिङ माध्यमबाट गर्नु पर्नेमा बिना बिल बिजकको अबैध रुपमा भित्राएको सुन प्रतिवादी सुमन खरेल मार्फत ७ के.जी खरिद गरी सोको भुक्तानी निज प्रतिवादी शिव कुमार सर्राफको मोबाईलको परीक्षणमा USDT (BITCOIN/CRYPTO CURRENCY को प्रकार) को फोटो र QR CODE समेत राखेको देखिएबाट निज प्रतिवादी शिव कुमार सर्राफले अबैध सुन खरिद गरी QRCODE SCANNER गरी भुक्तानी गर्ने गरेको स्पष्ट हुन आएको, निज प्रतिवादी शिव कुमार सर्राफको मोबाईल नं. ९८२८१३९५३१ बाट र प्रतिवादी सुमन खरेलको मोबाईल नं ९८४७२६५३१५ मा ६० पटक फोन सम्पर्क भएको र निज प्रतिवादी शिव कुमार सर्राफको मोबाईल नं.९८४५०३७३५१ बाट प्रतिवादी सुमन खरेललाई १५४ पटक फोन सम्पर्क गरेको देखिएबाट निज प्रतिवादीले बयानमा खुलाएको जस्तो ५०० ग्राम सुन खरिद नगरी ७ के.जी. अबैध सुन खरिद गरेको स्पष्ट हुन आएको। प्रतिवादी सुमन खरेललाई सुन बापतको रकम भुक्तानी गरेको Ali pay (चाईना) रकम प्राप्त गरेको प्रमाण पठाउने भारतिय नागरिक राकेश सिंहसँग निज प्रतिवादी शिव कुमार सर्राफको लेनदेन तथा कारोबार रहेको भनी खुलाएबाट निज प्रतिवादी शिव कुमार सर्राफ समेत एउटै समूहमा रही अबैध सुनको कारोबारमा संलग्न रहेको पुष्टी भएको, निजको मोबाईलको परीक्षणको क्रममा अबैध सुनको बेचबिखनको लागी उल्लेखित समूहले प्रयोग गर्ने गरेको कोड नेपाली रु.५ को नोट नं. ण५५०१३९०९ नं. भएको नोट र भारतीय दस रुपये 3OB520308 नं. को नोटको फोटो भेटिएबाट उल्लेखित समूहले सुन बेच बिखन गर्नको लागी अबलम्बन गरेको आपराधिक कार्यबिधीसँग मेल खाएबाट निज प्रतिवादी शिव कुमार सर्राफ आपराधिक समूहको सदस्य भई सो समूहको तर्फबाट सुन खरिद गरी सो सुन पुन : बेचबिखन गरी आर्थिक लाभ लिएको देखिन आएबाट निज **प्रतिवादी शिव कुमार सर्राफ**ले आपराधिक समूहमा आवद्ध भई आपराधिक लाभको लागी अबैध सुन खरिद बिक्रीमा प्रत्यक्ष रुपमा संलग्न रही विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

१९) **प्रतिवादी भोला साह सोनारको हकमा:**

प्रतिवादी भोला साह सोनारले अबैध रुपमा भित्राएको सुन प्रतिवादी सुमन खरेल मार्फत २ के.जी खरिद गरी सोको भुक्तानी निज प्रतिवादी भोला साह सोनारले QR CODE SCANNER गरी भुक्तानी गरेको, निज प्रतिवादी भोला साह सोनारले प्रयोग गर्ने मोबाईल नं.९८०७२६६४४० बाट र प्रतिवादी सुमन खरेलको मोबाईल नं ९८४७२६५३१५ मा १५ पटक फोन सम्पर्क भएको र निज प्रतिवादी भोला साह सोनारले प्रयोग गर्ने नं.९८६०३५१६०६ बाट प्रतिवादी सुमन खरेललाई ८ पटक फोन सम्पर्क गरेको देखिएबाट निज प्रतिवादी भोला साह सोनारले प्रतिवादी सुमन खरेलबाट २ के.जी. अबैध सुन खरिद गरेको स्पष्ट हुन आएको। प्रतिवादी

सुमन खरेललाई सुन बापतको रकम भुक्तानी गरेको Ali pay (चाईना) मार्फत भुक्तानी दिने गरेबाट निज प्रतिवादी भोला साह सोनार आपराधिक समूहको सदस्य भई सो समूहको तर्फबाट सुन खरिद गरी सो सुन पुन: भारतसम्म लगी बेचबिखन गरी आर्थिक लाभ लिएको देखिन आएबाट निज **प्रतिवादी भोला साह सोनारले** आपराधिक समूहमा आवद्ध भई आपराधिक लाभको लागी विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

२०) **प्रतिवादी जिवन चलाउनेको हकमा:**

निज प्रतिवादी जिवन चलाउनेले प्रतिवादी दावा छिरीङसंग समेत सम्पर्कमा रहेको, प्रतिवादी दावा छिरिङ्गको मोबाईल परीक्षणको क्रममा भेटिएको 977981837717 नं. को Whatsapp र प्रतिवादी जिवन चलाउनेको 9779851127590 नं को Whatsapp मा निज प्रतिवादीहरुले 30k$ sent to subu pratap kc in wells fargo bank विवरण रहेको देखिने फोटो आदान प्रदान गरेको देखिन आएको, साथै निजहरु विचमा how much is the monthly Intrest of 50 million, the party Asked me, This one month 80 kg भनी म्यासेज गरेकोमा निज प्रतिवादी जिवन चलाउनेले ok भनी रिप्लाई गरेको, Dai alikk gopya garnus. Aru sanga kura nagarnuhos र only u and me business talk ok we meet, hlo. I may hyatt. I will come to meet u tomorrow morning the Chinese party come office okey, 10:30-11:00 AM Dawa: I have some good idea, can do business with the Chinese Party., Jeevan:Yes dai maile milako chu sab kaam dai., Dawa: Let the n supportus. Jeevan: Good Indian Party. :Ok rich person. Dawa: I let the me Check it. If Ok., I will come alone to meet you., Jeevan: OK., Dawa: We stay Ambassador Hotel talka bout Business. Jeevan: OK. Dawa: All the mat my hotel, ask me money. :31,00,000, Please Dai don't do liket hat. I have many work to do. Give money to them., Jeevan: Dai me waiting, Call Dubai. भनी म्यासेज पठाएको देखिको हुँदा निज प्रतिवादी जिवन चलाउनेको प्रतिवादी दावा छिरीङसंग समेत सँगको आपराधिक समूहमा आवद्ध भई आपराधिक लाभको लागी विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

२१) **प्रतिवादी अमला रोकाको हकमा:**

प्रतिवादी अमला रोकाले काठमाडौं जिल्ला स्थित ठमेल ज्याँठा टोलमा होटल भियना संचालन गरी सुन तस्करीमा संलग्न चिनिया नागरिकहरुलाइ बस्ने ब्यबस्था साथै निजको श्रीमान दावा छिरीङ समेतको समन्वय र सहकार्यमा सुन तस्करीमा संलग्न रहेको साथै सुन तस्करीमा दावा छिरिङले गर्ने हरेक सुनसँग सम्बन्धित लेनदेन कारोवारमा संलग्न देखिएको प्रतिवादी DAOJING WANG संग बिभिन्न मितिमा अमला रोकाले प्रयोग गर्ने ९८०८४९४९९९ बाट प्रस्तुत मुद्दाका मूख्य प्रतिवादी DAOJING WANG को ९८०१०९९९९८ नम्बरमा ९ पटक सम्पर्क भएको देखिएको साथै कसूरमा संलग्न प्रतिवादीहरु ALEX भन्ने YAO PUCHENG र ALI भन्ने LI WEN TSUNG लाई मिति २०८०।०४।०५ गतेबाट कसूर वारदात पश्चात हप्तादिन सम्म होटल भियनामा लुक्न छिप्न सहयोग गरेको देखिन आयो। सुन गाल्न तथा रिफाईन गर्नका लागि ल्याईएको रसाईन आफूले संचालन गरेको होटेल भियनामा राखि चाईनिज नागरिकलाई उपलब्ध गराएको र सोही केमिकल रसाईन अनुसन्धानको क्रममा टोखा स्थित सुन गाल्न प्रयोग भएको स्थानबाट बरामद भई

आएको देखिन आएकोले अवैध सुन पैठारी गर्ने कार्यमा निज **प्रतिवादी अमला रोक्काले** आपराधिक समूहमा आवद्ध भई आपराधिक लाभको लागी विरुद्ध खण्डमा उल्लेखित अन्य प्रतिवादीहरु समेतसँग मिलि संगठित रुपमा अबैध सुनको कारोबार गरेको कसूर स्थापित हुन आएको छ।

अत: माथि उल्लिखित प्रतिवादी अनुसारको कसूर विवेचनाको आधारमा उल्लेखित प्रमाणहरुबाट प्रतिवादीहरुको बयान, कागज गर्ने मानिसहरुले खुलाई दिएको ब्यहोरा, राजस्व अनुसन्धान विभाग, त्रिभुवन अन्तराष्ट्रिय बिमानस्थल भन्सार कार्यालय, भन्सार विभाग समेतबाट लेखि आएको ब्यहोरा, बैज्ञानिक परीक्षण प्रतिवेदनहरु, बैंक स्टेटमेन्टहरु, प्रतिवादीहरुले प्रयोग गरेको विभिन्न Electronic Device हरुको Digital Forensic Lab बाट संकलन गरिएका Data हरु, CDR को विश्लेषण, GPS को डाटा, i2 बिश्लेषण बिवरण, खानतलासी बरामदी गर्ने क्रममा संकलित दशी प्रमाणहरु समतेका तथ्य प्रमाणहरुबाट **प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ, दिलिप भुजेल, कुमार ढकाल, पुष्कर राज भट्ट, सन्तोष चन्द, सरोज श्रेष्ठ, गणेश प्रसाद पौडेल, थुप्तिन छिरिङ, यादव पराजुली, सुदर्शन गौतम, रुकमिना सुव्वा, राजेन्द्र कुमार राई, राम कुमार भुजेल, हर्कराज राई, किशोर बस्नेत, बिरेन्द्र नेपाली, सुमन खरेल, शिव कुमार सरार्फ तथा चिनिया नागरिकहरु ALI भन्ने LI WEN TSUNG, LIN ZEQIANG, YANG WEN, MI TIAN, ROGER OR STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALEX भन्ने YAO PUCHENG र बेल्जियम नागरिक DAWA TSERING, भोला साह सोनार, जीवन चलाउने, अमला रोका, चाईनिज नागरिकहरु ZHONG JIANHUA, SAM भन्ने ZHONG JINGCHUAN, PENG LING FENG, WANG DAOJIN, PENG YONGXIN (ASHIN), MS Li, MR LIN, MR. MICHEAL ZHANG, ERIC Mao (mao Mengiun), Mr.TEDDY, LUORONG GONGBU र भारतिय नागरिक राकेश सिंह, राजु माडवारी र YOGI ENTERPRISE भारतका संचालक Brisleri Wala समेतका** व्यक्तिहरु एक आपसमा मिली निजहरुको योजनामा तीन वा सो भन्दा बढी व्यक्तिहरुको आपराधिक समूह खडा गरी सिलसिलाबद्ध गोप्य र सिमित सदस्यहरु आवश्यकता अनुसारको सूचना प्रवाह गरी गराई अन्तराष्ट्रिय रुपमा हङकङ देखी नेपालसम्म र नेपालबाट भारतसम्म संगठन बिस्तार गरी र समन्वय सम्बन्ध राख्दै आपराधिक लाभको लागी सदस्यहरु विचमा फरक फरक जिम्मेवारी दिई लिई सोही अनुसार परिचालन र परिचालित भई ईलेक्ट्रिक सामानहरु तथा अटो पार्ट (ब्रेक प्याड) हरु आयात गर्ने भनी विभिन्न कम्पनीहरु एकै उद्देश्य राखि खडा गरी सोही कम्पनीका नाममा फरक फरक मालवस्तुहरु फरक फरक कम्पनी, Airline, Sender Company हरुलाई प्रयोग गरी हङकङबाट फरक–फरक मालवस्तुमा सुनलाई लुकाई छिपाई अवैध तरिकाले आफूहरुलाई आपराधिक लाभ प्राप्त गर्ने योजना साथ हंङकङबाट अवैध रुपमा नेपालमा सुन भित्र्याई सो सुनलाई बिभिन्न आकार तथा परिमाणमा गाली अवैध र गैरकानुनी तवरले बिक्री गरी आफूहरुले अवैध अर्थोपार्जन गर्ने र नेपाल सरकारलाई हानी नोक्सानी पुर्याई पिरामिड शैलिमा अवैध सुन नेपाली तथा भारत सम्म बेचबिखन गर्ने समेत गर्ने गरेको र सोही क्रममा मिति २०८०।०४।०२ गते बिदेश हंङकङबाट अवैध तवरले नेपालमा ब्रेक प्याड समेतका मालबस्तुहरु पैठारीमा भएको सुन गाल्दा ६० किलो ७१६ ग्राम राजस्व अनुसन्धान विभागबाट बरामद भएको स-प्रमाण पुष्टी हुन आई प्रतिवादीहरुले नेपालमा पैठारी गरेको बरामद भएका ब्रेक प्याड अवस्था समेतका आधारमा सो ब्रेक प्याडबाट सुन निकाली हटाईएको भागहरु बरामद भई सो हटाईएको ब्रेक प्याडका भागहरुमा

३०२ किलो ०६२ ग्राम सुन रहेको आधारमा विरुद्ध खण्डमा उल्लिखित **प्रतिवादीहरु कृष्ण कुमार श्रेष्ठ, दिलिप भुजेल, कुमार ढकाल, पुष्कर राज भट्ट, सन्तोष चन्द, सरोज श्रेष्ठ, गणेश प्रसाद पौडेल, थुप्तिन छिरिङ, यादव पराजुली, सुदर्शन गौतम, रुकमिना सुव्वा, राजेन्द्र कुमार राई, राम कुमार भुजेल, हर्कराज राई, किशोर बस्नेत, बिरेन्द्र नेपाली, सुमन खरेल, शिव कुमार सरार्फ, चिनिया नागरिकहरु ALI भन्ने LI WEN TSUNG, LIN ZEQIANG, YANG WEN, MI TIAN, ROGER OR STEPS भन्ने LI NENGKAI, SAUTEN भन्ने DING SHENG FA, ALEX भन्ने YAO PUCHENG, बेल्जियम नागरिक DAWA TSERING, भोला साह सोनार, जीवन चलाउने र अमला रोका समेतलाई** ब्रेक प्याडमा मात्र जम्मा ३६२ किलो ७७८ ग्राम सुन नेपालमा अवैध रुपमा पैठारी गरी नेपाल तथा भारतिय बजारमा बिक्री गरेको समेत स्पष्ट देखिन आएकोले उक्त सुनको मिति २०८०।०४।०२ गते नेपाल राष्ट्र बैंकबाट कायम भएको मूल्य प्रति तोला रु.१,१२,५००/- का दरले ३६२ किलो ७७८ ग्राम सुनको जम्मा मूल्य **रु.३,५०,०२,१६,५५२/३१** (तीन अर्ब पचास करोड दुई लाख सोह्र हजार पाँच सय बाउन्न रुपैया एकतिस पैसा) र सो सुन अबैध रुपमा लुकाई छिपाई नेपाल ल्याउन प्रयोग भएको ब्रेक प्याडको भन्सारमा घोषणा गरिएको मूल्य र कर समेत गरी **रु.२८,७५,४२३।–** (अठ्ठाईस लाख पचहत्तर हजार चार सय तेईस) समेत गरी जम्मा **रु.३,५०,३०,९१,९७५.३१** (तीन अर्ब पचास करोड तीस लाख एकानब्बे हजार नौसय पचहत्तर रुपैया एकतिस पैसा) हानी नोक्सानी पुर्‍याई संगठित रुपमा अवैध सुन चोरी पैठारी गरेको उक्त कार्य **अवैध सुन भन्सार चोरी पैठारी तर्फ** भन्सार ऐन, २०६४ को दफा ५७(१) बमोजिमको कसूर र **संगठित अपराध तर्फ** निज प्रतिवादीहरुले संगठित अपराध निवारण ऐन, २०७० को दफा २ को (घ) मा परिभाषित सोही ऐनको दफा ३ को उपदफा (१) मा निषेधित एवं सोही ऐनको दफा ३ को उपदफा (२) र उपदफा (३) को देहाय (क) बमोजिमको कसूरमा संलग्न रही सोही ऐनको दफा ५ मा निषेधित कसूर गरेको स-प्रमाण पुष्टि हुन आयो।

**नेपाल राष्ट्र बैंक ऐन अन्तर्गतको कसूर तर्फ:**

प्रतिवादीहरु मध्ये **Dawa Tsering (दावा छिरिङ), Roger Or Steps भन्ने Li Nengkai, Alex भन्ने Yao Pucheng र शिव कुमार सरार्फले** अबैध सुनको कारोबारबाट प्राप्त रकम क्रिप्टो करेन्सीमा लगानी गरी कारोबार गरेको निज प्रतिवादी Dawa Tsering (दावा छिरिङ), Roger Or Steps भन्ने Li Nengkai, Alex भन्ने Yao Pucheng विदेशी नागरिक भएतापनि यी प्रतिवादीहरु नेपालमा रही बसी नेपाली नागरिकता लिई नेपाली नागरिकको हैसियतले नेपालमा रहदा बस्दा क्रिप्टो करेन्सीमा कारोबार गरेको देखिन आएकोले निज प्रतिवादीहरुले गरेको उक्त कार्य नेपाल राष्ट्र बैंक ऐन, २०५८ को दफा ९५(१) वमोजिमको कसूर गरेको स-प्रमाण पुष्टि हुन आयो।

**एकिकृत कसूर तर्फ:**

प्रतिवादीहरु Dawa Tsering (दावा छिरिङ), Roger Or Steps भन्ने Li Nengkai, Alex भन्ने Yao Pucheng र शिव कुमार सरार्फले संगठित रुपमा अवैध सुन चोरी पैठारीको कसूर र नेपाल राष्ट्र बैंक ऐन अन्तर्गतको कसूर गरी निज प्रतिवादीहरुले एकै वारदातमा एकभन्दा बढी कसूर गरेको देखिएकोले निज प्रतिवादीहरुले मुलुकी अपराध संहिता, २०७४ को दफा ४३(१) बमोजिम एकिकृत कसूर गरेको स-प्रमाण पुष्टि हुन आयो।

